त्यो अतिशय दीर्घकाय दानव आफ्नो चिउँडोले पृथिवीलाई तथा माथिल्लो ओठले स्वर्गलाई टाँसेर आकाश समान गम्भीर मुख, सर्पको समान डरलाग्दो जिब्रो तथा मृत्युको समान कराल दाह्राले जस्तै त्रिलोकलाई निल्नलागे झैं आफ्नो पाद-प्रहारले पृथ्वी थर्काउँदै तथा प्रबल वेगले पर्वतहरूलाई यता-उता धक्याउँदै इन्द्रको नजीकै पुग्यो र वाहन ऐरावत समेत तिनलाई यस प्रकार निलिदियो जस्तै कुनै ठूलो बलवान् अजिङ्गर हात्तीलाई स्वलक्क निल्दछ। यस प्रकार इन्द्रलाई वृत्रासुरको मुखभित्र परेका देखेर प्रजापतिहरू र महर्षिहरू सहित सबै देवता अति दुःखित भएर 'हा कष्ट ! हा कष्ट !' भन्दै करुणापूर्ण स्वरमा कराउन लागे ॥२७-३०॥ तर विष्णु भगवान्को योग तथा मायाको प्रभावले सुरक्षित रहनाले गर्दा दैत्यराज

वक्त्रेण लेलिह्योल्बणजिह्वया ॥ २७ ॥ दंष्ट्राभिः कालकल्पाभिर्ग्रसन्निव जगत्त्रयम् ॥ आतिमात्रमहाकाय आक्षिपंस्तरसा गिरीन् ॥ २८ ॥ गिरि-
राट् पादचारीव पद्भ्यां निर्जरयन्महीम् ॥ जग्रास स समासाद्य वज्रिणं सहवाहनम् ॥ २९ ॥ महावीर्यो महासर्प इव द्विपम् ॥ वृत्रग्रस्तं
तमालक्ष्य सप्रजापतयः सुराः ॥ हा कष्टमिति निर्विण्णाश्चुक्रुशुः समहर्षयः ॥ ३० ॥ निगीर्णोऽप्यसुरेन्द्रेण न ममारोदरं गतः ॥ महापुरुषमन्नद्धो
योगमायाबलेन च ॥ ३१ ॥ भित्त्वा वज्रेण तत्कुक्षिं निष्क्रम्य बलभिद्विभु ॥ उच्चकर्त शिरः शत्रोगिरिशृङ्गमिवौजसा ॥ ३२ ॥ वज्रस्तु तत्कन्धर-
माशुवेगः कृन्तन्समन्तात्परिवर्तमानः ॥ न्यपातयत्तावदहर्गणेन यो ज्योतिषामयने वार्त्रहत्ये ॥ ३३ ॥ तदा च खे दुन्दुभयो विनेदुर्गन्धर्वसिद्धाः
समहर्षिसङ्घाः ॥ वार्त्रघ्नलिंगैस्तमभिष्टुवाना मन्त्रैर्मुदा कुसुमैरभ्यवर्षन् ॥ ३४ ॥ वृत्रस्य देहान्निष्क्रान्तमात्मज्योतिररिन्दम ॥ पश्यतां सर्वलोकाना-

वृत्रासुरले निलेपछि त्यसको पेटमा पुगेर पनि इन्द्र मरेनन् जीवितै रहे ॥३१॥ त्यसपछि सामर्थ्यवान् सुरराज आफ्नो वज्रले त्यसको पेट फोरेर बाहिर निस्केर आए र उनले ठूलो वेगले आफ्नो शत्रुको पर्वत समान अग्लो शिर काटिदिए ॥३२॥ सूर्य आदि ग्रहको उत्तरायण-दक्षिणायनरूपिणी गतिमा जति समय लाग्दछ, त्यति नै दिन अर्थात् छ महीनामा वृत्र-वधको योग उपस्थित भएपछि चारैतिर घुमेर काट्दै त्यस तीव्र वेगवान् वज्रले त्यसको मस्तकलाई भूमिमा 'फ्याँकिदियो ॥३३॥ त्यसै बखत आकाशमा दुन्दुभी बज्नलागे र महर्षिगण सहित सिद्ध,गन्धर्वले वृत्रहन्ता इन्द्रको पराक्रमसूचक मन्त्रहरूले स्तुति गरे र तिनको *उपकारले कृतज्ञ हुँदै इन्द्रमाथि पुष्प-वर्षा गर्नलागे ॥३४॥ हे शत्रुदमन राजन् ! उता वृत्रासुरको शरीरबाट

*दृष्टान्त म उपकार गर्दिन)—यौटा सद्गृहस्थ भोकालाई अन्न दिने गर्दथ्यो र त्यो पनि आफ्नै हातले, किनकि योग्य अयोग्य हेरेर तथा पात्र कुपात्रको विचार गरेर दान दिनुपर्दछ। त्यो दान दिने बेलामा अनुदार गम्भीर रहन्थ्यो र तलतिर हेरिरहन्थ्यो। एक दिन कुनै महात्मा आए। तिनले भने— पापीको मुख तल र म्लान रहन्छ। तिमी त पुण्य गर्दछौ। अनि किन मुख तलपार्दछौ ?' गृहस्थले भन्यो—'यो सबै ईश्वरको महिमा हो। अन्नादि ईश्वरकै हुन, म पनि ईश्वरकै हुँ, तापनि याचक मेरो सहनी गर्दछन्, त्यसै निमित्त म लाज मान्दछु। म त यौटा साधारण भण्डारी मात्र हुँ। यदि म समर्थ सेठको यशमा दाग लगाउँ भनी मलाई पाप लाग्दछ अरू परमात्माको दृष्टिमा म पापी बनूँ, अनि मालिक कसरी हेर्न सक्छु। याचक मेरो यहाँबाट अन्न आदि लगेर मेरो उपकार मान्दछन् यो उचित मान्दछन् त्यो उचित होइन। बरु तिनको भैले नै उपकार मान्नु पर्दछ किनकि ती मेरो घर आएर मलाई धर्म पुर्याउँछन् र पाप रक्षा गर्दछन्। यस कारण म तिनीहरू तिर हेर्न सक्तिन।' गृहस्थको यस्तो विचार जानेर महात्मा निकै प्रसन्न भए र दान पाएर गए।

निरकेको ज्योति सर्प जनाको माथुन्ने सर्वलोकातीत भगवान्को स्वरूपमा गएर विलीन भयो ॥३५॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥ ( देवराज इन्द्रमाथि ब्रह्महत्याको आक्रमण )—शुकदेवजी भन्दछन्–हे दानी राजा परीक्षित ! वृत्रासुर मारिएपछि इन्द्र बाहेक लोकपालसमेत तीनै लोकसन्तापशून्य र आनन्द-विभोर भए ॥१॥ त्यो युद्ध सकिएपछि देवता, ऋषि, पितृगण, दैत्य तथा देवताका सबै अनुचर एवं ब्रह्मा, शिव तथा इन्द्रादि लोकपाल आफ्ना-आफ्ना लोकहरूमा प्रस्थान गरे ॥२॥ यति कथा सुनिसकेर राजा परीक्षितले सोधे–हे महामुने ! इन्द्रको असन्तोषको कारण जान्ने मेरो प्रबल इच्छा छ। जुन वृत्रासुरको वधले सबै देवताहरूलाई अपार आनन्द भयो, त्यसले इन्द्र किन दुःखी भए ? ॥३॥ श्रीशुकदेवजी भन्नुहुन्छ–हे राजन् ! जब वृत्रासुरको पराक्रमले कष्टमा प्राप्त देवता तथा महर्षिहरूले त्यसको वध गर्नका लागि प्रार्थना गरे, तापनि ब्रह्महत्याको भयले इन्द्रलाई वृत्र-वधको इच्छा भएन ॥४॥ इन्द्रले भने–हे देवता हो ! त्यस बखत विश्वरूपको वध गर्नाले मलाई जुन ब्रह्महत्या लागेको थियो, त्यसलाई

मल्लोकं समपद्यत ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे वृत्रवधो नाम द्वादशोऽध्यायः ॥ १२ ॥ श्रीशुक उवाच ॥ वृत्रे हते त्रयो लोका विना शक्रेण भूरिद ॥ सपाला ह्यभवन्सद्यो विज्वरा निर्वृतेन्द्रियाः ॥ १ ॥ देवर्षिपितृभूतानि दैत्या देवानुगाः स्वयम् ॥ प्रतिजग्मुः स्वधिष्ण्यानि ब्रह्मेशेन्द्रादयस्ततः ॥ २ ॥ राजोवाच ॥ इन्द्रस्यानिर्वृतेर्हेतुं श्रोतुमिच्छामि भो मुने ॥ येनासन्सुखिनो देवा हरेर्दुःखं कुतोऽभवत् ॥ ३ ॥ श्रीशुक उवाच ॥ वृत्रविक्रमसंविग्नाः सर्वे देवाः सहर्षिभिः ॥ तद्वधायार्थयन्निन्द्रं नैच्छद्भीतो बृहद्वधात् ॥ ४ ॥ इन्द्र उवाच ॥ स्त्रीभूजलद्रुमैरेनो विश्वरूपवधोद्भवम् ॥ विभक्तमनुगृह्णद्भिर्वृत्रहत्यां क माज्म्यहम् ॥ ५ ॥ श्रीशुक उवाच ॥ ऋषयस्तदुपाकर्ण्य महेन्द्रमिदमब्रुवन् ॥ याजयिष्याम भद्रं ते हयमेधेन मा स्म भैः ॥ ६ ॥ हयमेधेन पुरुषं परमात्मानमीश्वरम् ॥ इष्ट्वा नारायणं देवं मोक्ष्यसेऽपि जगद्वधात् ॥ ७ ॥ ब्रह्महा पितृहा गोघ्नो मातृहाऽऽचार्यहाघवान् ॥ श्वादः पुल्कसको वापि शुद्ध्येरन्यस्य कीर्तनात् ॥ ८ ॥ तमश्वमेधेन महामखेन श्रद्धान्वितोऽस्माभिरनुष्ठितेन ॥ हत्वाऽपि सब्रह्म चराचरं त्वं न लिप्यसे किं खलनिग्रहेण ॥ ९ ॥ श्रीशुक उवाच ॥ एवं सञ्चोदितो विप्रैर्मरुत्वानहनद्रिपुम् ॥ ब्रह्महत्या हते तस्मिन्नाससाद

त स्त्री, पृथिवी, जल र वृक्षहरूले कृपा गरेर स्वीकार गरे। अब वृत्रासुरको वध गरेको हत्याबाट कसरी मुक्ति पाउने छु ॥५॥ श्रीशुकदेवजी भन्नुहुन्छ–यो कुरा सुनेर महर्षिहरूले इन्द्रलाई भने–'हे देवराज ! तिमीले यसको डर मान्नु पर्दैन। तिम्रो सबै प्रकारले कल्याण हुनेछ। हामी तिमीद्वारा अश्वमेध यज्ञले भगवान्को पूजन गराउनेछौं ॥६॥ त्यस अश्वमेधद्वारा परमात्मा नारायणदेवको आराधना गर्नाले तिमी सम्पूर्ण विश्वको हत्या गरेको पापबाट मुक्ति पाउने छौ ॥७॥ ती भगवान्को केवल-नाम-सङ्कीर्तनले ब्राह्मण, पिता, गाई, माता तथा आचार्यको हत्या गर्ने अथवा ठूला-ठूला पापी, कुकुरको मासु खाने चाण्डाल र पुल्कस आदि जीव पनि तुरुन्त शुद्ध पवित्र हुन्छन् ॥८॥ हामीद्वारा अनुष्ठित अश्वमेध महायज्ञले श्रद्धापूर्वक ती भगवान्को भजन गरेर तिमी ब्रह्मासमेत सम्पूर्ण चराचर जगत्लाई मारेर पनि पापमा लिप्त हुन सक्तैनौ, अनि यस दुष्टको वध गर्नाले किन पापलिप्त हुनेछौ ? ॥९॥ श्रीशुकदेवजी भन्नुहुन्छ–ती ब्राह्मणहरूले त्यस प्रकार उत्साहित गरेपछि इन्द्रले देवताहरूको शत्रु वृत्रासुरको वध गरिदिए। त्यो मारिएपछि ब्रह्महत्याले इन्द्रमाथि आक्रमण गरिदियो।

601

त्यसै कारण इन्द्रले सार्है दुःखी हुनुपऱ्यो, त्यस बेलादेखि तिनलाई शान्ति मिलेन, किनकि यदि कुनै लज्जावान् पुरुषको अपकीर्ति भयो भने धैर्यादि गुण पनि प्रसन्न पनि शक्तैनन् ॥१०॥११॥ इन्द्रले देखे—ब्रह्महत्या साक्षात् चाण्डालिनी समान तिनको पछि-पछि दगुर्दै आइरहेकी थिई । त्यसको क्षयरोगग्रस्त शरीर वृद्धावस्थाले गर्दा काम्दैथियो, उसका लुगा रगतमा मुछिएका थिए ॥१२॥ त्यो आफ्नो शिरको पाकेका कपाल छिरिक पारेर 'पर्खी-पर्खी' भन्दै कराइरहेकी थिई । त्यसको श्वासबाट माछाको दुर्गन्ध आउँथ्यो, जसले गर्दा त्यो बाटो पनि दूषित पारिरहेको थियो ॥१३॥ हे राजन् ! इन्द्र त्यसको डरले आकाश र दशै दिशाहरूमा भाग्दा-भाग्दा थाकेर पूर्व र उत्तरको कुनामा विद्यमान मानसरोवरमा लुके ॥१४॥ त्यहाँ लुकेर त्यो डरलाग्दो ब्रह्महत्याबाट मुक्त हुने उपाय विचार गर्दै ती एक हजार वर्षसम्म कमलनालको तन्तुमा लुकिरहे । त्यति दिन तिनलाई केही पनि सुख भएन, किनकि तिनलाई सुख-साधन पुऱ्याउने दूत अग्नि जलमा आन सक्तैनथ्यो ॥१५॥ इन्द्र जबसम्म मानसरोवरमा लुकिरहे तबसम्म विद्या, तप, योग र बलको प्रभावयुक्त राजा नहुषले

वृषाकपिम् ॥ १० ॥ तामिन्द्रः स्मासहत्तापं निर्वृतिर्नामुमाविशत् ॥ ह्रीमन्तं वाच्यतां प्राप्तं सुखयन्त्यपि नो गुणाः ॥ ११ ॥ तां ददर्शानुधावन्तीं
चाण्डालीमिव रूपिणीम् ॥ जरया वेपमानाङ्गीं यक्ष्मग्रस्तामसृक्पटाम् ॥ १२ ॥ विकीर्य पलितान्केशांस्तिष्ठ तिष्ठेति भाषिणीम् ॥ मीनगन्ध्यसुग-
न्धेन कुर्वतीं मार्गदूषणम् ॥ १३ ॥ नभोगतो दिशः सर्वाः सहस्राक्षो विशां पते ॥ प्रागुदीचीं दिशं तूर्णं प्रविष्टो नृप मानसम् ॥ १४ ॥ स आव-
सत्पुष्करनालतन्तूनलब्धभोगो यदिहाग्निदूतः ॥ वर्षाणि साहस्रमलक्षितोऽन्तः स चिन्तयन्ब्रह्मवधाद्विमोक्षम् ॥ १५ ॥ तावत्त्रिणाकं नहुषः शशास
विद्यातपोयोगबलानुभावः ॥ ससम्पदैश्वर्यमदान्धबुद्धिर्नीतस्तिरश्चां गतिमिन्द्रपत्न्या ॥१६॥ ततो गतो ब्रह्मगिरोपहूत ऋतम्भरध्याननिवारिताघः ॥
पापस्तु दिग्देवतया हतौजास्तं नाभ्यभूदवितं विष्णुपत्न्या ॥ १७ ॥ तं च ब्रह्मर्षयोऽभ्येत्य हयमेधेन भारत ॥ यथावद्दीक्षयाञ्चक्रुः पुरुषाराधनेन
ह ॥ १८ ॥ अथेज्यमाने पुरुषे सर्वदेवमयात्मनि ॥ अश्वमेधे महेन्द्रेण वितते ब्रह्मवादिभिः ॥ १९ ॥ स वै त्वाष्ट्रवधो भूयानपि पापचयो नृप ॥

स्वर्गको शासन गरे । तर धन तथा ऐश्वर्यको मदले बुद्धि भ्रष्ट हुनाले गर्दा ती इन्द्राणीद्वारा तिर्यक् योनिमा पुऱ्याइए * ॥१६॥ त्यसपछि जब सत्यपालक श्रीहरिको ध्यान गर्नाले इन्द्रका सबै पाप नष्ट भयो, अनि ब्राह्मणहरू द्वारा डाकेपछि ती फेरि स्वर्गलोकमा गए । मानसरोवर निवासिनी लक्ष्मीजी इन्द्रको सुरक्षा गर्थिन् र दिशाहरूका देवता रुद्रको दृष्टिले तेजहीन हुनाको कारण त्यो ब्रह्महत्याको पापले उनलाई तिरस्कार गर्नसकेको थिएन ॥१७॥ हे भारत ! अनि ती ब्रह्मर्षिहरूले गएर भगवान् पुरुषोत्तमको आराधना-स्वरूप अश्वमेध यज्ञको विधिवत् दीक्षा दिए ॥१८॥ हे राजन् ! ती वेदवादी मुनिहरूद्वारा अनुष्ठित अश्वमेध यज्ञले जब इन्द्रले सर्व देवमय परमात्मा पुरुषोत्तमको यजन गरे तब

* कथान्तर—जब राजा नहुष इन्द्र बनेर धन तथा प्रभुताको मदले उन्मत्त भए, तब एक दिन तिनले इन्द्राणीसित भने—'अब म इन्द्र भएँ, अतः तिमी मलाई पतिरूपमा स्वीकार गर ।' त्यसपछि इन्द्राणीले देवगुरु बृहस्पतिको सम्मतिले समाचार पठाइन—'यदि तिमी ब्राह्मणहरू द्वारा बोकिएको डोलीमा बसेर आउँछौ भने म तिमीलाई पतिरूपमा स्वीकार गर्न सक्छु ।' त्यस दुर्मदले त्यसै गऱ्यो र बाटोमा छिटो हिड्न भन्दै पालकी बोकेका अगस्त्य ऋषिलाई खुट्टाले छोएर—'शीघ्रं सर्प-सर्प' अर्थात् छिटो-छिटो हिड भन्ने आज्ञा दिए । त्यसैमा रिसाएका ऋषिले तिनलाई श्राप दिई भने—'तँ सर्प भएस् ।' यसैले ती सर्प भएर पृथिवीमा झरे ।

त्यसैले तिनको वृत्र वधको पापपुञ्ज यस प्रकार नष्ट भयो, जसरी सूर्योदय हुनासाथ कुहिरो हराएको नष्ट भएर जान्छ ॥१९-२०॥ यस प्रकार मरीचि आदि मुनीश्वरहरू द्वारा विधिवत् गराइएको अश्वमेध यज्ञले पुराण-पुरुष श्रीयज्ञभगवान्को पूजन गरेर निष्पाप इन्द्र पहिले जस्तै पूजनीय भए ॥ २१ ॥ हे राजन् ! यो महान् आख्यान सबै पापलाई नष्ट गर्दछ । यसमा तीर्थपाद श्रीहरिको यशोगान छ, भक्तहरूको भक्तिवर्द्धक चरित्र वर्णन गरिएको छ र इन्द्रको विजय तथा ब्रह्महत्याबाट मुक्तिको गाथा गाइएको छ ॥ २२ ॥ बुद्धिमान् जनहरूको कर्तव्य हो इन्द्र सम्बन्धी आख्यान दिनहुँ पढ्न, विशेष गरेर पर्व-पर्वको दिन यसलाई अवश्य पढुन् र सुनुन् किनकि यो धन-यशको वृद्धि गर्दछ, सबै पाप नष्ट पारेर शत्रुमा विजय प्राप्त गराउँछ परम मङ्गल प्रदान गरेर आयु बढाउँछ ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥ १३ ॥ ( वृत्रासुरको पूर्वजन्मको कथा )—यति वर्णन सुनेर राजा परीक्षितले शुकदेवलाई सोधे—हे ब्रह्मन् ! त्यो रजोगुणी र तमोगुणी स्वभावको पापी वृत्रासुरको नारा

नीतस्तेनैव शून्ताय नीहार इव भानुना ॥ २० ॥ स वाजिमेधेन यथोदितेन वितायमानेन मरीचिमिश्रैः ॥ इष्ट्वाऽधियज्ञं पुरुषं पुराणमिन्द्रो महानाम विधूतपापः ॥ २१ ॥ इदं महाख्यानमशेषपाप्मनां प्रक्षालनं तीर्थपदानुकीर्तनम् ॥ भक्त्युच्छ्रयं भक्तजनानुवर्णनं महेन्द्रमोक्षं विजयं मरुत्वतः ॥ २२ ॥ पठेयुराख्यानमिदं सदा बुधाः शृण्वन्त्यथो पर्वणि पर्वणीन्द्रियम् ॥ धन्यं यशस्यं निखिलाघमोचनं रिपुञ्जयं स्वस्त्ययनं तथायुषम् ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे इन्द्रविजयो नाम त्रयोदशोऽध्यायः ॥ १३ ॥ परीक्षिदुवाच ॥ रजस्तमःस्वभावस्य ब्रह्मन्वृत्रस्य पाप्मनः ॥ नारायणे भगवति कथमासीद्दृढा मतिः ॥ १ ॥ देवानां शुद्धसत्त्वानामृषीणां चामलात्मनाम् ॥ भक्तिर्मुकुन्दचरणे न प्रायेणोपजायते ॥ २ ॥ रजोभिः समसंख्याताः पार्थिवैरिह जन्तवः तेषां ये केचनेहन्ते श्रेयो वै मनुजादयः ॥ ३ ॥ प्रायो मुमुक्षवस्तेषां केचनैव द्विजोत्तम ॥ मुमुक्षूणां सहस्रेषु कश्चिन्मुच्येत सिद्ध्यति ॥ ४ ॥ मुक्तानामपि सिद्धानां नारायणपरायणः ॥ सुदुर्लभः प्रशान्तात्मा कोटिष्वपि महामुने ॥ ५ ॥ वृत्रस्तु स कथं पापः सर्वलोकोपतापनः ॥ इत्थं दृढमतिः कृष्ण आसीत्संग्राम उल्बणे ॥ ६ ॥ अत्र नः संशयो भूयाञ्छ्रोतुं कौतूहलं प्रभो ॥ यः पौरुषेण समरे सहस्राक्षमतोषयत् ॥ ७ ॥ सूत उवाच ॥ परीक्षितोऽथ संप्रश्नं भगवान्बादरायणिः ॥ निशम्य श्रद्दधानस्य प्रतिनन्द्य

यणमा दृढ बुद्धि कसरी भयो ? ॥ १ ॥ ती भगवान् मुकुन्दका चरणमा त प्रायः शुद्ध सत्वगुणी देवगण तथा पवित्र चित्त हुने मुनिजनलाई पनि झट्ट प्रीति हुँदैन ॥ २ ॥ यस संसारमा पृथ्वीका जति रजःकण छन् त्यति नै जीवहरूको संख्या छ । ती मध्ये पनि मनुष्य आदि केही जीव नै आफ्नो कल्याणको उद्योग गर्दछन् ॥ ३ ॥ हे विप्र ! ती मनुष्यहरूमा पनि संसारबाट मुक्त हुने इच्छुक त कोही-कोही मात्र हुन्छन् र ती हजारौं मुमुक्षुमा पनि कुनै मात्र मोक्ष वा सिद्धिको लाभ पाउँछन् ॥४॥ हे महामुने ! ती करोडौं सिद्धगण र मुक्तपुरुषहरूमा भगवत्परायण, शान्तचित्त महापुरुष भेट्टाउन त साह्रै कठिन कुरा छ ॥ ५ ॥ अनि सबै लोकलाई सन्तप्त पार्ने महापापी वृत्रासुरलाई त्यस्तो घोर युद्धको बेला भगवान्का चरणमा यस प्रकारको भक्ति कसरी भयो ? ॥ ६ ॥ हे प्रभो ! यस विषयमा मलाई त ठूलो सन्देह हुन्छ र हजुरको मुखकमलबाट त्यस वीरको वृत्तान्त सुन्ने ठूलो कुतूहल छ, जसले

आफ्नो पुरुषार्थले संग्रामभूमिमा उभिएका देवराज इन्द्रलाई पनि प्रसन्न पारेका थिए ॥ ७ ॥ यस्तो भागवतादि ऋषिहरूलाई भन्दछन्–हे मुनिवृन्द ! परम श्रद्धालु राजा परीक्षितका त्यो प्रश्न सुनेर शुकदेवजीले तिनको अभिनन्दन गर्दै भने ॥८॥ शुकदेवजी भन्दछन्–हे राजन ! द्वैपायन, देवर्षि नारद तथा देवलको मुखबाट सुनेको यस विषयको एक इतिहास सबै जना सावधान भएर सुन्नोस् ( यसले तपाइँहरूको सबै शंका समाधान हुनेछ ) ॥९॥ हे राजन ! शूरसेन देशमा चित्रा सार्वभौम राजा बस्तथे, तिनको नाम थियो चित्रकेतु । तिनको राज्यमा पृथ्वी सबै प्रजाको समस्त कामना पूर्ण पार्दथिन् ॥१०॥ तिनका दश हजार रानीहरू थिए तर ती सन्तान उत्पन्न गर्न समर्थ थिए । तैपनि तिनका सन्तान भइरहेका थिएनन् ॥११॥ अतएव रूप, उदारता, आयु, कुलीनता, विद्या, ऐश्वर्य तथा सम्पत्ति आदि सबै गुणहरूले युक्त भएर पनि बाँझहरूका पति भइदिएका हुनाले उनलाई ठूलो चिन्ता लागि- रहेथ्यो ॥१२॥ यसै कारण सबै सम्पत्ति, सुनयना स्त्रीहरू तथा समस्त पृथ्वीमण्डलको राज्य पनि ती सार्वभौम सम्राट् चित्रकेतुलाई सुखी पार्न सकेन ॥१३॥ एकदिनको कुरा हो–अङ्गिरा

वचोऽब्रवीत् ॥ ८ ॥ श्रीशुक उवाच ॥ शृणुष्वावहितो राजन्नितिहासमिमं यथा ॥ श्रुतं द्वैपायनमुखान्नारदाद्देवलादपि ॥ ६ ॥ आसीद्राजा सार्वभौमः शूरसेनेषु वै नृप ॥ चित्रकेतुरिति ख्यातो यस्यासीत्कामधुङ्मही ॥ १० ॥ तस्य भार्यासहस्राणां सहस्राणि दशाभवन् ॥ सान्तानिकश्चापि नृपो न लेभे तासु सन्ततिम् ॥ ११ ॥ रूपौदार्यवयोजन्मविद्यैश्वर्यश्रियादिभिः ॥ सम्पन्नस्य गुणैः सर्वैश्चिन्ता वन्ध्यापतेरभूत् ॥ १२ ॥ न तस्य संपदः सर्वा महिष्यो वामलोचनाः ॥ सार्वभौमस्य भूश्चेयं नाभवन्प्रीतिहेतवः ॥ १३ ॥ तस्यैकदा तु भवनमङ्गिरा भगवानृषिः ॥ लोकाननुचरन्नेतानुपाग- च्छद्यदृच्छया ॥ १४ ॥ तं पूजयित्वा विधिवत्प्रत्युत्थानार्हणादिभिः ॥ कृतातिथ्यमुपासीदत्सुखासीनं समाहितः ॥ १५ ॥ महर्षिस्तमुपासीनं प्रश्न- यावनतं क्षितौ ॥ प्रतिपूज्य महाराज समाभाष्येदमब्रवीत् ॥ १६ ॥ अङ्गिरा उवाच ॥ अपि तेऽनामयं स्वस्ति प्रकृतीनां तथात्मनः ॥ यथा प्रकृतिभिर्गुप्तः पुमान्राजापि सप्तभिः ॥१७ ॥ आत्मानं प्रकृतिष्वद्धा निधाय श्रेय आप्नुयात् ॥ राज्ञा तथा प्रकृतयो नरदेवाहिताधयः ॥१८॥ अपि दाराः प्रजामात्या भृत्याः श्रेण्योऽथ मन्त्रिणः ॥ पौरा जानपदा भूपा आत्मजा वशवर्तिनः ॥ १९ ॥ यस्यात्मानुवशश्चेत्स्यात्सर्वे तद्वशगा

ऋषि सबै लोकमा डुल्दै स्वेच्छाले राजाकहाँ पुगे ॥१४॥ राजा चित्रकेतुले प्रत्युत्थान तथा पाद्य-अर्घादिले तिनको विधिवत् पूजन गरे । अतिथि–सत्कार भइसकेपछि जब ती सुखपूर्वक आसनमा बसे, तब महाराज चित्रकेतु पनि शान्त-भावले उनको नजीकै गएर बसे ॥१५॥ हे नरपते ! यस प्रकार आफ्नो अतिशय नजीकै नियमपूर्वक पृथ्वीमा विराजमान राजा चित्रकेतुको सम्भाषणादि द्वारा सत्कार गरेर महामुनि अङ्गिराले भने ॥१६॥ मुनि भन्दछन्–हे राजन् ! जस्तै जीव महत्तत्त्व आदि सात प्रकृतिरूपी आवरणले ढाकिइरहन्छ, त्यस्तै नै राजा पनि स्वामी, अमात्य, जनपद, दुर्ग, दण्ड तथा मित्ररूपी प्रकृतिहरूले सर्दैव घेरिइरहन्छ । अतः तिमी आफ्ना प्रकृतिहरू सहित सकुशल त छौ ? ॥ १७ ॥ हे नरदेव ! जस्तै राजा आफ्ना उपर्युक्त प्रकृतिहरूको अनुकूल रहेर नै राज्य-सुख भोग्न सक्दछ, त्यसै गरी सात प्रकृतिहरू पनि आफ्ना सारा दायित्व राजामा छाडेर सुख-समृद्धिको लाभ प्राप्त गर्न सक्दछन ॥१८॥ हे राजन् ! तिम्रा रानीहरू, प्रजा, अमात्य ( परामर्शदाता ) सेवक, व्यापारी वर्ग, मन्त्रीगण, पुरवासी, सामन्तगण तथा पुत्र तिम्रो अधीन छन् कि छैनन् ? ॥१९॥

त्यसो त असको मन आफ्नो वशमा हुन्छ, सबै जना पनि उसको वशीभूत रहन्छन् । त्यति मात्र होइन, लोकपाल समेत सबै लोक ठूलो सावधानीपूर्वक त्यसलाई बलि अर्पण गर्दछन् ॥२०॥ तर हे महाराज ! किन हो कुन्नि तिमीलाई म प्रसन्न देखिरहेको छैन । तिम्रो मुख चिन्ताले गर्दा मानो विचित्र प्रकारको भइरहेको छ । यसले ज्ञात हुनुपर्छ कि तिम्रो कुनै कामना अपूरो रहेको छ ॥२१॥ शुकदेवजी भन्दछन्–हे राजन् ! मुनिले यसरी सोधेपछि आफ्नो चिन्ताको कारण जानेर पनि पुत्रको निम्ति इच्छुक राजा चित्रकेतुले विनयावनतभावले भने ॥२२॥ राजा चित्रकेतु भन्नलागे—हे भगवन् ! जुन योगीजनका सबै पापमयी वासनाहरू नष्ट भइसकेका हुन्छन्, तिनलाई देहधारी मनुष्यका बाहिरी या भित्री यस्तो कुन वस्तु शेष रहन्छ–जुन तप, ज्ञान, तथा समाधिद्वारा ज्ञात हुन नसकोस् ? ॥२३॥ किनकि सबै कुरा जानेर पनि हजुर मसित सोध्नुहुन्छ, यसनिम्ति हजुरद्वारा प्रेरित भएर हजुरको नै आज्ञाले म आफ्नो मनको चिन्ता हजुरको समक्ष प्रकट गर्दछु ॥ २४ ॥ हे नाथ ! जस्तै कुनै भोक-प्यासले व्याकुल पुरुषलाई अन्न जलको अतिरिक्त अरु भोग आनन्दित पार्न

इमे ॥ लोकाः सपाला यच्छन्ति सर्वे बलिमतन्द्रिताः ॥ २० ॥ आत्मनः प्रीयते नात्मा परतः स्वत एव वा ॥ लक्षयेऽलब्धकामं त्वां चिन्तया शबलं मुखम् ॥ २१ ॥ एवं विकल्पितो राजन्विदुषा मुनिनाऽपि सः ॥ प्रश्रयावनतोऽभ्याह प्रजाकामस्ततो मुनिम् ॥ २२ ॥ चित्रकेतुरुवाच ॥ भगवन्किं न विदितं तपोज्ञानसमाधिभिः ॥ योगिनां ध्वस्तपापानां बहिरन्तःशरीरिषु ॥ २३ ॥ तथापि पृच्छतो ब्रूयां ब्रह्मन्नात्मनि चिन्तितम् ॥ भवतो विदुषश्चापि चोदितस्त्वदनुज्ञया ॥ २४ ॥ लोकपालैरपि प्रार्थ्याः साम्राज्यैश्वर्यसम्पदः ॥ न नन्दयन्त्यप्रजं मां क्षुत्तृटकाममिवापरे ॥ २५ ॥ ततः पाहि महाभाग पूर्वैः सह गतं तमः ॥ यथा तरेम दुस्तारं प्रजया तद्विधेहि नः ॥ २६ ॥ श्रीशुक उवाच ॥ इत्यर्थितः स भगवान्कृपालुर्ब्रह्मणः सुतः ॥ श्रपयित्वा चरुं त्वाष्ट्रं त्वष्टारमयजद्विभुः ॥ २७ ॥ ज्येष्ठा श्रेष्ठा च या राज्ञो महिषीणां च भारत ॥ नाम्ना कृतद्युतिस्तस्यै यज्ञोच्छिष्टमदाद्द्विजः ॥२८॥ अथाह नृपतिं राजन्भवितैकस्तवात्मजः ॥ हर्षशोकप्रदस्तुभ्यमिति ब्रह्मसुतो ययौ ॥ २९ ॥ साऽपि तत्प्राशनादेव चित्रकेतोरधारयत् ॥ गर्भं कृतद्युतिर्देवी कृत्तिकाग्नेरिवात्मजम् ॥ ३० ॥ तस्या अनुदिनं गर्भः शुक्लपक्ष इवोडुपः ॥ ववृधे शूरसेनेशतेजसा शनकैर्नृप

सक्तैनन् । त्यसै गरी म निःसन्तानलाई यो साम्राज्य, ऐश्वर्य तथा सम्पत्ति, जो सबै लोकपालहरू पनि इच्छा गर्दछन्, केही पनि सुख दिन्नन् ॥२५॥ अतः हे महाभाग ! आफ्ना पूर्वपुरुष सहित घोर दुःखमा परेको म दासको रक्षा गर्दै हजुर कुनै यस्तो उपाय गर्नुहवस्–जसले म भविष्यमा पाइने दुस्तर नरकलाई सन्तानद्वार तर्नसकूँ । शुकदेवजी भन्दछन्–हे राजन् ! चित्रकेतुले यति भनेपछि ब्रह्माका पुत्र तथा दयालु अङ्गिराले त्वाष्ट्र चरु तयार पारेर त्यसले त्वष्टा देवताको यजन गरे ॥२६-२७॥ हे भारत ! यस्तो गरेर ती द्विजराजले राजाका रानीहरूमा जुन सबभन्दा जेठी र गुणमा पनि सर्वश्रेष्ठ कृतद्युति नामकी राजमहिषी थिइन्, तिनलाई यज्ञ-चरु खानदिए ॥२८॥ त्यसपछि राजा चित्रकेतुसित उनले भने–'हे राजन् ! यसले तिम्रो यौटा पुत्र हुनेछ, त्यसद्वारा तिमीलाई हर्ष तथा शोक दुवै प्राप्त हुनेछन् ।' यति भनेर ब्रह्मपुत्र अङ्गिरा त्यहाँबाट हिंडे ॥२९॥ रानी कृतद्युतिले पनि चरु खानासाथ चित्रकेतुको सहवासले यस प्रकार गर्भ धारण गरिन्, जसरी कृतिकाले अग्निपुत्रलाई गर्भमा धारण गरेकी थिइन् ॥३०॥ हे राजन् ! शूरसेन देशका स्वामी राजा चित्रकेतु रोजले युक्त

कृतद्युतिको गर्भ दिनदिनै शुक्लपक्षका चन्द्रमा झैं विस्तार-विस्तार बढ्न लाग्यो ॥३१॥ त्यसपछि जब समय आयो तब यौटा बालक जन्मियो। त्यसको जन्मको समचार पाएर समस्त शूरसेन देशवासीहरूलाई ठूलो आनन्द भयो ॥३२॥ महाराज चित्रकेतु पनि-जन्मको समचार पाएर निकै प्रसन्न भए। उनले स्नानादि द्वारा पवित्र भएर राम्रा वस्त्राभूषण लगाए र ब्राह्मणहरूबाट अशीर्वाद लिई स्वस्तिवाचन गराई बालकको जातकर्म-संस्कार सम्पन्न गराए ॥३३॥ त्यसपछि उनले ती ब्राह्मणलाई सुन, चाँदी, वस्त्राभूषण, ग्राम, अश्व, गज र साठो करोड गाई दान गरेर दिए ॥३४॥ महामना राजा चित्रकेतुले त्यस पुत्रको आयुष्य र धन वृद्धिको तिम्ति सबै प्राणीहरूको इच्छाहरू यस प्रकार पूर्ण पारे, जसरी मेघ जल वर्षा गरेर सबै व्यक्तिको इच्छा पूर्ण गर्दछन् ॥३५॥ हे राजन् ! जस्तै कुनै कङ्गालीलाई ठूलो परिश्रमले धन प्राप्त होस् र त्यो त्यसैमा आजन्म रहोस्, त्यस्तै नै ठूलो कष्टले प्राप्त त्यस बालक प्रति राजा चित्रकेतुको प्रेम बढ्न लाग्यो ॥३६॥ बालककी आमा कृतद्युतिको पनि आफ्नो पुत्रमा अतिशय मोहजनित स्नेह थियो, तर त्यसका अन्य सौताको मनमा पुत्र-प्राप्तिको कामनाको

॥३१॥ अथ काल उपावृत्ते कुमारः समजायत ॥ स जनयञ्छूरसेनानां शृण्वतां परमां मुदम् ॥३२॥ हृष्टो राजा कुमारस्य स्नातः शुचिरलंकृतः ॥ वाचयित्वाऽऽशिषो विप्रैः कारयामास जातकम् ॥३३॥ तेभ्यो हिरण्यं रजतं वासांस्याभरणानि च ॥ ग्रामान्हयान्गजान्प्रादाद्धेनूनामर्बुदानि षट् ॥ ३४ ॥ ववर्ष काममन्येषां पर्जन्य इव देहिनाम् ॥ धन्यं यशस्यमायुष्यं कुमारस्य महामनाः ॥३५॥ कृच्छ्रलब्धेऽथ राजर्षेस्तनयेऽनुदिनं पितुः ॥ यथा निःस्वस्य कृच्छ्राप्ते धने स्नेहोऽन्ववर्धत ॥३६॥ मातुस्त्वतितरां पुत्रे स्नेहो मोहसमुद्भवः ॥ कृतद्युतेः सपत्नीनां प्रजाकामज्वरोऽभवत् ॥३७॥ चित्रकेतोरतिप्रीतिर्यथा दारे प्रजावति ॥ न तथाऽन्येषु संजज्ञे बालं लालयतोऽन्वहम् ॥ ३८ ॥ ताः पर्यतप्यन्नात्मानं गर्हयन्त्योऽभ्यसूयया ॥ आनपत्येन दुःखेन राज्ञोऽनादरणेन च ॥ ३९ ॥ धिगप्रजां स्त्रियं पापां पत्युश्चागृहसंमताम् ॥ सुप्रजाभिः सपत्नीभिर्दासीमिव तिरस्कृताम् ॥४०॥ दासीनां को नुसन्तापः स्वामिनः परिचर्यया ॥ अभीक्ष्णं लब्धमानानां दास्या दासीव दुर्भगाः ॥ ४१ ॥ एवं संदह्यमानानां सपत्न्याः पुत्रसम्पदा ॥ राज्ञोऽसंमतवृत्तीनां विद्वेषो बलवानभूत् ॥ ४२ ॥ विद्वेषनष्टमतयः स्त्रियो दारुणचेतसः ॥ गरं ददुः कुमाराय दुर्मर्षा नृपतिं प्रति ॥४३॥ कृतद्युतिरजानन्ती सपत्नीनामघं महत् ॥ सुप्त एवेति सञ्चिन्त्य निरीक्ष्य व्यचरद्गृहे ॥ ४४ ॥ शयानं सुचिरं बालमुपधार्य मनीषिणी ॥ पुत्रमानयमे

सन्ताप दिन दिनै बढ्न लाग्यो ॥३७॥ दिनहुँ त्यस बालकको लालन-पालन गर्दै रहनाले राजा चित्रकेतुको स्नेह अति त्यो पुत्रवती भार्यामा थियो, त्यति अन्य रानीहरूमा रहन गएन ॥३८॥ यस प्रकार निःसन्तान हुने कष्ट तथा राजाको तिरस्कारले अत्यन्त सन्तप्त भएर ती रानीहरू डाहले स्वयं आफ्नो निन्दा गर्दै मनमनै सान्है नै दुःख मान्न लागेका थिए ॥३९॥ परस्पर भन्नलागे-'हरे ! पुत्रवती सौता दासी झैं जसको तिरस्कार गर्दछन् र पति पनि जसलाई आफ्नी भार्या मान्दैनन्, ती पापिनी तथा निःसन्तान स्त्रीहरूलाई धिक्कार छ ॥४०॥ दासीहरूलाई पनि दुःख हुन्छ र ! ती त आफ्ना स्वामीको सेवा गरेर सदा सम्मान प्राप्त गर्दछन्, तर हामी अभागिनीहरू त यस बखत दासीहरूका पनि दासीहरू भइरहेका छौं ॥४१॥ यस प्रकार आफ्नी सौताको पुत्ररूपी सम्पत्तिले सन्तप्त एवं जो राजालाई पनि अप्रिय भइसकेका थिए,ती रानीहरूलाई सौता प्रति डाह हुन गयो ॥४२॥ डेषवश ती क्रूरचित्त भएका

कुबुद्धिहरूको बुद्धि नष्ट भइसकेको थियो, तिनलाई राजाको पुत्र-सुख सहन हुन सकेन र तिनले मौका पारेर त्यस बालकलाई विष खुवाइदिए ॥४३॥ आफ्नी सौताहरूको यो पापमयी कार्यको ज्ञान नहुनाले रानी कृतद्युति यस्तो विचार गरेर–बालक निदाएको छ, त्यसलाई परैबाट हेर्दै घरमा डुलिरहेकी थिई ॥४४॥(निकै बेर भएपछि) त्यस बुद्धिमतीले विचार गरिन्–बालक सुतेको धेरै बेर भइसक्यो । अनि धाईलाई डाकेर भनी–'भद्रे ! बालकलाई मनेर ल्याऊ ।' ॥४५॥ जब धाईले सुतेको बालकनेर गएर आँखाका परेला टालिएका तथा शरीरलाई प्राण, इन्द्रिय एवं जीवात्माले रहित देखी तब त्यो 'हाय ! यो के भयो ?' भन्दै पृथ्वीमा पछारिई ॥४६॥ जब रानी कृतद्युतिले दुवै हातले बेसरी टाउको र छाती ठोक्दै त्यस धाईको अति आतुर चीत्कारपूर्ण रुदन सुनिन् तब ती शुद्ध छोरोनेर दगुर्दै आइपुगिन् र तिनले बालकलाई मरिसकेको देखिन् ॥४७॥ त्यो देखेर ती अतिशय शोकले मूर्छित भई पृथ्वीमा ढलिन् र तिनको कपाल तथा वस्त्र अस्त-व्यस्त भए ॥४८॥ रानी कृतद्युतिको रुदन सुनेर अन्तःपुरका सबै स्त्री-पुरुष दगुर्दै आए र त्यसकै समान दुःखित भई

भद्रे इति धात्रीमचोदयत् ॥ ४५ ॥ सा शयानमुपव्रज्य दृष्ट्वा चोत्तारलोचनम् ॥ प्राणेन्द्रियात्मभिस्त्यक्तं हताऽस्मीत्यपतद्भुवि ॥ ४६ ॥ तस्यास्तदाकर्ण्य भृशातुरं स्वरं घ्नन्त्याः कराभ्यामुर उच्चकरपि ॥ प्रविश्य राज्ञी त्वरयाऽऽत्मजान्तिकं ददर्श बालं सहसा मृतं सुतम् ॥ ४७ ॥ पपात भूमौ परिवृद्धया शुचा मुमोह विभ्रष्टशिरोरुहाम्बरा ॥ ४८ ॥ ततो नृपान्तःपुरवर्तिनो जना नराश्च नार्यश्च निशम्य रोदनम् ॥ आगत्य तुल्यव्यथनाः सुदुःखितास्ताश्च व्यलीकं रुरुदुः कृतागमाः ॥ ४९ ॥ श्रुत्वा मृतं पुत्रमलक्षितान्तकं विनष्टदृष्टिः प्रपतत्स्खलन्पथि ॥ स्नेहानुबन्धैधितया शुचा भृशं विमूर्च्छितोऽनुप्रकृतिर्द्विजैर्वृतः ॥ ५० ॥ पपात बालस्य स पादमूले मृतस्य विस्रस्तशिरोरुहाम्बरः ॥ दीर्घं श्वसन्बाष्पकलोपरोधतो निरुद्धकण्ठो न शशाक भाषितुम् ॥ ५१ ॥ पतिं निरीक्ष्योरुशुचार्पितं तदा मृतं च बालं सुतमेकसन्ततिम् ॥ जनस्य राज्ञी प्रकृतेश्च हृद्रुजं मती दधाना

विलाप गर्नलागे । जसले यो महान अपराध गरेको थियो,ती रानीहरू पनि सबै जना जस्तै रुन-कराउन लागे ॥४९॥ उसो अकारण छोरोको मृत्युको समाचार सुनेर राजा चित्रकेतु पनि स्नेहानुबन्धनले बढेको शोकले गर्दा बौलाहा झैं भएर आफ्ना अनुगामी मन्त्रीगण तथा ब्राह्मणहरूले घेरिएर बाटोमा लड्दै-ढल्दै अन्तःपुरमा पुगे र मरेको बालकको खुट्टाको नजिकै पुगेर ढले । त्यस बखत तिनका आँखाको सामुन्ने अँध्यारो भएर आयो, तिनको कपाल र वस्त्र फुस्के, अनि लामो श्वास तथा अश्रु-धाराको आवेगले घाँटी अवरुद्ध हुनाले ती केही बोल्न सकिरहेका थिएनन् ॥५०॥५१॥ आफ्नो पतिलाई अत्यन्त शोकाकुल तथा छोरो मरेको देखेर रानी कृतद्युति प्रजा तथा मन्त्रिमण्डललाई शोकग्रस्त पार्दै रिमिम-रिमिमका

❀ दृष्टान्त ( स्त्रीचरित्र )–कानपुरमा कपूरको व्यापारी धौटा वैश्य बस्तथ्यो । उसकी स्त्रीको नाम रत्नप्रभा थियो । युवती रत्नप्रभा चंचल थिई र सेठ बूढो थियो । अतः त्यो धौटा नोकरसित आनन्द भोग्थी । एक दिन सेठले रत्नप्रभालाई देख्यो–त्यस नोकरलाई चुम्बन दिइरहेकी छ । रत्नप्रभाले देखी अब कुरा बिग्रन ओर्ल्यो । तुरुन्त सेवकलाई डाटेर सेठको नजीकै पुगी र भन्नलागी–स्वामी ! यो नोकर धेरै बदमास भइसक्यो, दिनहुँ गोदामबाट कपूर चोरेर खान्छ । शंका मलाई पहिले देखिनै थियो, त्यसैले आज स्वयं मैले मुख सुँघेर निश्चय गरिछिएँ ।' यति सुनेर नोकर नक्कली रिस देखाउँदै करायर भन्न लाग्यो–'हजुर ! जसको घरमा यस्तो मुख सुँघ्ने स्त्री छ, त्यहाँ कुनै पनि नोकर कसरी टिक्न सक्छ ? अतः हजुर आजै मेरो हिसाब चुक्ता गरिदिनोस् । मलाई चाहिएन यस्तो नोकरी ।' यति भन्दै त्यो हिसाएर हिँड्न लाग्यो । अब सेठ मुन्टो नमाई उठेर निकै खुसामद गरेर फर्काएर ल्यायो । यसै निमित्त नीतिशास्त्रमा भनिएको छ–'उशना वेद यच्छास्त्रं यच्च वेद बृहस्पति । स्वभावरत्न च यच्छास्त्रं स्त्रीबुद्धौ सुप्रतिष्ठितम् ।

विलाप गर्दै रुनलागे ॥५२॥ कुमकुम मिसाएको चन्दनले चर्चित आफ्ना कुच-युगललाई गाजलको कालिमा मिश्रित आँसुले भिजाउँदै तथा जपबाट फूलका माला छिनेर गिरिरहेथ्यो,' ती बाँधिएका कपाल फैलाउँदै ती आफ्नो बालकको निम्ति कुररी झैं उच्च स्वरले विलाप गर्दै थिइन् ॥५३॥ तिनले भनिन्–'हे विधाता ! तँ बज्रमूर्ख रहिछस्, जो आफैंले रचेको सृष्टिको प्रतिकूल कार्य गर्दछस् । कति आश्चर्यको कुरा छ–बूढापाका बाँचिरहनु र बालक मरुन् । यदि साँच्चै नै तेरो स्वभावमा यस्तो उल्टो छ भने तँ जीवको शत्रु होस् ॥५४॥ संसारमा यदि प्राणीहरूको जीवन-मरणको कुनै क्रम नै छैन भने ती प्रारब्धके अनुसार हुँदै जाँदै रहन्छन् । हे निष्ठुर ! सृष्टि वृद्धिको लागि तैंले जुन स्नेहपाश बनाएको छ, त्यसलाई तँ स्वयं काटिरहेको छस् ॥५५॥ अनि छोरातिर हेरेर भन्न लागी—'मेरो बाबु ! म दीन-हीन अनाथिनीलाई छाडेर तिमीले जान उचित होइन । तिमी अलिकति शोकाकुल आफ्ना पितातिर त हेर ! निःसन्तान पुरुष जसलाई ठूलो कष्टले पार गर्न सक्छन्, त्यो घोर नरक हामी तिमीद्वारा सहजै नाघ्न सक्छौं । तिमी निष्ठुर यमराजसित मेरो

विललाप चित्रधा ॥ ५२ ॥ स्तनद्वयं कुंकुमगन्धमण्डितं निषिञ्चती साञ्जनबाष्पबिन्दुभिः ॥ विकीर्य केशान्विगलत्स्रजः सुतं शुशोच चित्रं
कुररीव सुस्वरम् ॥ ५३ ॥ अहो विधातस्त्वमतीव बालिशो यस्त्वात्मसृष्ट्यप्रतिरूपमीहसे ॥ परेऽनुजीवत्यपरस्य या मृतिर्विपर्ययश्चेत्त्वमसि ध्रुवः
परः ॥ ५४ ॥ न हि क्रमश्चेदिह मृत्युजन्मनोः शरीरिणामस्तु तदात्मकर्मभिः ॥ यः स्नेहपाशो निजसर्गवृद्धये स्वयं कृतस्ते तमिमं विवृश्चसि
॥ ५५ ॥ त्वं तात नार्हसि च मां कृपणामनाथां त्यक्तुं विचक्ष्व पितरं तव शोकतप्तम् ॥ अञ्जस्तरेम भवताप्रजदुस्तरं यद्ध्वान्तं न याह्यकरुणेन
यमेन दूरम् ॥ ५६ ॥ उत्तिष्ठ तात त इमे शिशवो वयस्यास्त्वामाह्वयन्ति नृपनन्दन संविहर्तुम् ॥ सुप्तश्चिरं ह्यशनया च भवान्परीतो भुंक्ष्व स्तनं
पिब शुचो हर नः स्वकानाम् ॥ ५७ ॥ नाहं तनूज ददृशे हतमङ्गला ते मुग्धस्मितं मुदितवीक्षणमाननाब्जम् ॥ किं वा गतोऽस्यपुनरन्वयमन्य-
लोकं नीतोऽघृणेन न शृणोमि कला गिरस्ते ॥ ५८ ॥ श्रीशुक उवाच ॥ विलपन्त्या मृतं पुत्रमिति चित्रविलापनैः ॥ चित्रकेतुर्भृशं तप्तो मुक्त-
कण्ठो रुरोद ह ॥ ५९ ॥ तयोर्विलपतोः सर्वे दम्पत्योस्तदनुव्रताः ॥ रुरुदुः स्म नरा नार्यः सर्वमासीदचेतनम् ॥ ६० ॥ एवं कश्मलमापन्नं नष्टसंज्ञ-

सामुन्ने नजाऊ ॥५६॥ हेर ! मेरो बाबु ! उठेर बस । हेर, तिम्रा साथी सबै बालक तिमीलाई खेल्न डाकिरहेका छन् । तिमी धेरै बेरदेखि त्यसै सुतिरहेका छौ । अब त तिमीलाई भोक पनि लागेको होला । उठेर केही खाऊ, स्तन-पान गर र हामी स्वजनको शोक निवारण गर ॥५७॥ हे पुत्र ! आज मन्दभागिनीलाई तिम्रोमुख-मधुर हास्य र प्रसन्नताले भरिएको तिम्रो हेराई म देखिरहेकी छैन । अफसोस मलाई तिम्रो मीठो र तोते बोली सुनिएको छैन । उसो भए के तिमी साँच्चै निष्ठुर यमराजको प्रेरणाले त्यस लोकमा गइसकेका छौ, जहाँ गए पछि फर्केर कोही पनि आउन्न ? ॥५८॥ हे राजन् ! महारानी कृतद्युतिलाई आफ्नो मृत पुत्रको निम्ति यसरी थरि-थरिका करुण विलाप गरेकी देखेर राजा चित्रकेतु पनि अत्यन्त शोकाकुल भएर मुक्त कण्ठले रुदन गर्न लागे ॥५९॥ ती राज-दम्तीले विलाप गरेपछि तिनका अनुयायी अन्य नर-नारी पनि दुःखित भएर रुन लागे । यस प्रकार त्यो सारा नगर अपार शोकले व्याकुल भयो ॥६०॥ यस प्रकार राजालाई शोकाकुल एवं संज्ञाशून्य देखेर तथा यहाँ बुझेर कि यिनलाई बुझाउने कोही पनि छैन, त्यहाँ नारदजीको साथसाथै महर्षि अङ्गिरा आइपुगे

॥६१॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां चतुर्दशोऽध्यायः ॥१४॥ (राजा चित्रकेतुलाई अङ्गिरा र देवर्षि नारदको उपदेश)—शुकदेवजी भन्दछन्—हे राजन् ! त्यहाँ पुगेर ती दुवै महर्षिले मृत बालकको नजीकै शोकग्रस्त दशामा मृतक जस्तै ढलिरहेका राजा चित्रकेतुलाई अनेक राम्रा-राम्रा युक्तिहरूले बुझाउँदै भने—॥१॥ हे राजन् ! जसको निम्ति तिमी यस प्रकार रोइरहेका छौ, यो बालक यस बखत यो भन्दा पहिले र यस पछिका जन्ममा तिम्रो को थियो र तिमी यसका को थियौ ?॥२॥ जस्तै जलको तेज वेगले बालुवा आदि कहिले एकत्रित हुन्छ र कहिले छुट्टिन्छ पनि, त्यस्तै नै विभिन्न जीवहरू कालक्रमले कहिले कहीं मिल्दछन् र कहिले छुट्टिएर जान्छन् ॥३॥ जस्तै—केही बीजहरूद्वारा अन्य बीज उत्पन्नछन् र फेरि विलीन पनि हुन्छन्, त्यसै गरी भगवानको मायाले प्रेरित केही प्राणीहरूभन्दा अन्य प्राणी उत्पन्न हुँदै र नष्ट हुँदै जान्छन् ॥४॥ हे राजन् ! हामी र यी अतिरिक्त पनि चराचर जीवहरू यस समय छन्, यी सबै जस्तै आफ्नो जन्मभन्दा पूर्व तथा मरणभन्दा पछि रहन्छन् । त्यस्तै वर्तमान कालमा पनि छैनन् भन्ने जान ॥५॥ कुनै इच्छा नभए पनि अजन्मा

मनायकम् ॥ ज्ञात्वाऽङ्गिरा नाम मुनिराजगाम सनारदः ॥ ६१ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे चित्रकेतुविलापो नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥ श्रीशुक उवाच ॥ ऊचतुर्मृतकोपान्ते पतितं मृतकोपमम् ॥ शोकाभिभूतं राजानं बोधयन्तौ सदुक्तिभिः ॥ १ ॥ कोऽयं स्यात्तव राजेन्द्र भवान्यमनुशोचति ॥ त्वं चास्य कतमः सृष्टौ पुरेदानीमतः परम् ॥ २ ॥ यथा प्रयान्ति सततं स्रोतोवेगेन बालुकाः ॥ संयुज्यन्ते वियुज्यन्ते तथा कालेन देहिनः ॥ ३ ॥ यथा धानासु वै धाना भवन्ति न भवन्ति च ॥ एवं भूतेषु भूतानि चोदितानीशमायया ॥ ४ ॥ वयं च त्वं च ये चेमे तुल्यकालाश्चराचराः ॥ जन्ममृत्योर्यथा पश्चात्प्रागेवमधुनापि भोः ॥ ५ ॥ भूतैर्भूतानि भूतेशः सृजत्यवति हन्त्यजः ॥ आत्मसृष्टैरस्वतन्त्रैरनपेक्षोऽपि बालवत् ॥ ६ ॥ देहेन देहिनो राजन्देहाद्देहोऽभिजायते ॥ बीजादेव यथा बीजं देह्यर्थ इव शाश्वतः ॥ ७ ॥ देहदेहिविभागोऽयमविवेककृतः पुरा ॥ जातिव्यक्तिविभागोऽयं यथा वस्तुनि कल्पितः ॥ ८ ॥ श्रीशुक उवाच ॥ एवमाश्वासितो राजा चित्रकेतुर्द्विजोक्तिभिः ॥ प्रमृज्य पाणिना वक्त्रमाधिम्लानमभाषत ॥ ९ ॥ राजोवाच ॥ कौ युवां ज्ञानसम्पन्नौ महिष्ठौ च महीयसाम् ॥ अवधूतेन वेषेण गूढाविह समागतौ ॥ १० ॥ चरन्ति ह्यवनौ कामं ब्राह्मणा भगवत्प्रियाः ॥ मादृशां ग्राम्यबुद्धीनां बोधायोन्मत्तलिङ्गिनः ॥ ११ ॥ कुमारो

परेश्वर बालक जस्तै केवल खेलको निम्ति आफूले रचेका परतन्त्र जीवद्वारा अन्य जीवहरूको उत्पत्ति, पालन तथा संहार गर्दछ ॥६॥ हे राजन् ! जस्तै यौटा बीजबाट अर्को बीज उत्पन्न हुन्छ, त्यस्तै नै देही अर्थात् पिताको देहद्वारा आमाको देहबाट देही अर्थात् पुत्रको शरीर उत्पन्न हुन्छ । ती सबैबाट देही घटादि कामहरूमा पृथ्वी जस्तै नित्य छ ॥७॥ हे राजन् ! जस्तै यौटै नै वस्तुमा घटत्वादि जाति तथा घट आदिको व्यक्तिको विभाग केवल कल्पना मात्र हो, त्यस्तै नै देही तथा देहको विभाग पनि अनादि एवं अविद्या-कल्पित जान्नुहवस्॥८॥ श्रीशुकदेवजी भन्दछन्—हे राजन् ! यस प्रकारका ब्राह्मण-वाक्यले केही आश्वासन पाएपछि राजा चित्रकेतुले मानसिक व्यथाले गर्दा आफ्नो मलीन मुखको आँसु हातले पुछेर सोधे॥९॥ राजा भन्दछन्—हजुर दुवैजना को हुनुहुन्छ ? हजुर त ज्ञानवान् र महान देखिनुहुन्छ र अवधूतवेशमा आफूलाई लुकाएर यहाँ पाल्नुभएको हो ॥१०॥ अनेक भगवत्-प्रिय ब्राह्मण मजस्ता

विषयासक्त बुद्धि हुने पुरुषहरूलाई उपदेश दिनको निम्ति उन्मत्त जस्तै पृथिवीमा स्वतन्त्ररूपले विचरण गर्दै रहन्छन् ॥११॥ सनत्कुमार, नारद, ऋभु, अंगिरा, देवल र जसको हृदयको अज्ञानरूपी अन्धकार नष्ट भइसकेको थियो, ती व्यासजी, मार्कण्डेय, गौतम, वसिष्ठ, भगवान् परशुराम, कपिल, शुकदेवजी, दुर्वासा, असित, याज्ञवल्क्य, जातूकर्ण्य, आरुणि, रोमश, च्यवन, दत्तात्रय, आसुर, पतञ्जलि ऋषि वेदशिरा, बोध्यमुनि, पञ्चशिरा, हिरण्यनामा कौशल्य, श्रुतदेव, ऋतध्वज–यी सबै तथा अरु पनि अनेकानेक ज्ञानदाता सिद्धेश्वर पृथ्वीमा डुलिरहन्छन् ॥१२-१५॥ अतएव हे प्रभो ! ग्राम्य विषयमा अल्झेको म मूढबुद्धि पशुलाई, जो अतिशय घोर अज्ञानान्धकारमा डुबेको छ, हजुर आफ्नो ज्ञानदीप देखाउनोस् ॥१६॥ अङ्गिरा ऋषि भन्दछन्–हे राजन् ! जब तिमी छोरो प्राप्त गर्न आतुर थियौ तब जसले तिमीलाई पुत्र दिएका थिए, म उही अंगिरा ऋषि हुँ र यी साक्षात् ब्रह्माजीका छोरा भगवान् नारद हुन् ॥१७॥ हे नृप! तिमी पुत्रशोकले गर्दा तरिनसक्नु अन्धकारमा डुबेका छौ। तिमी भगवद्भक्त हौ। अतः शोक गर्नको योग्य छैनौ–यही विचारेर तिमीमाथि कृपा गर्नका लागि

नारद ऋभुरङ्गिरा देवलोऽसितः ॥ अपान्तरतमा व्यासो मार्कण्डेयोऽथ गौतमः ॥ १२ ॥ वसिष्ठो भगवान् रामः कपिलो बादरायणिः ॥ दुर्वासा याज्ञवल्क्यश्च जातूकर्ण्यस्तथाऽऽरुणिः ॥ १३ ॥ रोमशश्च्यवनो दत्त आसुरिः सपतञ्जलिः ॥ ऋषिर्वेदशिरा बोध्यो मुनिः पञ्चशिरास्तथा ॥१४॥ हिरण्यनाभः कौसल्यः श्रुतदेव ऋतध्वजः ॥ एते परे च सिद्धेशाश्चरन्ति ज्ञानहेतवः ॥ १५ ॥ तस्माद्युवां ग्राम्यपशोर्मम मूढधियः प्रभु ॥ अन्धे तमसि मग्नस्य ज्ञानदीप उदीर्यताम् ॥ १६ ॥ अहं ते पुत्रकामस्य पुत्रदोऽस्म्यङ्गिरा नृप ॥ एष ब्रह्मसुतः साक्षान्नारदो भगवानृषिः ॥१७॥ इत्थं त्वां पुत्रशोकेन मग्नं तमसि दुस्तरे ॥ अतदर्हमनुस्मृत्य महापुरुषगोचरम् ॥ १८ ॥ अनुग्रहाय भवतः प्राप्तावावामिह प्रभो ॥ ब्रह्मण्यो भगवद्भक्तो नावसीदितुमर्हति ॥ १९ ॥ तदेव ते वरं ज्ञानं ददामि गृहमागतः ॥ ज्ञात्वाऽन्याभिनिवेशं ते पुत्रमेव ददावहम् ॥ २० ॥ अधुना पुत्रिणां तापो भवतैवानुभूयते ॥ एवं दारा गृहा रायो विविधैश्वर्यसम्पदः ॥ २१ ॥ शब्दादयश्च विषयाश्चला राज्यविभूतयः ॥ मही राज्यं बलं कोशो भृत्या-मात्याः सुहृज्जनाः ॥ २२ ॥ सर्वेऽपि शूरसेनेमे शोकमोहभयार्तिदाः ॥ गन्धर्वनगरप्रख्याः स्वप्नमायामनोरथाः ॥ २३ ॥ दृश्यमाना विनाऽर्थेन न दृश्यन्ते मनोभवाः ॥ कर्मभिर्ध्यायतो नानाकर्माणि मनसोऽभवन् ॥ २४ ॥ अयं हि देहिनो देहो द्रव्यज्ञानक्रियात्मकः ॥ देहिनो विविधक्लेश-

नै हामी यहाँ आएका हौं। तिमी ब्राह्मण-भक्त तथा भगवद्भक्त छौ। तिमीले यस्तो खेद गर्नु उचित होइन ॥१८-१९॥ हे राजन् ! जब म पहिले आएको थिएँ त्यसैबेला तिमीलाई ज्ञानोपदेश दिने थिएँ, तर त्यस बखत तिम्रो मनमा अर्कै अभिलाषा अर्थात् पुत्रको कामना देखेर मैले तिमीलाई छोरो दिएँ ॥ २० ॥ अब तिमीले स्वयं छोरा हुनेहरूको कष्ट अनुभव गरिसकेका छौ। स्त्री, धन विविध प्रकारका ऐश्वर्यहरू, सम्पत्ति, शब्दादि विषय, वैभव, पृथिवी, राज्य, सेना, कोश, भृत्य, अमात्य तथा सुहृद्-जन–यी सबै नाशवान छन्॥२१-२२॥ हे शूरसेनदेशका स्वामी ! यी सबै गन्धर्वनगर स्वप्न, माया एवं मनले कल्पित पदार्थहरूको समान असल तथा मोह, भय एवं कष्टदायक छन् ॥२३॥ यी सबै दृश्य पदार्थ मनले कल्पित अर्थात् मिथ्या हुन्। किनकि यी वास्तविक स्वरूपको बिना नै भासमान भइरहेका छन् ! यसै निम्ति यी क्षणमै लोप भएर जान्छन्। हे नृप ! जो मानिस कर्म वासनाद्वारा प्रेरित भएर

विषयको चिन्तन गर्दछन्, उनकै मनमा विविध कम उत्पन्न हुन्छन् ।।२४।। जीवात्माको यो शरीर जुन पञ्चभूत, ज्ञानेन्द्रिय र कर्मेन्द्रियका समुदाय हुन्, यही त्यसको निम्ति क्लेश र सन्तापदायक छ ।।२५।। अतः तिमी शान्त-चित्तले आत्मस्वरूपको चिन्तन गरेर यस द्वैत-भ्रममा नित्यत्वबुद्धि त्यागेर शान्ति प्राप्त गर ।।२६।। श्रीनारद भन्दछन्–हे राजन् ! तिमी मन एकाग्र पारेर ममित यो मन्त्रोपनिषद् ग्रहण गर । यो धारण गरेर तिमी सात रात्रिमा नै संकर्षण भगवान्‌को दर्शन प्राप्त गर्नेछौ ।।२७।। हे इन्द्र ! जुन संकर्षणको चरणीतलको सहारा लिएर पूर्वकालमा भगवान् शंकर आदि योगी भेद-भ्रम त्यागेर शीघ्र अत्यधिक महिमा प्राप्त गरिसकेका छन् । उनकै प्रभावले तिमी पनि शीघ्र परमपद पाउँछौ ।।२८।। इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां पञ्चदशोऽध्यायः ।।१५।। ( देवर्षि नारदको उपदेशले राजा चित्रकेतुलाई संकर्षणको दर्शन हुनु )—शुकदेवजी भन्दछन्–हे राजन् ! त्यसपछि देवर्षि नारदले त्यो मरेको राजकुमारको शोकाकुल स्वजनहरूका समक्ष डाकेर त्योसित भने ।।१।। नारदजी भन्दछन्–हे जीवात्मन् ! तिम्रो मङ्गल होस् । यतातिर हेर,

सन्तापकृदुदाहृतः ॥ २५ ॥ तस्मात्स्वस्थेन मनसा विमृश्य गतिमात्मनः ॥ द्वैते ध्रुवार्थविश्रम्भं त्यजोपशममाविश ॥ २६ ॥ नारद उवाच ॥ एतां मन्त्रोपनिषदं प्रतीच्छ प्रयतो मम ॥ यां धारयन्सप्तरात्राद्‌द्रष्टा संकर्षणं प्रभुम् ॥ २७ ॥ यत्पादमूलमुपसृत्य नरेन्द्र पूर्वे शर्वादयो भ्रममिमं द्वितयं विसृज्य ॥ सद्यस्तदीयमतुलानधिकं महित्वं प्रापुर्भवानपि परं न चिरादुपैति ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे चित्रकेतुसान्त्वनं नाम पञ्चदशोऽध्यायः ॥ १५ ॥ श्रीशुक उवाच ॥ अथ देवऋषी राजन्संपरेतं नृपात्मजम् ॥ दर्शयित्वेति होवाच ज्ञातीनामनुशोचताम् ॥ १ ॥ नारद उवाच ॥ जीवात्मन्पश्य भद्रं ते मातरं पितरं च ते ॥ सुहृदो बान्धवास्तप्ताः शुचा त्वत्कृतया भृशम् ॥ २ ॥ कलेवरं स्वमाविश्य शेषमायुः सुहृद्वृतः ॥ भुङ्क्ष्व भोगान्पितृप्रत्तानधितिष्ठ नृपासनम् ॥ ३ ॥ जीव उवाच ॥ कस्मिञ्जन्मन्यमी मह्यं पितरो मातरोऽभवन् ॥ कर्मभिर्भ्राम्यमाणस्य देवतिर्यङ्नृयोनिषु ॥ ४ ॥ बन्धुज्ञात्यरिमध्यस्थमित्रोदासीनविद्विषः ॥ सर्व एव हि सर्वेषां भवन्ति क्रमशो मिथः ॥ ५ ॥ यथा वस्तूनि पण्यानि हेमादीनि ततस्ततः ॥ पर्यटन्ति नरेष्वेवं जीवो योनिषु कर्तृषु ॥ ६ ॥ नित्यस्यार्थस्य सम्बन्धो ह्यनित्यो दृश्यते नृषु ॥ यावद्यस्य हि सम्बन्धो ममत्वं तावदेव हि ॥ ७ ॥ एवं योनिगतो जीवः स नित्यो निरहंकृतः ॥ यावद्यत्रोपलभ्येत तावत्स्वत्वं हि तस्य तत् ॥ ८ ॥ एष नित्योऽव्ययः

तिम्रा यी माता-पिता, सुहृद् तथा सबै बन्धु-बान्धव तिम्रो निम्ति शोकाकुल भइरहेका छन् ।।२।। अतएव तिमी शीघ्र आफ्नो शरीरमा प्रवेश गरेर शेष आयुले आफ्ना यी बन्धुजनका साथ पितृप्रदत्त सुख भोग र राजसिंहासनलाई सुशोभित पार ।।३।। जीवले भन्यो—म आफ्नू कर्मवश देव, मनुष्य तथा तिर्यगादि अनेक योनिहरूमा डुल्दै रहें । तीमध्ये एक जन्ममा यी मेरा माता-पिता भए ।।४।। जीवका विभिन्न जन्ममा क्रमशः सबैका बन्धु, ज्ञाति, शत्रु, मध्यस्थ, मित्र, उदासीन र द्वेषी हुँदैरहन्छन् ।।५।। जस्तै सुवर्णादि क्रय-विक्रयका वस्तुहरू व्यवहारशील मनुष्यहरूमा जुनसुकैको नजीक आउँदै जाँदै रहन्छन्, त्यस्तै जीव पनि विभिन्न योनिहरूमा उत्पन्न हुँदैरहन्छ ।।६।। यसप्रकार सुवर्णादि वस्तुहरूको सम्बन्ध पनि मनुष्यहरूमा अनित्य नै देखिन्छ र जबसम्म जसको सम्बन्ध बनिरहन्छ, तबसम्म उसमा त्यसको ममता अर्थात् 'मेरो' भन्ने भाव पनि रहिरहन्छ ।।७।। यस प्रकार नित्य

तथा निरहङ्कारी जीव गर्भमा गएर जबसम्म शरीरमा रहन्छ, त्यसै बेलासम्म त्यस जीवको शरीरमा मोह रहिरहन्छ॥८॥ यो जीव नित्य, अविनाशी र सूक्ष्म अर्थात् जन्मादिरहित छ र स्वयं प्रकाशशील हुनाका कारणले सबैको अधिष्ठान छ । यो आफ्नो सर्वसमर्थ मायाका गुणले स्वयं आफूलाई विश्वरूपले उत्पन्न गर्दछ ॥९॥ यसको न कुनै प्रिय,छ, न अप्रिय छ र न कुनै आफ्नो न कोही बिरानो छ किनकि आफ्नो हित तथा अहित गर्ने भएका मित्र या शत्रु आदिको बुद्धिहरूको यही एकमात्र मित्र छ ॥१०॥ यो आत्मा कार्य-कारणको साक्षी तथा स्वतन्त्र छ । अतएव यो गुण, दोष अथवा स्वरूप-फललाई ग्रहण गर्दैन र सधैँ उदासीन-भावले स्थित रहन्छ ॥ ११ ॥ श्रीशुकदेवजी भन्नुहुन्छ–यति भनेर त्यो जीव त्यहाँबाट गयो, अनि त्यसका जाति बन्धुहरूले विस्मितभावले आफ्नो स्नेह-बन्धन काटिदिए र शोक त्यागिदिए ॥ १२ ॥ अनि ती सगोत्रीहरूले ज्ञातिभूत त्यो मृत बालकको देहको तत्काल उचित संस्कार गरे र त्यसपछि गरिने योग्य और्ध्वदैहिक क्रियाहरू सम्पन्न गरिए । अनि फेरि शोक, मोह, भय तथा दीनता उत्पन्न गर्ने त्यागिनसक्नु स्नेह

सूक्ष्म एष सर्वाशयः स्वदृक् ॥ आत्ममायागुणैर्विश्वमात्मानं सृजते प्रभुः ॥ ९ ॥ न ह्यस्यातिप्रियः कश्चिन्नाप्रियः स्वः परोऽपि वा ॥ एकः सर्वधियां द्रष्टा कर्तॄणां गुणदोषयोः ॥ १० ॥ नादत्त आत्मा हि गुणं न दोषं न क्रियाफलम् ॥ उदासीनवदासीनः परावरदृगीश्वरः ॥ ११ ॥ श्रीशुक उवाच ॥ इत्युदीर्य गतो जीवो ज्ञातयस्तस्य ते तदा ॥ विस्मिता मुमुचुः शोकं छित्त्वात्मस्नेहशृङ्खलाम् ॥१२॥ निर्हृत्य ज्ञातयो ज्ञातेर्देहं कृत्वोचिताः क्रियाः ॥ तत्यजुर्दुस्त्यजं स्नेहं शोकमोहभयार्तिदम् ॥१३॥ बालघ्न्यो व्रीडितास्तत्र बालहत्याहतप्रभाः ॥ बालहत्याव्रतं चेरुर्ब्राह्मणैर्यन्निरूपितम् ॥ यमुनायां महाराज स्मरन्त्यो द्विजभाषितम् ॥ १४ ॥ स इत्थं प्रतिबुद्धात्मा चित्रकेतुर्द्विजोक्तिभिः ॥ गृहान्धकूपान्निष्क्रान्तः सरःपंकादिव द्विपः ॥१५॥ कालिन्द्यां विधिवत्स्नात्वा कृतपुण्यजलक्रियः ॥ मौनेन संयतप्राणो ब्रह्मपुत्राववन्दत ॥ १६ ॥ अथ तस्मै प्रपन्नाय भक्ताय प्रयतात्मने ॥ भगवान्नारदः प्रीतो

त्यागिदिए ॥१३॥ हे राजन् ! त्यसपछि बालहत्याले हतप्रभ एवं लज्जित ती बालघातिनी रानीहरूले अङ्गिराले भनेका कुरा स्मरण गर्दै यमुनाको तटमा ब्राह्मणहरूका कथनानुसार बाल-हत्याको प्रायश्चित्त गरे ॥१४॥ यस प्रकार अङ्गिरा तथा नारदजीका उपदेशले आत्मज्ञान प्राप्त भएपछि राजा चित्रकेतु हिलोमा गाडिएको हात्ती निस्केर आए झैं गृहरूपी अन्धकारबाट निस्केर आए॥ ॥१५॥ फेरि उनले यमुनाजीमा विधिवत् स्नान गरेर तर्पणादि जलक्रिया गरे र मौन धारण गरी संयतेन्द्रिय भई ती ब्रह्माजीका पुत्र अर्थात् नारद र अङ्गिरालाई प्रणाम

उदाहरण—( नाम्लो होइन, क्याम्री )—कुनै राजासित यौटा ठूलो ऊँट थियो । जब कुनै उत्सवको समय हुन्थ्यो वा कुनै जुलुस निस्कन्थ्यो तब त्यही ऊँटको पिठिउँमा ठूलो-ठूलो क्याम्री राखेर बजाइने गर्दथ्यो ! समय बितेर ऊँट बूढो भयो । त्यसको हालतमा दया लागेर राजाले हुकुम दिए-'अब यो ऊँट द्वारा कुनै पनि काम नलिई छाडा चर्न छाडिदिनु ।' त्यहाँबाट फुकुवा भएपछि त्यो मनपरि कहाँदाले डुल्न र चर्न लाग्यो । एक दिन डुल्दै-फिर्दै त्यो यौटा गाउँमा पुग्यो । त्यहाँ यौटी बुढाले आफ्नो घरको पर बाहिर आँगनमा सुकाउन भनी अन्न फिजाएकी थिई । बाटोमा ऊँटको दृष्टि त्यस अन्नमा पर्‍यो । अनि त्यसले बाटोबाट नै आफ्नो लामो गर्दन बढायो । अन्न सुकाउने बुढा खाने कुरा फर्काउँदै थिई । त्यस ऊँटको धृष्टता देखेर यौटा हातमा नाम्लो र अर्कोमा बल्दो अगुल्टो लिएर घरको बाहिर निस्की र नाम्लो ठटाइ ठटाइ ऊँटलाई भगाउन लागी । तर ऊँटलाई त्यस नाम्लोको धम्कीले केही असर पारेन र डर पनि मानेन । त्यो डटेर मनपरि अन्न खाँदै रह्यो । जब त्यो बुढा ऊँटलाई भगाउँदा भगाउँदा हारी, तब ऊँटले भन्यो- स्वयं किन दुःख गरिरहेकी छौ आमै, तिमी ! म तिमीले नाम्लो ठटाएर किन डराउँथें ! मेरो पिठिउँमा जन्मभरि क्याम्री बजिसकेको छ ।' सोच्नै हो-जुन प्राणीले ठूला-ठूला कष्ट भोगिसकेको छ, त्यसको निम्ति साना कष्टले के गर्न सक्दछन् !

गरे ॥१६॥ भगवान् नारदले प्रपन्न मनले ती शरणागत तथा संयत चित्त भक्तलाई यस मन्त्रको उपदेश दिए–॥१७॥ 'ॐ हजुर भगवान् वासुदेवलाई म हृदयले नमस्कार गर्दछु। प्रद्युम्न, अनिरुद्ध तथा सङ्कर्षण-रूपधारी हजुरलाई मेरो नमस्कार छ ॥१८॥ विशुद्ध ज्ञानमात्र परमानन्द-स्वरूप आत्मराम द्वैत दृष्टिबाट रहित र शान्तस्वरूप हजुर परमेश्वरलाई मेरो प्रणाम छ ॥१९॥ स्वरूपानन्दको अनुभवले मायाका रागद्वेषादि तरङ्गहरूलाई शान्त पारिदिने इन्द्रियहरूका स्वामी, परम महान् तथा विश्वरूप हजुरलाई म नमस्कार गर्दछु ॥२०॥ अहो ! जसलाई पाउन नसकी मन सहित वाणी फर्केर आउँदछ। ती नाम रूपले रहित, एक, चिन्मात्र तथा कार्य-कारणले नमेट्ने हजुर हाम्रो रक्षा गर्नोस् ॥२१॥ सम्पूर्ण जगत् जसमा व्याप्त छ र जसद्वारा यो उत्पन्न, स्थित तथा लीन हुन्छ र जो माटाका वस्तुहरूमा व्याप्त माटो जस्तै सबैमा लिप्त रहन्छ, ती परब्रह्म स्वरूप नारायण भगवान्लाई नमस्कार छ ॥२२॥ आकाश सदृश बाहिर-भित्र व्याप्त रहेर पनि जसलाई मन, बुद्धि, इन्द्रियहरू तथा प्राण न स्पर्श गर्न सक्तछन्, र न जान्न नै सक्तछन्, त्यस्ता हजुरलाई म प्रणाम गर्दछु ॥२३॥ जसको

विद्यामेतामुवाच ह ॥१७॥ ॐ नमस्तुभ्यं भगवते वासुदेवाय धीमहि ॥ प्रद्युम्नायानिरुद्धाय नमः संकर्षणाय च ॥ १८ ॥ नमो विज्ञानमात्राय परमा-
नन्दमूर्तये ॥ आत्मारामाय शान्ताय निवृत्तद्वैतदृष्टये ॥ १९ ॥ आत्मानन्दानुभूत्यैव न्यस्तशक्त्यूर्मये नमः ॥ हृषीकेशाय महते नमस्ते विश्वमूर्तये
॥२०॥ वचस्युपरतेऽप्राप्य य एको मनसा सह ॥ अनामरूपश्चिन्मात्रः सोऽव्यान्नः सदसत्परः ॥ २१ ॥ यस्मिन्निदं यतश्चेदं तिष्ठत्यप्येति जायते ॥
मृन्मयेष्विव मृज्जातिस्तस्मै ते ब्रह्मणे नमः ॥ २२ ॥ यन्न स्पृशन्ति न विदुर्मनोबुद्धीन्द्रियासवः ॥ अन्तर्बहिश्च विततं व्योमवत्तं नतोऽस्म्यहम्
॥ २३ ॥ देहेन्द्रियप्राणमनोधियोऽमी यदंशविद्धाः प्रचरन्ति कर्मसु ॥ नैवान्यदा लोहमिवाप्रतप्तं स्थानेषु तद्द्रष्ट्रपदेशमेति ॥२४॥ ॐ नमो भगवते
महापुरुषाय महानुभावाय महाविभूतिपतये सकलसात्वतपरिवृढनिकरकमलकुड्मलोपलालितचरणारविन्दयुगल परम परमेष्ठिन्नमस्ते ॥ २५ ॥
श्रीशुक उवाच ॥ भक्तायैतां प्रपन्नाय विद्यामादिश्य नारदः ॥ ययावंगिरसा साकं धाम स्वायम्भुवं प्रभोः ॥ २६ ॥ चित्रकेतुस्तु विद्यां तां यथा
नारदभाषिताम् ॥ धारयामास सप्ताहमब्भक्षः सुसमाहितः ॥ २७ ॥ ततश्च सप्तरात्रान्ते विद्यया धार्यमाणया ॥ विद्याधराधिपत्यं स लेभेऽप्रति-
हतं नृपः ॥ २८ ॥ ततः कतिपयाहोभिर्विद्ययेद्धमनोगतिः ॥ जगाम देवदेवस्य शेषस्य चरणान्तिकम् ॥ २९ ॥ मृणालगौरं शितिवाससं स्फुर-

चैतन्य-शक्तिले युक्त भएर यो देह, इन्द्रिय, प्राण, मन तथा बुद्धि आदि आफाफ्ना कार्यमा प्रवृत्त हुन्छन् र जो नभई अग्निमा नतताएको फलामसमान क्यै गर्न सक्तैनन्, त्यस आत्माको नै जाग्रदादि अवस्थाका साक्षीस्वरूपले जीव संज्ञा हुन्छ ॥ २४ ॥ ॐ हे भगवन् ! महाविभूतिपनि भगवान् महापुरुषलाई प्रणाम छ। जसका दुवै चरण सबै श्रेष्ठ भक्तहरूका ठूलो समुदायको कर-कमल-कलिकाहरूले सेवित छन्, ती परम परमेष्ठीलाई पुनः पुनः प्रणाम छ ॥ २५ ॥ श्रीशुकदेवजी भन्नुहुन्छ–हे राजन् ! यस प्रकार आफ्ना शरणागत एवं भक्त राजा चित्रकेतु यस विद्याको उपदेश दिएर नारदजी, अंगिरा मुनिको साथमा आफ्नो धाम ब्रह्मलोक फर्किए ॥२६॥ अनि राजा चित्रकेतुले नारदजीले बताएका विद्याको उनले भनेका युक्ति-हरूले सात दिनसम्म केवल पानी पिएर संयत-चित्त भई अनुष्ठान गरे ॥२७॥ त्यस मन्त्रको अनुष्ठानले सात रातसम्म गरेपछि राजा चित्रकेतुलाई विद्याधरहरूको अप्रतिहत प्रभुत्व प्राप्त भयो

॥ २८॥ केही दिनपछि त्यस विद्याको प्रभावले मनको गति अझ बढेर गएपछि राजा चित्रकेतु भगवान् शेषजीका चरणमा पुग्नगए ॥२९॥ तिनले त्यहाँ देखे–भगवान् शेषजी अगणित सिद्धेश्वरहरुले घेरिएका छन् उनको शरीर कमल-नालको समान गौर वर्णको छ। त्यसमाथि नीलाम्बर झलमलाउँदो किरीट, केयूर, कटिसूत्र र कङ्कणादि भूषण शोभित छन्! उनको मुख प्रसन्न छ र नेत्र अरुण वर्णका छन् ॥३०॥ यस प्रकार शेष भगवान्को दर्शन गर्नासाथ राजा चित्रकेतुका सबै पाप नष्ट भए। तिनको अन्तःकरण शुद्ध र निर्मल भयो, उनले आफ्नो बढिरहेको भक्तिभाव द्वारा प्रेमाश्रु भरेर पुलकित शरीरले भगवान् आदिपुरुषलाई प्रणाम गरे ॥ ३१ ॥ अनि ती आफ्ना प्रेमाश्रुबिन्दुहरुले पवित्र कीर्ति भगवान् शेषजीको पादपीठलाई बारम्बार सिंच्नलागे। त्यो प्रेमोद्वेगवश कण्ठ अवरुद्ध हुनाले गर्दा ती धेरै बेरसम्म उनको स्तुति गर्न पाएनन् ॥ ३२ ॥ अनि जब उनलाई बोल्ने शक्ति मिल्यो, तब बुद्धि र मनको एकाग्रता पारी था सम्पूर्ण इन्द्रियहरुको बाह्य-वृत्ति रोकेर उसको स्वरूपको पञ्चरात्र आदि भक्ति-शास्त्रमा वर्णन गरिएको छ, ती जगद्गुरुको यसरी स्तुति। गरे चित्रकेतु

त्किरीटकेयूरकटित्रकङ्कणम् ॥ प्रसन्नवक्त्रारुणलोचनं वृतं ददर्श सिद्धेश्वरमण्डलैः प्रभुम् ॥ ३० ॥ तद्दर्शनध्वस्तसमस्तकिल्बिषः स्वच्छामलान्तः-करणोऽभ्ययान्मुनिः ॥ प्रवृद्धभक्त्या प्रणयाश्रुलोचनः प्रहृष्टरोमाऽनमदादिपूरुषम् ॥ ३१ ॥ स उत्तमश्लोकपदाब्जविष्टरं प्रेमाश्रुलेशैरुपमेहयन्मुहुः ॥ प्रेमोपरुद्धाखिलवर्णनिर्गमो नैवाशकत्तं प्रसमीडितुं चिरम् ॥ ३२ ॥ ततः समाधाय मनो मनीषया बभाष एतत्प्रतिलब्धवानसौ ॥ नियम्य सर्वेन्द्रियबाह्यवर्तनं जगद्गुरुं सात्वतशास्त्रविग्रहम् ॥३३॥ चित्रकेतुरुवाच ॥ अजित जितः सममतिभिः साधुभिर्भवान् जितात्मभिर्भवता ॥ विजितास्तेऽपि च भजतामकामात्मनां य आत्मदोऽतिकरुणः ॥३४॥ तव विभवः खलु भगवन् जगदुदयस्थितिलयादीनि ॥ विश्वसृजस्तेऽंशांशास्तत्र मृषा स्पर्धन्ते पृथगभिमत्या ॥३५॥ परमाणुपरममहतोस्त्वमाद्यन्तान्तर्वर्ती त्रयविधुरः ॥ आदावन्तेऽपि च सत्त्वानां यद् ध्रुवं तदेवान्तरालेऽपि ॥ ३६ ॥ क्षित्यादिभिरेष किलावृतः सप्तभिर्दशगुणोत्तरैरण्डकोशः ॥ यत्र पतत्यणुकल्पः सहाण्डकोटिकोटिभिस्तदनन्तः ॥ ३७ ॥ विषयतृषो नरपशवो य उपासते विभूतीर्न परं त्वाम् ॥ तेषामाशिष ईश तदनु विनश्यन्ति यथा राजकुलम् ॥ ३८ ॥ कामधियस्त्वयि रचिता न परम रोहन्ति यथा करम्भबीजानि ॥

मन्दछन्–हे अजित! यद्यपि हजुर सबभन्दा अजेय हुनुहुन्छ, तापनि समदर्शी तथा जितेन्द्रिय सज्जनले हजुरलाई जिते र हजुरले पनि उनलाई आफ्नो वशमा राख्नुभएको छ। हजुर दयालु हुनुहुन्छ, किनकि भक्तजनलाई हजुर आफ्नो स्वरूपसम्म दिनुहुन्छ ॥३३॥३४॥ हे भगवन्! यस संसारको उत्पत्ति-स्थिति तथा लय आदि काम हजुरकै लीलाहरू हुन्। विश्वरचयिता ब्रह्मादि देवता हजुरकै अंश हुन्, तथापि 'म नै जगत्कर्ता हुँ' यस्तो भेदबुद्धि वश व्यर्थ परस्पर स्पर्द्धा गर्न थाल्दछन् ॥३५॥ परमाणु देखि लिएर अतिशय महान् महत्तत्त्वपर्यन्त सबै वस्तुहरूको आदि, अन्त तथा मध्यमा हजुर नै विराजमान रहनु हुन्छ, तापनि हजुर आदि अन्त तथा यी तीनै अवस्थादेखि रहित रहनु हुन्छ किनकि सत्य-स्वरूप हीं प्रतीत हुने यी सबै वस्तुहरूका आदि तथा अन्त्यमा जुन निश्चल तत्त्व छ, त्यही मध्यमा पनि रहन्छ ॥३६॥ जुन यौटादेखि अर्को दस गुना ठूलो पृथ्वी आदि सात आवरणले घेरिएको छ, त्यो ब्रह्माण्डकोश आफ्नै समान करोडौं ब्रह्माण्डसाथ परमाणु झैं घुम्दै रहन्छ। हजुर वास्तवमा अनन्त हुनुहुन्छ ॥ ३७ ॥ जुन मनुष्यरूपी पशु केवल विषय नै चाहन्छ,

ती हजुर जस्ता परमात्मालाई छाडेर हजुरका विभूतिस्वरूप इन्द्रादि अन्य देवताहरूको नै उपासना गर्दछन् । अतः राजकुलको पतन भएपछि त्यसका अनुयायीहरूको जीविका पनि नष्ट हुन्छ, ती क्षुद्र उपास्य देवताहरूको ह्रास भइसकेपछि उनले दिएका भोग पनि नष्ट हुन्छन् ॥ ३८ ॥ हे परमात्मन् ! हजुर ज्ञानस्वरूप तथा निर्गुण हुनुहुन्छ । अतः हजुरप्रति गरिएको विषय-सम्बन्धी माँग त्यस्तै कर्मफलदायिनी हुँदैनन , जस्तै–घुन लागेका बीजमा अंकुर निस्कन्न किनकि जीवलाई सुख-दुःखादि द्वन्द्व सत्वगुणबाट नै प्राप्त हुन्छ र हजुर निर्गुण हुनुहुन्छ, अनि कसरी मिल्ने ? ॥३९॥ हे अजित ! जब हजुरले मलाई विशुद्ध भागवत-धर्मको उपदेश दिनुभयो, त्यसैले हजुरले सबैलाई जित्नुभयो, किनकि अकिञ्चन र आत्माराम सनकादि मुनि मोक्ष प्राप्तिको निम्ति उही भागवत-धर्मको पालन गर्दछन् ॥ ४० ॥ भागवत धर्मको पालन गर्नमा अन्य सकाम धर्महरूको जस्तै मनुष्यहरूको 'तँ-म र-मेरो तेरो' भेदबुद्धि रहन सक्तैन । जुन धर्म विपरीत बुद्धिले रचना गरिएको हुन्छ, त्यो अशुद्ध हुन्छ, नाशवान् र अधर्मयुक्त हुन्छ ॥४१॥ यस प्रकार आफ्नो र विरानो दुवै थरिको अपकार गर्ने धर्मले आफ्नो र अर्काको पनि के प्रयोजन सिद्ध हुन सक्तछ ? बरु त्यस धर्मको आचरण गरेर आफ्नो चित्तलाई सन्ताप पार्नाले भगवान् रिसाउन हुन्छ र अर्कालाई कष्ट दिएको

ज्ञानात्मन्यगुणमये गुणगणतोऽस्य द्वन्द्वजालानि ॥३९॥ जितमजित तदा भवता यदाऽऽह भागवतं धर्ममनवद्यम् ॥ निष्किञ्चना ये मुनय आत्मारामा यमुपासतेऽपवर्गाय ॥ ४० ॥ विषममतिर्न यत्र नृणां त्वमहमिति मम तवेति च यदन्यत्र ॥ विषमधिया रचितो यः स ह्यविशुद्धः क्षयिष्णुरधर्म-बहुलः ॥ ४१ ॥ कः क्षेमो निजपरयोः कियानर्थः स्वपरद्रुहा धर्मेण ॥ स्वद्रोहात्तव कोपः परसंपीडया च तथाऽधर्मः ॥ ४२ ॥ न व्यभिचरति तवेक्षा यया ह्यभिहितो भागवतो धर्मः ॥ स्थिरचरसत्त्वकदम्बेष्वपृथग्धियो यमुपासते त्वार्याः ॥ ४३ ॥ न हि भगवन्नघटितमिदं त्वद्दर्शनान्नृणामखिलपापक्षयः ॥ यन्नाम सकृच्छ्रवणात्पुल्कसकोऽपि विमुच्यते संसारात ॥ ४४ ॥ अथ भगवन्वयमधुना त्वदवलोकपरिमृष्टाशय-मलाः ॥ सुरऋषिणा यदुदितं तावकेन कथमन्यथा भवति ॥ ४५ ॥ विदितमनन्तसमस्तं तव जगदात्मनो जनैरिहाचरितम् ॥ विज्ञाप्यं परमगुरोः कियदिव सवितुरिव खद्योतैः ॥ ४६ ॥ नमस्तुभ्यं भगवते सकलजगत्स्थितिलयोदयेशाय ॥ दुरवसितात्मगतये कुयोगिनां भिदा परमहंसाय ॥४७॥

हुनाले अधर्म पनि हुन्छ ॥ ४२ ॥ हे नाथ ! जुन दृष्टिले हजुरले भागवत धर्म भन्नुभयो, हजुरको त्यो दृष्टि कहिल्यै चुक्तैन । यसै निम्ति सबै चराचरजीव-समुदायमा जसको समानदृष्टि छ, ती आर्यजन नै त्यस धर्मको आचरण गर्दछन् ॥४३॥ हे भगवन् ! हजुरको दर्शनले नै मनुष्यहरूका सबै पाप नष्ट भएर जान्छन्, यो कुनै छक्क पर्ने कुरा होइन, किनकि हजुरको नाम केवल एकपल्ट सुन्नाले मात्र पनि चाण्डाल भए पनि सांसारिक बन्धनबाट मुक्त हुन्छ ॥४४॥ हे भगवन् ! यस बखत हजुरको दर्शनले नै हाम्रो अन्तःकरणको सबै मल पखालियो र यस्तो हुनै पर्दछ, किनकि हजुरका भक्त देवर्षि नारदले जे जति भनेका छन्, त्यो मिथ्या कसरी हुन सक्तछ ? ॥४५॥ हे अनन्त ! हजुर सम्पूर्ण जगतका आत्मा हुनुहुन्छ । अतः संसार-मा व्यक्ति जे जति गर्दछन्, त्यो सबै हजुरलाई ज्ञात नै छ । अतः जस्तै–सूर्यलाई खद्योत ( जूनकिरी ) ले प्रकाशित पार्न सक्तैन, त्यस्तै नै हजुर परम गुरुलाई हामी केही भन्न सक्तैनौं ॥४६॥ हे भगवन् ! हजुर सम्पूर्ण जगत्को उत्पत्ति, स्थिति तथा प्रलय गर्नमा समर्थ हुनुहुन्छ । कुयोगीजन आफ्नो भेद-दृष्टिले गर्दा हजुरको वास्तविक तत्त्वलाई जान्न सक्तैनन । यस

615

प्रकारका शुद्ध स्वरूप भगवान्‌लाई नमस्कार छ ॥४७॥ केवल हजुरका चेष्टाले नै ब्रह्मा आदि जगत्कर्ता चेष्टा गर्दछन् जसको दृष्टि पर्नाले नै ज्ञानेन्द्रिय आफ्ना विषय ग्रहण गर्दछन् र जसको मस्तकमा राखिएको भूमण्डल सरस्यूँको दानाजस्तै ज्ञान हुन्छ, ती भगवान् सहस्रशीर्षालाई हाम्रो नमस्कार छ ॥ ४८ ॥ श्रीशुकदेवजी भन्नुहुन्छ–हे कुरुनन्दन ! यसरी स्तुति गरिएपछि भगवान् अनन्त प्रसन्न भएर विद्याधराधिपति राजा चित्रकेतुसित भन्नुभयो ॥४९॥ श्रीशेष भगवान्‌ले आज्ञा भयो–नारद र अङ्गिरा मुनिले तिमीलाई मेरो विद्याको जुन उपदेश दिएका छन्, त्यस विद्याको प्रभाव र मेरो दर्शनले नै तिमी पूर्ण सिद्ध भइसक्यौ ॥ ५०॥ सबै प्राणीहरूको अन्तरात्मा र तिनको पालनकर्ता एकमात्र म नै हुँ । शब्दब्रह्म र परब्रह्म यी दुवै मेरो नै सनातन मूर्ति हुन् ॥५१॥ सबै प्रपञ्चमा आत्मा र आत्मामा प्रपञ्च व्याप्त छ । यी दुवैमा कारणरूपले म व्याप्त रहन्छु र ममा नै यी दुवै कल्पित भएका छन् ॥५२॥ जस्तै निदाएको पुरुष सपनामा जगत्‌लाई आफूमै देख्दछ र निद्रा भङ्ग भएपछि संसारको कुनै घाँटा देशमा आफ्नो स्थिति मान्दछ, त्यसै गरी जीवका जाग्रत आदि अवस्थाहरू मात्र परमेश्वरको

यं वै श्वसन्तमनु विश्वसृजः श्वसन्ति यं चेकितानमनु चित्तय उच्चकन्ति ॥ भूमण्डलं सर्षपायति यस्य मूर्ध्नि तस्मै नमो भगवतेऽस्तु सहस्रमूर्ध्ने ॥ ४८ ॥ श्रीशुक उवाच ॥ संस्तुतो भगवानेवमनन्तस्तमभाषत ॥ विद्याधरपतिं प्रीतश्चित्रकेतुं कुरूद्वह ॥ ४९ ॥ श्रीभगवानुवाच ॥ यन्नारदाङ्गिरोभ्यां ते व्याहृतं मेऽनुशासनम् ॥ संसिद्धोऽसि तया राजन्विद्यया दर्शनाच्च मे ॥ ५० ॥ अहं वै सर्वभूतानि भूतात्मा भूतभावनः ॥ शब्दब्रह्म परं ब्रह्म ममोभे शाश्वती तनू ॥ ५१ ॥ लोके विततमात्मानं लोकं चात्मनि संततम् ॥ उभयं च मया व्याप्तं मयि चैवोभयं कृतम् ॥ ५२ ॥ यथा सुषुप्तः पुरुषो विश्वं पश्यति चात्मनि ॥ आत्मानमेकदेशस्थं मन्यते स्वप्न उत्थितः ॥ ५३ ॥ एवं जागरणादीनि जीवस्थानानि चात्मनः ॥ मायामात्राणि विज्ञाय तद्द्रष्टारं परं स्मरेत् ॥ ५४ ॥ येन प्रसुप्तः पुरुषः स्वापं वेदात्मनस्तदा ॥ सुखं च निर्गुणं ब्रह्म तमात्मानमवेहि माम् ॥५५॥ उभयं स्मरतः पुंसः प्रस्वापप्रतिबोधयोः ॥ अन्वेति व्यतिरिच्येत तज्ज्ञानं ब्रह्म तत्परम् ॥ ५६ ॥ यदेतद्विस्मृतं पुंसो मद्भावं भिन्नमात्मनः ॥ ततः संसार एतस्य देहाद्देहो मृतेर्मृतिः ॥ ५७ ॥ लब्ध्वेह मानुषीं योनिं ज्ञानविज्ञानसंभवाम् ॥ आत्मानं यो न बुद्ध्येत न क्वचिच्छमाप्नुयात् ॥५८॥ स्मृत्वेहायां परिक्लेशं ततः फलविपर्ययम् ॥ अभयं चाप्यनीहायां संकल्पाद्विरमेत्कविः ॥ ५९ ॥ सुखाय दुःखमोक्षाय कुर्वाते

माया नै हुन्, यो जानेर ती सबैका साक्षी मायातीत परमात्माको स्मरण गरिरहनु पर्दछ ॥५३-५४॥ निदाएको पुरुष जसको सहायताले निद्रा तथा अतीन्द्रिय सुखको अनुभव गर्दछ, त्यो सबैको आत्मस्वरूप एकमात्र म नै हुँ—यस्तो जान ॥५५॥ जो निद्रा तथा जागृति यी दुवै नै अवस्थाहरूको स्मरण गराउने भएको तत्त्व ती अवस्थाहरूमा साक्षीरूपले विद्यमान रहन्छ र जो वास्तवमा तीबाट पृथक् छ, त्यो ज्ञान नै परब्रह्म हो ॥५६॥ मेरो परब्रह्मस्वरूपलाई जीव जब बिर्सिदिन्छ तब त्यो आफ्नो आत्मस्वरूपबाट पनि पृथक् भएर रहन्छ । यसै कारणले त्यसलाई बारम्बार संसार प्राप्त हुँदै रहन्छ र एक जन्म-मरणपछि अर्को जन्म-मरण बराबर प्राप्त भइरहन्छ ॥ ५७ ॥ यस लोकमा जो पुरुष ज्ञान-विज्ञानको प्राप्तिका कारणस्वरूप मानव जन्म पाएर पनि सबैका आत्मस्वरूप परमेश्वरलाई जान्दैन, त्यसलाई कहीं पनि शान्ति प्राप्त हुन सक्तैन ॥ ५८ ॥ पहिले त सांसारिक सुखका निमित्त गरिने

चेष्टाहरूमा नै क्लेश छ र त्यसको विपरीत फल पाइने सम्भावना रहिरहन्छ, तर निवृत्तिमार्गमा डुब्ने डर छैन—यस्तो विचार गरेर विवेकी पुरुषले त्यस फलको कामनाबाट एकदम निवृत्त होओस् ॥५९॥ यस संसारमा सबै स्त्री-पुरुष सुखको प्राप्ति र दुःखको निवृत्तिका लागि प्रयत्नशील रहन्छन्, किन्तु ती प्रयत्नहरू द्वारा न त तिनको दुःख नाश हुन्छ, न तिनलाई इच्छित सुख नै मिल्दछ ॥६०॥ जो आफूलाई ज्ञानी मान्दछन्, तिनलाई पनि यस्तै विपरीत फल प्राप्त हुन्छ । यो जानेर तथा आत्माको अतिसूक्ष्मगति, स्वप्न, सुषुप्ति, जाग्रदादि तीनै अवस्थाहरूबाट पृथक् छ—यस्तो मानेर पुरुष आफ्नो विवेक बलको द्वारा लौकिक र पारलौकिक भोगहरूबाट मुक्त तथा ज्ञान-विज्ञानले परितृप्त भएर सधैंको निम्ति मेरो भक्त बनोस् ॥६१॥ सबै इन्द्रिय द्वारा एकमात्र परमात्माको दर्शन गर्नु नै योगमार्गमा कुशलता प्राप्त गरेका बुद्धिवाला मनुष्यले आफ्नो सबभन्दा ठूलो पुरुषार्थ ठान्नु पर्दछ ॥६३॥ हे राजन् ! यदि तिमी मेरो यो उपदेश सावधान मनले श्रद्धासहित धारण गर्‍यौ भने ज्ञान-विज्ञानले युक्त भएर शीघ्र सिद्ध बन्न पाउने छौ ॥ ६४ ॥ श्रीशुकदेवजी भन्दछन्—

दम्पती क्रियाः ॥ ततोऽनिवृत्तिरप्राप्तिर्दुःखस्य च सुखस्य च ॥ ६० ॥ एवं विपर्ययं बुद्ध्वा नृणां विज्ञाभिमानिनाम् ॥ आत्मनश्च गतिं सूक्ष्मां स्थानत्रयविलक्षणाम् ॥ ६१ ॥ दृष्टश्रुताभिर्मात्राभिर्निर्मुक्तः स्वेन तेजसा ॥ ज्ञानविज्ञानसंतुष्टो मद्भक्तः पुरुषो भवेत् ॥ ६२ ॥ एतावानेव मनुजैर्योगनैपुणबुद्धिभिः ॥ स्वार्थः सर्वात्मना ज्ञेयो यत्परात्मैकदर्शनम् ॥ ६३ ॥ त्वमेतच्छ्रद्धया राजन्नप्रमत्तो वचो मम ॥ ज्ञानविज्ञानसंपन्नो धारयन्नाशु सिद्ध्यसि ॥ ६४ ॥ श्रीशुक उवाच ॥ आश्वास्य भगवानित्थं चित्रकेतुं जगद्गुरुः ॥ पश्यतस्तस्य विश्वात्मा ततश्चान्तर्दधे हरिः ॥ ६५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे चित्रकेतोः परमात्मदर्शनं नाम षोडशोऽध्यायः ॥ १६ ॥ श्रीशुक उवाच ॥ यतश्चान्तर्हितोऽनन्तस्तस्यै कृत्वा दिशे नमः ॥ विद्याधरश्चित्रकेतुश्चार गगनेचरः ॥ १ ॥ स लक्षं वर्षलक्षाणामव्याहतबलेन्द्रियः ॥ स्तूयमानो महायोगी मुनिभिः सिद्धचारणैः ॥ २ ॥ कुलाचलेन्द्रद्रोणीषु नानासङ्कल्पसिद्धिषु ॥ रेमे विद्याधरस्त्रीभिर्गापयन्हरिमीश्वरम् ॥ ३ ॥ एकदा स विमानेन विष्णुदत्तेन भास्वता ॥ गिरिशं ददृशे गच्छन्परीतं सिद्धचारणैः ॥ ४ ॥ आलिङ्ग्याङ्कीकृतां देवीं बाहुना मुनिसंसदि ॥ उवाच देव्याः शृण्वत्या जहासोच्चैस्तदन्तिके ॥ ५ ॥ चित्रकेतुरुवाच ॥ एष लोकगुरुः साक्षाद्धर्मवक्ता शरीरिणाम् ॥ आस्ते मुख्यः सभायां वै मिथुनीभूय भार्यया ॥ ६ ॥ जटाधरस्तीव्रतपा

हे राजन् ! जगद्गुरु तथा विश्वात्मा अनन्त भगवान् चित्रकेतुलाई यसरी बुझाएर उनको साामुन्ने नै त्यहाँबाट अन्तर्धान हुनुभयो ॥ ६५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां षोडशोऽध्यायः ॥१६॥ (विद्याधर चित्रकेतुलाई भवानीको श्राप)–शुकदेव भन्दछन्–हे राजन् ! जता भगवान् अन्तर्धान भएका थिए त्यस दिशालाई नमस्कार गरेर विद्याधर चित्रकेतु आकाशचारी भएर डुल्न लागे ॥१॥ महायोगी चित्रकेतु लाखौं वर्षसम्म शरीर र इन्द्रियहरूको अकुण्ठित शक्तिले सम्पन्न भएर मुनिजन, सिद्धगण र चारणादिले स्तूयमान भएर विविध प्रकारका सङ्कल्पलाई पूर्ण गर्ने कुलाचल पर्वतका कन्दराहरूमा विद्याधर-सुन्दरीद्वारा नारायणको सुयशगान गराउँदै तिनीहरूसित विहार गर्दथे ॥ २ ॥ ३ ॥ एक दिनको कुरा हो, ती विष्णु भगवान्ले दिएको तेजोमय विमानमा बसेर डुलिरहेका थिए । सहसा तिनले देखे–सिद्ध-चारणले घेरिएर भगवान् शंकर मुनिहरूका माझ भगवती पार्वती-

6.17

काखामा लिएर एक बाहुले आलिङ्गन गरेर बसेका छन् । यो देखेर ती नगीचै गए र चर्को स्वरमा हाँस्तै भने—भवानी पनि तिनका कुरा सुनिरहेकी थिइन् ॥ ४ ॥ ५ ॥ चित्रकेतुले भने–अहो ! यी सबै लोकका गुरु हुन् र सबैलाई धर्म-मार्गको उपदेश दिन्छन्, तैपनि सभाको माझमा यस प्रकार आफ्नी भार्यालाई टाँसेर बसेका छन् ॥६॥ ठूला जटाधारी, असाधारण तपस्वी र ब्रह्मवेत्ताहरूको समाजमा अग्रणी छन् । तर यस बखत साधारण विषयी पुरुष झैं निर्लज्ज भएर स्त्रीलाई काखमा लिएका छन् ॥ ७ ॥ संसारका विषयी पुरुष पनि एकान्तमा नै यस्तो गर्दछन्, तर यी यति ठूला व्रतधारी भएर पनि भरिएको सभामा भार्यालाई पाखुरामा अँठ्याएर बसेका छन् ॥ ८ ॥ श्रीशुकदेव भन्दछन्–हे राजन् ! अगाधबुद्धि शंकर त तिनको यो कटाक्षपूर्ण कुरा सुनेर हाँसीमात्र दिए–केही बोलेनन् । त्यस सभामा विद्यमान अन्य सदस्य पनि उसै गरी मौन बसिरहे ॥९॥ तर भगवान् शंकरको प्रभाव जान्न नसकेका चित्रकेतुको त्यस्तो अनुचित भाषण सुनेर 'म जितेन्द्रिय हुँ' यस्तो अभिमानले सान्है धृष्ट ती राजासित पार्वतीदेवीले रिसाई यस प्रकार भनिन् ॥ १० ॥ पार्वती भन्दछिन्–अहो ! हामी जस्ता

ब्रह्मवादिसभापतिः ॥ अङ्गीकृत्य स्त्रियं चास्ते गतह्रीः प्राकृतो यथा ॥७॥ प्रायशः प्राकृताश्चापि स्त्रियं रहसि बिभ्रति ॥ अयं महाव्रतधरो बिभर्ति सदसि स्त्रियम् ॥ ८ ॥ श्रीशुक उवाच ॥ भगवानपि तच्छ्रुत्वा प्रहस्यागाधधीर्नृप ॥ तूष्णीं बभूव सदसि सभ्याश्च तदनुव्रताः ॥ ९ ॥ इत्यत‐द्वीर्यविदुषि ब्रुवाणे बह्वशोभनम् ॥ रुषाऽऽह देवी धृष्टाय निर्जितात्माभिमानिने ॥ १० ॥ पार्वत्युवाच ॥ अय किमधुना लोके शास्ता दण्डधरः प्रभुः ॥ अस्मद्विधानां दुष्टानां निर्लज्जानां च विप्रकृत् ॥ ११ ॥ न वेद धर्मं किल पद्मयोनिर्न ब्रह्मपुत्रा भृगुनारदाद्याः ॥ न वै कुमारः कपिलो मनुश्च ये नो निषेधन्त्यतिवर्तिनं हरम् ॥१२॥ एषामनुध्येयपदाब्जयुग्मं जगद्गुरुं मङ्गलमङ्गलं स्वयम् ॥ यः क्षत्रबन्धुः परिभूय सूरीन् प्रशास्ति धृष्टस्तदयं हि दण्ड्यः ॥१३॥ नायमर्हति वैकुण्ठपादमूलोपसर्पणम् ॥ संभावितमतिः स्तब्धः साधुभिः पर्युपासितम् ॥ १४ ॥ अतः पापीयसीं योनिमासुरीं याहि दुर्मते ॥ यथेह भूयो महतां न कर्ता पुत्र किल्बिषम् ॥ १५ ॥ श्रीशुक उवाच ॥ एवं शप्तश्चित्रकेतुर्विमानादवरुह्य सः ॥ प्रसादयामास सतीं मूर्ध्ना नम्रेण भारत ॥ १६ ॥ चित्रकेतुरुवाच ॥ प्रतिगृह्णामि ते शापमात्मनोऽञ्जलिनाऽम्बिके ॥ देवैर्मर्त्याय यत्प्रोक्तं पूर्वदिष्टं हि तस्य तत् ॥१७॥ संसा‐

दुष्ट तथा निर्लज्जलाई उपदेश दिएर सुधार्ने दण्डधर प्रभु के यस संसारमा केवल यहीमात्र रहिरहेको छ ? ॥ ११ ॥ कमल-योनि ब्रह्मा, भृगु आदि ब्रह्माका पुत्र, नारद आदि देवर्षिगण, सनकादि मुनि, कपिलदेव तथा मनु–के यीमध्ये कोही पनि धर्मको तत्त्व जान्दैनन्, जो शास्त्र-विधिको अतिक्रमण गर्ने शंकर भगवान्लाई यस्तो गर्नबाट रोक्तैनन् ? ॥१२॥ यस अधम क्षत्रियले विद्वन्मण्डलको अपमान गर्दै ब्रह्मादिले पनि ध्यान गरिने योग्य चरण कमल-युगल, मङ्गलमूर्ति तथा जगद्गुरु भगवान् शङ्करको ठूलो धृष्टतासहित अपमान गर्‍यो अतएव यो दण्डको योग्य छ ॥१३॥ यो आफूलाई श्रेष्ठ ठान्ने भएको र निकै अभिमानी छ । अतः यो दुष्ट विष्णु भगवान्को साधुजनसेवित चरणकमलको समीप बस्न पाउने अधिकारी छैन ॥१४॥ अतएव हे दुर्मते ! तँ अतिशय अधम आसुरी योनिमा जाइहाल । यस्तो भएपछि हे पुत्र ! तँ फेरि कहिल्यै महापुरुषको अपमान गर्न छैनस् ॥ १५ ॥ श्रीशुकदेवजी भन्दछन्–हे भारत ! पार्वतीले यसरी श्राप दिएपछि चित्रकेतु विमानबाट तल झर्लियो र नम्र भएर शिर न्यूराई भगवतीको स्तुति गर्नलाग्यो॥१६॥चित्रकेतुले भने–हे माता ! म हजुरको

आप अंजलिमा ग्रहण गर्दछु, किनकि देवता मनुष्यहरूका लागि जे जति गर्दछन्, त्यो सबै तिनका पूर्वजन्मका कर्मको नै फल हुन्छ ॥१७॥ अज्ञान विमुग्ध जीव संसार-चक्रमा पानीको भमरी झैं घुम्दै सर्वत्र सुख-दुःख खोज्दै रहन्छ ॥१८॥ त्यो *सुख-दुखका दाता हजुर अथवा अरु कुनै होइन। यस विषयमा अज्ञानीजन नै आफूलाई अथवा अरु कसैलाई कर्ता मान्न थाल्दछ ॥१९॥ संसार सत्त्वादि तीनै गुणहरूको प्रवाह हो। यसमा श्राप तथा अनुग्रह, स्वर्ग वा नरक, सुख अथवा दुःख केही वस्तु पनि होइन ॥ २० ॥ एकमात्र ईश्वर नै आफ्नो मायाको बलले सबै प्राणीहरू र तिनका बन्धन-मोक्ष अथवा सुख-दुःखको सृजना गर्दछन्, किन्तु ती महाप्रभु स्वयं बन्धन-मोक्षादिले रहित छन् ॥ २१ ॥ हे माता ! ती भगवान्

रचक्र एतस्मिञ्जन्तुरज्ञानमोहितः ॥ भ्राम्यन्सुखं च दुःखं च भुङ्क्ते सर्वत्र सर्वदा ॥ १८ ॥ नैवात्मा न परश्चापि कर्ता स्यात्सुखदुःखयो ॥ कर्तारं मन्यतेऽप्राज्ञ आत्मानं परमेव च ॥१९॥ गुणप्रवाह एतस्मिन्कः शापः को न्वनुग्रहः ॥ कः स्वर्गो नरकः को वा किं सुखं दुःखमेव वा ॥२०॥ एकः सृजति भूतानि भगवानात्ममायया ॥ एषां बन्धं च मोक्षं च सुखं दुःखं च निष्कलः ॥ २१ ॥ न तस्य कश्चिद्दयितः प्रतीपो न ज्ञातिबन्धुर्न परो न च स्वः ॥ समस्य सर्वत्र निरञ्जनस्य सुखे न रागः कुत एव रोषः ॥ २२ ॥ तथापि तच्छक्तिविसर्ग एषां सुखाय दुःखाय हिताहिताय ॥ बन्धाय मोक्षाय च मृत्युजन्मनोः शरीरिणां संसृतयेऽवकल्पते ॥ २३ ॥ अथ प्रसादये न त्वां शापमोक्षाय भामिनि ॥ यन्मन्यसे ह्यसाधूक्तं मम तत्क्षम्यतां सति ॥२४॥ श्रीशुक उवाच ॥ ॥ इति प्रसाद्य गिरिशौ चित्रकेतुररिन्दम ॥ जगाम स्वविमानेन पश्यतोः स्मयतोस्तयोः ॥ २५ ॥ ततस्तु

सर्वत्र समान तथा निर्दोष छन्। तिनका न कोही प्रिय, न जातिबन्धु, न आफ्नो-बिरानो छ। जब सुखमा उनको राग नै रहन्न भने, तिनलाई रागजनित क्रोध कसरी हुन सक्छ ? ॥२२॥ तापनि तिनको मायारूपिणी शक्तिबाट उत्पन्न पाप-पुण्य नै प्राणीहरूका सुख-दुःख, हित-अहित, बन्धन-मोक्ष जन्म-मरण, तथा संसारमा पुनर्जन्मका कारण हुन्छन् ॥२३॥ अतः हे भामिनी ! म यस श्रापबाट मुक्त हुनको निम्ति हजुरसित विन्ति गर्दिन। हे सती ! मेरो केवल यति नै प्रार्थना छ कि मेरो कथन हजुरलाई अनुचित लागेको भए क्षमा गरिदिनोस् ॥२४॥ श्रीशुकदेवजी भन्दछन्–हे शत्रुसूदन ! यस प्रकार भगवान् शंकर र पार्वतीलाई प्रसन्न पारेर राजा चित्रकेतु उनको साम्ुन्ने नै आफ्नो विमानमा बसेर सबैलाई चकित

* उदाहरण ( सुख-दुःख भनेको मोटा कल्पना मात्र हो )—मोटा वैश्य कुनै कारण परेर विदेश गयो। त्यसले उहाँ बीस वर्ष बस्नुपर्‍यो। जब त्यो परदेश जान लागेको थियो तब त्यसको वर्षदिनको मोटा छोरो थियो। जब त्यो तन्नेरी भयो तब आफ्नो बाबुलाई भेट्न हिंड्यो। त्यसै बखत वैश्य पनि घर जान हिंड्यो। संयोगवश छोरो एक स्थानमा कुनै धर्मशालामा दिउँसैदेखि नै राम्रो कोठा लिएर त्यसैमा बसेको थियो। सायंकालमा वैश्य पनि त्यहीं पुग्यो। जुन कोठामा छोरो बसेको थियो, सायंकालमा वैश्य पनि त्यहीं पुग्यो। जुन कोठामा छोरा बसेको थियो, त्यही कोठामा वैश्यले पनि मनपराग्यो र केही धर्ता पैसा तिरेर छोरोलाई त्यहाँबाट निकाल्न लगायो। धर्मशालामा अरु स्थान नहुनाले छोरो मैदानमा बसेर रातभरि रोइरह्यो। बिहान वैश्यले छोरोलाई देख्यो र त्योसित सोध्यो—'तिमी कहाँबाट आएका ? छोरोले आफ्नो नगर, टोल बाउ र पिताको नाउँ समेत भनिदियो। सुन्नासाथ वैश्यले थाहा पायो–यो त मेरो नै छोरो हो। अब त्यसलाई अंकमाल गरेर त जे जति त्यसलाई दुःख दिएको थियो, त्यसको निम्ति पश्चात्ताप गर्न लाग्यो। हेर, त्यही छोरो रात्रिमा पनि थियो, तर त्यसलाई छोरो भनेर मानेन यसै निम्ति केही दुःख भएन। बिहान त्यसैलाई आफ्नो छोरो भनेर चिनेपछि दुःख भयो। अतः संसारमा सुख र दुःख कुनै वस्तु होइन। यो मनको कल्पना मात्र हो। मनुष्यलाई जुन वस्तु प्रिय छ, त्यो प्राप्त नहुने अवस्थामा दुःख नै हुन्छ !

बढदा सम्पति बेसरी हृदयमा जाला प्रतिष्ठा भनी। चिन्ता बढ्न गएर स्वप्न मनले लाग्दैन निद्रा पनि ॥
बढ्दै जान्छ अनेक लोभ ममता सम्पत्ति दारा सुत। सन्तोषी मनले रहे बखतमा गर्दा त्यसैले हित ॥

पार्दै त्यहाँबाट प्रस्थान गरे ॥२५॥ अनि त्यहाँ भएका सबै देवता, ऋषि, दैत्य, सिद्ध तथा पार्षद तिनको वचन सुनिरहेका थिए, तब भगवान् शङ्कर पार्वतीसित यसरी भन्दछन् ॥२६॥ शिवजीले *उपदेश दिँदै आज्ञाभयो–हे सुन्दरी ! तिमीले अद्भुत कर्म गर्ने भगवान्का निस्पृह तथा महानुभाव दासका महिमा देख्यौ ? ॥२७॥ भगवत्परायण व्यक्तिलाई कुनै कुराको डर भय रहन्न । किनकि स्वर्ग, मोक्ष तथा नरकादिमा पनि तिनको समान दृष्टि रहन्छ ॥२८॥ भगवानको लीलासित देहको संयोग भएपछि मात्र सुख-दुःख, जन्म-मरण, शाप-अनुग्रह आदि द्वन्द्व भोग्न पर्ने हुन्छ ॥२९॥ जस्तै भेद-भ्रमबाट सुख-दुखादि ज्ञात हुन्छन् र भ्रमको कारणले नै डोरीमा सर्पको भय हुन्छ,त्यस्तै नै मनुष्य अज्ञानले आत्मामा देव-मनुष्यादि भेद

भगवान्रुद्रो रुद्राणीमिदमब्रवीत् ॥ देवर्षिदैत्यसिद्धानां पार्षदानां च शृण्वताम् ॥ २६ ॥ श्रीरुद्र उवाच ॥ दृष्टवत्यसि सुश्रोणि हरेरद्भुतकर्मणः ॥
माहात्म्यं भृत्यभृत्यानां निःस्पृहाणां महात्मनाम् ॥२७॥ नारायणपराः सर्वे न कुतश्चन बिभ्यति ॥ स्वर्गापवर्गनरकेष्वपि तुल्यार्थदर्शिनः ॥२८॥
देहिनां देहसंयोगाद् द्वन्द्वानीश्वरलीलया ॥ सुखं दुःखं मृतिर्जन्म शापोऽनुग्रह एव च ॥२९॥ अविवेककृतः पुंसो ह्यर्थभेद इवात्मनि ॥ गुणदोषवि-
कल्पश्च भिदेव स्रजिवत्कृतः ॥३०॥ वासुदेवे भगवति भक्तिमुद्वहतां नृणाम् ॥ ज्ञानवैराग्यवीर्याणां नेह कश्चिद्व्यपाश्रयः ॥ ३१ ॥ नाहं विरिञ्चो
न कुमारनारदौ न ब्रह्मपुत्रा मुनयः सुरेशाः ॥ विदाम यस्येहितमंशकांशका न तत्स्वरूपं पृथगीशमानिनः ॥ ३२ ॥ न ह्यस्यास्ति प्रियः कश्चिन्ना-
प्रियः स्वः परोऽपि वा ॥ आत्मत्वात्सर्वभूतानां सर्वभूतप्रियो हरिः ॥ ३३ ॥ तस्य चायं महाभागश्चित्रकेतुः प्रियोऽनुगः ॥ सर्वत्र समदृक्शान्तो
ह्यहं चैवाच्युतप्रियः ॥ ३४ ॥ तस्मान्न विस्मयः कार्यः पुरुषेषु महात्मसु ॥ महापुरुषभक्तेषु शान्तेषु समदर्शिषु ॥३५॥ श्रीशुक उवाच ॥ इति

तथा गुण-दोषको कल्पना गर्ने गर्दछ ॥३०॥ जुन ज्ञान-वैराग्यको बलले युक्त सज्जन भगवान वासुदेवको भक्ति गर्दछन् तिनलाई संसारमा आफ्नो बुद्धिको कुनै आश्रय देखिन्न ॥३१॥ म, ब्रह्माजी, सनकादि, नारद मुनि, ब्रह्माजीका पुत्र भृगु आदि मुनि एवं ठूला-ठूला देवता पनि जसको लीला जान्दैनन्, तिनको स्वरूप संसारका ती साधारण पुरुषले कसरी जान्न सक्ने ? ॥३२॥ जो तिनका अंशांश भएर पनि आफूलाई पूर्ण समर्थ मान्दछन् ॥३२॥ श्रीहरिको न कोही प्रिय छ र कोही आफ्नो वा बिरानो छ । ती भगवान् सबै प्राणीका अन्तरात्मास्वरूप

---

* शिक्षा ( अमूल्य उपदेश )—१. वडी प्रतिज्ञा नगर्ने गर । २. सदैव सत्य बोल । ३. कसैको पनि निन्दा नगर । राम्रा व्यक्तिको संगत गर भएपछि बस्ने गर । ५. जीवनलाई नियमित राख ६. जुआ नखेल । ७. मादक द्रव्यको सेवन कदापि नगर । ८. सच्चरित्रता अन्य सबै वस्तुभन्दा उत्तम छ । ९. यदि आफ्नो भन्न नहुने गुप्त कुरा छ भने कसैसित नभन । १०. [illegible] ऋण नलेऊ । ११. जबसम्म तिमी आफ्नी पत्नीलाई सुखपूर्वक खान-लाउन दिने योग्य धन कमाउन सक्दैनौ, तबसम्म विवाह नगर । १२. यदि सुखी रहन खोज्दछौ भने सदैव निष्पाप रहू । १३. [illegible] गर्दछौ तब उसैको मुखतिर मात्र हेरिरहू । १४. यदि सफलता खोज्दछौ भने धनी बन्नको निमित्त हडबड नगर । १५. सदैव आमदनी भन्दा थोरै खर्च गर । १६. वृद्धावस्थाको निमित्त जवानीमा केही [illegible] । १७. म प्रलोभनको प्रभावबाट [illegible] सबै टाढा बस । १८. यदि ऋण तिर्ने साधन छैन भने कदापि पनि ऋण नलेऊ । १९. साधु र विद्वान व्यक्तिहरूबाट [illegible] र योग्यता प्राप्त हुन्छ । २०. उत्तम [illegible] र मधुर भाषण सद्गुणका स्तम्भ हुन् । २१. तिम्रो चरित्रलाई तिम्रा कृतिहरू बाहेक अरु कसैले कलङ्कित पार्न सक्तैन । २२. तिमी आफ्नो चरित्रलाई यति पवित्र राख कि यदि कसैले तिम्रो निन्दा गर्दछ भने पनि [illegible] कुरामा विश्वास नगरू । २३. राति सुत्नभन्दा पहिले यस कुरामा विचार गर कि आज दिनभरि [illegible] ? २४. कहिल्यै अल्छी नबन । [illegible] मानसिक विकाशिर ध्यान देऊ ।

620

छन् अतएव ती सबैका प्रिय छन ॥३३॥ महाभाग चित्रकेतु उनैको प्रिय अनुचर, शान्त र समदर्शी पुरुष हो। म पनि श्रीअच्युत भगवान्‌को भक्त हुँ ॥३४॥ अतः परमपुरुष परमात्मा-का यी शान्त समदर्शी र महात्मा भक्तहरूको विषयमा तिमीले केही पनि विस्मय गर्नु उचित छैन ॥३५॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! शङ्कर भगवान्‌को यो वचन सुनेर पार्वतीको संशय नष्ट भयो र ती शान्त भइन् ॥ ३६ ॥ परम भगवद्भक्त चित्रकेतु भगवती भवानीको श्रापको साटो श्राप दिनमा पनि समर्थ थिए तापनि तिनले उनको श्राप आफ्नो शिरमा थापे–यही नै साधुको लक्षण हो ॥३७॥ त्यसपछि राजा चित्रकेतु दानवी योनिमा भएर त्वष्टा देवताका दक्षिणाग्निबाट उत्पन्न एवं ज्ञान-विज्ञान युक्त भएर वृत्रासुर नामले विख्यात भए ॥३८॥ यस प्रकार तिमीले जुन वृत्रासुरको दैत्ययोनिमा जन्म भएर पनि भगवत्परायण हुने कारण सोधेका थियौ, त्यो सबै मैले सुनाइदिएँ ॥३९॥ हे राजन् ! विष्णुभक्तका साक्षात् माहात्म्यस्वरूप महात्मा चित्रकेतुको यो पवित्र इतिहास सुन्ने मनुष्य सबै प्रकारका बन्धनबाट मुक्ति प्राप्त गर्दछ ॥४०॥ जुन पुरुष बिहानै उठेर भगवान्‌को स्मरण गरी मौनभावले यस

श्रुत्वा भगवतः शिवस्योमाऽभिभाषितम् ॥ बभूव शान्तधी राजन्देवी विगतविस्मया ॥३६॥ इति भागवतो देव्याः प्रतिशप्तुमलंतमः ॥ मूर्ध्ना संजगृहे शापमेतावत्साधुलक्षणम् ॥ ३७ ॥ जज्ञे त्वष्टुर्दक्षिणाग्नौ दानवीं योनिमाश्रितः ॥ वृत्र इत्यभिविख्यातो ज्ञानविज्ञानसंयुतः ॥ ३८ ॥ एतत्ते सर्वमाख्यातं यन्मां त्वं परिपृच्छसि ॥ वृत्रस्यासुरजातेश्च कारणं भगवन्मतेः ॥ ३९ ॥ इतिहासमिमं पुण्यं चित्रकेतोर्महात्मनः ॥ माहात्म्यं विष्णुभक्तानां श्रुत्वा बन्धाद्विमुच्यते ॥ ४० ॥ य एतत्प्रातरुत्थाय श्रद्धया वाग्यतः पठेत् ॥ इतिहासं हरिं स्मृत्वा स याति परमां गतिम् ॥४१॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे चित्रकेतुशापो नाम सप्तदशोऽध्यायः ॥ १७ ॥ श्रीशुक उवाच ॥ पृश्निस्तु पत्नी सवितुः सावित्रीं व्याहृतिं त्रयीम् ॥ अग्निहोत्रं पशुं सोमं चातुर्मास्यं महामखान् ॥१॥ सिद्धिर्भगस्य भार्याऽङ्ग महिमानं विभुं प्रभुम् ॥ आशिषं च वरारोहां कन्यां प्रासूतसुव्रताम् ॥२॥ धातुः कुहूः सिनीवाली राका चानुमतिस्तथा ॥ सायं दर्शमथ प्रातः पूर्णमासमनुक्रमात् ॥३॥ अग्नीन्पुरीष्यानाधत्त क्रियायां समनन्तरः ॥ चर्षणी वरुणस्यासीद्यस्यां जातो भृगुः पुनः ॥४॥ वाल्मीकिश्च महायोगी वल्मीकादभवत्किल ॥ अगस्त्यश्च वसिष्ठश्च मित्रावरुणयोर्ऋषी ॥ ५ ॥

इतिहासको पाठ गर्दछ भने त्यसलाई भगवान्‌को परमपद प्राप्त हुन्छ ॥ ४१ ॥ इति श्रीमद्भागवते षष्ठस्कन्धे नेपाली भाषाटीकायां सप्तदशोऽध्यायः ॥१७॥ ( अदिति र दितिका सन्तान तथा मरुद्गणहरूको उत्पत्तिको वृत्तान्त—शुकदेवजी भन्दछन्–हे राजन् ! भगवान् सविताकी स्त्री सावित्रीले सावित्री, व्याहृति, त्रयी, अग्निहोत्र, पशु, सोम, चातुर्मास्य तथा पञ्चमहायज्ञ–यी आठ सन्तानहरूलाई जन्मदिइन् । हे प्रिय ! भगकी पत्नी सिद्धिले महिमा, विभु र प्रभु नामका तीन पुत्र तथा आशिषा नामकी एक सुव्रता कन्या उत्पन्न गरिन् ॥१-२॥ धाताकी कुहू, सिनीवाली, राका तथा अनुमति नामका स्त्रीबाट क्रमशः सायं, दर्श, प्रातः र पूर्णमास नामक छोराहरूलाई जन्म दिइन् ॥३॥ धाताका भाई विधाताले आफ्नी भार्या क्रियाबाट पुरीष्य नामका पाँच अग्नि उत्पन्न गरिन् । वरुणकी स्त्री चर्षणीको गर्भबाट भृगुले पुनः जन्म ग्रहण गरे । यो भन्दा पहिले ब्रह्माणीबाट उनको जन्म भएको थियो ॥४॥ कसैको भनाइ छ कि वल्मीकबाट उत्पन्न महायोगी वाल्मीकि पनि वरुणकै छोरा थिए । एक समय अब उर्वशीलाई देखेर मित्र तथा वरुण यी दुवै देवको वीर्यस्खलित भयो

तब त्यसलाई लगेर पाँटा घडामा राखिदिए। त्यबाट कुम्भज ( अगस्त्य ) र वसिष्ठको जन्म भयो। मित्रले आफ्नी भार्या रेवतीबाट उत्सर्ग, अरिष्ट र पिप्पल तीन पुत्र जन्माए ॥५॥६॥ हे राजन्! इन्द्रले आफ्नी भार्या पोलोमीबाट जयन्त, ऋषभ र मीढुष तीन पुत्रलाई जन्म दिएका थिए भन्ने कुरा मैले जन समुदापसित सुनेको छु ॥७॥ वामनरूपधारी भगवान् उरुक्रमले आफ्नी भार्या कीर्तिबाट बृहच्छ्लोक नामक पुत्रलाई जन्म दिए, तिनका सौभगादि अनेक सन्तान उत्पन्न भए ॥८॥ कश्यप-तनय भगवान् अर्थात् वामनका कर्म, गुण, पराक्रम र जसरी उनले माता अदितिको गर्भबाट जन्म लिएका थिए, त्यसको वर्णन पछि गर्नेछु ॥९॥ हे राजन्! अब म कश्यप द्वारा दितिको गर्भबाट उत्पन्न ती पुत्रहरूको वर्णन गर्दछु, जसको वंशमा भगवद्भक्त प्रह्लाद तथा राजा बलि उत्पन्न भएका थिए ॥ १० ॥ दितिको गर्भबाट दैत्यगण तथा दानवादि द्वारा वन्दित हिरण्यकशिपु र हिरण्याक्ष दुई छोरा उत्पन्न भएथे–यिनको वर्णन पहिले नै गरिसकियो ॥ ११ ॥ हिरण्यकशिपुकी पत्नी कयाधु नामकी दानवीले—जुन जम्भ दानवकी छोरी थिई र उनको पिताले हिरण्यकशिपुसित

रेतः सिषिचतुः कुम्भे उर्वश्याः सन्निधौ द्रुतम् ॥ रेवत्यां मित्र उत्सर्गमरिष्टं पिप्पलं व्यधात् ॥ ६ ॥ पौलोम्यामिन्द्र आधत्त त्रीन्पुत्रानिति नः
श्रुतम् ॥ जयन्तमृषभं तात तृतीयं मीढुषं प्रभुः ॥ ७ ॥ उरुक्रमस्य देवस्य मायावामनरूपिणः कीर्तौ पत्न्यां बृहच्छ्लोकस्तस्यासन्सौभगादयः
॥८॥ तत्कर्मगुणवीर्याणि काश्यपस्य महात्मनः ॥ पश्चाद्वक्ष्यामहेऽदित्यां यथा वाऽवततार ह ॥ ९ ॥ अथ कश्यपदायादान्दैतेयान्कीर्तयामि ते ॥
यत्र भागवतः श्रीमान्प्रह्लादो बलिरेव च ॥ १० ॥ दितेर्द्वावेव दायादौ दैत्यदानववन्दितौ ॥ हिरण्यकशिपुर्नाम हिरण्याक्षश्च कीर्तितौ ॥ ११ ॥
हिरण्यकशिपोर्भार्या कयाधुर्नाम दानवी ॥ जम्भस्य तनया दत्ता सुषुवे चतुरः सुतान् ॥ १२ ॥ संह्रादं प्रागनुह्रादं ह्रादं प्रह्लादमेव च ॥ तत्स्वसा
सिंहिका नाम राहुं विप्रचितोऽग्रहीत् ॥ १३ ॥ शिरोऽहरद्यस्य हरिश्चक्रेण पिबतोऽमृतम् ॥ संह्रादस्य कृतिर्भार्याऽसूत पञ्चजनं ततः ॥ १४ ॥
ह्रादस्य धमनिर्भार्याऽसूत वातापिमिल्वलम् ॥ योऽगस्त्याय त्वतिथये पेचे वातापिमिल्वलः ॥ १५ ॥ अनुह्रादस्य सूर्म्यायां बाष्कलो महिषस्तथा ॥
विरोचनस्तु प्राह्लादिर्देव्यास्तस्याभवद्बलिः ॥ १६ ॥ बाणज्येष्ठं पुत्रशतमशनायां ततोऽभवत् ॥ तस्यानुभावः सुश्लोक्यः पश्चादेवाभिधास्यते ॥१७॥

तिनको विवाह गरेका थिए, तिनले चार छोरा उत्पन्न गरिन् ॥१२॥ तिनका संह्राद, अनुह्राद, ह्राद र प्रह्लाद यी नाम थिए र तिनकी बहिनी सिंहिका थिई—तिनले आफ्नो पति विप्रचित्ति नामक दानवको संसर्गले राहु नामक पुत्र उत्पन्न गरिन् ॥ १३ ॥ समुद्र-मन्थनपछि अमृत-पानको अवसरमा जसको शिर भगवान्ले चक्रद्वारा टिदिएका थिए। संह्रादकी भार्या कृतिले पञ्चजन नामक पुत्र जन्माइन् ॥ १४ ॥ जसले अगस्त्यको आतिथ्य सत्कार गर्दा वातापीलाई पचाएका थिए, त्यो इल्वल र वातापीलाई ह्रादकी भार्या धमनीले जन्माएकी थिइन्※ ॥१५॥ अनुह्रादले आफ्नी स्त्री सूर्म्याको गर्भबाट बाष्कल र महिषासुरको जन्म भयो। प्रह्लादका छोराको नाम विरोचन थियो र विरोचनकी भार्याबाट उत्पन्न भए बलि ॥ १६ ॥ राजा बलिले आफ्नी भार्या अशनाको गर्भबाट सय पुत्र उत्पन्न गरे। तिनमा बाणासुर सर्वभन्दा जेठा थिए। इनको भन्ने-सुन्ने योग्य महिमा को

※ कथान्तर—कुनै समय महर्षि अगस्त्य वातापी र इल्वलकहाँ पुगे। उनलाई निम्ता गरेर इल्वलले मेषरूपधारी वातापीलाई पकाएर अगस्त्यलाई ख्वाइदियो अनि यस्तो विचार गरेर–वातापी अगस्त्य ऋषिको पेट फोरेर बाहिर निस्किहाल्छ—'वातापी' भनेर डाक्यो, तर ऋषिले त्यसलाई पचाइसकेका थिए। यस प्रकार त्यसको कुमति त्यसलाई हानिकारक सिद्ध भयो।

622

वर्णन अगाडि गरिने छ ॥१७॥ बलिको छोरो बाणासुरले शिवको आराधना गरेर शिवगणमा प्रमुखता पाएको थियो । शिवजी अहिले पनि त्यसको नगररक्षक बनेर त्यसकहाँ निवास गर्नुहुन्छ ॥१८॥ दितिका गर्भबाट मरुत् नामका उनञ्चास छोरा अरु जन्मेका थिए । ती सबै निःसन्तान थिए । ती सबैलाई इन्द्रले आफू समान देवता तुल्याएका थिए ॥१९॥ पनि कथा सुनेर परीक्षितले सोधे–हे गुरो ! ती मरुत्ले यस्तो कुन सुकर्म गरेका थिए, जसले गर्दा तिमले आसुरीभाव त्यागिदिए र ती सबै इन्द्रद्वारा देवता तुल्याइएका थिए ? ॥२०॥ हे भगवन् ! म र यी सबै ऋषिगण यो प्रकरण जान्न उत्सुक छौं, अतः हजुर त्यो सबै रहस्य हामीलाई विस्तारपूर्वक आज्ञा हवस् ॥ २१ ॥ सूतजी भन्दछन्–हे शौनक ! महाराज परीक्षितको सादर, स्वल्प तथा सारगर्भित वचन सुनेर सर्वज्ञ व्यासनन्दन शुकले प्रसन्न चित्तले तिनको प्रशंसा गर्दै भन्नुभयो ॥ २२ ॥ शुकदेव भन्नुहुन्छ–हे राजन ! इन्द्रको पक्ष लिने विष्णु भगवानका हातबाट हिरण्यकशिपु आदि अनेकानेक छोराहरू मरेका देखेर दिति शोकाग्नि द्वारा प्रज्वलित रिसले सन्तप्त भएर विचार गर्न लागिन्–हरे ! यस्तो

बाण आराध्य गिरिशं लेभे तद्‌गणमुख्यताम् ॥ यत्पार्श्वे भगवानास्ते ह्यद्यापि पुरपालकः ॥ १८ ॥ मरुतश्चादितेः पुत्राश्चत्वारिंशन्नवाधिकाः ॥ त
आसन्नप्रजाः सर्वे नीता इन्द्रेण सात्मताम् ॥ १९ ॥ राजोवाच ॥ कथं त आसुरं भावमपोह्यौत्पत्तिकं गुरो ॥ इन्द्रेण प्रापिताः सात्म्यं किं तत्साधु
कृतं हि तैः ॥ २० ॥ इमे श्रद्‌दधते ब्रह्मन्नृषयो हि मया सह ॥ परिज्ञानाय भगवंस्तन्नो व्याख्यातुमर्हसि ॥ २१ ॥ तद्विष्णुरातस्य स बादरा·
यणिर्वचो निशम्याद्दतमल्पमर्थवत् ॥ सभाजयन्संनिभृतेन चेतसा जगाद सत्रायण सर्वदर्शनः ॥ २२ ॥ श्रीशुक उवाच ॥ हतपुत्रा दितिः
शक्रपार्ष्णिग्राहेण विष्णुना ॥ मन्युना शोकदीप्तेन ज्वलन्ती पर्यचिन्तयत् ॥ २३ ॥ कदा नु भ्रातृहन्तारमिन्द्रियाराममुल्वणम् ॥ अक्लिन्नहृदयं पापं
घातयित्वा शये सुखम् ॥ २४ ॥ कृमिविड्भस्मसंज्ञाऽऽसीद्यस्येशाभिहितस्य च ॥ भूतध्रुक्तत्कृते स्वार्थं किं वेद निरयो यतः ॥२५॥ आशासानस्य
तस्येदं ध्रुवमुन्नद्धचेतसः ॥ मदशोषक इन्द्रस्य भूयाद्येन सुतो हि मे ॥२६॥ इति भावेन सा भर्तुराचचारासकृत्प्रियम् ॥ शुश्रूषयाऽनुरागेण प्रश्रयेण
दमेन च ॥ २७ ॥ भक्त्या परमया राजन्मनोज्ञैर्वल्गुभाषितैः ॥ मनो जग्राह भावज्ञा सुस्मितापाङ्गवीक्षणैः ॥ २८ ॥ एवं स्त्रिया जडीभूतो

कहिले होला–जब आफ्ना भाइहरूको वध गर्ने विषय-लोलुप, क्रूर, निष्ठुर र पापात्मा इन्द्रलाई मारेर म सुखपूर्वक सुत्नेछु ॥ २४ ॥ जुन राजा आदिको देह 'प्रभु' कहिन्छ, त्यो पनि अन्त्यमा कुहेर कृमि, सर्पले खाएर विष्ठा तथा पोलिदिएपछि खरानी बन्दछ, यस्तो निन्द्य देहको निम्ति जुन प्राणी अन्य प्राणीसित शत्रुता गर्दछ भने त्यो के आफ्नो स्वार्थलाई जान्दछ ? जान्दैन । त्यसले प्राणीहरूको द्रोह गर्नाले नरकगामी हुनुपर्दछ ॥ २५ ॥ अ एव शरीरलाई नित्य ठानेर जसको मन सर्वदा उन्मत्त रहन्छ, त्यस इन्द्रको मद चूर्ण पार्ने पुत्र मेरो कोखबाट जसरी पनि उत्पन्न होस्–यस्तो कुनै उपाय अवश्य गर्नुपर्दछ ॥ २६ ॥ आफ्नो मनमा यस्तो विचारेर दिति सेवा, अनुराग, विनय तथा इन्द्रिय संयम आदि द्वारा आफ्ना पति कश्यपलाई सर्वदा प्रसन्न राख्न लागिन् ॥ २७ ॥ हे राजन् ! पतिको मनोभाव जान्ने भएकी देवी दितिले आफ्नो उत्कृष्ट भक्तिभाव, मनोहर एवं मधुर वाणी तथा हास्ययुक्त कटाक्ष-भंगिमाले महामना कश्यपको हृदय आफ्नो वशमा पारिन् ॥ २८ ॥ महात्मा कश्यप ठूला विद्वान र विचारवान् व्यक्ति थिए तापनि ती

बुद्धिमती स्त्रीको सेवाले मुग्ध र विवश भई उनले नै 'लौ' भनिदिए अर्थात् दितिको इच्छा पूर्ण पार्न स्वीकार गरिदिए। स्त्रीको वशमा भएर पुरुषले त्यस्तो भनिदिनु कुनै छक्क पर्ने कुरा होइन ॥ २९ ॥ किनकि पहिले स्वयं प्रजापति ब्रह्माले नै सबै जीवलाई निःसङ्ग देखेर आफ्नो आधा शरीरले नारीलाई जन्म दिएथे, जसले पुरुषको बुद्धि हरिलिइन ॥३०॥ यस प्रकार आफ्नी भार्या दितिले धेरै सेवा गरेपछि भगवान् कश्यप परम प्रसन्न भएर तिनको प्रशंसा गर्दै हाँसेर भने–॥३१॥ कश्यपजी भन्दछन्–हे वरोरु ! हे अनिन्दिते ! म तिमीमाथि प्रसन्न छु। तिमी इच्छा लागेको वर माग। आफ्ना पति प्रसन्न भएपछि स्त्रीको निम्ति इहलोक वा परलोकमा कुन पदार्थ दुर्लभ रहन सक्दछ ? ॥३२॥ नारीहरूको निम्ति परम पूजनीय देवता पति नै मानिएका छन्। सबै प्राणीका अन्तःकरणमा विराजमान साक्षात् लक्ष्मीपति भगवान् नै नाम रूपको भेदले कल्पित भिन्न-भिन्न देवताका रूपमा सबै पुरुष तथा पतिरूपमा स्त्रीहरूद्वारा पूजित हुछन्। अतएव हे सुमध्यमे ! प्रायः सबै कल्याण-कामिनी र प्रतिव्रता स्त्रीहरू आफ्ना पतिलाई अनन्यभावले सर्वात्मा भगवानको रूपमा पूजा

विद्वानपि विदग्धया ॥ बाढमित्याह विवशो न तच्चित्रं हि योषिति ॥ २९ ॥ विलोक्यैकान्तभूतानिभूतान्यादौ प्रजापतिः ॥ स्त्रियं चक्रे स्वदेहार्धं यया पुंसां मतिर्हृता ॥ ३० ॥ एवं शुश्रूषितस्तात भगवान्कश्यपः स्त्रिया ॥ प्रहस्य परमप्रीति दितिमाहाभिनन्द्य च ॥ ३१ ॥ कश्यप उवाच ॥ वरं वरय वामोरु प्रीतस्तेऽहमनिन्दिते ॥ स्त्रिया भर्तरि सुप्रीते कः काम इह चागमः ॥ ३२ ॥ पतिरेव हि नारीणां दैवतं परमं स्मृतम् ॥ मानसः सर्वभूतानां वासुदेवः श्रियः पतिः ॥ ३३ ॥ स एव देवतालिङ्गैर्नामरूपविकल्पितैः ॥ इज्यते भगवान्पुम्भिः स्त्रीभिश्च पतिरूपधृक् ॥ ३४ ॥ तस्मात्पतिव्रता नार्यः श्रेयस्कामाः सुमध्यमे ॥ यजन्तेऽनन्यभावेन पतिमात्मानमीश्वरम् ॥ ३५ ॥ सोऽहं त्वयाऽर्चितो भद्रे ईदृग्भावेन भक्तितः ॥ तत्ते सम्पादये काममसतीनां सुदुर्लभम् ॥३६॥ दितिरुवाच ॥ वरदो यदि मे ब्रह्मन्पुत्रमिन्द्रहणं वृणे ॥ अमृत्युं मृतपुत्राऽहं येन मे घातितौ सुतौ ॥ ३७ ॥ निशम्य तद्वचो विप्रो विमनाः पर्यतप्यत ॥ अहो अधर्मः सुमहानद्य मे समुपस्थितः ॥३८॥ अहो अर्थेन्द्रियारामो योषिन्मय्येह मायया ॥ गृहीतचेताः कृपणः पतिष्ये नरके ध्रुवम् ॥ ३९ ॥ कोऽतिक्रमोऽनुवर्तन्त्याः स्वभावमिह योषितः ॥ धिङ्मां बताबुधं स्वार्थे यदहं त्वजितेन्द्रियः ॥ ४० ॥ शरत्पद्मोत्सवं वक्त्रं वचश्च श्रवणामृतम् ॥ हृदयं क्षुरधाराभं स्त्रीणां को वेद चेष्टितम् ॥ ४१ ॥ नहि कश्चित्प्रियः स्त्रीणामञ्जसा स्वाशिषा-

गर्दछन् ॥३३-३५॥ हे भद्रे ! तिमीले पनि भक्तिपूर्वक म आफ्नो पतिको त्यस्तै भावले पूजा गरेकी छौ। अतः म तिम्रो त्यो सबै इच्छा पूर्ण गर्नेछु–जुन कुलटा स्त्रीहरूलाई दुर्लभ हुन्छन् ॥३६॥ दितिले भनिन्–हे ब्रह्मन् ! यदि वास्तवमा हजुर मलाई वर दिन खोज्ने भए म हजुरसित यस्तो अमर पुत्र माग्दछु जो इन्द्रको वध गर्न सकोस्–जसले मेरा दुवै छोराको वध गरेर मलाई अपुत्री तुल्याएको छ ॥ ३७ ॥ दितिको वचन सुनेर महर्षि कश्यप चिन्तित जस्ता भएर यस प्रकार पछुतो गर्न लागे–'अहो ! आज मेरो सामुन्ने यो ठूलो पापको प्रसंग उपस्थित भयो ॥३८॥ अहो ! म इन्द्रिय लोलुप चित्त हुने पुरुषलाई आज यी स्त्रीरूपिणी मायाले जड तुल्याइन्। अब म दीनले अवश्य नरकगामी हुनुपर्दछ ॥ ३९ ॥ यस नारीले त आफ्नो जातीय स्वभावको नै अनुसरण गरेकी छ, यसमा यसको के अपराध ? म नै ठूलो अजितेन्द्रिय तथा आफ्नो वास्तविक स्वार्थबाट अनभिज्ञ छु !

मलाई धिक्कार छ ॥४०॥ यी स्त्रीहरूको मुख शरत्कालको कमल जस्तै राम्रो हुन्छ र वचन त झन कानमा अमृतको धारा बगाउन थाल्दछन्, तर यिनको हृदय खुकुरीको धार झैं तीक्ष्ण हुन्छ । अनि इनको चरित्रलाई कसले बुझ्न सक्दछ ? ॥४१॥ आफ्नो इच्छाको पूर्तिका लागि नै यी आत्मा जस्तै प्रिय लाग्दछन् । साँच्चै भन्ने हो भने यी स्त्रीहरूको कोही पनि प्रिय हुँदैन । आफ्नो स्वार्थमा बाधा आउने देखे भने ती पति, पुत्र र भाइलाई पनि स्वयं मार्न अथवा अरुद्वारा मार्न लाउन सक्छन् ॥४२॥ अब यस विषयमा मैले यस्तो केही गर्नुपर्दछ कि मैले जुन प्रतिज्ञा गरेको थिएँ—'म तिमीलाई वर दिन्छु' मेरो त्यो वचन मिथ्या नहोस् र इन्द्र पनि नमरोस् ॥ ४३ ॥ हे राजन् ! यस्तो विचारेर मरीची नन्दन कश्यपले अलि रिसाए झैं गर्दै भने ॥ ४४ ॥ कश्यपजी भन्दछन्—'हे भद्रे ! यदि तिमी एक वर्षसम्म मैले बताएको विधिसहितव्रत निर्वाह गर्न सक्ने भए तिम्रो

त्मनाम् ॥ पतिं पुत्रं भ्रातरं वा घ्नन्त्यर्थे घातयन्ति च ॥ ४२ ॥ प्रतिश्रुतं ददामीति वचस्तन्न मृषा भवेत् ॥ वधं नार्हति चेन्द्रोऽपि तत्रेदमुपकल्पते ॥ ४३ ॥ इति संचिन्त्य भगवान्मारीचः कुरुनन्दन ॥ उवाच किञ्चित्कुपित आत्मानं च विगर्हयन् ॥ ४४ ॥ कश्यप उवाच ॥ पुत्रस्ते भविता भद्रे इन्द्रहा देवबान्धवः ॥ संवत्सरं व्रतमिदं यद्यञ्जो धारयिष्यसि ॥ ४५ ॥ दितिरुवाच ॥ धारयिष्ये व्रतं ब्रह्मन्ब्रूहि कार्याणि यानि मे ॥ यानि चेह निषिद्धानि न व्रतं घ्नन्ति यानि तु ॥ ४६ ॥ कश्यप उवाच ॥ न हिंस्याद्भूतजातानि न शपेन्नानृतं वदेत् ॥ न छिन्द्यान्नखरोमाणि न स्पृशेद्यदमङ्गलम् ॥ ४७ ॥ नाप्सु स्नायान्न कुप्येत न संभाषेत दुर्जनैः ॥ न वसीताधौतवासः स्रजं च विधृतां क्वचित् ॥ ४८ ॥ नोच्छिष्टं चण्डिकान्नं च सामिषं वृषलाहृतम् ॥ न भुञ्जीतोदक्यया दृष्टं पिबेदञ्जलिना त्वपः ॥४९॥ नोच्छिष्टाऽस्पृष्टसलिला सन्ध्यायां मुक्तमूर्धजा ॥ अनर्चिताऽसंयतवाङ्नासं-

कोखबाट इन्द्र-वध गर्ने पुत्र उत्पन्न हुनेछ, तर त्यसमा कुनै प्रकारको विघ्न भयो भने त्यो छोरो देवताहरूको मित्र बन्नेछ ॥ ४५ ॥ दिति भन्दछिन्—हे ब्रह्मन् ! म यो व्रत धारण गर्दछु । यस व्रतमा जुन-जुन कर्तव्य छ, जे जति त्याग गर्नु उचित छ र जे गर्नाले व्रत भङ्ग हुने सम्भावना नरहोस्, त्यो सबै मलाई आज्ञा हवस् ॥ ४६ ॥ कश्यपजीले भने—यो व्रत पालन गर्दा कहिल्यै पनि कुनै प्राणीको केही प्रकारले हिंसा नगरोस्, कसैलाई कटुवचन नभनोस् , झूटो नबोलोस्, नङ-केश नकाटोस् र कुनै अपवित्र वस्तु छुन हुँदैन ॥ ४७ ॥

---

* दृष्टान्त ( अर्धशिक्षित नारी )—कुनै गाउँमा थोटा बनियाँ बस्तथे । ती बी.ए., एल.एल.बी. पास थिए । यद्यपि तिनको हार्दिक अभिलाषा यो थियो कि उनलाई शिक्षित पत्नी मिलून्, तर दुर्भाग्यले उनलाई थोरै मात्र पढेकी स्त्री प्राप्त भई जो केवल हिन्दीका अक्षर चिन्दथी । बनियाँ उदार प्रकृतिका व्यक्ति थिए । माग्न आउनेलाई चन्दा आदि अवश्य दिन्थे । आय-व्ययको हिसाब मिलाउन दैनन्दिनीमा यस प्रकार लेखिदिन्थे ४) चन्दा, २) चन्दा. दैवयोगले त्यो रही पत्नीको हातमा पर्‍यो । 'नयाँ बैल, प्राण संकट' भन्ने झैं तिनकी पत्नीले जब आफ्नो विद्या ज्ञान अनुसार चन्दाको नाम पढिन् तब उनले बुझिन्—बजारमा बस्ने कुनै वेश्याको नाम चन्दा रहेछ । मेरो पति त्यसैको जालमा अल्झेका छन् । त्यसलाई कहिले ४) र कहिले २) दिएर आउँछन् । यो कुरा सर्वविदित छ कि पहिले त स्त्रीहरू कुनै कुरा शङ्का गर्दैनन् तर यदि तिनलाई शंका पर्‍यो भने ब्रह्मा पनि तिनको मनबाट त्यो सन्देह झिक्न सक्दैनन् । त्यसै दिनदेखि तिनकी पत्नीको मन चिढियो । एक दिन तिनले पत्नीसित पान मागे । पत्नीले भनिन्—'लौ चन्दासित किन माग्दैनौ, जसलाई धन दिएर आउँछौ !' बनियाँ त अकमक्क परे । के कुरा हो भन्ने बुझ्नै सकेनन् । अन्तमा तिनले धेरै हठ गरेर बारम्बार सोधेपछि तिनकी शंकालु पत्नीले भनिन्—'के तिमीले मलाई यो पनि थाहा पाउँदिन भन्ने ठानेका छौ ! मलाई तिम्रा सबै कर्मको ज्ञान छ । अहिले त म बाँचेकै छु । अनि तिमी किन त्यो 'चन्दा' वेश्याकहाँ जान्छौ ?' बनियाँले सबै कुरा बुझे—यो स्त्रीको दोष होइन, यसको अपूर्ण शिक्षाको फल हो—जो यसलाई दिइएको छ ।' भनाईको तात्पर्य के भने अपूर्ण शिक्षाले कुनै बेला अनावश्यक विवादको रूप धारण गर्दछ । 625

पानीमा पसेर ननुहाउनु, रिस नगर्नु, दुर्जनसित सम्भाषण नगर्नु, नधोएको वस्त्र नलगाउनु र अर्काले लगाएको माला धारण नगर्नु ॥ ४८ ॥ जूठो, भद्रकालीलाई अर्पित, मांसयुक्त शूद्रले ल्याएको अथवा रजस्वला स्त्रीले देखेको अन्न नखानु र अञ्जलिले जल पियोस् ॥४९॥ जूठो मुख, कुल्ला नगरी सन्ध्याको बेला, कपाल फुकाई, शृङ्गार नगरेर, विना वाणीलाई वशमा पारेर तथा लुगा नलगाई घरबाट बाहिर ननिस्कनु ॥५०॥ खुट्टा नधोई, अपवित्र अवस्थामा, चीमो खुट्टाले, उत्तर वा पश्चिम सिरान गरेर, अर्कासित, नाङ्गो स्थितिमा अथवा बिहानै तथा सायंकालमा नसुतोस् ॥५१॥ यी सबै निषिद्ध कर्महरू त्याग्दै सदा पवित्र र धोएको लुगा लगाई तथा सबै सौभाग्य-चिह्नहरूले युक्त भएर जलपान गर्नुभन्दा अगाडिनै गाई, ब्राह्मण, लक्ष्मी र विष्णु भगवान्को पूजा गरोस् ॥५२॥ त्यसपछि माला, चन्दन, नैवेद्य तथा आभूषण आदि दिएर सौभाग्यवती स्त्रीहरूको पूजन गरेर पतिको पूजा गरी उनको सेवामा तत्पर रहोस् र उसको तेज मेरो कुक्षिमा आएर स्थित भएको छ भन्ने विचार गरोस् ॥५३॥ हेदिति ! एकवर्ष तिमी यो पुंसवन व्रत अखण्डरूपले

वीता बहिश्चरेत् ॥५०॥ नाधौतपादाऽप्रयता नार्द्रपान्न उदक्शिराः ॥ शयीत नापराङ्नान्यैर्न नग्ना न च सन्ध्ययोः ॥ ५१ ॥ धौतवासाः शुचिर्नित्यं सर्वमङ्गलसंयुता ॥ पूजयेत्प्रातराशात्प्राग्गोविप्राञ्छ्रियमच्युतम् ॥ ५२ ॥ स्त्रियो वीरवतीश्चार्चेत्स्रग्गन्धबलिमण्डनैः ॥ पतिं चार्च्योपतिष्ठेत ध्यायेत्कोष्ठगतं च तम् ॥ ५३ ॥ सांवत्सरं पुंसवनं व्रतमेतदविप्लुतम् ॥ धारयिष्यसि चेत्तुभ्यं शक्रहा भविता सुतः ॥ ५४ ॥ बाढमित्यभिप्रेत्याथ दिती राजन्महामनाः ॥ काश्यपं गर्भमाधत्त व्रतं चाञ्जो दधार सा ॥ ५५ ॥ मातृष्वसुरभिप्रायमिन्द्र आज्ञाय मानद ॥ शुश्रूषणेनाश्रमस्थां दितिं पर्यचरत्कविः ॥ ५६ ॥ नित्यं वनात्सुमनसः फलमूलसमित्कुशान् ॥ पत्रांकुरमृदोऽपश्च काले काल उपाहरत् ॥ ५७ ॥ एवं तस्या व्रतस्थाया व्रतच्छिद्रं हरिर्नृप ॥ प्रेप्सुः पर्यचरज्जिह्मो मृगहेव मृगाकृतिः ॥ ५८ ॥ नाध्यगच्छद्व्रतच्छिद्रं तत्परोऽथ महीपते ॥ चिन्तां तीव्रां गतः शक्रः केन मे स्याच्छिवं त्विह ॥ ५९ ॥ एकदा सा तु सन्ध्यायामुच्छिष्टा व्रतकर्शिता ॥ अस्पृष्टवार्यधौताङ्घ्रिः सुष्वाप विधिमोहिता ॥ ६० ॥ लब्ध्वा तदन्तरं शक्रो

पालन गर अनि तिम्रो गर्भबाट इन्द्र-वध गर्ने पुत्र जायमान हुनेछ ॥ ५४ ॥ हे राजन् ! कश्यपकी महामनस्विनी पत्नी दितिले 'हुन्छ' भनेर कश्यपको तेजयुक्त गर्भ धारण गरिन् र व्रतको पनि दीक्षा लिइन् ॥ ५५ ॥ हे मानद ! बाठा देवराज इन्द्रलाई जब आफ्नी आमाकी बहिनी दितिको अभिप्राय थाहा भयो तब आश्रम निवासिनी दितिको सेवा शुश्रूषा गर्नलागे ॥५६॥ त्यस बखत ती उनलाई दिनहुँ बनबाट फूल, फल, मूल, समिधा, कुश, पत्र, दूध, माटो तथा जल आदि ल्याएर दिन्थे ॥ ५७ ॥ हे राजन् ! जस्तै व्याधा मृगादिलाई मार्नको निम्ति उसैको जस्तो वेष बनाउँदछ, त्यस्तै नै इन्द्र आफ्नो कपट वेष बनाएर व्रतमा स्थित दितिको व्रतभङ्ग पारिदिने मौका खोज्दै तिनको सेवा-टहलमा संलग्न रहे ॥ ५८ ॥ हे महीपति ! यस प्रकार छिद्रान्वेषणमा सवदा तत्पर रहेर पनि जब इन्द्रलाई कुनै मौका हात लागेन, तब उनलाई यो चिन्ता भयो—म के गरुँ कि जसरी मेरो कल्याण होस् ॥ ५९ ॥ एक दिनको कुरा हो—विधाताको विधानले विमोहित दिति व्रतले गर्दा अत्यन्त दुर्बल हुनाले सायङ्कालको उच्छिष्ट अवस्थामा कुल्ला नगरी तथा हात खुट्टा नधोई

सुत्न गइन् ॥ ६० ॥ अवसर हात लागेको देखेर योगेश्वर इन्द्र तत्काल आफ्नो योगबलद्वारा निद्राले अचेत दितिको उदरमा पसे ॥ ६१ ॥ उहाँ तिनले आफ्नो वज्रले उस सुवर्णको देदीप्यमान गर्भको सात टुक्रा पारे। काट्ने बेलामा जब त्यो बालक रुन लाग्यो तब 'नरोऊ' यस्तो भनेर तिनले त्यो एक-एक खण्डको सात-सात टुक्रा पारिदिए ॥६२॥ हे राजन् ! यस प्रकार काटिएपछि ती सबैले हात जोरेर विनीत-भावले भने–'हे इन्द्र ! तिमी हामीलाई किन मारिरहेका छौ ? हामी तिम्रा भाइ हौं' ॥६३॥ अनि इन्द्र आफ्ना अनन्य पार्षदले मरुतहरूसित भने–अस्तु, यदि मेरा भाइ हौ भने डराउन पर्दैन ॥६४॥ हे राजन् ! त्यससमय जस्तै अश्वत्थामाको ब्रह्मास्त्रले तिम्रो कुनै अनिष्ट भएको थिएन, त्यस्तै नै श्रीनिवास नारायणको कृपाले दितिको त्यो गर्भ इन्द्रको वज्रद्वारा टुक्रा-टुक्रा भएर पनि मरेनन् ॥६५॥ कुनै पुरुष एकपल्ट भगवान् आदिपुरुषको पूजन गरेर नै उनको समानता प्राप्त गर्दछ, त एक वर्षमा केही मात्र कम दिनसम्म सेवा गरेकी थिइन् ॥६६॥ त्यसपछि ती मरुद्गण इन्द्रसित मिलेर उनञ्चास देवता भए र इन्द्र र इन्द्रले विमाताको सम्बन्धबाट घटित हुने

निद्रापहृतचेतसः ॥ दितेः प्रविष्ट उदरं योगेशो योगमायया ॥ ६१ ॥ चकर्त सप्तधा गर्भं वज्रेण कनकप्रभम् ॥ रुदन्तं सप्तधैकैकं मा रोदीरिति तान्पुनः ॥ ६२ ॥ ते तमूचुः पाट्यमानाः सर्वे प्राञ्जलयो नृप ॥ नो जिघांससि किमिन्द्र भ्रातरो मरुतस्तव ॥ ६३ ॥ मा भैष्ट भ्रातरो मह्यं यूयमित्याह कौशिकः ॥ अनन्यभावान्पार्षदानात्मनो मरुतां गणान् ॥ ६४ ॥ न ममार दितेर्गर्भः श्रीनिवासानुकम्पया ॥ बहुधा कुलिशक्षुण्णो द्रोण्यस्त्रेण यथा भवान् ॥ ६५ ॥ सकृदिष्ट्वाऽऽदिपुरुषं पुरुषो याति साम्यताम् ॥ संवत्सरं किञ्चिदूनं दित्या यद्धरिरर्चितः ॥ ६६ ॥ सजूरिन्द्रेण पञ्चाशद्देवास्ते मरुतोऽभवन् ॥ व्यपोह्य मातृदोषं ते हरिणा सोमपाः कृताः ॥ ६७ ॥ दितिरुत्थाय ददृशे कुमाराननलप्रभान् ॥ इन्द्रेण सहितान्देवी पर्यतुष्यदनिन्दिता ॥ ६८ ॥ अथेन्द्रमाह ताताहमादित्यानां भयावहम् ॥ अपत्यमिच्छन्त्यचरं व्रतमेतत्सुदुष्करम् ॥ ६९ ॥ एकः संकल्पितः पुत्रः सप्तसप्ताभवन्कथम् ॥ यदि ते विदितं पुत्र सत्यं कथय मा मृषा ॥ ७० ॥ इन्द्र उवाच ॥ अम्ब तेऽहं व्यवसितमुपधार्यागतोऽन्तिकम् ॥ लब्धान्तरोऽच्छिदं गर्भमर्थबुद्धिर्न धर्मवित् ॥ ७१ ॥ कृतो मे सप्तधा गर्भ आसन्सप्त कुमारकाः ॥ तेऽपि चैकैकशो वृक्णाः सप्तधा नापि मम्रिरे ॥ ७२ ॥ ततस्तत्परमाश्चर्यं वीक्ष्याध्यवसितं मया ॥ महापुरुषपूजायाः सिद्धिः काप्यानुषङ्गिकी ॥ ७३ ॥ आराधनं भगवत ईहमाना निराशिषः ॥ ये तु नेच्छन्त्यपि परं

भएको दोष त्यागेर सोमपायी देवता बनाइदिए ॥६७॥ जब दिति उठिन् तब तिनले इन्द्रसित ती अग्नि समान तेजस्वी उनञ्चास बालकहरूलाई सामुन्ने उभिएका देखिन्। त्यसले उत्तम आचरण भएकी दिति निकै प्रसन्न भइन् ॥ ६८ ॥ उनले इन्द्रलाई भनिन्–'बाबु ! म अदितिका पुत्रहरूलाई भय दिने छोरो पाउने इच्छाले यस दुष्कर व्रतको पालन गर्दै थिएँ। मेरो सङ्कल्प त केवल यौटा छोरोको निम्ति थियो, अनि यी उनञ्चास पुत्र कसरी भए ? बाबु ! यस विषयमा यदि तिमीलाई थाहा भए सत्य-सत्य बताऊ, मिथ्या नभन ॥६९॥७०॥ इन्द्रले भने–हे माता ! तिम्रो दुष्ट अभिप्राय थाहा पाएर म स्वार्थबुद्धिले तिमीनेर आएर बस्न लागेको थिएँ। मलाई धर्मको विचार थिएन। यसनिम्ति अवसर पाएर मैले तिम्रो गर्भको टुक्रा-टुक्रा पारिदिएँ ॥७१॥ पहिले जुन सात टुक्रा पारेथें, ती सात बालक भए। तब तिनको पनि प्रत्येकको सात-सात टुक्रा पारिदिएँ, तैपनि मरेनन् र सात टुक्राका उनञ्चास बालक

भए ।।७२।। यो आश्चर्यजनक घटना घटित भएको मैले विचार गरें—यो परमपुरुष नारायणको उपासनाले प्राप्त हुने कुनै सिद्धि छ ।। ७३ ।। निष्कामभावले भगवान्‌को उपासना गर्दै जो जन मोक्ष खोज्दैनन् तिनै सच्चा स्वार्थ-कुशल हुन्छन् ।। ७४ ।। अतः आफ्नो आत्मा तथा आफ्नो आत्मस्वरूप ज्ञान गराउने जगदीश्वरको आराधना गरेर कुन बुद्धिमान् पुरुष तीसित विषय भोगहरूको इच्छा किन गर्ला, जो कि नरकमा पनि पाउन सकिन्छ ।। ७५ ।। हे माता ! तिमी ठूली हौ म मूर्खले जुन दुष्टता गरें त्यो क्षमा गर । ठूलो सौभाग्यको कुरा छ—तिम्रो गर्भ मरेर पनि जीवित भयो ।।७६।। श्रीशुकदेव भन्नुहुन्छ—इन्द्रले शुद्ध भावले प्रसन्न दितिले भनेपछि देवराज इन्द्र प्रणाम गरेर तथा मरुद्गणहरूसाथै लिई आफ्नो देवलोकमा फर्के ।। ७७ ।। यस प्रकार जो तिमीले सोधेका थियौ त्यो मैले मरुद्गणको मङ्गलमय उत्पत्तिको सबै वृत्तान्त सुनाएँ । अब अरु के भनूँ ? ।। ७८ ।। इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां अष्टादशोऽध्यायः ।। १८ ।। ( पुंसवन व्रतको विधान )—त्यसपछि राजा परीक्षितले भने—हे ब्रह्मन् ! हजुरले जो पुंसवन

ते स्वार्थकुशलाः स्मृताः ॥ ७४ ॥ आराध्यात्मप्रदं देवं स्वात्मानं जगदीश्वरम् ॥ को वृणीते गुणस्पर्शं बुधः स्यान्नरकेऽपि यत् ॥ ७५ ॥ तदिदं मम दौर्जन्यं बालिशस्य महीयसि ॥ क्षन्तुमर्हसि मातस्त्वं दिष्ट्या गर्भो मृतोत्थितः ॥ ७६ ॥ श्रीशुक उवाच ॥ इन्द्रस्तयाऽभ्यनुज्ञातः शुद्धभावेन तुष्टया ॥ मरुद्भिः सह तां नत्वा जगाम त्रिदिवं प्रभुः ॥ ७७ ॥ एवं ते सर्वमाख्यातं यन्मां त्वं परिपृच्छसि ॥ मङ्गलं मरुतां जन्म किं भूयः कथयामि ते ॥ ७८ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे मरुदुत्पत्तिकथनं नामाष्टादशोऽध्यायः ॥ १८ ॥ राजोवाच ॥ व्रतं पुंसवनं ब्रह्मन्भवता यदुदीरितम् ॥ तस्य वेदितुमिच्छामि येन विष्णुः प्रसीदति ॥ १ ॥ श्रीशुक उवाच ॥ शुक्ले मार्गशिरे पक्षे योषिद्भर्तुरनुज्ञया ॥ आरभेत व्रतमिदं सार्वकामिकमादितः ॥ २ ॥ निशम्य मरुतां जन्म ब्राह्मणाननुमन्त्र्य च ॥ स्नात्वा शुक्लदती शुक्ले वसीतालंकृताम्बरे ॥ पूजयेत्प्रातराशात्प्राग्भगवन्तं श्रिया सह ॥ ३ ॥ अलं ते निरपेक्षाय पूर्णकाम नमोऽस्तु ते ॥ महाविभूतिपतये नमः सकलसिद्धये ॥ ४ ॥ यथा त्वं कृपया भूत्या तेजसा महिमौजसा ॥ जुष्ट ईशगुणैः सर्वैस्ततोऽसि भगवान्प्रभुः ॥ ५ ॥ विष्णुपत्नि महामाये महापुरुषलक्षणे ॥ प्रीयेथा मे महाभागे लोकमातर्नमोऽस्तु ते ॥६॥

व्रतको चर्चा गर्नुभएथ्यो, जसले विष्णु भगवान् प्रसन्न हुन्छन्, म त्यसको विधि जान्न उत्सुक छु ।। १ ।। श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! आफ्ना स्वामीको आज्ञा लिएर सबै कामनाहरू सम्पन्न पार्ने यस व्रतलाई मार्गशीर्ष शुक्ल पक्षको प्रतिपदाबाट आरम्भ गर्नुपर्दछ ।। २ ।। पहिले मरुद्गणको कथा सुनेर ब्राह्मणहरूबाट आज्ञा लिनु तब प्रतिदिन बिहानै दतिवन आदिले दाँत सफा पारी स्नानबाट निवृत्त भएर दुइटा सेतो वस्त्र र आभूषण लगाई तथा भोजन गर्नभन्दा पहिल्यै लक्ष्मी-नारायणको पूजा गरेर । यस प्रकार स्तुति गरोस्—।। ३ ।। हे पूर्णकाम ! हजुरलाई केही पनि अप्राप्य रहन्न । यसैनिम्ति हजुर कसैसित केही इच्छा राख्नु हुन्न । हे महाविभूतिपते ! हे सर्वसिद्धिमय ! हजुरलाई बारम्बार नमस्कार छ ।। ४ ।। हे देव ! हजुर कृपा, विभूति, तेज, महिमा तथा वीर्य आदि प्रभुताका सबै गुणले परिपूर्ण छन् ।। ५ ।। यस प्रकार भगवान्‌को विनम्र प्रार्थना गरिसके पछि भगवती लक्ष्मीजीको स्तुति गर्दै भन्नलागे—हे विष्णु-पत्नी ! हे महामाये ! हे भगवद्गुणविशिष्टे ! हेमहाभागे । हे मातः ! तिमी मेरो माथि प्रसन्न होऊ—तिमीलाई प्रणाम छ ।।६।।

अनि संबत मन्त्र—ॐ महापुरुष महाविभूतिपति तथा भगवान् महानुभावलाई उनका महाविभूतिहरू सहित नमस्कार छ। उनलाई पूजोपहार समर्पण गर्दछु।' यस मन्त्रको उच्चारण गरेर विष्णु भगवानको नित्य आवाहन, अर्घ्य, पाद्य, आचमन, स्नान, वस्त्र, यज्ञोपवीत, आभूषण, गन्ध, पुष्प, धूप, दीप तथा उपहार आदि निवेदन गरोस् ॥ ७ ॥ रहेको नैवेद्यले 'ॐ नमो भगवते महापुरुषाय महाविभूतिपतये स्वाहा' यो मन्त्र पढेर बल्दो अग्निमा बाह्र आहुति देओस् ॥ ८ ॥ जसलाई सबै सम्पत्ति प्राप्त गर्ने अभिलाषा छ, त्यो सबै सबै कामनाहरू पूर्ण पार्ने एवं वरदायक श्रीलक्ष्मीजी र भगवान् नारायण दुवैको एकसंगै भक्तिपूर्वक पूजन गरोस् ॥ ९ ॥ त्यसपछि भक्तिको कारण नम्रचित्तले पृथ्वीमा लम्पसार परेर साष्टांग प्रणाम गरोस् र उपर्युक्त मन्त्रको दसपल्ट जप गरेपछि यस स्तोत्रको पाठ गरोस्—॥१०॥ 'हे लक्ष्मी नारायण ! हजुर दुवै सर्वव्यापकर सम्पूर्ण जगत्का परम कारण हुनुहुन्छ। यी लक्ष्मीजी हजुर नारायणकी दुर्निवार तथा भक्ति रूपिणी प्रकृति हुनुहुन्छ ॥११॥ हजुर इनका अधीश्वर एवं साक्षात् परमपुरुष हुनुहुन्छ। हजुर नै यज्ञ र इज्या हुनुहुन्छ। हजुर फलका

ॐ नमो भगवते महापुरुषाय महानुभावाय महाविभूतिपत्ते सह महाविभूतिभिर्बलिमुपहराणीति ॥ अनेनाहरहर्मन्त्रेण विष्णोरावाहनार्घ्य-
पाद्योपस्पर्शस्नानवासउपवीतविभूषणगन्धपुष्पधूपदीपोपहाराद्युपचारांश्च समाहित उपाहरेत ॥ ७ ॥ हविःशेषं तु जुहुयादनले द्वादशाहुतीः ॥ ॐ
नमो भगवते महापुरुषाय महाविभूतिपतये स्वाहेति ॥ ८ ॥ श्रियं विष्णुं च वरदावाशिषां प्रभवावुभौ ॥ भक्त्या संपूजयेन्नित्यं यदीच्छेत्सर्वसम्पदः
॥ ९ ॥ प्रणमेद्दण्डवद्भूमौ भक्तिप्रह्वेण चेतसा ॥ दशवारं जपेन्मन्त्रं ततः स्तोत्रमुदीरयेत् ॥ १० ॥ युवां तु विश्वस्य विभू जगतः कारणं परम् ॥
इयं हि प्रकृतिः सूक्ष्मा मायाशक्तिर्दुरत्यया ॥ ११ ॥ तस्या अधीश्वरः साक्षात्त्वमेव पुरुषः परः ॥ त्वं सर्वयज्ञ इज्येयं क्रियेयं फलभुग्भवान् ॥१२॥
गुणव्यक्तिरियं देवी व्यञ्जको गुणभुग्भवान् ॥ त्वं हि सर्वशरीर्यात्मा श्रीः शरीरेन्द्रियाशया ॥ नामरूपे भगवती प्रत्ययस्त्वमपाश्रयः ॥ १३ ॥ यथा
युवां त्रिलोकस्य वरदौ परमेष्ठिनौ ॥ तथा म उत्तमश्लोक सन्तु सत्या महाशिषः ॥१४॥ इत्यभिष्टूय वरदं श्रीनिवासं श्रिया सह ॥ तन्निःसार्योपहरणं
दत्त्वाऽऽचमनमर्चयेत् ॥ १५ ॥ ततः स्तुवीत स्तोत्रेण भक्तिप्रह्वेण चेतसा ॥ यज्ञोच्छिष्टमवघ्राय पुनरभ्यर्चयेद्धरिम् ॥ १६ ॥ पतिं च परया भक्त्या
महापुरुषचेतसः ॥ प्रियैस्तैस्तैरुपनमेत्प्रेमशीलः स्वयं पतिः ॥ बिभृयात्सर्वकर्माणि पत्न्या उच्चावचानि च ॥१७॥ कृतमेकतरेणापि दम्पत्योरुभयोरपि ॥

भोक्ता र यो क्रिया हुन् ॥१२॥ यी देवी लक्ष्मी गुणहरूकी अभिव्यक्ति हुन् र हजुर उनका व्यञ्जक गुणहरूका भोक्ता हुनुहुन्छ। हजुर सबै देहधारीहरूका आत्मा र लक्ष्मी शरीर, इन्द्रिय तथा अन्तःकरण हुन्। यी भगवती नाम तथा रूप हुन्, हजुर इनका प्रकाशक र आश्रय हुनुहुन्छ ॥१३॥ हे पवित्रकीर्ति ! हजुर त्रिलोकका वरदाता ईश्वर हुनुहुन्छ। अतः मेरो सबै ठूला-ठूला कामनाहरू हजुरको कृपाले पूर्ण होउन् ॥१४॥ यस प्रकार लक्ष्मी सहित वरदायक लक्ष्मीपतिको स्तुति गरेर त्यहाँबाट नैवेद्य हटाएर भगवान्लाई जलले आचमन गराई पूजन गरोस् ॥१५॥ फेरि भक्ति-विनम्र चित्तले विविध स्तोत्र द्वारा भगवान्को स्तुति गरोस् र यज्ञशिष्ट वस्तु सुँघेर फेरि भगवान्को पूजा गरोस् ॥१६॥ आफ्नू पतिलाई पनि यसै गरी उनको सबै मनपरेका वस्तु अर्पण गरेर अतिशय भक्तिभावले ईश्वर बुद्धिका साथै पूजोस् र स्वयं पति पनि आफ्नी पत्नीको सबै साना-ठूला कामना पूर्णपारुन् ॥१७॥ स्त्री-पुरुषमा कसैको

पनि गरिएको कार्य पति-पत्नी दुवैका लागि फलदायक हुन्छ । अतएव यदि पत्नी यो व्रत पूर्ण गर्नमा समर्थ छैन भने पति नै एकाग्र मनले यसलाई सम्पन्न गरोस् ॥१८॥ किनकियो वैष्णवव्रत आरम्भ गरेर बीचमा कहिल्यै नछाड्नू । नियमपूर्वक यस व्रतको पालन गर्ने पुरुष अथवा स्त्रीलाई नित्य देवपूजनको बाद माला, चन्दन-नैवेद्य तथा आभूषणादि द्वारा ब्राह्मण तथा सधवा स्त्रीहरूको भक्तिपूर्वक पूजन गर्नुपर्दछ ॥१९॥ त्यसपछि भगवान्‌का आफ्नो परमधाम जाने भावना गरेर विसर्जन गरोस् तथा चित्त शुद्धिका लागि र कामनाहरूको पूर्तिका निमित्त भगवान्‌लाई पूर्ण निवेदित प्रसाद खाओस् ॥२०॥ त्यो साध्वी स्त्री यही विधिअनुसार बाह्र महीनासम्म यस व्रतको आचरण गरेर कार्तिकमासको अन्तिम दिन उद्यापन, उपवास तथा पूजन गरोस् ॥२१॥ उद्यापनको दिन विहानै स्नान गरेर पूर्ववत् कृष्ण भगवान्‌को पूजा गरेर त्यस खीरो यति पाकयज्ञ विधिको अनुसार दूधमा पकाइएका घृत मिश्रित चरु द्वारा अग्निमा बाह्र आहुतिहरु देओस् ॥२२॥ त्यसपछि ब्राह्मणहरूलाई प्रसन्नतापूर्वक दिएका आशीर्वादहरूलाई शिरमा धारण गरोस् र उनलाई मस्तक न्युराएर भक्तिपूर्वक

पत्न्यां कुर्यादनर्हायां पतिरेतत्समाहितः ॥ १८ ॥ विष्णोर्व्रतमिदं बिभ्रन्न विहन्यात्कथञ्चन ॥ विप्रान्स्त्रियो वीरवतीः स्रग्गन्धबलिमण्डनैः ॥ अर्चेद्-
हरहर्भक्त्या देवं नियममास्थितः ॥ १९ ॥ उद्वास्य देवं स्वे धाम्नि तन्निवेदितमग्रतः ॥ अद्यादात्मविशुद्ध्यर्थं सर्वकामर्द्धये तथा ॥ २० ॥ एतेन
पूजाविधिना मासान्द्वादश हायनम् ॥ नीत्वाऽथोपचरेत्साध्वी कार्तिके चरमेऽहनि ॥२१॥ श्वोभूतेऽप उपस्पृश्य कृष्णमभ्यर्च्य पूर्ववत् ॥ पयःशृतेन
जुहुयाच्चरुणा सह सर्पिषा ॥ पाकयज्ञविधानेन द्वादशैवाहुतीः पतिः ॥ २२ ॥ आशिषः शिरसाऽऽदाय द्विजैः प्रीतैः समीरिताः ॥ प्रणम्य शिरसा
भक्त्या भुञ्जीत तदनुज्ञया ॥२३॥ आचार्यमग्रतः कृत्वा वाग्यतः सह बन्धुभिः ॥ दद्यात्पत्न्यै चरोः शेषं सुप्रजास्त्वं सुसौभगम् ॥ २४ ॥ एतच्च-
रित्वा विधिवद्व्रतं विभोरभीप्सितार्थं लभते पुमानिह ॥ स्त्री त्वेतदास्थाय लभेत सौभगं श्रियं प्रजां जीवपतिं यशो गृहम् ॥ २५ ॥ कन्या च
विन्देत समग्रलक्षणं वरं त्ववीरा हतकिल्बिषा गतिम् ॥ मृतप्रजा जीवसुता धनेश्वरी सुदुर्भगा सुभगा रूपमग्र्यम् ॥ २६ ॥ विन्देद्विरूपा विरुजा
विमुच्यते य आमयावीन्द्रियकल्पदेहम् ॥ एतत्पठन्नभ्युदये च कर्मण्यनन्ततृप्तिः पितृदेवतानाम् ॥ २७ ॥ तुष्टाः प्रयच्छन्ति समस्तकामान्होमावसाने

प्रणाम गरोस् । अनि तिनको आज्ञा लिएर पहिले आचार्यलाई भोजन गराओस् । त्यसपछि आफ्ना बन्धुहरू सहित मौनभावले स्वयं भोजन गरोस् । अनि जुन सत्पुत्रदायक, सौभाग्यप्रद चरु शेष होस्, त्यो आफ्नी पत्नीलाई खान देओस् ॥२३॥२४॥ विष्णु भगवान्‌का प्रिय यस व्रतको विधिपूर्वक आचरण गर्नाले पुरुषलाई सबै इच्छित पदार्थ मिल्दछन् । स्त्रीले यसको आचरण गर्नाले सौभाग्य, सम्पत्ति, सन्तान, अवैधव्य, यश र गृह आदिका सबै सुख प्राप्त हुन्छन् ॥२५॥ यो व्रत धारण गर्नाले कन्या सर्वलक्षणसम्पन्न पति पाउँछे, विधवा पाप-रहित भएर सद्गति प्राप्त गर्दछे, मृतपुत्रा स्त्रीका चिरञ्जीवी पुत्र प्राप्त हुन्छ, धनवती तर अभागिनी स्त्रीलाई सौभाग्य एवं कुरूपालाई रूपवान् प्राप्त हुन्छ । कुनै रोगी पुरुष यदि यसको आचरण गर्दछ भने रोगमुक्त भएर बलियो शरीरको हुनेछ । आभ्युदयिक अर्थात् यज्ञ श्राद्धादिको अवसरमा यसको पाठ गर्नाले देवता तथा पितृहरूलाई अनन्त तृप्ति हुन्छ ॥२६॥२७॥ यसैले ती देवता र पितर सन्तुष्ट भएर त्यसका सबै कामनाहरू पूर्ण पारिदिन्छन् । यसै प्रकार होमको अन्त्यमा हवन गरिएका सामग्रीलाई अग्निद्वारा भोग्ने भएका श्रीलक्ष्मी-नारायण

630

प्रसन्न भएर त्यस *विश्वासी भक्तको सबै मनोरथ पूर्ण पारिदिने गर्दछन्। हे राजन्! मरुद्गणको यो पुण्यप्रद तथा महान चरित्र र कश्यप प्रिया दितिको महाव्रतको वृत्तान्त

हुतभुक्श्रीर्हरिश्च ॥ राजन्महन्मरुतां जन्म पुण्यं दितेर्व्रतं चाभिहितं महत्ते ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टादशसाहस्र्यां संहितायां वैयासिक्यां षष्ठस्कन्धे पुंसवनव्रतकथनं नामैकोनविंशोऽध्यायः ॥ १९ ॥

मैले तिमीलाई सुनाएँ ॥२८॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायामेकोनविंशोऽध्यायः ॥१९॥

॥ इति षष्ठस्कन्धः समाप्तः ॥



---

* सत्सँग वाणी-पानाले दुइ कुराले हुन्छ–विश्वासी पुरुषहरूको वाणीले अथवा विश्वासी पुरुषका आचरणहरूले र–२. कुनै पनि प्रकारले गरिएका भगवत्–स्मरणले। १. आजका धन मदान्धको औषधि के हो? तिनको धन रहनै नदिनु। तर द्वेषपूर्ण औषधि दिइयो भने त्यसको फल उल्टो निस्कन्छ। त्यसलाई रोगीसित द्वेष नहोस्, केवल रोगसित होस्–यस्तो व्यक्तिले औषधि दियो भने उचित छ। २. धन नकारात्मक वस्तु होइन, नकारात्मक हो धनको अभिमान। यदि धनको सदुपयोग गरे भने त्यो भगवानको सेवामा लाग्दछ। यदि त्यसको दुरुपयोग भयो भने मानिसलाई यति तल खसालिदिन्छ कि त्यसको कहीं पनि ठेगान लाग्दैन। मानवता मेटिनमा सबैलाई कष्ट हुन्छ, तर धन-मद हुने व्यक्ति मानवतालाई हाँसी-हाँसी आफ्नै हातले समाप्त पारेर हाल्दछन्। धन गर्वित व्यक्ति विचार्दछन्–कसैमाथि दया गर्नु त चित्तको दुर्बलता हो। धनाभिमानले लोभ बढाउँछ र मोह, जुवा, चोरी–यी तीनै व्यसनलाई कुनै न कुनै रूपमा ल्याइदिन्छ। अरूलाई पीडा दिएर आत्म-पोषण धनाभिमानी व्यक्तिको स्वभाव नै बन्दछ। कृमि, विष्ठा एवं भस्मको पूर्वरूप शरीरलाई नै सबभन्दा श्रेष्ठ ठान्नु, अनुचित छ, तर धन-गर्व त्यो पनि गराउन सफल हुन्छ। ३. शरणागतिका दुइ स्वरूप छन्–१. शुद्ध भएर भगवान्को शरणमा जानु। यसमा शुद्धिका लागि आफ्नो बल लगाउनु पर्दछ आफ्नो बलको शुद्धि गर्नुपर्दछ। २. जसरी भए पनि भगवान्को शरणमा जाऊ। जस्तो छु, उनको छु–यस्तो मानेर आँखा चिम्लेर नै आफूलाई प्रभुका चरणमा अर्पण गरिदेऊ, अनि तिम्रो शुद्धि स्वयं भगवान् गर्दछन्। जो स्वयं आफ्नो शुद्धि गर्न चाहन्छ त्यसले अनेक थरिका विघ्न बाधा बेहोर्नुपर्दछ। अवश्य शुद्धि हुन्छ भन्ने निश्चय पनि छैन र निश्चय पनि छैन र निश्चय भए पनि लामो समय लाग्दछ। जसको शुद्धि स्वयं भगवान् गर्दछन्, त्यसमा विघ्न बाधा आउन्न। त्यसमा अशुद्धिको मोटो कण पनि शेष रहन पाउन्न। शुद्धि शीघ्र र निश्चित हुन्छ।

जस्तै–कसैले आफ्नो सबै सम्पत्ति सरकारलाई सुम्पिदियो। यस प्रकार जब सबै सम्पत्ति सरकारको भयो तब लेन देन पनि सरकारकै उत्तरदायित्व भयो। अब पर नै मैले कसैलाई दान दिइसकें, तब त्यो धनको फोहोर म किन सफा गरौं? त्यो त लिनेले स्वयं गर्दछ। यसै प्रकार जो व्यक्ति आफूलाई भगवान्मा अर्पण गर्ने इच्छा गर्दछन्, तिनले यो हेर्ने आवश्यकता छैन कि म कस्तो छु। उनले त यो हेर्नुपर्दछ कि भगवान् कस्ता छन्! ३. प्रश्न–जब भगवान्को प्रेरणाले नै सबै काम हुन्छ भने कर्मको शुभाशुभ फल किन प्राप्त हुन्छ? उत्तर–र्म बलाई कर्मको दण्ड प्राप्त हुँदैन। जीव भगवान्को प्रेरणालाई बिर्सेर आफू स्वयं कर्ता बनेर बस्तछ, यस दुरभिमानको नै तिनलाई दण्ड प्राप्त हुन्छ। भगवान् नै सबै गर्दछन्–यो मान यथार्थरूपले भएपछि अशुभ टिक्नै सक्दैन। यदि केही शुभाशुभ शेष रहे पनि सम्पूर्ण दायित्व भगवान्को नै हुन्छ। कर्तापन भएपछि मात्र कर्म बन्दछ र कर्म बनेपछि नै कर्तामाथि उत्तरदायित्वको भारि आइलाग्दछ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते सप्तमः स्कन्धः प्रारभ्यते।

श्रीहरिः ( नारद युधिष्ठिर संवाद )—महाराज परीक्षितले सोधे–हे ब्रह्मन् ! भगवान् समदर्शी इ सबैका सुहृद् हुन् । अनि उनले विषम-दृष्टि पुरुष झैं इन्द्रको निम्ति दैत्यहरू किन मारे ? ॥१॥ ती त कल्याणस्वरूप छन् । उनलाई देवताहरूसित कुनै प्रयोजन छैन र निर्गुण हुनाले दैत्यसित उनलाई कुनै द्वेष वा उद्वेग रहन्न ॥२॥ हे महाभाग । मेरो मनमा नारायणका गुणहरूको प्रति यो ठूलो सन्देह भएको छ, यसलाई हजुर नै निवृत्त पार्न सक्नुहुन्छ ॥३॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! हजुरले भगवान्‌को विचित्र चरित्रसम्बन्धी धेरै राम्रो प्रश्न गर्नुभयो, जसमा यहाँ परमभक्तको माहात्म्य वर्णित छ ॥ ४ ॥ यस चरित्रको नारदादि मुनिहरू सर्वदा गान गर्दछन् । अब म मुनीश्वर श्रीकृष्ण द्वैपायनलाई प्रणाम गरेर त्यो हरिकथा भन्दछु ॥५॥ वास्तवमा ती भगवान् निर्गुण, अजन्मा, अव्यक्त र प्रकृति भन्दा पर छन् । तापनि आफ्नो मायाका गुणहरूको भरमा ती स्वयं बाध्य-बाधक भावमा प्राप्त

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच समः प्रियः सुहृद्ब्रह्मभूतानां भगवान्स्वयम् ॥ इन्द्रस्यार्थे कथं दैत्यानवधीद्विषमो यथा ॥ १ ॥
न ह्यस्यार्थः सुरगणैः साक्षान्निः श्रेयसात्मनः ॥ नैवासुरेभ्यो विद्वेषो नोद्वेगश्चागुणस्य हि ॥ २ ॥ इति नः सुमहाभाग नारायणगुणान्प्रति ॥ संशयः
सुमहाञ्जातस्तद्भवाँश्छेत्तुमर्हति ॥३॥ श्रीशुक उवाच ॥ साधु पृष्टं महाराज हरेश्चरितमद्भुतम् ॥ यद्भागवतमाहात्म्यं भगवद्भक्तिवर्धनम् ॥४॥ गीयते
परमं पुण्यमृषिभिर्नारदादिभिः ॥ नत्वा कृष्णाय मुनये कथयिष्ये हरेः कथाम् ॥ ५ ॥ निर्गुणोऽपि ह्यजोऽव्यक्तो भगवान्प्रकृतेः परः ॥ स्वमायागुण-
माविश्य बाध्यबाधकतां गतः ॥ ६ ॥ सत्त्वं रजस्तम इति प्रकृतेर्नात्मनो गुणाः ॥ न तेषां युगपद्राजन्ह्रास उल्लास एव वा ॥ ७ ॥ जयकाले तु स-
त्त्वस्य देवर्षीन्रजसोऽसुरान् ॥ तमसो यक्षरक्षांसि तत्कालानुगुणोऽभजत् ॥ ८ ॥ ज्योतिरादिरिवाभाति संघातान्न विविच्यते ॥ विदन्त्यात्मानमात्म-
स्थं मथित्वा कवयोऽन्ततः ॥ ९ ॥ यदा सिसृक्षुः पुरः आत्मनः परो रजः सृजत्येष पृथक् स्वमायया ॥ सत्त्वं विचित्रासु रिरंसुरीश्वरः शयिष्यमाण-
स्तम ईरयत्यसौ ॥ १० ॥ कालं चरन्तं सृजतीश आश्रयं प्रधानपुम्भ्यां नरदेव सत्यकृत् ॥ य एष राजन्नपि काल ईशिता सत्त्वं सुरानीकमिवैधय-
त्यतः ॥ तत्प्रत्यनीकानसुरान्सुरप्रियो रजस्तमस्कान्प्रमिणोत्युरुश्रवाः ॥ ११ ॥ अत्रैवोदाहृतः पूर्वमितिहासः सुरर्षिणा ॥ प्रीत्या महाक्रतौ राज-

हुन्छन् ॥६॥ सत्त्व, रज र तम यी तीनै गुण हुन्–आत्माका होइनन् । हे राजन् ! ती तीनैमा संगसँगै क्षति अथवा वृद्धि हुने गर्दैन ॥ ७ ॥ यही कारण हो कि भगवान् बेला-बेलामा तात्कालिक गुणको आश्रय लिएर सत्त्वगुणको प्रधानता भएको बेला देवता र ऋषिहरूको र रजोगुणको वृद्धिमा असुरहरूको तथा तमोगुणको वृद्धि हुँदा यक्ष र राक्षसहरूलाई बढाउँछन् ॥८॥ आत्मा त अग्नि-जल जस्तै भिन्न-भिन्न देहमा भिन्न-भिन्न रूपमा रहन्छ । देहादिदेखि भिन्न उसको उसको उपलब्धि हुँदैन । ठूला-ठूला विद्वान् विचारद्वारा उसलाई अन्तर्यामी रूपले आफ्नो अन्तःकरणमा देख्न पाउँछन् ॥९॥ जब परमात्मा जीवका कर्मफल भोग्नको निम्ति भिन्न-भिन्न देह रच्ने इच्छा गर्दछन् तब ती आफ्नो मायाले रजोगुणलाई भिन्नै उत्पन्न गर्दछन् र जब उनलाई ती शरीरमा रमणा गर्ने इच्छा हुन्छ, तब सत्त्वगुणको सृष्टि गर्दछन् र जब शयन गर्न चाहन्छन्, तब तमोगुणलाई प्रेरित गरिदिन्छन् ॥१०॥ हे नरदेव ! जगत्‌का

निमित्त कारण-स्वरूप प्रकृति तथा सहायक एवं आश्रयरूपी काललाई अमोघकर्ता भगवान् स्वयं रचतछन्, तैपनि ती *विषयाधीन हुँदैनन् । जब काल सत्त्वगुण बढाउँछ तब परकयशस्वी र देवप्रिय परमेश्वर सत्त्वप्रधान देवगणको उत्कर्ष र तिनको विरोधी रजोगुण-तमोगुण प्रधान असुरहरूको संहार गरिरहेका देखिन्छन् ॥११॥ हे राजन ! जब राजसूय यज्ञ भइरहेको थियो, तब अजातशत्रु युधिष्ठिरले सोधेपछि देवर्षि नारदले यौटा इतिहास सुनाएका थिए । त्यस महायज्ञमा चेदिराज शिशुपाल भगवान् वासुदेवद्वाराप सायुज्य-मुक्ति-प्राप्तिको अद्भुत कार्य भएको देखेर युधिष्ठिरले सान्है छक परेर यज्ञशालामा बसेका देवर्षि नारदसित सम्पूर्ण मुनिजनहरूको समक्ष सोधे-॥१३॥१४॥ महाराज युधिष्ठिर भन्दछन्—अहो ! यो अद्भुत हो—

न्पृच्छतेऽजातशत्रवे ॥ १२ ॥ दृष्ट्वा महाद्भुतं राजा राजसूये महाक्रतौ ॥ वासुदेवे भगवति सायुज्यं चेदिभूभुजः ॥१३॥ तत्रासीनं सुरऋषिं राजा पाण्डुसुतः क्रतौ ॥ पप्रच्छ विस्मितमना मुनीनां शृण्वतामिदम् ॥ १४ ॥ युधिष्ठिर उवाच ॥ अहो अत्यद्भुतं ह्येतद्दुर्लभैकान्तिनामपि ॥ वासुदेवे परे तत्त्वे प्राप्तिश्चैद्यस्य विद्विषः ॥ १५ ॥ एतद्वेदितुमिच्छामः सर्व एव वयं मुने ॥ भगवन्निन्दया वेनो द्विजैस्तमसि पातितः ॥१६॥ दमघोषसुतः पाप आरभ्य कलभाषणात् ॥ सम्प्रत्यमर्षी गोविन्दे दन्तवक्रश्च दुर्मतिः ॥ १७ ॥ शपतोरसकृद्विष्णुं यद्ब्रह्म परमव्ययम् ॥ श्वित्रो न जातो

परमविद्वेषी शिशुपाललाई श्रीकृष्ण भगवान्को यो सायुज्य मुक्ति प्राप्त भयो, जो उनका अनन्य भक्तलाई पनि दुर्लभ थियो ॥ १५ ॥ हे मुने ! श्रीकृष्ण भगवान्को निन्दा गर्नाले ब्राह्मणहरूले राजा वेनलाई तामिस्र नरकमा हालिदिएका थिए तर त्यो भन्दा पनि पापी दमघोषको छोरो शिशुपाल र दन्तवक्र त जब सानैमा तोते बोली बोल्न लागेथे, त्यसै वेलादेखि अन्त्यसम्म तिनले भगवान्को द्वेष नै गरेथे । ती अविनाशी, परब्रह्म विष्णु भगवानलाई सर्वदा कटुवाक्य भन्दथे तथापि न तिनको जिब्रोमा कुष्ठ भयो, न ती कुनै घोर नरमा परे । म

* उदाहरण ( विषयको मिठो मर्म ) कुनै राजाको पुत्र आफ्नो मन्त्रीकी छोरीको राम्रो रूप देखेर मोहित भयो । अतः त्यसै दिनदेखि उसले अन्न जल त्यागिदियो । सबैले घेरैपल्ट सोधेपछि राजपुत्रले सब वृत्तान्त बतायो । राजाले गान्हो ठान्दै आफ्नो मन्त्रीसित भनेर मन्त्रीले सारा वृत्तान्त आफ्नी पत्नी तथा छोरीसित भन्यो । अनि मन्त्रीकी पुत्रीले भनी—'हजुर राजकुमारलाई भनिदिनुस कि ती अन्न जल ग्रहण गरून् । म पर्सी उनीसित भेट गर्नेछु ।' मन्त्रीले गएर राजकुमारलाई सबै कुरा बुझाए । अनि राजपुत्र प्रसन्न भएर खान-पिन गर्‍यो । यता तेस्रो दिन मन्त्रीकी छोरीले आफ्ना पिताजित भनी—'हजुर कृपा गरेर पचास थोत्रा र पचास राम्रा रेशमी रूमाल झिकाइदिनोस् । मन्त्रीले तत्काल सबै झिकाइदिए । अनि मन्त्रीकी छोरीले वैद्यकहाँबाट जमालगोटाको काढा जुलाब मगाएर खाई दिई । अब थाल्यो पखाला लाग्न । यो उही स्थानमा दिसा गर्न थाल्थी जहाँ पहिले माटकी थिई । त्यो भुड्कोमा यौटा रेशमी रूमाल बाँधिदिन्थी । यसै प्रकार सबै डुड्काहरूमा दिसा गरेर उसले भुड्काको मुखमा रेशमी रूमाल बाँधिसकी । जब सबै भुड्का बाँधिइसके तब आफ्ना पितासित भनी— हजुर गएर राजपुत्रलाई डाकेर ल्याउनोस् ।' मन्त्री राजपुत्रलाई डाकन गयो । यता दिसा गर्दा-गर्दा केटी दुर्बल भएर पहेंलो भई र खाटमा पल्टिई । त्यसका सबै सुन्दरता पनि दिसामा मुछिएका थिए र जब राजकुमार सुसज्जित भएर मन्त्रीको घरमा गयो तब दुर्गन्ध आउन लाग्यो । राजकुमारले नाकमा रूमाल राख्तै भन्यो— 'मन्त्रीजी ! यो केको दुर्गन्ध आइरहेको छ ?' मन्त्रीले भन्यो—'होला केही वस्तु, तपाईं सरासर आउनु होस् ।' राजकुमार जब मन्त्रीकी छोरीको नजीकै पुग्यो तब दुर्गन्धले उभिन कठिन भयो । अनि राजकुमारले कन्याको दशा देखेर भन्यो—'अस्ती त मैले इनलाई अर्कै रूपमा देखेको थिएँ, आज के भयो ?' मन्त्रीकी छोरीले भनी—'यदि हजुरलाई मसित प्रेम थियो भने म सेवामा उपस्थित छु । मेरो सौन्दर्यसित प्रेम थियो भने, ती भुड्काहरूमा भरिएको छ ।' राजकुमारले कन्याको गूढ कुरा सुनेर विचार गर्‍यो-सुन्दरता कुनै विशेष हो, जुन यी भुड्कामा भरिएको छ । उसले गएर भुड्काको मुखमा बाँधिएको रूमाल झुकाएर हेर्नासाथ त्यसका मिठो आँखिखुले र त्यसै पलत्त त्यसको मनमा वैराग्य उत्पन्न भयो । त्यसै दिनदेखि विषयबाट चित्त हटाएर त्यो भगवद्भजनमा संलग्न भयो र केही दिनमै मुक्ति प्राप्त गर्‍यो । मिठो माटोमा मिल्ने नवयुवक विचार गरून् र विषयको मिठो मर्ममा ध्यान दिऊन् जुन विषयलाई सन्तजनले त्यागे मूढ त्यसैलाई अँगाली रहेछन्-जस्तै मनुष्यले काढेको वस्तु कुकुरले स्वाद मानेर चाट्छ ।

635

यसको कारण जान्न खोज्दछु कि भगवानका द्रोही भएर पनि ती अत्यन्त दुर्लभ भगवानमा सबैको साम्मुन्ने अनायास कसरी लीन भए ? ॥१८–१९॥ हे भगवन् ! यो कुरा ठूलो र अद्भुत छ । मेरो बुद्धि वायुको वेगले काँपिरहने दीप शिखा झैं भ्रान्त भइरहेको छ । अतएव हजुर यसको कारण भन्नुहवस् ॥२०॥ शुकदेवजी भन्दछन्–राजा युधिष्ठिरको वचन सुनेर देवर्षि नारद निकै प्रसन्न भए र त्यस सभाको माझ उनलाई सम्बोधन गरेर भन्नलागे ॥२१॥ नारदजी भन्दछन्–प्राणीहरूको अज्ञानले नै निन्दा-स्तुति, सत्कार तथा तिरस्कारको आश्रयरूपी यस शरीरको रचना भएको छ ॥२२॥ हे पार्थिव ! शरीरको अभिमानले नै जीवमा 'म मेरो' भन्ने ममतारूपिणी विषमता आउँछ र निन्दादिका दुःखको ज्ञान हुन्छ ॥२३॥ जसले गर्दा अभिमान हुन्छ, त्यसकै वधले प्राणीहरूको वध मानिन्छ, तर यो अभिमान जस्तो जीवमा छ, त्यस्तै भगवान्मा छैन, किनकि ती अद्वितीय छन् । यसै निम्ति

जिह्वायां नान्धं विविशतुस्तमः ॥ १८ ॥ कथं तस्मिन्भगवति दुरवग्राहधामनि ॥ पश्यतां सर्वलोकानां लयमीयतुरञ्जसा ॥ १९ ॥ एतद्भ्राम्यति
मे बुद्धिर्दीपार्चिरिव वायुना ॥ ब्रूह्येतदद्भुततमं भगवँस्तत्र कारणम् ॥ २० ॥ श्रीशुक उवाच ॥ राज्ञस्तद्वच आकर्ण्य नारदो भगवानृषिः ॥ तुष्टः
प्राह तमाभाष्य शृण्वत्यास्तत्सदःकथाः ॥ २१ ॥ नारद उवाच ॥ निन्दनस्तवसत्कारन्यक्कारार्थं कलेवरम् ॥ प्रधानपरयो राजन्नविवेकेन कल्पि-
तम् ॥ २२ ॥ हिंसा तदभिमानेन दण्डपारुष्ययोर्यथा ॥ वैषम्यमिह भूतानां ममाहमिति पार्थिव ॥ २३ ॥ यन्निबद्धोऽभिमानोऽयं तद्वधात्प्रा-
णिनां वधः ॥ तथा न यस्य कैवल्यादभिमानोऽखिलात्मनः ॥ परस्य दमकर्तुर्हि हिंसा केनास्य कल्प्यते ॥ २४ ॥ तस्माद्वैरानुबन्धेन निर्वैरेण
भयेन वा ॥ स्नेहात्कामेन वा युञ्ज्यात्कथञ्चिन्नेक्षते पृथक् ॥२५॥ यथा वैरानुबन्धेन मर्त्यस्तन्मयतामियात् ॥ न तथा भक्तियोगेन इति मे निश्चिता
मतिः ॥ २६ ॥ कीटः पेशस्कृता रुद्धः कुड्यायां तमनुस्मरन् ॥ संरम्भभययोगेन विन्दते तत्स्वरूपताम् ॥ २७ ॥ एवं कृष्णे भगवति मायामनुज
ईश्वरे ॥ वैरेण पूतपाप्मानस्तमापुरनुचिन्तया ॥ २८ ॥ कामाद्द्वेषाद्भयात्स्नेहाद्यथा भक्त्येश्वरे मनः ॥ आवेश्य तदघं हित्वा बहवस्तद्गतिं गताः
॥ २९ ॥ गोप्यः कामाद्भयात्कंसो द्वेषाच्चैद्यादयो नृपाः ॥ सम्बन्धाद्वृष्णयः स्नेहाद्यूयं भक्त्या वयं विभो ॥ ३० ॥ कतमोऽपि न वेनः स्यात्प-
ञ्चानां पुरुषं प्रति ॥ तस्मात्केनाप्युपायेन मनः कृष्णे निवेशयेत् ॥ ३१ ॥ मातृष्वस्रेयो वश्चैद्यो दन्तवक्त्रश्च पाण्डव ॥ पार्षदप्रवरौ विष्णोर्विप्र-

अर्कांको कल्याणार्थ शत्रुका दमनकारी ती परमात्मालाई हिंसाले कसरी हुन सक्छ ? ॥२४॥ अतः बलियो वैरानुबन्ध, वैरहीन भक्तिभाव, भय, स्नेह र काम कुनै पनि बाटोबाट उनमा यसरी चित्त लगाओस् कि उनी बाहेक अरु केही पनि नदेखियोस् ॥२५॥ मेरो त यो निश्चित मत छ–मनुष्य वैरानुबन्धनले भगवान्मा जति तन्मय हुन्छ, त्यति भक्तियोगले पनि हुन पाउन्न ॥२६॥ भृङ्गी कीरा द्वारा आफ्नो प्वालमा थुनिराखेको कीरा भय र उद्वेगले भृङ्गीको स्मरण गर्दा-गर्दै उसैको समान बनिजान्छ ॥२७॥ त्यस्तै नै माया-मानवरूप धारी परमेश्वर भगवान् कृष्णमा वैरभावले सर्वदा उनैको चिन्तन गर्दा-गर्दा पवित्र भएर इनले पनि उनलाई पाइसकेका छन् ॥२८॥ हे राजन् ! काम, द्वेष, भय, स्नेह र भक्ति आदि उपायहरूले भगवान्मा चित्त लगाएर अनेक व्यक्ति कामादिजनित पापबाट छुटेर सायुज्यमुक्ति पाइसकेका छन् ॥२९॥ हे सर्वसमर्थ ! कामले गोपिनीहरू, द्वेषले शिशुपालादि राजा, सम्बन्धले यादव

स्नेहले तथा *भक्तिले हामी मुनिजन तिनको स्वरूपलाई पाउन सकेकाछौं ॥३०॥ यी पाँच थरिका भगवत्-चिन्तकमध्ये वेन कुनैको पनि अन्तर्गत थिएनन् । अतः मुक्त हुन सकेनन् । यसै निम्ति जसरी हुन्छ उसै गरी श्रीकृष्णमा मन लगाइरहोस् ॥३१॥ हे पाण्डव ! तिम्रा सानीमाका छोरा शिशुपाल र दन्तवक्र पूर्वजन्ममा भगवान्‌का पार्षद थिए । विप्र-श्रापले ती दुवै पार्षद-पदबाट भ्रष्ट भएथे ॥३२॥ यो कुरा सुनेर राजा युधिष्ठिर भन्दछन्–हे मुने ! भगवान्‌का दासहरूलाई पनि तिरस्कृत पार्ने श्राप कस्तो र कसको थियो ? यस्ता अनन्य भगवद्भक्त-हरूले भवसागरमा खाडिनु त विश्वसनीय लागेन ॥३३॥ प्राकृत देह र इन्द्रिय आदिले हीन ती वैकुण्ठवासीलाई जसरी शरीर-सम्बन्धको लाभ भएको होस्, त्यो प्रसंग मलाई आज्ञाहबस्

शापात्पदाच्च्युतौ ॥ ३२ ॥ युधिष्ठिर उवाच ॥ कीदृशः कस्य वा शापो हरिदासाभिमर्शनः ॥ अश्रद्धेय इवाभाति हरेरेकान्तिनां भवः ॥ ३३ ॥ देहेन्द्रियासुहीनानां वैकुण्ठपुरवासिनाम् ॥ देहसम्बन्धसम्बद्धमेतदाख्यातुमर्हसि ॥ ३४ ॥ नारद उवाच ॥ एकदा ब्रह्मणः पुत्रा विष्णुलोकं यदृच्छ-या ॥ सनन्दनादयो जग्मुश्चरन्तो भुवनत्रयम् ॥ ३५ ॥ पंचषड्ढायना भाभाः पूर्वेषामपि पूर्वजाः ॥ दिग्वाससः शिशून्मत्वा द्वाःस्थौ तान्प्रत्यषेधताम् ॥ ३६ ॥ अशपन्कुपिता एवं युवां वासं न चार्हथः ॥ रजस्तमोभ्यां रहिते पादमूले मधुद्विषः ॥ पापिष्ठामासुरीं योनिं बालिशौ यातमाश्वतः ॥३७॥ एवं शप्तौ स्वभवनात्पतन्तौ तैः कृपालुभिः ॥ प्रोक्तौ पुनर्जन्मभिर्वां त्रिभिर्लोकाय कल्पताम् ॥ ३८ ॥ जज्ञाते तौ दितेः पुत्रौ दैत्यदानववन्दितौ ॥

॥३४॥ नारदजी भन्दछन्–हे राजन् ! एक दिन ब्रह्माका पुत्र सनक-सनन्दनादि ऋषिहरू तीनै लोकमा डुल्दै विष्णुलोक पुगे ॥३५॥ पूर्वजका पनि पूर्वज भएर पनि ती पाँच–छ वर्षका बालक देखिन्थे र सदा दिगम्बर ( नाँगै ) वेषमा रहन्थे । साधारण बालक ठानेर द्वारपाल जय-विजयले तिनलाई भित्र जान दिएनन् ॥३६॥ अनि रिसाएर उनले भने–'मूर्ख हो ! तिमी दुवै विष्णु भगवान्‌का रजोगुण-तमोगुणहीन चरणमा बस्ने योग्य छैनौ । अतः शीघ्र पापमयी असुर योनिमा जाओ' ॥३७॥ यसरी श्राप पाएर जब ती आफ्नो स्थानबाट च्युत (गिर्न) लागे, तब ती दयालु मुनिहरूले भने–'तीन जन्ममा श्रापको अवधि समाप्त पारेर तिमी दुवै फेरि वैकुण्ठ लोकमा फर्केर आउने छौ ।' तिनै दुवै द्वारपाल जय-विजय दैत्य-दानव वन्दित

---

*सत्संग चर्चा—१. जबसम्म व्याकुलता आउन्न, तबसम्म भगवान् गुप्त रहन्छन्, तर जब व्याकुलता आउँछ तब तो भगवान्‌का चरण चिन्ह स्वयं भनिदिन्छन्–'यता आऊ, भगवान् यहाँ छन् ।' व्याकुलताले नै उनका चरण चिन्ह देखिन थाल्दछन् । २. जो आफ्नो शक्तिले भगवान्‌लाई देख्न, बुझ्न र उनको सीमा बाँध्न खोज्दछन्, उनको निम्ति भगवान् नित्य अव्यक्त छन् । तर जो भगवान्‌का शरणापन्न भइजान्छन्, तिनको निम्ति भगवान् सधैंदा व्यक्त छन् । ३. भगवान्‌को बन्धन शुद्ध प्रेमपूर्ण व्याकुलताले, किनकि व्याकुलता बिना भगवान्‌लाई बाँध्ने भगवत्कृपाको प्रकाश फैलिन्न । ४. जबसम्म कुनै काम असाध्य ज्ञात हुँदैन वा अत्यन्त अनिवार्य हुँदैन, तबसम्म उनको निम्ति व्यग्रता उत्पन्न हुँदैन । असाध्य भाव र नितान्त आवश्यकता नै व्यग्रता उत्पन्न गर्दछ । ५. श्रीकृष्णको निम्ति जबसम्म प्राण दिँदैन, तबसम्म उनलाई कसैले पक्रन सक्दैन । ६. जसको जसमा कामना हुन्छ, त्यही उसको काम्य हो । त्यसमा बाधा पर्नाले क्रोध उत्पन्न हुन्छ । यसलयमा काम नै प्रतिहत भएर क्रोध बन्दछ । ७. जुन वस्तुमा जति परिमाणमा कामना रहन्छ, त्यसको निम्ति उति नै परिमाणमा क्रोध हुन्छ । ८. भगवान् कोमित लिंदिर लीला गर्दछन्, ती सबै भगवानका पार्षद हुन । पार्षदका दुइ भेद छन्—१. अनुकूल पार्षद र २. प्रतिकूल पार्षद । जो अनुकूल पार्षद छन्, ती उनको लीलामा मित्ररूपले सहायता गर्दछन् र जुन प्रतिकूल पार्षद छन्, ती शत्रुरूपले सहायता गर्दछन् । दिव्यधाममा अनुकूल पार्षदसहित भगवान्‌का लीला हुन्छन् । त्यहाँ प्रतिकूल पार्षद अचेतनभावले उपस्थित रहन्छन् ।

दितिका छोरा भए । तिनमा हिरण्यकशिपु जेठो र हिरण्याक्ष कान्छो थिए ॥३८-३९॥ हिरण्यकशिपुलाई भगवान्ले नृसिंह रूप धारण गरेर मारी भूमिलाई उद्धार गर्ने बेला शूकर रूपले हिरण्याक्षको संहार गरे ॥४०॥ हिरण्यकशिपुले आफ्नो भगवद्भक्त पुत्र प्रह्लादलाई मार्नको निम्ति अनेक यातना दियो ॥ १ ॥ अनेक युक्ति गरेर पनि त्यो सबै प्राणीहरूका आत्मा, परम शान्त, समदर्शी तथा भगवन्-तेजयुक्त प्रह्लादलाई मार्न सकेन ॥४२॥ त्यसपछि ती दुवै विश्रवा पिता र केशिनी माताद्वारा रावण र कुम्भकर्ण भएर जन्मिए । तिनले सबै व्यक्तिलाई त्रेसरी कष्ट दिए ॥४३॥ त्यस जन्ममा पनि श्राप-मुक्त पार्नको निम्ति भगवान्ले रामरूपले अवतार लिएर मारे । हे राजन् ! ती रामचन्द्रको पराक्रम मार्कण्डेय मुनिको मुखबाट सुन्नेछौ ॥४४॥ जन्मान्तरमा तिनै दुवै क्षत्रियरूपमा तिम्री सानीमाका छोरा भएर जन्मेथे । ती अब श्रीकृष्णको सुदर्शन चक्रले पवित्र भएर श्रापमुक्त भए ॥४५॥ ती विष्णु-पार्षद वैरानुबन्धले बलियो ध्यानद्वारा नारायणको स्वरूप प्राप्त गरेर फेरि उनैको नगीच पुग्दछन् ॥ ४६ ॥ राजा युधिष्ठिरले सोधे–हे भगवन् ! हिरण्यकशिपुले आफ्नो प्रियपुत्र महात्मा

हिरण्यकशिपुर्ज्येष्ठो हिरण्याक्षोऽनुजस्ततः ॥ ३६ ॥ हतो हिरण्यकशिपुर्हरिणा सिंहरूपिणा ॥ हिरण्याक्षो धरोद्धारे बिभ्रता सौकरं वपुः ॥ ४० ॥
हिरण्यकशिपुः पुत्रं प्रह्लादं केशवप्रियम् ॥ जिघांसुरकरोन्नाना यातना मृत्युहेतवे ॥ ४१ ॥ सर्वभूतात्मभूतं तं प्रशान्तं समदर्शनम् ॥ भगवत्तेजसा
स्पृष्टं नाशक्नोद्धन्तुमुद्यमैः ॥४२॥ ततस्तौ राक्षसौ जातौ केशिन्यां विश्रवःसुतौ ॥ रावणः कुम्भकर्णश्च सर्वलोकोपतापनौ ॥४३॥ तत्रापि राघवो
भूत्वा न्यहनच्छापमुक्तये ॥ रामवीर्यं श्रोष्यसि त्वं मार्कण्डेयमुखात्प्रभो ॥ ४४ ॥ तावेव क्षत्रियौ जातौ मातृष्वस्रात्मजौ तव ॥ अधुना शापनिर्मुक्तौ
कृष्णचक्रहतांहसौ ॥ ४५ ॥ वैरानुबन्धतीव्रेण ध्यानेनाच्युतसात्मताम् ॥ नीतौ पुनर्हरेः पार्श्वं जग्मतुर्विष्णुपार्षदौ ॥ ४६ ॥ युधिष्ठिर उवाच ॥
विद्वेषो दयिते पुत्रे कथमासीन्महात्मनि ॥ ब्रूहि मे भगवन् येन प्रह्लादस्याच्युतात्मता ॥ ४७ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादचरि-
तोपक्रमे प्रथमोऽध्यायः ॥ १ ॥ नारद उवाच ॥ भ्रातर्येवं विनिहते हरिणा क्रोडमूर्तिना ॥ हिरण्यकशिपू राजन्पर्यतप्यद्रुषा शुचा ॥ १ ॥ आह
चेदं रुषा घूर्णः सन्दष्टदशनच्छदः ॥ कोपोज्ज्वलद्भ्यां चक्षुर्भ्यां निरीक्षन्धूम्रमम्बरम् ॥ २ ॥ करालदंष्ट्रोग्रदृष्ट्या दुष्प्रेक्ष्यभ्रुकुटीमुखः ॥ शूलमुद्यम्य
सदसि दानवानिदमब्रवीत् ॥ ३ ॥ भो भो दानवदैतेया द्विमूर्धंस्त्र्यक्ष शम्बर ॥ शतबाहो हयग्रीव नमुचे पाक इल्वल ॥ ४ ॥ विप्रचित्ते मम वचः

प्रह्लादसित द्वेष किन गन्यो ? असुर कुलमा जन्म लिएर पनि प्रह्लादले भगवान्मा आफ्नू चित्त कसरी लगाए ? त्यो भन्नुहवस् ॥४७॥ इतिःश्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषा टीकायां प्रथमोऽध्यायः ॥१॥ ( पुत्रशोकले व्याँतर दिति र अन्य कुटुम्बले हिरण्यकशिपुलाई बुझाउनु )–नारदजी भन्दछन्–राजन् ! वाराह भगवान् द्वारा आफ्नो भाई मारिएपछि हिरण्यकशिपु क्रोध र शोकले तमतमायो ॥१॥ रिसले गर्दा काम्दै, दाँतले ओठ टोक्दै र शोक एवं क्रोधाग्निले गर्दा बल्दो आँखाका धुवाँले धूम्रवर्ण आकाशतर्फ आँखा तर्दै त्यो भन्न लाग्यो ॥ २ ॥ बोल्न लाग्दा कराल दाह्रा, उग्रदृष्टि र भृकुटीहरूले त्यसको मुख यस्तो विकृत भएको थियो कि कोही पनि त्यसको मुखतिर हेर्न समर्थ थिएन । आफ्नो सभाको बीचमा त्रिशूल तानेर उसले भन्यो–॥ ३ ॥ 'हे द्विमूर्द्धा, त्र्यक्ष, शम्बर, शतबाहु, हयग्रीव, नमुचि, पाक, इल्वल, विप्रचित्ति, प्रलोमा तथा शकुनि आदि दैत्य र दानव हो !

मेरो कुरा सुने र जस्तो मन्दछु उस्तै गर । यसमा ढीलो नहोस् ।। ४-५।। समदर्शी भएर पनि उपासनाले निज पक्षमा ल्याइएका विष्णुद्वारा हाम्रा तुच्छ शत्रु देवताहरूले मेरो परमप्रिय सुहृद् तथा सहोदर भाइलाई मार्न लगाए ।। ६ ।। जसले शुद्ध स्वरूप भएर पनि आफ्नो स्वभाव त्यागिदिए, त्यो माया-वाराहरूपधारी, बालकहरूको समान अस्थिरचित्त र आफ्ना उपासकहरूको अनुकूल विष्णुको कण्ठ आफ्नो त्रिशूलले काटेर जब म आफ्नो रुधिर-प्रेमी भाइको तर्पण गरौंला, अनि मात्र मेरो मनको आगो निभ्ने छ ।। ७-८ ।। देवगणको प्राण त्यो विष्णु नै छ । त्यो कपटी शत्रु नरहेपछि यी सबै यस्ता निस्तेज हुनेछन्, जस्तै जरैबाट काटिएको वृक्ष ।। ९ ।। अतः तिमी अहिल्यै ब्राह्मण र क्षत्रियहरूले भरिएको भूमिमा गएर तप, यज्ञ स्वाध्याय, जप र दानादि शुभ कर्मगर्नेलाई मार ।।१०।। किनकि ब्राह्मणद्वारा गरिएका यज्ञादि क्रिया नै विष्णुका जरो हुन् । त्यो परमपुरुष यज्ञस्वरूप तथा धर्ममय छ । त्यही सबै देव

पुलोमञ्शकुनादयः ।। शृणुतानन्तरं सर्वं क्रियतामाशु मा चिरम् ।।५।। सपत्नैर्घातितः क्षुद्रैर्भ्राता मे दयितः सुहृत् ।। पार्ष्णिग्राहेण हरिणा समेनाप्यु·
पधावनैः ।। ६ ।। तस्य त्यक्तस्वभावस्य घृणेर्मायावनौकसः ।। भजन्तं भजमानस्य बालस्येवास्थिरात्मनः ।। ७ ।। मच्छूलभिन्नग्रीवस्य भूरिणा रुधिरेण
वै ।। रुधिरप्रियं तर्पयिष्ये भ्रातरं मे गतव्यथः ।।८।। तस्मिन्कूटेऽहिते नष्टे कृत्तमूले वनस्पतौ ।। विटपा इव शुष्यन्ति विष्णुप्राणा दिवौकसः ।। ९ ।।
तावद्यात भुवं यूयं ब्रह्मक्षत्रसमेधिताम् ।। सूदयध्वं तपोयज्ञस्वाध्यायव्रतदानिनः ।। १० ।। विष्णुर्द्विजक्रियामूलो यज्ञो धर्ममयः पुमान् ।। देवर्षिपि·
तृभूतानां धर्मस्य च परायणम् ।। ११ ।। यत्र यत्र द्विजा गावो वेदा वर्णाश्रमाः क्रियाः ।। तं तं जनपदं यात सन्दीपयत वृश्चत ।। १२ ।। इति ते
भर्तृनिर्देशमादाय शिरसाऽऽदृताः ।। तथा प्रजानां कदनं विदधुः कदनप्रियाः ।। १३ ।। पुरग्रामव्रजोद्यानक्षेत्रारामाश्रमाकरान् ।। खेटखर्वटघोषांश्च ददहुः
पत्तनानि च ।। १४ ।। केचित्खनित्रैर्बिभिदुः सेतुप्राकारगोपुरान् ।। आजीव्यांश्चिच्छिदुर्वृक्षान्केचित्परशुपाणयः ।। प्रादहञ्छरणान्यन्ये प्रजानां ज्वलितो·
ल्मुकैः ।।१५।। एवं विप्रकृते लोके दैत्येन्द्रानुचरैर्मुहुः ।। दिवं देवाः परित्यज्य भुवि चेरुरलक्षिताः ।।१६।। हिरण्यकशिपुर्भ्रातुः सम्परेतस्य दुःखितः ।।
कृत्वा कटोदकादीनि भ्रातृपुत्रानसान्त्वयत् ।। १७ ।। शकुनिं शम्बरं धृष्टं भूतसन्तापनं वृकम् ।। कालनाभं महानाभं हरिश्मश्रुमथोत्कचम् ।। १८ ।।
तन्मातरं रुषाभानुं दितिं च जननीं गिरा ।। श्लक्ष्णया देशकालज्ञ इदमाह जनेश्वर ।। १९ ।। हिरण्यकशिपुरुवाच ।। अम्बाम्ब हे वधूः पुत्रा वीरं

ऋषि, पितर, भूत तथा धर्मको आधार छ ।। ११ ।। जहाँ पनि ब्राह्मण, गाई, वेद र वर्णाश्रम-धर्म विद्यमान छन्, त्यहीं गएर तिमी त्यो देशलाई पोलिदेउ र सारा धर्म-कर्म नष्ट पारिदेउ ।।१२।। आफ्ना स्वामीको आज्ञा शिरोधार्य गरेर ती हिंसाप्रिय दैत्य प्रजाको संहार गर्नलागे ।।१३।। तीनीहरूले पुर, ग्राम, व्रज, उद्यान, क्षेत्र, बगैंचा, आश्रम खान कृषकका घर पर्वतीय झुपडीहरू यादवका घर र ठूला-ठूला नगरहरूमा आगो लगाइदिए ।।१४।। कोदालोले सेतुहरू, किला, नगर-द्वारहरू तोडिदिए फल लागेका वृक्ष बन्चराले काटिदिए र घर-द्वार पोलिदिए ।।१५।। दैत्यपति हिरण्यकशिपुका अनुचरहरूले जब प्रजालाई धेरै दुःख दिए तब सबै देवता स्वर्ग छाडेर गुप्त रूपले पृथ्वीमा घुम्नलागे ।। १६ ।। उताबन्धु वियोगले दुःखी तथा देशकालको ज्ञाता हिरण्यकशिपुले आफ्नो मरिसकेको सहोदर भाइलाई तिलाञ्जलि आदि दिएर, शकुनि, शम्बर, धृष्ट, भूतसन्तापन, वृक, कालनाभ, हरिश्मश्रु र उत्कच आदि

भतीजाहरूलाई धैर्य दियो । हे जनेश्वर ! आफ्नो भाइकी आमा रुषाभाद्र तथा आफ्नी जननी दितिसित उसले मधुर वाणीमा भन्यो ॥१७-१९॥ हिरण्यकशिपु भन्दछ–हे माता ! हे बुहारी हो ! हे पुत्रगण ! तिमीहरू त्यस वीरको निम्ति शोक नगर–शूरवीर त शत्रुको साम्रुन्ने नै शरीर त्याग्नु श्लाघ्य ठान्दछन् ॥२०॥ हे सुव्रते ! संसारमा जीवहरू एकै ठाउँमा भेटिनु पानी पिलाउने स्थानमा एकत्र बाटो हिड्ने पथिकसमान क्षणिक हुन्छ । ती आफ्नो कर्मानुसार दैवयोगले एकत्रित हुन्छन् र बिछुडिन्छन् ॥२१॥ वस्तुतः आत्मा नित्य, अविनाशी, शुद्ध, सर्वगत, सर्वज्ञ, देह र इन्द्रियहरूभन्दा पृथक् छ । त्यो आफ्नो अविद्याको कारणले नै सुख-दुःखादि गुणलाई स्वीकार गरेर लिङ्गदेह धारण गर्दछ ॥२२॥ जस्तै नदी-मा जल हिँडेपछि तटवर्ती वृक्षहरू पनि हिँडे झैं देखिन्छन् र आँखाका गोलकहरू घुम्नाले पृथिवी पनि घुमे झैं देखिन्छ । त्यस्तै नै गुणहरूद्वारा मन शान्त भएपछि निर्विकार आत्मा पनि शान्त रहन्छ र देहादि लिङ्गबाट रहित भएर पनि तिनीहरूद्वारा युक्त भएजस्तै देखिन्छ ॥२३॥२४॥ यस प्रकार आफ्नो अशरीर आत्मामा शरीरका भावना नै आत्म-विपर्यय हो ।

मार्हथ शोचितुम् ॥ रिपोरभिमुखे श्लाघ्यः शूराणां वध ईप्सितः ॥ २० ॥ भूतानामिह संवासः प्रपायामिव सुव्रते ॥ दैवेनैकत्र नीतानामुन्नीतानां स्वकर्मभिः ॥२१॥ नित्य आत्माऽव्ययः शुद्धः सर्वगः सर्ववित्परः ॥ धत्तेऽसावात्मनो लिङ्गं मायया विसृजन्गुणान्॥२२॥ यथाऽम्भसा प्रचलता तरवोऽपि चला इव ॥ चक्षुषा भ्राम्यमाणेन दृश्यते चलतीव भूः ॥२३॥ एवं गुणैर्भ्राम्यमाणे मनस्यविकलः पुमान् ॥ याति तत्साम्यतां भद्रे ह्यलिङ्गो लिङ्गवानिव ॥२४॥ एष आत्मविपर्यासो ह्यलिङ्गे लिङ्ग भावना ॥ एष प्रियाप्रियैर्योगो वियोगःकर्मसंसृतिः ॥२५॥ सम्भवश्च विनाशश्च शोकश्च विविधः स्मृतः ॥ अविवेकश्च चिन्ता च विवेकास्मृतिरेव च ॥ २६ ॥ अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ॥ यमस्य प्रेतबन्धूनां सम्वादं तं निबोधत ॥ २७ ॥ उशीनरेष्वभूद्राजा सुयज्ञ इति विश्रुतः ॥ सपत्नैर्निहतो युद्धे ज्ञातयस्तमुपासत ॥ २८ ॥ विशीर्णरत्नकवचं विभ्रष्टाभरणस्रजम् ॥ शरैर्निर्भिन्नहृदयं शयानमसृगाविलम् ॥ २९ ॥ प्रकीर्णकेशं ध्वस्ताक्षं रभसा दष्टदच्छदम् ॥ रजःकुण्ठमुखाम्भोजं छिन्नायुधभुजं मृधे ॥ ३० ॥ उशीनरेन्द्रं विधिना तथा कृतं पतिं महिष्यः प्रसमीक्ष्य दुःखिताः ॥ हताः स्म नाथेति करैरुरो भृशं घ्नंत्यो मुहुस्तत्पदयोरुपापतन् ॥ ३१ ॥ रुदत्य उच्चैर्दयितांघ्रिपङ्कजं सिञ्चन्त्य अस्रैः कुचकुङ्कुमारुणैः ॥ विस्रस्तकेशाभरणां शुचं नृणां सृजन्त्य आक्रन्दनया विलेपिरे ॥ ३२ ॥ अहो विधात्राऽकरुणेन नः

यसैले प्रिय-अप्रियको संयोग, कर्म, संसारको प्राप्ति, जन्म, मरण, शोक, अविवेक, चिन्ता, तथा विवेकको विस्मृति आदि कार्य हुन्छन् ।।२५-२६॥ यस विषयमा जान्ने जन यो इतिहास भन्दछन्, जसमा यहाँ मृत व्यक्तिका बान्धवसित यमराजको कुरा-कानी छ । अब त्यो सुन-॥२७॥ उशीनरर देशमा राजा सुयज्ञ राज्य गर्दथे । सहसा ती युद्धक्षेत्रमा शत्रुहरू द्वारा मारिए । तब तिनका सबै जातिबन्धु त्यसलाई चारैतिरबाट घेरेर बसे । मरेपछि त्यो मृतकको रत्नजडित कवच छिन्न-भिन्न भएको थियो । त्यसका सबै आभूषण तथा मालादि छरिएका थिए । त्यसको हृदय बाण विद्ध भएर चारैतिर छरिएको थियो र सारा शरीर रगतका मुछिएको थियो । त्यसका केश छिन्निन्न थिए र नेत्र नष्ट भइसकेका थिए । रिसको वेगले उसले दुवै ओठ दाँतले थिचिराखेका थिए । त्यसको मुखकमल धूलि-धूसरित थियो र अस्त्र-शस्त्र र भुजाहरू युद्धमा काटिएका थिए ॥२८-३०॥ विधाताले राजा उशीनरलाई यस अधम दशामा

पुन्याइदिए, यस्तो देखेर तिनका पटरानीहरूलाई साह्रै कष्ट भयो र ती हे नाथ ! हामी मारियौं भन्दै छाती ठोक्तै राजाका खुट्टामा लटपटिए ॥३१॥ ती ठूलो शब्दले हाहाकार गर्दै कुच-कुंकुम मिश्रित अरुण वर्णका अश्रुजलले आफ्ना प्रियतमका चरण पखाल्न लागे। तिनका केश र आभूषण छरिएका थिए। ती अन्य पुरुषका हृदयमा पनि शोक-संचार तथा करुण क्रन्दन गर्दै भन्न लागे—॥३२॥ 'हरे ! निर्दयी विधाताले आज हजुरलाई हाम्रो आँखाबाट टाढा पारिदिए। हे नाथ ! हजुर पहिले उशीनर निवासीहरूलाई जीविका दिनुहुन्थ्यो तर आज विधाताले हजुरलाई तिनको शोकदाता तुल्याइदियो ॥३३॥ हे भूपते ! हजुर जस्ता कृतज्ञ प्रियतम बिना हामी कसरी बाँच्ने ? वीर ! हजुर जहाँ जानुहुन्छ, त्यहीं आउनका लागि आफ्ना चरणका दासीहरूलाई पनि आज्ञा दिंदै जानुहवस्' ॥३४॥ आफ्ना मृत पतिलाई समातेर यसरी विलाप गर्दागर्दै सूर्यास्त भयो। तैपनि तिनको दाह-संस्कार परिवारले हुन दिएनन् ॥३५॥ ती मृतराजाका बन्धुहरूको विलाप सुनेर स्वयं यमराज बालक-स्वरूपले प्रकट भई तिनको नजीकै गएर भने ॥३६॥ यमराज भन्दछन्—अहो ! यिनीहरू मभन्दा धेरै ठूला छन् र

प्रभो भवान्प्रणीतो दृग्गोचरां दशाम् ॥ उशीनराणामसि वृत्तिदः पुरा कृतोऽधुना येन शुचां विवर्धनः ॥ ३३ ॥ त्वया कृतज्ञेन वयं महीपते कथं विना स्याम सुहृत्तमेन ते ॥ तत्रानुयानं तव वीर पादयोः शुश्रूषतीनां दिश यत्र यास्यसि ॥३४॥ एवं विलपतीनां वै परिगृह्य मृतं पतिम् ॥ अनिच्छतीनां निर्हारमर्कोऽस्तं संन्यवर्तत ॥ ३५ ॥ तत्र ह प्रेतबन्धूनामाश्रुत्य परिदेवितम् ॥ आह तान्बालको भूत्वा यमः स्वयमुपागतः ॥३६॥ यम उवाच ॥ अहो अमीषां वयसाऽधिकानां विपश्यतां लोकविधिं विमोहः ॥ यत्रागतस्तत्र गतं मनुष्यं स्वयं सधर्मा अपि शोचन्त्यपार्थम् ॥ ३७ ॥ अहो वयं धन्यतमा यदत्र त्यक्ताः पितृभ्यां न विचिन्तयामः ॥ अभक्ष्यमाणा अबला वृकादिभिः स रक्षिता रक्षति यो हि गर्भे ॥ ३८ ॥ य इच्छयेशः सृजतीदमव्ययो य एव रक्षत्यवलुम्पते च यः ॥ तस्याबलाः क्रीडनमाहुरीशितुश्चराचरं निग्रहसंग्रहे प्रभुः ॥ ३९ ॥ पथि च्युतं तिष्ठति दिष्टरक्षितं गृहे स्थितं तद्विहतं विनश्यति ॥ जीवत्यनाथोऽपि तदीक्षितो वने गृहेऽपि गुप्तोऽस्य हतो न जीवति ॥ ४० ॥ भूतानि तैस्तैर्निजयोनिकर्मभिर्भवन्ति काले न भवन्ति सर्वशः ॥ न तत्र हात्मा प्रकृतावपि स्थितस्तस्या गुणैरन्यतमो निबध्यते ॥ ४१ ॥ इदं शरीरं पुरुषस्य मोहजं

जन्म-मरणरूपी संसारको गतिलाई देखेका छन्, तैपनि यिनलाई यस्तो मोह छ। यो मनुष्य जहाँबाट आएको थियो, उहीं गयो। यी स्वयं पनि यो जस्तै मर्ने छन्, तैपनि शोक गर्दछन् ॥३७॥ अहो ! स्वामी धन्यछौं जो आफ्ना माता-पिता द्वारा त्यागिदिएर पनि चिन्ता गर्दैनौं। हामी साह्रै निर्बल छौं, तापनि हिंसक जन्तु हामीलाई खाँदैनन् र यो कुरा बुझेर—जसले गर्भमा मेरो रक्षा गरे, उनले यहाँ पनि गर्नेछन्' निश्चिन्त रहन्छौं ॥३८॥ हे अबला हो। अविनाशी परमेश्वर आफ्नो इच्छाले संसारको रचना, पालन र संहार गर्दछन्। यस चराचर जगत्लाई उही ईश्वरको खेलौना भन्दछन् ओ यसको पालन तथा संहारमा समर्थ छन् ॥३९॥ दैवद्वारा सुरक्षित वस्तु बाटोमा जस्ताको त्यस्तै पडिरहन्छ र दैव विपरीत भएपछि घरमा राखेको वस्तु पनि नष्ट भएर जान्छ। परमात्माको दयाले अतिथि र वनवासी मनुष्य बाँच्दछ र भगवान् विपरीत भएपछि घरैमा सुरक्षित बसिरहे पनि बाँच्न सकिन्न ॥ ४० ॥ हे महारानीहरू हो ! यो भौतिक शरीर कारणरूप लिङ्गदेहको कर्मानुसार उत्पन्न तथा नष्ट हुँदै रहन्छन्, परन्तु आत्मा शरीरमा स्थित रहेर पनि त्योदेखि सर्वथा भिन्न रहँदो छँदो गुणहरूमा लिप्त हुँदैन ॥ ४१ ॥ यो शरीर मोहको कारण नै सबैलाई आफ्नू ठान्न थाल्दछ। वस्तुतः घर आदि जस्तै यो पनि आफूबाट पृथक् नै रहन्छ

641

जस्तै जलबाट उत्पन्न फोका, पृथ्वीका विकार घटादि तथा तैजस कुण्डल आदि पदार्थ कालक्रमले उत्पन्न हुँदै तथा विकृत भएर नष्ट हुन्छन्, त्यस्तै नै पृथ्वी, जल र तेजले उत्पन्न शरीर पनि विकृत भएर नष्ट हुन्छ ॥ ४२ ॥ जस्तै काठमा व्याप्त रहेर पनि अग्नि त्यसदेखि भिन्न हुन्छ, वायु शरीरमा रहेर पनि त्योदेखि अलग्ग रहन्छ र आकाश सर्वत्र व्याप्त भए पनि असङ्ग रहन्छ, त्यस्तै आत्मा शरीरमा रहेर पनि त्यसदेखि पृथक् रहन्छ ॥ ४३ ॥ हे मूर्खा हो ! जसको निम्ति रोइरहेछौ, त्यो शरीर त तिम्रो साम्मुन्ने छँदैछ। यसमा जुन सुन्ने र बोल्ने थियो, त्यसलाई कसैले देखिरहेका छैनौ। अतः त्यसको निम्ति शोक नगर ॥ ४४ ॥ सबै इन्द्रियमा प्रधान भएर पनि महाप्राण सुन्ने तथा बोल्ने होइन। जो यस शरीरमा सबै इन्द्रियको आधार छ, त्यो आत्मा प्राण र देहदेखि पृथक् रहन्छ ॥ ४५ ॥ वास्तवमा त्यो सर्वगत आत्मा शरीरदेखि भिन्न छ। तैपनि त्यो भूत, इन्द्रिय र मन

यथा पृथग्भौतिकमीयते गृहम् ॥ यथोदकैः पार्थिवतैजसैर्जनः कालेन जातो विकृतो विनश्यति ॥४२॥ यथाऽनलो दारुषु भिन्न ईयते यथाऽनिलो देहगतः पृथक् स्थितः ॥ यथा नभः सर्वगतं न सज्जते तथा पुमान्सर्वगुणाश्रयः परः ॥४३॥ सुयज्ञो नन्वयं शेते मूढा यमनुशोचथ ॥ यः श्रोता योऽनुवक्तेह स न दृश्येत कर्हिचित् ॥४४॥ न श्रोता नानुवक्ताऽयं मुख्योऽप्यत्र महानसुः ॥ यस्त्विहेन्द्रियवानात्मा स चान्यः प्राणदेहयोः ॥४५॥ भूतेन्द्रियमनोलिङ्गान्देहानुच्चावचान्विभुः ॥ भजत्युत्सृजति ह्यन्यस्तच्चापि स्वेन तेजसा ॥ ४६ ॥ यावल्लिङ्गान्वितो ह्यात्मा तावत्कर्मनिबन्धनम् ॥ ततो विपर्ययः क्लेशो मायायोगोऽनुवर्तते ॥४७॥ वितथाभिनिवेशोऽयं यद्गुणेष्वर्थदृग्वचः ॥ यथा मनोरथः स्वप्नः सर्वमैन्द्रियकं मृषा ॥४८॥ अथ नित्यमनित्यं वा नेह शोचन्ति तद्विदः ॥ नान्यथा शक्यते कर्तुं स्वभावः शोचतामिति ॥ ४९ ॥ लुब्धको विपिने कश्चित्पक्षिणां निर्मितो

लिङ्गले प्रतीयमान उत्तम तथा अधम शरीरलाई आफ्नो तेजले धारण र त्याग गर्दै रहन्छ ॥४६॥ जब सम्म आत्मा लिङ्गदेहमा विद्यमान रहन्छ, तबसम्म त्यसलाई कर्मबन्धनले बाँध्दछ। त्यसैले उसलाई मोह, क्लेश पुनः पुनः प्राप्त हुन्छन्। त्यसको अस्तित्व केवल मायाको कारणले छ ॥४७॥ गुणका कार्य सुख-दुःखादिलाई सत्य मान्नु वा सत्य भन्नु व्यर्थको आग्रह हो मनोरथ तथा सपनाका पदार्थ झैं इन्द्रियहरूका सबै विषय मिथ्या हुन्छन्॥४८॥अतः पण्डित जन नित्य (आत्मा) एवं अनित्य (शरीर) यीबाट कुनैको निम्ति पनि शोक गर्दैनन् किनकि शोकले आकुल व्यक्ति उपाय गरेर पनि कुनै वस्तुको स्वभाव सार्न सक्तैन। यस विषयको एक दृष्टान्त छ-यौटा वनमा कुनै व्याधा बस्तथ्यो। त्यो अनेक उपायले पक्षीलाई पक्ने

※ दृष्टान्त ( बुद्धिले हुने काम बलले हुन सक्तैन )—यौटा ठूलो वनमा कर्पूरतिलक नामको यौटा हात्ती बस्तथ्यो। त्यसलाई देखेर स्यालहरूले सोचे—'कुनै उपायले मार्न पाएदेखि हामीहरू चार महीनासम्म आरामले खाने थियौं। तिनमा यौटा बूढो स्यालले प्रतिज्ञा गर्‍यो—'म आफ्नो बुद्धि बलले यसलाई मार्नेछु।' त्यो धूर्त कर्पूरतिलककहाँ गएर भन्नलाग्यो—'देवता ! म प्रणाम गर्दछु।' हात्तीले भन्यो—'तिमी को हौ र कहाँबाट आएका ?' उसले उत्तर दियो—'म स्याल हुँ। वनका सबै पशुहरू मिलेर मलाई पठाएका हुन्। उनीहरूको विचार छ- विना राजाको रहनु अनुचित हो। अतः यस वनको राज्य-सिंहासनमा अभिषेक गर्नका लागि हजुरलाई डाकेका छन्। अतएव हजुर तत्काल हिड्नोस्, नत्र मुहूर्त बित्ने डर छ।' राज्यको लोभले कपूरतिलक त्यो स्यालको पछि-पछि दगुर्दै गयो। स्याल हलुको थियो, यसै निम्ति सबै ठाउँमा दगुर्दै उफ्रँदै जान्थ्यो, किन्तु हात्ती एक ठाउँमा हिलोमा भासियो। अनि उसले स्याललाई कराएर भन्यो—म त हिलोमा गाडिएँ। यसबाट निस्कने मैले अनेक चेष्टा गरें तर सफल हुनसकिन। अब मेरो मृत्यु आइपुगे जस्तो छ।' स्यालले भन्यो—'हामी जस्ता धूर्त प्राणीमाथि तिमीले जस्तो विश्वास गर्‍यौ त्यस्तै आफ्नो मूर्खताको फल पनि भोग।' अन्त्यमा त्यो हात्ती त्यहीं मर्‍यो र स्यालहरूले खाइदिए।

(.५१)

जाल थापिदिन्थ्यो ॥४९॥५०॥ एक दिन त्यसलाई यौटा कुलिङ्ग पक्षीको जोडा वनमा डुलेको देखियो । त्यसले सहजै पोथीलाई फकाइलियो ॥ ५१ ॥ असले त्यो जालमा परेर अल्झिई । त्यसलाई आपत्तिग्रस्त देखेर भाले कुलिंग दुःखी भयो र मुक्त पार्नमा असमर्थ भएर अत्यन्त स्नेहवश कातर भावले विलौना गर्न थाल्यो–॥ ५२ ॥ हरे ! सर्वसमर्थ भएर पनि विधाता साह्रै निष्ठुर छ । म अभागीको निम्ति रुने र करुणापात्री मेरी दीन भार्यालाई लगेर त्यो के गर्ला ! ॥ ५३ ॥ स्त्री बिना कष्टले बाँच्ने यो आधा शरीरको मलाई के काम ? अब त विधाताले मलाई पनि लगिदिए हुन्थ्यो ॥५४ ॥ जसको अहिले प्वाँख पनि उम्रेका छैनन् ती मातृहीन चल्लालाई म कसरी पालौंला ? हरे ! मेरा ती अभागी बच्चा गुँडमै बसेर आमाको बाटो हेर्दा हुनन् ॥ ५५ ॥ यस प्रकार आफ्नी प्रियाको वियोगले व्याकुल र गद्गद्कण्ठले रुने कुलिङ्गलाई पनि त्यही व्याधाले नजीकैको वृक्षको आडमा

ऽन्तकः ॥ वितत्य जालं विदधे तत्र तत्र प्रलोभयन् ॥५० ॥ कुलिङ्गमिथुनं तत्र विचरत्समदृश्यत ॥ तयोः कुलिङ्गी सहसा लुब्धकेन प्रलोभिता ॥५१॥ साऽसज्जत शिचस्तन्त्यां महिषी कालयन्त्रिता ॥ कुलिङ्गस्तां तथापन्नां निरीक्ष्य भृशदुःखितः ॥ स्नेहादकल्पः कृपणः कृपणां पर्यदेवयत् ॥५२॥ अहो अकरुणो देवः स्त्रिया करुणया विभुः ॥ कृपणं माऽनुशोचन्त्या दीनया किं करिष्यति ॥५३॥ कामं नयतु मां देवः किमर्धेनात्मनो हि मे ॥ दीनेन जीवता दुःखमनेन विधुरायुषा ॥५४॥ कथं त्वजातपक्षांस्तान्मातृहीनान्बिभर्म्यहम् ॥ मन्दभाग्याः प्रतीक्षन्ते नीडे मे मातरं प्रजाः ॥५५॥ एवं कुलिङ्गं विलपन्तमारात्प्रियावियोगातुरमश्रुकण्ठम् ॥ स एव तं शाकुनिकः शरेण विव्याध कालप्रहितो विलीनः ॥ ५६ ॥ एवं यूयमपश्यन्त्य आत्मापायमबुद्धयः ॥ नैनं प्राप्स्यथ शोचन्त्यः पतिं वर्षशतैरपि ॥५७॥ हिरण्यकशिपुरुवाच ॥ बाल एवं प्रवदति सर्वे विस्मितचेतसः ॥ ज्ञातयो मेनिरे सर्वमनित्यमयथोत्थितम् ॥ ५८ ॥ यमदुपाख्याय तत्रैवान्तरधीयत ॥ ज्ञातयोऽपि सुयज्ञस्य चक्रुर्यत्साम्परायिकम् ॥ ५९ ॥ ततः शोचत मा यूयं परं चात्मानमेव च ॥ क आत्मा कः परो वाऽत्र स्वीयः पारक्य एव वा ॥ स्वपराभिनिवेशेन विना ज्ञानेन देहिनाम् ॥६०॥ नारद उवाच ॥ इति दैत्यपतेर्वाक्यं दितिराकर्ण्य सस्नुषा ॥ पुत्रशोकं क्षणात्त्यक्त्वा तत्त्वे चित्तमधारयत् ॥६१॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे दितिशोकापनयनं नाम द्वितीयोऽध्यायः ॥ २ ॥ नारद उवाच ॥ हिरण्यकशिपू राजन्नजेयमजरामरम् ॥ आत्मानमप्रतिद्वन्द्वमेकराजं व्यधि-

लुकेर वाण हानिदियो, त्यसले त्यो पनि त्यहीं मर्‍यो ॥५६॥ हे बुद्धिहीन राजमहिषी हो ! यसै प्रकार एक दिन प्राप्तव्य आफ्नू मृत्युलाई तिमीहरू देख्दैनौ । अब त सय वर्षसम्म शोक गरेर पनि यो पति पाउन सक्तैनौ ॥ ५७ ॥ हिरण्यकशिपुले भन्यो—हे तात ! त्यस बालकले त्यसरी भनेपछि ती सबै ज्ञाति बन्धु विस्मित भए र तिनले सारा संसार अनित्य तथा मिथ्या ठाने ॥५८॥ यति कुरा भनेर यमराज त्यहीं अन्तर्धान भए । अनि सुयज्ञका बान्धवहरूले उसको देहको और्ध्वदैहिक संस्कार सम्पन्न पारे ॥५९॥ तिमी पनि आफ्ना-बिरानाको निम्ति शोक नगर किनकि यस संसारमा आफ्नू-बिरानोको अभिनिवेशरूपी अज्ञान बाहेक वास्तवमा प्राणीहरूको स्वयं वा आफ्ना बिराना के रहन्छ र ! ॥ ६० ॥ देवर्षि नारदजी भन्दछन्–हे राजन् ! दैत्यराज हिरण्यकशिपुका त्यस्ता वचन सुनेर आफ्नी पुत्रवधूसहित तत्काल दितिले पुत्रशोक त्यागेर आफ्नो मन आत्मतत्त्वको चिन्तनमा

लगाइन् ॥६१॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥२॥ ( हिरण्यकशिपुको तपस्या र वरप्राप्ति )—नारदजी भन्दछन्–हे राजन् ! त्यसपछि हिरण्यकशिपुले अजेय, अजर-अमर र निष्कण्टक सम्राट् बन्ने निश्चय गर्‍यो ॥१॥ अनि मन्दराचलको कन्दरामा ऊर्ध्वबाहु भएर आकाशमा दृष्टिलाई भूमिमा खुट्टाको बुढीऔंलाले मात्र टेकी अतिशय कठोर तपस्या गर्नलाग्यो ॥२॥ बढेका जटाकलापले त्यो किरण जाल-सुशोभित प्रलयकालीन सूर्य झैं देखिन्थ्यो । त्यो तपोमग्न भएपछि देवताहरू आफना-आफना स्थानमा गएर बस्नलागे ॥३॥ कालान्तरमा त्यस दैत्यको कपालबाट धूमयुक्त तमोमय अग्नि प्रकटभयो । त्यो आगो चारैतिर फैलिएर तल-माथि र वर-परका लोक डढाउनलाग्यो॥४॥ त्यसले नदी तथा समुद्र उम्लन लागे र द्वीप तथा पर्वतसमेत पृथिवी हल्लन थाल्यो । ग्रह र तारागण टुका-टुका भएर झर्नलागे, दसै दिशा बल्नलाग्यो ॥५॥ त्यस ज्वालाले डराएका देवता स्वर्गलोक छाडेर ब्रह्मलोक गए र ब्रह्माजीसित भन्दछन्–हे देवदेव ! हे जगत्पते ! हामीहरू दैत्यराज हिरण्यकशिपुको तपको तेजले तप्त भएर स्वर्गमा टिक्न सकेनौं हे सर्वाधिपे !

त्सत ॥ १ ॥ स तेपे मन्दरद्रोण्यां तपः परमदारुणम् ॥ ऊर्ध्वबाहुर्नभोदृष्टिः पादाङ्गुष्ठाश्रितावनिः ॥ २ ॥ जटादीधितिभी रेजे संवर्तार्क इवांशुभिः ॥ तस्मिस्तपस्तप्यमाने देवाः स्थानानि भेजिरे ॥ ३ ॥ तस्य मूर्ध्नः समुद्भूतः सधूमोऽग्निस्तपोमयः ॥ तिर्यगूर्ध्वमधोलोकानतपद्विष्वगीरितः ॥४॥ चुक्षुभुर्नद्युदन्वन्तः सद्वीपाद्रिश्चचाल भूः ॥ निपेतुः सग्रहास्तारा जज्वलुश्च दिशो दश ॥ ५ ॥ तेन तप्ता दिवं त्यक्त्वा ब्रह्मलोकं ययुः सुराः ॥ धात्रे विज्ञापयामासुर्देवदेव जगत्पते ॥ ६ ॥ दैत्येन्द्रतपसा तप्ता दिवि स्थातुं न शक्नुमः ॥ तस्य चोपशमं भूमन्विधेहि यदि मन्यसे ॥ लोका न यावन्नङ्क्ष्यन्ति बलिहारास्तथा विभो ॥ ७ ॥ तस्यायं किल सङ्कल्पश्चरतो दुश्चरं तपः ॥ श्रूयतां किं न विदितस्तवाथापि निवेदितः ॥ ८ ॥ सृष्ट्वा चराचरमिदं तपोयोगसमाधिना ॥ अध्यास्ते सर्वधिष्ण्येभ्यः परमेष्ठी निजासनम् ॥ ९ ॥ तदहं वर्धमानेन तपोयोगसमाधिना ॥ कालात्मनोश्च नित्यत्वात्साधयिष्ये तथात्मनः ॥ १० ॥ अन्यथेदं विधास्येऽहमयथापूर्वमोजसा ॥ किमन्यैः कालनिर्धूतैः कल्पान्ते वैष्णवादिभिः ॥ ११ ॥ इति शुश्रुम निर्बन्धं तपः परममास्थितः ॥ विधत्स्वानन्तरं युक्तं स्वयं त्रिभुवनेश्वर ॥ १२ ॥ तवासनं द्विजगवां पारमेष्ठ्य जगत्पते ॥ भवाय श्रेयसे भूत्यै क्षेमाय विजयाय च ॥ १३ ॥ इति विज्ञापितो देवैर्भगवानात्मभूर्नृप ॥ परीतो भृगुदक्षाद्यैर्ययौ दैत्येश्वराश्रमम् ॥ १४ ॥ न ददर्श प्रतिच्छन्नं वल्मीकतृणकी-

हे भूमन् ! हजुरका पूजक हामी सबैको संहार हुन नपाउँदै कुनै उपायले त्यसलाई शान्त पारिदिनुहवस् ॥६॥७॥ त्यो जुन विचारले यो कठोर तपस्या गरिरहेको छ, त्यो हजुर सबै जान्नुहुन्छ । तैपनि हामीले भनेको सुन्नुहवस् ॥८॥ त्यसको इच्छा छ–जसरी ब्रह्माजी तप र योग-निष्ठाले यो चराचर जगत् रचेर सर्वोच्च स्थान सत्यलोकमा रहन्छन् । त्यसै गरी म पनि आफ्नो बढिरहेको तपस्या र योगनिष्ठाले त्यो स्थान प्राप्त गर्छु, किनकि काल र आत्मा नित्य छन्, तिनको कहिल्यै पनि नाश हुँदैन ॥९॥१०॥ अनि पाप-पुण्यादिको गति पल्टाएर म सम्पूर्ण जगत् नै उलट-पलट पारिदिनु । ब्रह्मपद बाहेक अन्य वैष्णवादि पदहरूसित मलाई के वास्ता ? किनकि ती त कल्पको अन्त्यमा नष्ट हुन्छन् ।।२१॥ हामीले त्यसको विचार सुनेका छौं । यसै निम्ति त्यो कठोर तपमा लागेको छ । त्रिभुवनेश्वर ! यस विषयमा हजुर जे उचित ठान्नुहुन्छ, त्यो शीघ्र गर्नुहवस् ॥१२॥ हे जगत्पते ! हजुरको यो श्रेष्ठस्थान

आश्रम तथा गाईहरूको उत्पत्ति कल्याण, विभूति, कुशल र विजयको मूल कारण हो ॥१३॥ हे राजन् ! देवताहरूले यसरी भनेपछि आत्मयोनि ब्रह्मा भृगु, दक्षादि प्रजापतिहरूका साथ हिरण्यकशिपुको आश्रममा गए ॥१४॥ पहिले त्यो उनीहरूलाई देखिएन, किनकि तृण, घाँस र धमिराको माटोले त्यसको शरीर ढाकिएको थियो र कमिला त्यसको मेदा, त्वचा, मांस तथा रक्तादिलाई चाटिसकेका थिए ॥१५॥ निकै बेरसम्म खोजी गरेपछि जब मेघमालाच्छन्न सूर्यसमान परम तेजस्वी तथा आफ्नो तपले त्रैलोक्य थर्काउने त्यो दैत्यलाई देखे, तब हंसवाहन ब्रह्माजी चकित भएर हाँस्तै भन्नलागे ॥१६॥ ब्रह्माजीले भने–हे कश्यपतनय ! अब उठ-उठ, तिम्रो तप सिद्ध भयो, तिम्रो कल्याण होस्। म तिमीलाई वर दिन आएको छु। तिमी इच्छानुसार वर माग ॥१७॥ मैले तिम्रो यो अद्भुत आत्मबल देखें–जो लामखुट्टे आदिले खाएर पनि तिम्रो प्राण र शरीर केवल हाडको भरमा टिकिरहेको छ ॥१८॥ यस्तो कठोर तप कहिले कुनै महर्षिले पनि गरेका छैनन् र न कोही भविष्यमा नै गर्न सक्ला ! संसारमा कुन यस्तो प्राणी छ जो पानी विना सय वर्षसम्म बाँचोस् ॥ १९ ॥

चकैः ॥ पिपीलिकाभिराचीर्णमेदस्त्वङ्मांसशोणितम् ॥१५॥ तपन्तं तपसा लोकान् यथाभ्रापिहितं रविम् ॥ विलक्ष्य विस्मितः प्राह प्रहसन्हंसवाहनः ॥ १६ ॥ ब्रह्मोवाच ॥ उत्तिष्ठोत्तिष्ठ भद्रं ते तपःसिद्धोऽसि काश्यप ॥ वरदोऽहमनुप्राप्तो व्रियतामीप्सितो वरः ॥ १७ ॥ अद्राक्षमहमेतत्ते हृत्सारं महदद्भुतम् ॥ दंशभक्षितदेहस्य प्राणा ह्यस्थिषु शेरते ॥ १८ ॥ नैतत्पूर्वर्षयश्चक्रुर्न करिष्यन्ति चापरे ॥ निरम्बुर्धारयेत्प्राणान्को वै दिव्यसमाः शतम् ॥ १९ ॥ व्यवसायेन तेऽनेन दुष्करेण मनस्विनाम् ॥ तपोनिष्ठेन भवता जितोऽहं दितिनन्दन ॥ २० ॥ ततस्त आशिषः सर्वा ददाम्यसुरपुङ्गव ॥ मर्त्यस्य ते अमर्त्यस्य दर्शनं नाफलं मम ॥२१॥ नारद उवाच ॥ इत्युक्त्वाऽऽदिभवो देवो भक्षिताङ्गं पिपीलिकैः ॥ कमण्डलुजलेनौक्षद्दिव्येनामोघराधसा ॥ २२ ॥ स तत्कीचकवल्मीकात्सहओजोबलान्वितः ॥ सर्वावयवसम्पन्नो वज्रसंहननो युवा ॥ उत्थितस्तप्तहेमाभो विभावसुरिवैधसः॥ २३ ॥ स निरीक्ष्याम्बरे देवं हंसवाहमवस्थितम् ॥ ननाम शिरसा भूमौ तद्दर्शनमहोत्सवः ॥ २४ ॥ उत्थाय प्राञ्जलिः प्रह्व ईक्षमाणो दृशा विभुम् ॥ हर्षाश्रुपुलकोद्भेदो गिरा गद्गदयाऽगृणात् ॥ २५ ॥ हिरण्यकशिपुरुवाच ॥ कल्पान्ते कालसृष्टेन योऽन्धेन तमसाऽऽवृतम् ॥ अभिव्यनग्जगदिदं स्वयंज्योतिः

हे दितिनन्दन ! ठूला-ठूला धैर्यशाली पुरुषलाई पनि कठिन तिम्रो तपस्याले मलाई आफ्नो वशमा पारिलियो ॥२०॥ हे आसुरश्रेष्ठ ! म तिम्रा सबै इच्छा पूर्णपारिदिनेछु । तिमी मृत्युलोकका जीव हौ, तापनि हामी जस्ता अमर देवताको दर्शन व्यर्थ जाँदैन ॥२१॥ नारदजी भन्दछन्–हे राजन् ! आदिदेव ब्रह्माजीले यति भनेपछि कमिलाहरूले चाटिसकेको शरीर भएको हिरण्यकशिपु माथि आफ्नो कमण्डलुको अमोघ प्रभावशाली जल छर्किदिए ॥२२॥त्यो जल पर्नासाथ त्यो दाउराबाट अग्निझैं उत्पन्न मानसिक, ऐन्द्रियिक र शारीरिक शक्तिसम्पन्न, सर्वाङ्गपूर्ण, वज्र-समान पुष्ट र तताएको सुवर्ण जस्तै राम्रो नवयुवक भई धमिराको गोलोबाट निस्केर ठिङ्ग उभियो ॥२३॥ आकाशमा हंसवाहन भगवान् ब्रह्माजीलाई देखेर उनको दर्शनले अति आनन्दित भएर उसले प्रणाम गर्‍यो ॥२४॥ अनि त्यो दैत्यराज नेत्रमा आनन्दका आँशु भरेर पुलकित शरीर भई तथा भगवानतिर अत्यन्त विनीत भावले एकहोरो हेर्दै दुवै हात जोरेर गद्गद् वाणीले स्तुति गर्नलाग्यो–॥२५॥ हिरण्यकशिपु भन्दछ—प्रत्येक कल्पको अन्त्यमा कालद्वारा प्रेरित तथा तमोगुणले ढाकिएको जगत्‌लाई जो स्वयं प्रकाशशील

645

परमेश्वरले आफ्नो तेजबाट उत्पन्न गरेको छ, जो त्रिगुणात्मक संसारको रचना, पालन र संहार गर्दछन्, ती सत्व, रज, तमोमय परमात्मालाई प्रणाम छ ॥२६॥२७॥ जो आदि पुरुष र जगत्का बीज छन्, ज्ञान-विज्ञान जसका स्वरुप छन् र जो प्राण, इन्द्रिय, मन तथा बुद्धि द्वारा आदि विकारले व्यक्त हैं देखिन्छन् ॥ २८ ॥ हे पितामह ! हजुर नै सूत्रात्मक स्वरूपले यो स्थावर-जङ्गम जगत्मा शासन गर्दछन् । अतएव हजुर प्रजा र तिनका चित्त, चेतना, मन इन्द्रियहरूका पनि स्वामी हुनुहुन्छ । मनस्तत्वरूपले हजुरनै आकाशादि भूत शब्दादि विषय र तिनका वासनाको रचना गर्नुहुन्छ ॥२९॥ जसमा होता,अध्वर्यु, ब्रह्मा र उद्‌गाता यी चार ऋत्विज भएका कर्मका प्रतिपादक वेदत्रयीरूप हजुर आफ्नू देहबाट नै अग्निष्टोमादि सात यज्ञ रच्ने र हजुर नै सबै प्राणीहरूका एकमात्र आत्मा हुनुहुन्छ । हे अनादि ! अनन्त, अपार, सर्वज्ञ, अन्तर्यामी विधाता ! हजुर नै काल हुनुहुन्छ । अतः हजुर अनिमेषरूपले क्षण लव आदि आफ्ना अवयवद्वारा सबै जीवहरूको आयु क्षीण पार्दै रहे पनि निर्विकार रहनुहुन्छ किनकि हजुर ज्ञानस्वरूप, परमेश्वर, अजन्मा, सबै जीवका अन्तरात्मा हुनुहुन्छ ॥३०-३१॥

स्वरोचिषा ॥ २६ ॥ आत्मना त्रिवृता चेदं सजत्यवति लुम्पति ॥ रजःसत्त्वतमोधाम्ने पराय महते नमः ॥ २७ ॥ नम आद्याय बीजाय ज्ञानविज्ञानमूर्तये ॥ प्राणेन्द्रियमनोबुद्धिविकारैर्व्यक्तिमीयुषे ॥२८॥ त्वमीशिषे जगतस्तस्थुषश्च प्राणेन मुख्येन पतिः प्रजानाम् ॥ चित्तस्य चित्तेर्मनइन्द्रियाणां पतिर्महान्भूतगुणाशयेशः ॥ २९ ॥ त्वं सप्ततन्तून्वितनोषि तन्वा त्रय्या चातुर्होत्रकविद्यया च ॥ त्वमेक आत्मात्मवतामनादिरनन्तपारः कविरन्तरात्मा ॥ ३० ॥ त्वमेव कालोऽनिमिषो जनानामायुर्लवाद्यावयवैः क्षिणोषि ॥ कूटस्थ आत्मा परमेष्ठ्यजो महांस्त्वं जीवलोकस्य च जीव आत्मा ॥३१॥ त्वत्तः परं नापरमप्यनेजदेजच्च किञ्चिद्व्यतिरिक्तमस्ति ॥ विद्याः कलास्ते तनवश्च सर्वा हिरण्यगर्भोऽसि बृहत्त्रिपृष्ठः ॥ ३२ ॥ व्यक्तं विभो स्थूलमिदं शरीरं येनेन्द्रियप्राणमनोगुणांस्त्वम् ॥ भुङ्क्षे स्थितो धामनि पारमेष्ठ्य अव्यक्त आत्मा पुरुषः पुराणः ॥३३॥ अनंताव्यक्तरूपेण येनेदमखिलं ततम् ॥ चिदचिच्छक्तियुक्ताय तस्मै भगवते नमः ॥ ३४ ॥ यदि दास्यास्यभिमतान्वरान्मे वरदोत्तम ॥ भूतेभ्यस्त्वद्विसृष्टेभ्यो मृत्युर्माभून्मम प्रभो ॥ ३५ ॥ नान्तर्बहिर्दिवा नक्तमन्यस्मादपि चायुधैः ॥ न भूमौ नाम्बरे मृत्युर्न नरैर्न मृगैरपि ॥ ३६ ॥ व्यसुभिर्वाऽसुमद्भिर्वा सुरा-

हे नाथ ! कार्य-कारण र स्थावर-जङ्गममध्ये कुनै पनि वस्तु हजुरभन्दा भिन्न रहन्न । विद्या र काल पनि हजुरकै अङ्ग हुन् । हजुर त्रिगुणात्मिका मायादेखि पर परब्रह्म परमात्मा हुनुहुन्छ । किनकि यो सुवर्णमय ब्रह्माण्ड हजुरको गर्भमै स्थित छ ॥३२॥ हे विभो ! दृश्यमान ब्रह्माण्ड स्थूल शरीर हो । यसैद्वारा हजुर इन्द्रिय, प्राण र मनको विषय भोग्नुहुन्छ । यी विषयका भोग हजुर परमात्मस्वरूपमा स्थित भएर नै गर्नुहुन्छ । वस्तुतः हजुर अव्यक्त, पुराणपुरुष र निरूपाधि ब्रह्मरूप हुनुहुन्छ ॥ ३३ ॥ आफ्ना अनन्त र अव्यक्त रूपले जो सारा जगत्मा व्याप्त छन्, ती चेतन र अचेतन-शक्तिसम्पन्न भगवान्‌लाई प्रणाम छ ॥ ३४ ॥ हे वरदातामा उत्तम प्रभो ! हजुर यदि मलाई इच्छित वर दिनुहुन्छ भने यही वरदान दिनुहवस् कि हजुरले रचेका कुनै पनि प्राणीका हातबाट म नमरूँ ॥३५॥ भित्र-बाहिर, दिन-रात्रि, हजुरले रचेका प्राणी वा अन्य कुनै जीवले, कुनै शस्त्रास्त्रले पृथिवी तथा आकाशमा, कुनै मनुष्य वा मृगले एवं जीवित अथवा मृतक प्राणीद्वारा मेरो मृत्यु नहोस् । देवता, असुर तथा नागादिमा मलाई कसैले मार्न नसकून् । युद्धमा कोही पनि मेरो सामुन्ने

टिकन नसकोस् र म नैं सबैको एकमात्र अधीश्वर बनूँ ॥३६॥३७॥ इन्द्रादि सबै लोकपालमा हजुरको जस्तो महिमा छ यस्तै नैं महिमा मेरो पनि होओस् र तपोयोग प्रभावयुक्त योगीहरू लाई जुन अविनाशी ऐश्वर्य प्राप्त छ, त्यहाँ मलाई पनि मिलोस् ॥३८॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥ (दैत्यपति हिरण्यकशिपुको उत्पात र प्रह्लादको अनुपम गुण र प्रभाव)–नारद भन्दछन्–हे राजन् ! ब्रह्माजी हिरण्यकशिपुमाथि धेरै प्रसन्न थिए। अतः त्यसले मागेको ती परमदुर्लभ सबै वर दिए ॥१॥ ब्रह्माजी भन्दछन्–हे तात ! तिमीले जुन-जुन वर मागेका छौ, ती अति दुर्लभ छन्, तापनि म तिमीलाई ती सबै वर दिन्छु॥२॥त्यसपछि जसको कृपा कहिल्यै व्यर्थ हुँदैन, ती ब्रह्माजी दैत्यपति हिरण्यकशिपु द्वारा पूजित तथा प्रजापतिहरूद्वारा स्तुयमान हुँदै त्यहाँबाट फर्किए ॥३॥ यता सुवर्ण समान कान्तियुक्त शरीरले सुशोभित दैत्यराज हिरण्यकशिपु त्यस्तो वर पाएर, आफ्नो भाईको

सुरमहोरगैः ॥ अप्रतिद्वन्द्वितां युद्धे ऐकपत्यं च देहिनाम् ॥ ३७ ॥ सर्वेषां लोकपालानां महिमानं तथात्मनः ॥ तपोयोगप्रभावाणां यन्न रिष्यति कर्हिचित् ॥३८॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे हिरण्यकशिपोर्वरयाचनं नाम तृतीयोऽध्यायः ॥ ३ ॥ नारद उवाच ॥ एवं वृतःशतधृ-तिर्हिरण्यकशिपोरथ ॥ प्रादात्तत्तपसा प्रीतो वरांस्तस्य सदुर्लभान् ॥ १ ॥ ब्रह्मोवाच ॥ तातेमे दुर्लभाः पुंसां यान्वृणीषे वरान्मम ॥ तथापि वित-राम्यङ्ग वरान् यदपि दुर्लभान् ॥ २ ॥ ततो जगाम भगवानमोघानुग्रहो विभुः ॥ पूजितोऽसुरवर्येण स्तूयमानः प्रजेश्वरैः ॥ ३ ॥ एवं लब्धवरो दैत्यो बिभ्रद्धेममयं वपुः ॥ भगवत्यकरोद्द्वेषं भ्रातुर्वधमनुस्मरन् ॥ ४ ॥ स विजित्य दिशः सर्वा लोकांश्च त्रीन्महासुरः ॥ देवासुरमनुष्येन्द्रान्गन्धर्व-गरुडोरगान् ॥ ५ ॥ सिद्धचारणविद्याध्रानृषीन्पितृपतीन्मनून् ॥ यक्षरक्षःपिशाचेशान्प्रेतभूतपतीनथ ॥६॥ सर्वसत्त्वपतीञ्जित्वा वशमानीय विश्वजित् ॥ जहार लोकपालानां स्थानानि सह तेजसा ॥ ७ ॥ देवोद्यानश्रिया जुष्टमध्यास्ते स्म त्रिविष्टपम् ॥ महेन्द्रभवनं साक्षान्निर्मितं विश्वकर्मणा ॥ त्रैलो-क्यलक्ष्यायतनमध्युवासाखिलर्द्धिमत् ॥ ८ ॥ यत्र विद्रुमसोपाना महामारकता भुवः ॥ यत्र स्फाटिककुड्यानि वैदूर्यस्तम्भपङ्क्तयः ॥ ९ ॥ यत्र चित्रवितानानि पद्मरागासमानि च ॥ पयःफेननिभाः शय्या मुक्तादामपरिच्छदाः ॥ १० ॥ कूजद्भिर्नूपुरैर्देव्यः शब्दयन्त्य इस्तत : ॥ रत्नस्थलीपु पश्यन्ति सुदतीः सन्दरं मुखम् ॥ ११ ॥ तस्मिन्महेन्द्रभवने महाबलो महामना निर्जितलोक एकराट् ॥ रेमेऽभिवन्द्याङ्घ्रियुगः सुरादिभिः प्रता-

मरण सम्झेर नारायणसित द्वेष गर्न लाग्यो ॥४॥ त्यस महादैत्यले सबै दिशाहरू, तीनै लोक तथा देवता, असुर, नरेन्द्रगण, गन्धर्व, गरुड, सर्प, सिद्ध, चारण, विद्याधर, ऋषि, पितृहरूका स्वामी, मनु यक्ष, राक्षस, पिशाचपति, भूत-प्रेतका प्रभु एवं सबै जीवहरूका स्वामीहरूलाई जितेर आफ्नो वशमा पारिलियो। त्यस विश्वविजयी असुरले आफ्नो बलले सबै लोकपालका पद खोसिलियो ॥५-७॥ त्यो महाबलवान् दैत्यनन्दनको शोभाले युक्त स्वर्गलोकमा गएर विश्वकर्माले बनाएका र तीनै लोकको शोभाको आधार एवं समस्त वैभवपूर्ण इन्द्र भवनमा बस्न लाग्यो ॥८॥ जुन इन्द्र-भवनका खुड्किला विद्रुमका, भूमि मरकतमणीको, भित्ता स्फटिकमणिको तथा स्तम्भश्रेणी वैदूर्यमणिको बनेका थिए ॥९॥ जसमा चित्र-विचित्र बितान, पद्मरागका पीढा, दुग्धफेनसमान उज्ज्वल शय्या र मोतीका मालाले अलंकृत चदुवा शोभायमान थिए ॥१०॥ त्यस दिव्यभवनमा सुन्दर दाँत हुने देवाङ्गना नूपुरका झङ्कार गर्दै

डुलिरहेका थिए र त्यहाँका रत्न-स्थलीहरूमा आफ्नो सुन्दर मुख हेर्दै हिँड्थे ॥११॥ त्यो महाबली र महामनस्वी दैत्यराज सबै लोकहरू जितेर सम्पूर्ण त्रिलोकको शासक बनी अनेक आनन्द गर्नलाग्यो । त्यो ठूलो तेजस्वी र कठोर शासक थियो । त्यसको तेजले सन्तप्त देवता नित्य त्यसका चरणको वन्दना गर्दथे ॥१२॥ हे राजन् ! त्यो अतिशय तीव्र गन्धको मदिरा (रक्सी) पिएर सधैं मदमत्त बनिरहन्थ्यो । त्यसका राता-राता आँखा डरलाग्दा देखिन्थे । त्यो तप, योग र शारीरिक एवं मानसिक शक्तिको आधार बनिसकेको थियो । ब्रह्मा, विष्णु तथा महादेव बाहेक अरू सबै लोकपाल उपहार लिएर सर्वदा उपस्थित रहन्थे ॥१३॥ हे पाण्डुनन्दन ! आफ्नो शक्तिले इन्द्रासनमा आसीन त्यस हिरण्यकशिपुको म नारद, विश्वावसु तथा तुम्बुरु आदि गुणगान गर्दथे । सबै सिद्ध, गन्धर्व, ऋषि विद्याधर तथा अप्सराहरू उसकै स्तुति गर्दथे ॥ १४ ॥ हे राजन् ! वर्णाश्रम-धर्मका पालक पुरुषहरूद्वारा ठूला-ठूला दक्षिणा दिइने यज्ञ गरिएपछि त्यो दैत्यराज नै आफ्नो प्रभावले सारा यज्ञभाग ग्रहण गर्नलाग्यो ॥ १५ ॥ त्यसको राज्यकालमा सप्तद्वीपा पृथिवी खन-जोत नगरेर नै उपज दिन्थिन् ।

पितैरूर्जितचण्डशासनः ॥ १२ ॥ तमङ्ग मत्तं मधुनोरुगन्धिना विवृत्तताम्राक्षमशेषधिष्ण्यपाः ॥ उपासतोपायनपाणिभिर्विना त्रिभिस्तपोयोगब-लौजसां पदम् ॥ १३ ॥ जगुर्महेन्द्रासनमोजसा स्थितं विश्वावसुस्तुम्बुरुरस्मदादयः ॥ गन्धर्वसिद्धा ऋषयोऽस्तुवन्मुहुर्विद्याधरा अप्सरसश्च पाण्डव ॥ १४ ॥ स एव वर्णाश्रमिभिः क्रतुभिर्भूरिदक्षिणैः ॥ इज्यमानो हविर्भागानग्रहीत्स्वेन तेजसा ॥ १५ ॥ अकृष्टपच्या तस्यासीत्सप्तद्वीप-वती मही ॥ तथा कामदुघा द्यौस्तु नानाश्चर्यपदं नभः ॥ १६ ॥ रत्नाकराश्च रत्नौघांस्तत्पत्न्यश्चोहुरूर्मिभिः ॥ क्षारसीधुघृतक्षौद्रदधिक्षीरामृतो-दकाः ॥ १७ ॥ शैला द्रोणीभिराक्रीडं सर्वर्तुषु गुणान्द्रुमाः ॥ दधार लोकपालानामेक एव पृथग्गुणान् ॥ १८ ॥ स इत्थं निर्जितककुबेकराड्वि-षयान्प्रियान् ॥ यथोपजोषं भुञ्जानो नातृप्यदजितेन्द्रियः ॥ २६ ॥ एवमैश्वर्यमत्तस्य दृप्तस्योच्छास्त्रवर्तिनः ॥ कालो महान्व्यतीयाय ब्रह्मशापमुपेयुषः ॥२०॥ तस्योग्रदण्डसंविग्नाः सर्वे लोकाः सपालकाः ॥ अन्यत्रालब्धशरणाः शरणं ययुरच्युतम् ॥ २१ ॥ तस्यै नमोऽस्तु काष्ठायै यत्रात्मा हरि-रीश्वरः ॥ यद्गत्वा न निवर्तन्ते शान्ताः संन्यासिनोऽमलाः ॥ २२ ॥ इति ते संयतात्मानः समाहितधियोऽमलाः ॥ उपतस्थुर्हृषीकेशं विनिद्रा

स्वर्ग लोकहरूका कामना पूर्ण पार्दथ्यो र अन्तरिक्ष लोक विविध आश्चर्यको आश्रय बनिसकेको थियो ॥ १६ ॥ नूनिलो पानी, मदिरा, घृत, इक्षुरस, दधि, दुग्ध र गुलियो पानी हुने समुद्र पनि आफ्ना पत्नी ( नदीहरू ) सहित त्यसको नगीचै तरङ्गद्वारा रत्नराशि पुऱ्याउँदै रहन्थे ॥ १७॥ सबै पर्वत आफ्ना कन्दराहरूका क्रीडाङ्गण तथा वृक्ष प्रत्येक ऋतुका फल-पुष्प दिनलागे, किनकि त्यस बेला हिरण्यकशिपु स्वयं लोकपालहरूका गुण धारण गरेका थिए ॥१८॥ त्यो दिग्विजयी तथा एकछत्र सम्राट् भएर आफ्ना प्रिय भोगहरू यथेच्छ भोगि-रहेको थियो । तापनि अजितेन्द्रिय हुनाले त्यसलाई तृप्ति भइरहेको थिएन ॥१९॥ यस प्रकार विप्रशापले प्राप्त, ऐश्वर्योन्मत्त, अभिमानी एवं शास्त्रविरुद्ध कर्म गर्ने दैत्य हिरण्यकशिपुको धेरै नै समय बितेर गयो ॥२०॥ त्यसको कठोर शासनले लोकपाल समेत सबै लोक उद्विग्न भएर जब तिनलाई अन्त कतै शरण पाइएन तब ती श्रीविष्णु भगवानको शरणमा पर्न गए ॥२१॥ ती यहाँ पुगेर भन्दछन्–'त्यस दिशालाई नमस्कार छ, जसमा सर्वात्मा जगदीश्वर बस्तछन् र जसलाई प्राप्त गरेर शान्त तथा निर्मल स्वभावका संन्यासीजन फेरि यहाँ फर्कन्न'

॥२२॥ त्यहाँ उनले इन्द्रियहरू संयत पारेर चित्तका एकाग्रताले निद्रा जिते र केवल वायुमात्र खाएर विशुद्ध बुद्धिले भगवान् हृषीकेशको आराधना गरे ॥ २३ ॥ कालान्तरमा उनलाई मेघ समान गम्भीर र साधुजनलाई अभय दिने यस्तो आकाशवाणी सुनियो, जसका गम्भीर घोषले दिशाहरू प्रतिध्वनित भए। तिनले सुने—तिमीहरू नडराओ। तिम्रो कल्याण होस्। मेरो दर्शन सबै प्रकारका मङ्गलको साधक मानिन्छ ॥२४॥२५॥ म त्यस अधम दैत्यको दुष्टता जान्दछु। बेला पुगेपछि म त्यसलाई शान्त पार्नेछु। त्यति बेलासम्म समयको प्रतीक्षा गर ॥२६॥ जब कुनै प्राणी देवता, गाई, वेद, ब्राह्मण, साधु, धर्म र मप्रति द्वेष गर्न थाल्दछ, तब त्यो शीघ्र नै नष्ट भएर जान्छ ॥२७॥ अतः त्यो जब आफ्नो निर्वैर शान्त तथा महात्मा पुत्र प्रह्लादसित वैरत्व गर्ला, तब ब्रह्माजीको वरले उद्धत त्यस दैत्यलाई म अवश्य मार्नेछु' ॥ २८ ॥ नारदजी भन्दछन्—सारा संसारका गुरु भगवान्‌ले त्यसो भनेपछि देवताहरूले उद्वेगरहित भएर उनलाई प्रणाम गरे र फर्किए। त्यसै बेलादेखि तिनले यस असुरलाई मरेजस्तै ठाने ॥ २९ ॥ हे राजन् ! दैत्यराज हिरण्यकशिपुका चार पुत्र

वायुभोजनाः ॥ २३ ॥ तेषामाविरभूद्वाणी अरूपा मेघनिःस्वना ॥ सन्नादयन्ती ककुभः साधूनामभयङ्करी ॥ २४ ॥ मा भैष्ट विबुधश्रेष्ठाः सर्वेषां भद्रमस्तु वः ॥ मद्दर्शनं हि भूतानां सर्वश्रेयोपपत्तये ॥ २५ ॥ ज्ञातमेतस्य दौरात्म्यं दैतेयापसदस्य च ॥ तस्य शान्तिं करिष्यामि कालं तावत्प्रतीक्षत ॥ २६ ॥ यदा देवेषु वेदेषु गोषु विप्रेषु साधुषु ॥ धर्मे मयि च विद्वेषः स वा आशु विनश्यति ॥ २७ ॥ निर्वैराय प्रशान्ताय स्वसुताय महात्मने ॥ प्रह्लादाय यदा द्रुह्येद्धनिष्येऽपि वरोर्जितम् ॥ २८ ॥ नारद उवाच ॥ इत्युक्ता लोकगुरुणा तं प्रणम्य दिवौकसः ॥ न्यवर्तन्त गतोद्वेगा मेनिरे चासुरं हतम् ॥ २९ ॥ तस्य दैत्यपतेः पुत्राश्चत्वारः परमाद्भुताः ॥ प्रह्लादोऽभून्महांस्तेषां गुणैर्महदुपासकः ॥ ३० ॥ ब्रह्मण्यः शीलसम्पन्नः सत्यसन्धो जितेन्द्रियः ॥ आत्मवत्सर्वभूतानामेकः प्रियसुहृत्तमः ॥३१॥ दासवत्संनतार्याङ्घ्रिः पितृवद्दीनवत्सलः ॥ भ्रातृवत्सदृशे स्निग्धो गुरुष्वीश्वरभावनः ॥ विद्यार्थरूपजन्माढ्यो मानस्तम्भविवर्जितः ॥ ३२ ॥ नोद्विग्नचित्तो व्यसनेषु निःस्पृहः श्रुतेषु दृष्टेषु गुणेष्ववस्तुदृक् ॥ दान्तेन्द्रियप्राणशरीरधीः सदा प्रशान्तकामो रहितासुरोऽसुरः ॥ ३३ ॥ यस्मिन्महद्गुणा राजन्गृह्यन्ते कविभिर्मुहुः ॥ न तेऽधुना पिधीयन्ते यथा भगवतीश्वरे ॥३४॥ यं साधुगाथासदसि रिपवोऽपि सुरा नृप ॥ प्रतिमानं प्रकुर्वन्ति किमुतान्ये भवादृशाः ॥३५॥ गुणैरलमसंख्येयैर्माहात्म्यं तस्य सूच्यते ॥

थिए। ती चारमा प्रह्लाद आफना सद्गुणहरूले श्रेष्ठ थिए। ती ब्राह्मण तथा महापुरुषहरूका भक्त, सदाचारी, सत्य प्रतिज्ञ, आत्माको समान सबैका प्रिय, अंत सुहृद्, सत्पुरुषका चरणमा दास झैं विनीत, दीनजनमा पिता झैं कृपालु, समान जनमा भ्राता झैं स्नेही र ठूलालाई ईश्वर झैं ठान्दथे। ती विद्या, धन, रूप र कुलले युक्त भएर पनि मान तथा गर्वले शून्य थिए ॥३०॥ ती विपत्तिमा आत्तिन्नथे। देखेका र सुनेका सबै विषयलाई मिथ्या ठानेर ती त्यसलाई ग्रहण गर्दैनथे। तिनका सबै इन्द्रिय, प्राण, शरीर तथा मन उनका वशमा थियो र तिनलाई केही पनि चाहिन्थ्यो। असुर कुलमा जन्म लिएर पनि ती आसुरभावले सदैव अस्पृश्य रहन्थे ॥ ३३ ॥ हे राजन् ! तिनका महान गुणहरू विद्वज्जन बारम्बार ग्रहण गर्दछन्। ती गुण ईश्वरको समान अझसम्म हराएका छैनन् ॥३४॥ हे राजन् ! वैरी भएर पनि सबै देवता आफ्नू सभामा साधुपुरुषको चर्चा चल्दा जसको उदाहरण दिन्छन् ती भगवद्भक्त

प्रह्लादजीको हजुर जस्ता व्यक्ति अवश्य आदर गर्नन् । भगवान् वासुदेवमा जसको सहज प्रेम थियो, ती प्रह्लादका असंख्य गुणहरूको वर्णन कसरी गरेर साध्य हुन्छ ? हामी त तिनको माहात्म्य मात्र भन्दछौं ॥३५॥३६॥ हे राजन् ! बाल्यकालमै ती खेल्न छाडेर भगवद् ध्यानमा तन्मय भइरहन्थे । तिनको मनमलाई कृष्णरूपी ग्रहले ग्रसिसकेको थियो । अतः तिनलाई यो केही पनि थाहा थिएन संसार कस्तो छ ॥३७॥ श्रीकृष्णमा लीन रहनाले उनलाई उठ्ता-बस्ता, हुल्दा, खाँदा-पिउँदा, शयन तथा कुरा-कानी गर्दा ती कियाहरूको पनि केही ज्ञान रहन्नथ्यो ॥३८॥ वैकुण्ठनाथको चिन्तनले चित्त क्षुभित भएपछि ती कहिले रुने, कहिले भगवद् स्मृतिमा गद्‌गद् भएर हाँस्ने र कहिले वेसरी कराएर भगवद्‌गुण गान गर्न थाल्दथे ॥३९॥ ती कहिले अति उत्कण्ठित भएर गर्जन्थे, कहिले लज्जा त्यागेर नाच्तथे र कहिले काहीं भगवद्भावको आवेशमा उनका लीलाहरूको अनुकरण गर्न लाग्दथे ॥४०॥ ती कहिले नारायणको स्पर्शानुभव गरेर परमानन्दले पुलकित भई मौन धारण गरी बसिरहन्थे र उनका आँखा अविचल प्रेमानन्दवश उर्लेको आनन्दाश्रुले भरिएर चिम्ले झैं हुन्थे ॥४१॥

वासुदेवे भगवति यस्य नैसर्गिकी रतिः ॥ ३६ ॥ न्यस्तक्रीडनको बालो जडवत्तन्मनास्तथा ॥ कृष्णग्रहगृहीतात्मा न वेद जगदीदृशम् ॥ ३७ ॥
आसीनः पर्यटन्नश्नञ्छयानः प्रपिबन्ब्रुवन् ॥ नानुसन्धत्त एतानि गोविन्दापरिरम्भितः ॥ ३८ ॥ क्वचिद्रुदति वैकुण्ठचिताशबलचेतनः ॥ क्वचिद्धसति
तच्चिन्ताह्लाद उद्गायति क्वचित् ॥ ३९ ॥ नदति क्वचिदुत्कण्ठो विलज्जो नृत्यति क्वचित् ॥ क्वचित्तद्भावनायुक्तस्तन्मयोऽनुचकार ह ॥ ४० ॥ क्वचि-
दुत्पुलकस्तूष्णीमास्ते संस्पर्शनिर्वृतः ॥ अस्पन्दप्रणयानन्दसलिलामीलितेक्षणः ॥ ४१ ॥ स उत्तमश्लोकपदारविन्दयोर्निषेवयाऽकिंचनसंगलब्धया ॥
तन्वन्परां निर्वृतिमात्मनो मुहुर्दुःसंगदीनान्यमनाः शमं व्यधात् ॥ ४२ ॥ तस्मिन्महाभागवते महाभागे महात्मनि ॥ हिरण्यकशिपू राजन्नकरोदघ-
मात्मजे ॥ ४३ ॥ युधिष्ठिर उवाच ॥ देवर्ष एतदिच्छामो वेदितुं तव सुव्रत ॥ यदात्मजाय शुद्धाय पिताऽदात्साधवे ह्यघम् ॥ ४४ ॥ पुत्रान्विप्रति-
कूलान्स्वान्पितरः पुत्रवत्सला ॥ उपालभन्ते शिक्षार्थं नैवाघमपरो यथा ॥४५॥ किमुतानुवशान्साधूंस्तादृशान्गुरुदेवतान् ॥ एतत्कौतूहलं ब्रह्मन्न-
स्माकं विधम प्रभो ॥ पितुः पुत्राय यद्द्वेषो मरणाय प्रयोजितः ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादचरिते चतुर्थोऽध्यायः
॥ ४ ॥ नारद उवाच ॥ पौरोहित्याय भगवान् वृतः काव्यः किलासुरैः ॥ शण्डामर्कौ सुतौ तस्य दैत्यराजगृहान्तिके ॥ १ ॥ तौ राज्ञा प्रापितं

यस प्रकार प्रह्लाद निष्किञ्चन भगवद्भक्त द्वारा प्राप्त उत्तमश्लोक भगवान्का चरणारविन्दको सेवाले आफ्नो मन प्रसन्न पार्दै अन्य कुसङ्गग्रस्त पुरुषको मनलाई पनि शान्ति दिनलागे ॥४२॥ हे राजन् ! यस्ता भगवद्भक्त, महाभाग तथा महात्मा छोरासित पनि हिरण्यकशिपु शत्रुता गर्नलाग्यो ॥४३॥ राजा युधिष्ठिर भन्दछन्–हे सुव्रत ! अब म यो जान्न खोज्दैछु–पिता भएर पनि त्यसले त्यस्ता शुद्ध हृदय वैरत्व किन गरे ? ॥४४॥ प्रतिकूल पुत्रको शिक्षार्थ शुभचिन्तक पिता पुत्रको तिरस्कार त गर्दछन्, तर शत्रु झैं व्यवहारचाहिं गर्नसक्तैनन् ॥४५॥ फेरि प्रह्लाद जस्ता अनुकूल, साधु-चरित्र तथा गुरुजनको आदर गर्ने छोराको विषयमा त कुरै छैन ? हे प्रभो ! मलाई त यस्तो विचार गरेर ठूलो विस्मय हुन्छ कि पिताले पुत्रलाई मार्नको निम्ति वैरत्व साधे । अतः हे ब्रह्मन् ! मेरो यो कुतूहललाई हजुर शान्त गर्नुहवस् ॥४६॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषा-टीकायां चतुर्थोऽध्यायः ॥४॥

650

( दैत्यपति हिरण्यकशिपु द्वारा प्रह्लादको वध गर्ने उपाय )—नारदजी भन्दछन्—हे राजन् ! असुरहरूले शुक्राचार्यलाई आफ्ना पुरोहित बनाएका थिए। तिनका पुत्र शण्ड र अमर्क दैत्यराज हिरण्यकशिपुको महल नजीकै बस्तथे ॥१॥ ती राजाले पठाएका नीतिकुशल बालक प्रह्लाद तथा अन्य असुर-बालकहरूलाई पनि पाठ्यविषय पढाउँथे ॥२॥ गुरुले जे पाठ पढाउँथे त्यो त ताको तस्तै सुनाई दिन्थे, 'यो आफ्नो, यो विरानो हो' यस्तो दूषित आग्रहले दुष्ट त्यो पाठ तिनको मनमा बसाल्न सक्तैनथ्यो ॥३॥ हे पाण्डव ! एक दिन दैत्यराज हिरण्यकशिपुले प्रह्लादलाई काखमा लिएर सोध्यो—'बाबु ! ली भन तिमीलाई के मनपर्छ ?' ॥४॥ प्रह्लाद भन्दछन्—हे दैत्य श्रेष्ठ ! अहंता-ममतारूपी असत् आग्रहले जसको बुद्धि सदैव उद्विग्न भैँ रहन्छ, तिनको निम्ति म त यही नै उत्तम ठान्दछु कि आत्मपतनको हेतुभूत गृहरूपी अन्धकूप त्यागेर वनमा गई श्रीहरिको भजन गरून् ॥५॥ नारदजी भन्दछन्—हे राजन् ! आफ्नो विपक्षी विष्णुको श्रद्धायुक्त वचन सुनेर दैत्यराज हाँस्यो र भन्यो—बालकको बुद्धि अर्काको कुरा सुनेर यसै प्रकार भ्रष्ट हुने गर्दछ ॥ ६ ॥ अतः गुरुकुलमा लगेर

बालं प्रह्लादं नयकोविदम् ॥ पाठयामासतुः पाठ्यानन्यांश्चासुरबालकान् ॥ २ ॥ यत्तत्र गुरुणा प्रोक्तं शुश्रुवेऽनुपपाठ च ॥ न साधु मनसा मेने स्वपरासद्ग्रहाश्रयम् ॥३॥ एकदाऽसुरराट् पुत्रमंकमारोप्य पाण्डव ॥ पप्रच्छ कथ्यतां वत्स मन्यते साधु यद्भवान् ॥ ४ ॥ प्रह्लाद उवाच ॥ तत्साधु मन्येऽसुरवर्य देहिनां सदा समुद्विग्नधियामसद्ग्रहात् ॥ हित्वाऽऽत्मपातं गृहमन्धकूपं वनं गतो यद्धरिमाश्रयेत ॥ ५ ॥ नारद उवाच ॥ श्रुत्वा पुत्रगिरो दैत्यः परपक्षसमाहिताः ॥ जहास बुद्धिर्बालानां भिद्यते परबुद्धिभिः ॥ ६ ॥ सम्यग्विधार्यतां बालो गुरुगेहे द्विजातिभिः ॥ विष्णुपक्षैः प्रतिच्छन्नैर्न भिद्येतास्य धीर्यथा ॥७॥ गृहमानीतमाहूय प्रह्लादं दैत्ययाजकाः ॥ प्रशस्य श्लक्ष्णया वाचा समपृच्छन्त सामभिः ॥ ८ ॥ वत्स प्रह्लाद भद्रं ते सत्यं कथय मा मृषा ॥ बालानति कुतस्तुभ्यमेष बुद्धिविपर्ययः ॥ ९ ॥ बुद्धिभेदः परकृत उताहो ते स्वतोऽभवत् ॥ भण्यतां श्रोतुकामानां गुरूणां कुलनंदन ॥१०॥ प्रह्लाद उवाच ॥ स्वः परश्चेत्यसद्ग्राहः पुंसां यन्मायया कृतः ॥ विमोहितधियां दृष्टस्तस्मै भगवते नमः ॥ ११ ॥ स यदाऽनुव्रतः पुंसां पशुबुद्धिर्विभिद्यते ॥ अन्य एष तथान्योऽहमिति भेदगता सती ॥१२॥ स एष आत्मा स्वपरेत्यबुद्धिभिर्दुरत्ययानुक्रमणो निरूप्यते ॥ मुह्यन्ति यद्वर्त्मनि वेदवादिनो ब्रह्मादयो ह्येष भिनत्ति मे मतिम् ॥ १३ ॥ यथा भ्राम्यत्ययो ब्रह्मन्स्वयमाकर्षसन्निधौ ॥ तथा मे भिद्यते चेतश्चक्रपाणेर्यदृच्छया ॥ १४ ॥

ब्राह्मणहरू द्वारा यसलाई कडा हेर-विचारमा राखियोस्, जसले वैष्णव गुप्तचर यसको बुद्धि बिगार्न नपाउन् ॥७॥ आफ्नो घर पुऱ्याइएपछि दैत्य-पुरोहितले नजीकै डाकेर मधुर वाणीमा प्रशंसा गर्दै प्रह्लादसित सोधे—॥८॥ 'बाबु प्रह्लाद ! तिम्रो मङ्गल होस् । तिमी साँचो भन, हेर झूठो नबोल्नु । यो सबै बालकको अपेक्षा तेरो बुद्धि यस्तो विपरीत किन भएको छ ? ॥९॥ हे कुलनन्दन ! तिमीमा यो बुद्धि भेद कसैले गरिदिएको हो वा स्वयं भएको हो ? हेर, म तिम्रो गुरु हुँ । मलाई यो जान्ने उत्कट इच्छा छ । अतःतिमी सबै सत्य-सत्य मलाई भनिदेउ' ॥१०॥ प्रह्लाद भन्दछन्—मोहग्रस्त बुद्धि हुनेको जसको मायाले आफ्नो-विरानो हो व्यर्थ दुराग्रह भइरहेछ, ती भगवान्लाई प्रणाम छ ॥११॥ जब जीवहरूमाथि उनै प्रभुको दया हुन्छ अनि तिनको मिथ्या पशुबुद्धि—जसमा 'यो व्यक्ति विरानो हो तथा म भिन्न हुँ' यो भेद उत्पन्न हुन्छ—स्वयं नष्ट हुन्छ ॥१२॥ निर्बुद्धिजन आत्मालाई नै 'आफ्नो हो र यो विरानो

651

हो, यस्तो भन्दछन् भन्दछन् । उसको लीला दुर्बोध छ । उसको बाटोमा ब्रह्मादि वेदवादी देवता पनि मोहित हुन्छन् । ती परमात्माले नै मेरो बुद्धिमा भेद उत्पन्न गरेका हुन् ॥१३॥ हे ब्रह्मन् ! जस्तै फलाम स्वयं चुम्बकको नजीक तानिएर जान्छ, त्यस्तै नै चक्रपाणि विष्णु भगवान्तिर तानिएर नै मेरो बुद्धिमा भेद परेको छ ॥१४॥ नारदजी भन्दछन्–हे राजन् ! ती ब्राह्मणगुरुजनसित यति भनेर महामति प्रह्लाद चुपलागे । अनि ती विचरा राज-सेवकले रिसाएर प्रह्लादलाई हप्काउँदै भने–॥१५॥ 'ए यौटा बेतको छड़ी ल्याओ यो हामीलाई अवगाल पार्ने अधम बालक हो । यस दुर्बुद्धि र कुलाङ्गारको निम्ति कुट-पीट नै उपयुक्त छ ॥१६॥ यो बालक दैत्यकुलरूपी श्रीखण्डको वनमा काँढाको वृक्ष भएर उम्रेको छ र त्यस वृक्षको मूलोच्छेद गर्न विष्णुरूपी खड्गको निम्ति बींडको काम दिनेछ' ॥१७॥ यस प्रकार हप्काइ-दप्काइ आदि अनेक उपायले प्रह्लादलाई डर देखाउँदै ती उनलाई धर्म, अर्थ र कामप्राप्ति गराउने विद्या पढाउन लागे ॥१८॥ त्यसपछि गुरुले जब देखे–प्रह्लाद साम, दाम, भेद र दण्ड चारै विषयलाई बुझिसकेका छन्, तब उनलाई आमाद्वारा स्नान गराई आभूषणले अलंकृत

नारद उवाच ॥ एतावद्ब्राह्मणायोक्त्वा विरराम महामतिः ॥ तं निर्भर्त्स्याथ कुपितः स दीनो राजसेवकः ॥ १५ ॥ आनीयतामरे वेत्रमस्माकमयशस्करः ॥ कुलाङ्गारस्यदुर्बुद्धेश्चतुर्थोऽस्योदितो दमः ॥१६॥ दैतेयचन्दनवने जातोऽयं कण्टकद्रुमः॥ यन्मूलोन्मूलपरशोर्विष्णोर्नालायितोऽर्भकः॥१७॥ इति तं विविधोपायैर्भीषयंस्तर्जनादिभिः ॥ प्रह्लादं ग्राहयामास त्रिवर्गस्योपपादनम् ॥१८॥ तत एनं गुरुर्ज्ञात्वा ज्ञातज्ञेयचतुष्टयम् ॥ दैत्येन्द्रं दर्शयामास मातृमृष्टमलंकृतम् ॥ १९ ॥ पादयोः पतितं बालं प्रतिनन्द्याशिषाऽसुरः ॥ परिष्वज्य चिरं दोर्भ्यां परमामाप निर्वृतिम् ॥ २० ॥ आरोप्याङ्कमवघ्राय मूर्धन्यश्रुकलाम्बुभिः ॥ आसिञ्चन्विकसद्वक्त्रमिदमाह युधिष्ठिर ॥ २१ ॥ हिरण्यकशिपुरुवाच ॥ प्रह्लादानूच्यतां तात स्वधीतं किञ्चिदुत्तमम् ॥ कालेनैतावताऽऽयुष्मन् यदशिक्षद्गुरोर्भवान् ॥ २२ ॥ प्रह्लाद उवाच ॥ श्रवणं कीर्तनं विष्णोः स्मरणं पादसेवनम् ॥ अर्चनं वन्दनं दास्यं सख्यमात्मनिवेदनम् ॥२३॥ इति पुंसार्पिता विष्णौ भक्तिश्चेन्नवलक्षणा ॥ क्रियते भगवत्यद्धा तन्मन्येऽधीतमुत्तमम् ॥२४ ॥ निशम्यैतत्सुतवचो हिरण्यकशिपुस्तदा ॥ गुरुपुत्रमुवाचेदं रुषा प्रस्फुरिताधरः ॥२५॥ ब्रह्मबन्धो किमेतत्ते विपक्षं श्रयताऽसता ॥ असारं ग्राहितो बालो मामनादृत्य दुर्मते ॥२६॥सन्ति ह्यसाधवो लोके दुर्मैत्राश्छद्मवेषिणः ॥ तेषामुदेत्यघं काले रोगः पातकिनामिव ॥२७॥ गुरुपुत्र उवाच ॥ न मत्प्रणीतं न परप्रणीतं सुतो वदत्येष तवेन्द्रशत्रो ॥

पारेर हिरण्यकशिपुकहाँ लगे ॥१९॥ आफ्नो पुत्र खुट्टामा न्युरेको देखेर असुरराज हिरण्यकशिपुले उसलाई आशीर्वादले अभिनन्दन गरे । अनि आफ्ना दुवै भुजाले आलिंगत गरेर ती आनन्दमग्न भए ॥ २० ॥ हे युधिष्ठिर ! तिनले ती प्रसन्न बालकलाई काखमा लिएर शिर सुँघी दुवै नेत्रबाट आंसु बगाउँदै भने । हिरण्यकशिपु भन्दछन्—चिरञ्जीवी बाबु प्रह्लाद ! यति दिन तिमीले गुरुसित जे पढ्यौ, त्यसमध्ये कुनै राम्रो कुरा सुनाऊ ॥२१-२२॥ प्रह्लाद भन्दछन्–हे पिताजी ! विष्णु भगवान्‌का गुण श्रवण-कीर्तन, स्मरण, चरणसेवा, अर्चन, वन्दन, दास्य, सख्य तथा आत्मनिवेदन, यो नवधा भक्ति हो । पुरुष भगवदर्पणपूर्वक यसको आचरण गरोस्, म त्यसैलाई स्वाध्याय मान्दछु ॥२३-२४॥ छोरोको यस्ता वचन सुनेर रिसले हिरण्यकशिपुका अधरोष्ठ फर्कन लागे र उसले गुरुपुत्रसित भने–॥२५ ॥ ए ब्राह्मणाधम ! हे दुर्बुद्धि ! तैंले मलाई केही गनीनस् र मेरो शत्रुको पक्ष

652

लिएर बालकलाई यही निःसार शिक्षा दियौ ? ॥२६॥ ठीकै छ, संसारमा अनेक यस्ता दुष्ट छन्, जो माथिबाट छद्मवेषी मित्र बनिरहेर मौकामा एक-न एक दिन विद्रोह गरिदिन्छन्' ॥२७॥ गुरु पुत्रले भने–हे इन्द्रशत्रो ! हजुरको पुत्र जे जति भन्दछ, त्यो मैले या अरु कसैले सिकाएको होइन। हे राजन् ! यो यसको उपज हो। हजुर क्रोध शान्त गर्नुहवस् र हामीलाई व्यर्थ दोष नदिनोस् ॥२८॥ नारदले भने–हे राजन् ! पुत्रले त्यति भनेपछि दैत्यराजले छोरोसित सोध्यो–'क्या हो दुष्ट ! तँलाई यदि यस्तो बुद्धि गुरुहरूको उपदेशले मिलेको होइन भने पाइस् कहाँबाट ?' ॥२९॥ प्रह्लाद भन्छन्–जो अजितेन्द्रिय प्राणी चर्वित-चार्वण न्यायले भोगिसकेका विषय फेरि भोग्न संसारमा आउँछन्, ती गृहासक्त जनको बुद्धि स्वयं वा कसैको शिक्षा या सत्संगले पनि भगवान्‌मा लाग्दैन ॥ ३० ॥ जो विषयलाई नै ठूलो ठान्ने तथा अन्धो द्वारा डोर्‍याइएको अन्धो समान वेदवाणीरूपिणी डोरीको बन्धनमा बाँधिई रहन्छन्, ती दुर्बुद्धि परम पुरुषार्थ स्वरूप श्रीविष्णुलाई पाउन सक्तैनन् ॥ ३१ ॥ जब सम्म ती आफूलाई निष्किञ्चन महापुरुषका चरण रजले

नैसर्गिकीयं मतिरस्य राजन्नियच्छ मन्युं कददाः स्म मा नः ॥२८॥ नारद उवाच ॥ गुरुणैवं प्रतिप्रोक्तो भूय आहासुरः सुतम् ॥ न चेद्‌गुरुमुखीयं ते कुतोऽभद्राऽसती मतिः ॥२९॥ प्रह्लाद उवाच ॥ मतिर्न कृष्णे परतःस्वतो वा मिथोऽभिपद्येत गृहव्रतानाम् ॥ अदान्तगोभिर्विशतां तमिस्रं पुनः पुनश्चर्वितचर्वणानाम् ॥ ३० ॥ न ते विदुः स्वार्थगतिं हि विष्णुं दुराशया ये बहिरर्थमानिनः ॥ अन्धा यथाऽन्धैरुपनीयमाना वाचीशतन्त्यामुरुदाम्नि बद्धाः ॥ ३१ ॥ नैषां मतिस्तावदुरुक्रमांघ्रिं स्पृशत्यनर्थापगमो यदर्थः ॥ महीयसां पादरजोऽभिषेकं निष्किञ्चनानां न वृणीत यावत् ॥ ३२ ॥ इत्युक्त्वो परतं पुत्रं हिरण्यकशिपू रुषा ॥ अन्धीकृतात्मा स्वोत्सङ्गान्निरस्यत महीतले ॥ ३३ ॥ आहामर्षरुषाविष्टः कषायीभूतलोचनः ॥ वध्यतामाश्वयं वध्यो निःसारयत नैर्ऋताः ॥ ३४ ॥ अयं मे भ्रातृहा सोऽयं हित्वा स्वान्सुहृदोऽधमः ॥ पितृव्यहन्तुर्यः पादौ विष्णोर्दासवदर्चति ॥ ३५ ॥ विष्णोर्वा साध्वसौ किं नु करिष्यत्यसमञ्जसः ॥ सौहृदं दुस्त्यजं पित्रोरहाद्यः पञ्चहायनः ॥ ३६ ॥ परोऽप्यपत्यं हितकृद्यथौषधं स्वदेहजोऽप्यामयवत्सुतोऽहितः ॥ छिन्द्यात्तदङ्गं यदुतात्मनोऽहितं शेषं सुखं जीवति यद्विवर्जनात् ॥३७॥ सर्वैरुपायैर्हन्तव्यः सम्भोजशयनासनैः ॥ सुहृल्लिङ्गधरः शत्रु-

अभिषिक्त हुन्नन्, तबसम्म तिनको बुद्धि भगवच्चरण स्पर्श गर्न सक्तैन–जसले संसाररूपी अनर्थको नाश हुन्छ ॥ ३२ ॥ यति भनि चुपलागे। त्यो देखेर हिरण्यकशिपुले क्रोधान्ध भएर पुत्रलाई काखाबाट भूमिमा बरालिदियो ॥ ३३ ॥ असहिष्णुता र रोषले राता-राता नेत्र पारेर भन्यो––'ए राक्षस हो ! यो बालक बध-योग्य छ, यसलाई मारिदेओ वा बाहिर धपाइदेओ ॥ ३४ ॥ अब यो पापी ज्ञाति-बन्धुहरूलाई छाडेर आफ्नो काकाको घातक विष्णुका चरणको पूजा गर्दछ, भने यो मेरो भाइको घातक विष्णु नै हो ॥ ३५ ॥ यो बालक विष्णुको पनि के हित गर्ला ? जसले पाँच वर्षको अवस्थामै आमा-बाबूको स्नेह त्यागिदियो ॥ ३६ ॥ यदि बिरानो पनि आफ्नू हितकारी छ भने त्यसलाई औषधिको समान पुत्र नै ठानोस् र आफ्नो देहजात छोरो पनि दुःखदायी छ भने रोग झैं त्यसलाई त्यागिदेओस्। अरुको के कुरा, यदि आफ्नो शरीरकै कुनै अङ्ग दुःख दिन थाल्दछ भने त्यसलाई पनि काटिदेओस्। किनकि त्यो अंग नभए शेष देह सुखले रहन्छ ॥३७॥ अतः यसलाई सुत्ता-बस्ता, खान-पानको बेलामा कुनै उपायले मारिदेओ, किनकि जस्तै मुनिजनका उच्छृङ्खल इन्द्रिय

तिनका निम्ति शत्रु हुद । त्यस्तै म पनि यसलाई सुहृद्रूपधारी शत्रु मान्दछु ॥३८॥ स्वामीको त्यस्तो आज्ञा पाएर तीखा दाह्रा, विकराल मुख, राता-राता दाह्री-जुँघा र राता
कपाल हुने डरलाग्दा राक्षस हातमा त्रिशूल लिई 'काट-काट-मार-मार' भन्दै भयङ्कररूपले गर्जने त्यहाँ बसेका प्रह्लादका मर्मस्थानमा प्रहार गर्नलागे ॥३९॥४०॥ तैपनि प्रह्लादको
मन अनिर्वाच्य तथा सर्वात्मा भगवान् परब्रह्ममा लागिरह्यो र अभागीहरूको उद्योग झैँ ती भक्तमा तिनले गरेको सबै प्रहार व्यर्थ भयो ॥४१॥ हे युधिष्ठिर ! त्यो प्रयत्न विफल
भएपछि दैत्यराजको चित्त झन् शङ्कामा पर्नगयो र उनलाई मार्नको निम्ति उसले अनेक यत्न गर्‍यो ॥४२॥ त्यो क्रुर पिताले पुत्रलाई दिग्गजका खुट्टामुनि थिचायो, सर्पले
टोक्न लगायो, यन्त्र-मन्त्र गराई, पर्वतबाट पुर्‍याएटी, मायाको प्रयोग गराई, अँध्यारो कोठामा थुनाई, विष खुवाएर, भोकै राखेर, शीत, वायु, अग्नि र जलमा बगालेर, पर्वतहरूको
तल थिचेर मार्ने चेष्टा गर्‍यो । तैपनि जब निर्दोष बालकको वध-गर्न सकेन तब दैत्यराजलाई ठूलो चिन्ता भयो । तर ती बालकको वध गर्नको निम्ति उसलाई कुनै अचूक उपाय

मुंनेर्नष्टमिवेन्द्रियम् ॥३८॥ नैर्ऋतास्ते समादिष्टा भर्त्रा वै शूलपाणयः ॥ तिग्मदंष्ट्रकरालास्यास्ताम्रश्मश्रुशिरोरुहाः ॥ ३९ ॥ नदन्तो भैरवान्नादाँ-
श्छिन्धि भिन्धीति वादिनः ॥ आसीनं चाहनञ्छूलैः प्रह्लादं सर्वमर्मसु ॥ ४० ॥ परे ब्रह्मण्यनिर्देश्यं भगवत्यखिलात्मनि ॥ युक्तात्मन्यफला आसन्-
पुण्यस्येव सत्क्रियाः ॥४१॥ प्रयासेऽपहते तस्मिन्दैत्येन्द्रः परिशङ्कितः ॥ चकार तद्वधोपायान्निर्बन्धेन युधिष्ठिर ॥४२॥ दिग्गजैर्दन्दशूकैश्च अभिचा-
रावपातनैः ॥ मायाभिः संनिरोधैश्च गरदानैरभोजनैः ॥ ४३ ॥ हिमवाय्वग्निसलिलैः पर्वताक्रमणैरपि ॥ न शशाक यदा हन्तुमपापमसुरः सुतम् ॥
चिन्तां दीर्घतमां प्राप्तस्तत्कर्तुं नाभ्यपद्यत ॥ ४४ ॥ एष मे बह्वसाधूक्तो वधोपायाश्च निर्मिताः ॥ तैस्तैर्द्रोहैरसद्धर्मैर्मुक्तः स्वेनैव तेजसा ॥ ४५ ॥ वर्त-
मानोऽविदूरे वै बालोऽप्यजडधीरयम् ॥ न विस्मरति मेऽनार्यं शुनःशेप इव प्रभुः ॥ ४६ ॥ अप्रमेयानुभावोऽयमकुतश्चिद्भयोऽमरः ॥ नूनमेतद्विरो-
धेन मृत्युर्मे भविता न वा ॥ ४७ ॥ इति तं चिन्तया किंचिन्म्लानश्रियमधोमुखम् ॥ शण्डामर्कावौशनसौ विविक्त इति होचतुः ॥ ४८ ॥ जितं
त्वयैकेन जगत्त्रयं भ्रुवोर्विजृम्भणत्रस्तसमस्तधिष्ण्यपम् ॥ न तस्य चिन्त्यं तव नाथ चक्ष्महे न वै शिशूनां गुणदोषयोः पदम् ॥ ४९ ॥ इमं तु पाशै-

देखा परेन । ४३॥४४॥ त्यो आफ्नो मनमा भन्नलाग्यो–'हरे ! मैले यसलाई धेरै कटुवाक्य भनें र मार्नको लागि धेरै उपाय गरें, तर ती सबै द्रोह र निन्दित आचरण द्वारा यो
आफ्नो प्रभावले मरेन ॥४५॥ यो सानु बालक भनेर निर्भीकभावले उभिएको छ । यसमा केही सामर्थ्य अवश्य छ र यो शुनःशेपको समान मेरा अपकारहरूलाई कहिल्यै पनि बिर्सनेछैन
( शुनः शेपको कथा नवमस्कन्धको सातौं अध्यायमा आउनेछ ) ॥४६॥ यसको प्रभावको त सीमानै छैन त्यसलाई कुनै डर छैन । के यो अमर छ ? यसको विरोधगर्नाले यसेरो मृत्यु
हुन सक्छ–नहुन पनि सक्छ ॥४७॥ अनि चिन्ताले मलिन कान्ति हिरण्यकशिपुलाई एकान्तमा नतमस्तक बसेको देखेर शुक्रपुत्र शण्ड र अमर्क भन्दछन्–॥४८॥ हे प्रभो ! हजुरको
भृकुटिविलासले मात्र सबै लोकपाल डरले काम्न लाग्दछन् र तीनै लोकलाई हजुरले एक्लै पराजित पार्नु भएथ्यो । हजुर जस्ता प्रतापीको निम्ति कुनै चिन्ताको कुरा छैन । हे तात !
यस्ता साना बालकका व्यवहार कुनै गुण-दोषका कारण हुँदैनन् ॥४९॥ शुक्राचार्यको आउने बेलासम्मका लागि हजुर यसलाई वरुणपाशले बाँधि राख्नुस्, जसले यो भाग्न न-

654

पाओस् । कहिले काहीं यस्तो पनि हुन्छ–आयुको वृद्धि र सज्जनको सेवाले स्वयं बुद्धि आउँदछ ॥ ५० ॥ अनि 'हुन्छ' भनेर हिरण्यकशिपुले गुरुपुत्रका कुरा मानेर भन्यो–'यसलाई गृहस्थ राजाहरूको धार्मिकशिक्षा दिनुहोस्' ॥५०॥ हे युधिष्ठिर ! त्यसपछि दुवै गुरुपुत्र अति विनीत प्रह्लादलाई धर्म, अर्थ र कामको शिक्षा दिनलागे ॥५२॥ तर ती गुरुले जुन शास्त्रको द्वारा धर्म, अर्थ र कामको शिक्षा दिएथे, प्रह्लादले त्यो मनपराएनन्, किनकि त्यो शिक्षा राग-द्वेषादि द्वन्द तथा विषय भोगमा आसक्त पुरुषको निम्ति नै बनेको थियो ॥५३॥ एक दिन जब गुरुजी आफ्नो घर-धन्दामा लागेका थिए, तब साथीले खेल्ने मौका देखेर प्रह्लादलाई खेल्न डाके ॥ ५४ ॥ तर तिनको जन्म-मरणको गतिका ज्ञाता तथा महान् ज्ञानी प्रह्लादले आफ्नो मधुर वाणीले तिनलाई नै आफ्नो नजीक डाके र ती माथि दया गरेर हाँस्तै भने ॥ ५६ ॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! ती बालक थिए, तिनको बुद्धि राग-द्वेषादि द्वन्द्वमा डुबेका विषयी पुरुषको उपदेश तथा उनको आचरणले दूषित भएको थिएन । यसै निम्ति तिनले डाकेपछि ती सबै प्रह्लादको गौरवले आफ्ना खेलका

र्वरुणस्य बद्ध्वा निधेहि भीतो न पलायते यथा । बुद्धिश्च पुंसो वयसाऽऽर्यसेवया यावद्गुरुर्भार्गव आगमिष्यति ॥ ५० ॥ तथेति गुरुपुत्रोक्तमनुज्ञा-
येदमब्रवीत् ॥ धर्मो ह्यस्योपदेष्टव्यो राज्ञां यो गृहमेधिनाम् ॥५१॥ धर्ममर्थं च कामं च नितरां चानुपूर्वशः ॥ प्रह्लादायोचतू राजन्प्रश्रितावनताय
च ॥ ५२ ॥ यथा त्रिवर्गं गुरुभिरात्मने उपशिक्षितम् ॥ न साधु मेने तच्छिक्षां द्वंद्वारामोपवर्णिताम् ॥ ५३ ॥ यदाचार्यः परावृत्तो गृहमेधीयकर्मसु ॥
वयस्यैर्बालकैस्तत्र सोपहूतः कृतक्षणैः ॥ ५४ ॥ अथ तान् श्लक्ष्णया वाचा प्रत्याहूय महाबुधः ॥ उवाच विद्वांस्तन्निष्ठां कृपया प्रहसन्निव ॥५५॥
ते तु तद्गौरवात्सर्वे त्यक्तक्रीडापरिच्छदाः ॥ बाला न दूषितधियो द्वन्द्वारामेरितेहितैः ॥ ५६ ॥ पर्युपासत राजेन्द्र तन्न्यस्तहृदयेक्षणाः ॥ तानाह
करुणो मैत्रो महाभागवतोऽसुरः ॥ ५७ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादानुचरिते पंचमोऽध्यायः ॥ ५ ॥ प्रह्लाद उवाच ॥ कौमार
आचरेत्प्राज्ञो धर्मान्भागवतानिह ॥ दुर्लभं मानुषं जन्म तदप्यध्रुवमर्थदम् ॥ १ ॥ यथा हि पुरुषस्येह विष्णोः पादोपसर्पणम् ॥ यदेष सर्वभूतानां
प्रिय आत्मेश्वरः सुखमैन्द्रियकं दैत्या देहयोगेन देहिनाम् ॥ सर्वत्र लभ्यते दैवाद्यथा दुःखमयत्नतः ॥ ३ ॥ तत्प्रयासो न कर्तव्यो यत
आयुर्व्ययः परम् ॥ न तथा विन्दते क्षेमं मुकुन्दचरणाम्बुजम् ॥ ४ ॥ ततो यतेत कुशलः क्षेमाय भयमाश्रितः ॥ शारीरं पौरुषं यावन्न विपद्येत

वस्तु फालेर दगुर्दै तिनको नगीचै आए र उनैमा आफ्नू चित्त र नेत्र लगाएर चारैतिरबाट मण्डलाकार बसे । अति दयालु, मित्र, महाभागवत, असुरश्रेष्ठ प्रह्लाद भन्नलागे ॥५६।५७। इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषा-टीकायां पञ्चमोऽध्यायः ॥५॥ ( असुर-बालकहरूलाई प्रह्लादको उपदेश ) प्रह्लादले भने-हे बालक हो ! प्रत्येक बुद्धिमान पुरुष बाल्यावस्थादेखि नै वैष्णव धर्मको पालन गरुन् । यो मानव जन्म दुर्लभ छ र अनित्य भए पनि सबै पुरुषार्थको साधक छ ॥ १ ॥ यस जन्ममा विष्णुका चरणको शरण लिनु नै जीवको सबभन्दा ठूलो कर्तव्य हो, किनकि सबै प्राणीहरूका उनै आत्मा, प्रिय, ईश्वर र सुहृद् हुन् ॥ २ ॥ हे दैत्य हो ! देहको सम्बन्ध हुने आत्माले प्राणीहरूलाई इन्द्रियजनित सुख तथा दुःख सबै योनिमा स्वतः मिल्दै रहन्छ ॥४॥ अनि त्यसको निम्ति प्रयत्न गर्नु व्यर्थ छ, किनकि त्यसमा आयु व्यर्थ गुमाउनु पर्दछ । त्यसले प्राणीहरूलाई त्यो सुख प्राप्त हुन्न

जुन भगवान्‌का चरण कमलको आराधनाले प्राप्त हुन्छ ॥ ४ ॥ यो सर्वावयवपूर्ण मानव शरीर विपत्तिग्रस्त नहोस्, यो मन्दा आगवै भवभयमा परेका ज्ञानी पुरुषले आफ्नो कल्याणको उपाय गरिसक्नु पर्दछ ॥ ५ ॥ मनुष्यको पूर्ण आयु सयवर्षको हुन्छ । त्यसमा अजितेन्द्रिय प्राणीहरूको आधा आयु व्यर्थ बितेर जान्छ, किनकि रात्रिमा तमोगुणको अधीन भएर निदाउँछन् ॥ ६ ॥ त्यसबाट पनि बाल्यावस्थमा प्राणी मोहग्रस्त रहन्छ र कौमारावस्थामा खेल्नमै लाग्दछ, जसले बीस वर्ष व्यर्थ जान्छ । बीस वर्ष वृद्धावस्थाको समय शरीरमा सामर्थ्य नरहनाले नष्ट हुन्छ ॥ ७ ॥ शेष आयु कष्टले पूर्ण हुने काम तथा प्रबल मोहवश घरमा आसक्त रहनाले प्रमादमा व्यतीत हुन्छ ॥ ८ ॥ हे बालक हो ! यस्तो कुन अजितेन्द्रिय पुरुष छ, जो बलियो स्नेह-बन्धनमा बाँधिएको आफ्नो गृहासक्त मनलाई त्यसबाट छुटाउन सक्ला ! ॥ १९ ॥ जसलाई चोर, सेवक र व्यापारी आफ्नो प्रियतम प्राणको साटो किन्दछन्, त्यो प्राणाधिक प्रिय द्रव्यको तृष्णा सहजै को त्याग्नसक्दछ ? ॥ १० ॥ जसको मन प्रियतमाको संगै एकान्त-सहवास तथा मनोहर वार्तालापमा, बन्धुजनको स्नेह तथा

पुष्कलम् ॥५॥ पुंसो वर्षशतं ह्यायुस्तदर्धं चाजितात्मनः ॥ निष्फलं यदसौ रात्र्यां शेतेऽन्धं प्रापितस्तमः ॥ ६ ॥ मुग्धस्य बाल्ये कौमारे क्रीडतो याति विंशतिः ॥ जरया ग्रस्तदेहस्य यात्यकल्पस्य विंशतिः ॥ ७ ॥ दुरापूरेण कामेन मोहेन च बलीयसा ॥ शेषं गृहेषु सक्तस्य प्रमत्तस्यापयाति हि ॥ ८ ॥ को गृहेषु पुमान्सक्तमात्मानमजितेन्द्रियः ॥ स्नेहपाशैर्दृढैर्बद्धमुत्सहेत विमोचितुम् ॥ ९ ॥ को न्वर्थतृष्णां विसृजेत्प्राणेभ्योऽपि य ईप्सितः ॥ यं क्रीणात्यसुभिः प्रेष्ठैस्तस्करः सेवको वणिक् ॥ १० ॥ कथं प्रियाया अनुकम्पितायाः सङ्गं रहस्यं रुचिरांश्च मन्त्रान् ॥ सुहृत्सु च स्नेहसितः शिशूनां कलाक्षराणामनुरक्तचित्तः ॥ ११ ॥ पुत्रान्स्मरंस्ता दुहितॄर्हृदय्या भ्रातॄन्स्वसॄर्वा पितरौ च दीनौ ॥ गृहान्मनोज्ञोरुपरिच्छदांश्च वृत्तीश्च कुल्याः पशुभृत्यवर्गान् ॥१२॥ त्यजेत कोशस्कृदिवेहमानः कर्माणि लोभादवितृप्तकामः ॥ औपस्थ्यजैह्व्यं बहु मन्यमानः कथं विरज्येत दुरन्तमोहः ॥१३॥ कुटुम्बपोषाय वियन्निजायुर्न बुध्यतेऽर्थं विहतं प्रमत्तः ॥ सर्वत्र तापत्रयदुःखितात्मा निर्विद्यते न स्वकुटुम्बरामः ॥ १४ ॥ वित्तेषु नित्याभिनिविष्टचेता विद्वांश्च दोषं परवित्तहर्तुः ॥ प्रेत्येह चाथाप्यजितेन्द्रियस्तदशान्तकामो हरते कुटुम्बी ॥१५॥ विद्वानपीत्थं दनुजाः कुटुम्बं पुष्णन्स्वलोकाय न

बालकको तोतेबोलीमा अल्झेको छ, जसले ससुर-गृहमा गएकी कन्या, पुत्र दाजु-भाइ, बहिनी दीन माता-पिता, मनोहर अधिक परिच्छदहरूले गृह, कुलको वृत्ति, तथा पशु र सेवकादिको हेरचाह गनिरहन्छ, त्यो ती सबै कसरी त्याग्न सक्ला ? जो लोभवश कामनाहरूले तृप्त हुँदैन र उपस्थ ( लिङ्ग ) तथा जिब्रोका सुखलाई नै ठूलो मानेर बस्तु तथा रेशम बनाउने कीरा झैं जो आफ्ना बन्धनको नै सम्मान गर्दछ, त्यो महामोहग्रस्त व्यक्ति कसरी विरक्त हुनसक्दछ ? ॥ ११-१३ ॥ जो पुरुष आफ्ना कुटुम्बको पालन पोषणमा व्यस्त रहेर यस्तो मतवाला हुन्छ कि उसलाई यो ज्ञान नै हुन सक्तैन कि कुटुम्ब पालनमा व्यर्थ आयु गुमाउनुले मेरो पुरुषार्थ नष्ट भइरहेको छ । त्यो सदा त्रिविध तापले सन्तप्त रहन्छ—तैपनि विरक्त हुन सक्तैन ॥१४॥ त्यस कुटुम्बी पुरुषको मन सधैं धनमा लागिरहन्छ । परधनहारी पुरुषलाई यस लोक र परलोकमा जुन दुःख प्राप्त हुन्छ, त्यो जानी–बुझेर पनि त्यो अजितेन्द्रिय, अशान्त र लोभयुक्त प्राणी परधन हर्दै रहन्छ ॥१५॥ हे दैत्य हो ! जो पुरुष आफ्ना कुटुम्बको पालन-पोषणमा लागिरहन्छ त्यो विद्वान भएर पनि

आत्मज्ञान पाउन सक्तैन किनकि आफ्ना-बिरानाको भेद बुद्धिले त्यो अज्ञानीकै समान तमोग्रस्त हुन्छ ॥ १६ ॥ हे दैत्य बालक हो ! कामिनीहरूका विरहको क्रीडामृग र क्षुद्राका सन्ततिरूपिणी बेल हालेर कुनै पनि दीन पुरुष आफ्नो आत्माको उद्धार गर्न सक्तैन । अतः तिमीहरू विषयासक्त दैत्यहरूको संगति परैबाट त्यागेर नारायणको शरण पर । एकमात्र उनै मुक्तसङ्ग महात्माहरूका इच्छित मोक्ष हुन् ॥ १७॥१८॥ हे दैत्य-बालक हो ! भगवान् अच्युतलाई प्रसन्न पार्न विशेष प्रयास गर्नु पर्दैन किनकि ती सबै प्राणीहरूका आत्मा हुन् र सर्वत्र विराजमान छन् । ब्रह्मादेखि लिएर स्थावरसम्म सबै साना-ठूला जीव, पञ्चमहाभूतबाट उत्पन्न घट-पटादि पदार्थ, आकाशादि महाभूत, सत्वादि गुण, गुणको साम्यावस्थारूपिणी प्रकृति र गुणवैषम्यस्वरूप महत्तत्त्वमा ती परमात्मा भगवान् एक्लै रहन्छन् ॥ १९॥२० ॥ ती अनिर्वचनीय र अविकल्पित छन्, तापनि अन्तर्यामी द्रष्टारूपले व्यापक, अनात्मा र दृश्यरूपले व्याप्य भनेर सबै उनैको निर्वचन गर्दछन् ॥ २२ ॥ ती अनुभवानन्दस्वरूप परमेश्वरको सारा ऐश्वर्य गुणमयी सृष्टि गर्ने ती मायाले

कल्पते वै ॥ यः स्वीयपारक्यविभिन्नभावस्तमः प्रपद्येत यथा विमूढः ॥ १६ ॥ यतो न कश्चित्क च कुत्रचिद्वा दीनः स्वमात्मानमलं समर्थः ॥ विमोचितुं कामदृशां विहारक्रीडामृगो यन्निगडो विसर्गः ॥ १७ ॥ ततो विदूरात्परिहृत्य दैत्या दैत्येषु सङ्गं विषयात्मकेषु ॥ उपेत नारायणमादिदेवं स मुक्तसङ्गैरिषितोऽपवर्गः ॥ १८ ॥ न ह्यच्युतं प्रीणयतो बह्वायासोऽसुरात्मजाः ॥ आत्मत्वात्सर्वभूतानां सिद्धत्वादिह सर्वतः ॥ १९ ॥ परावरेषु भूतेषु ब्रह्मान्तस्थावरादिषु ॥ भौतिकेषु विकारेषु भूतेष्वथ महत्सु च ॥ २० ॥ गुणेषु गुणसाम्ये च गुणव्यतिकरे तथा ॥ एक एव परो ह्यात्मा भगवानीश्वरोऽव्ययः ॥ २१ ॥ प्रत्यगात्मस्वरूपेण दृश्यरूपेण च स्वयम् ॥ व्याप्यव्यापकनिर्देश्यो ह्यनिर्देश्योऽविकल्पतः ॥ २२ ॥ केवलानुभवानन्दस्वरूपः परमेश्वरः ॥ माययाऽन्तर्हितैश्वर्य ईयते गुणसर्गया ॥ २३ ॥ तस्मात्सर्वेषु भूतेषु दयां कुरुत सौहृदम् ॥ आसुरं भावमुन्मुच्य यया तुष्यत्यधोक्षजः ॥ २४ ॥ तुष्टे च तत्र किमलभ्यमनन्त आद्ये किं तैर्गुणव्यतिकरादिह ये स्वसिद्धाः ॥ धर्मादयः किमगुणेन च काङ्क्षितेन सारंजुषां चरणयोरुपगायतां नः ॥ २५ ॥ धर्मार्थकाम इति योऽभिहितस्त्रिवर्ग ईक्षा त्रयी नयदमौ विविधा च वार्ता ॥ मन्ये तदेतदखिलं निगमस्य सत्यं स्वात्मार्पणं स्वसुहृदः परमस्य पुंसः ॥ २६ ॥ ज्ञानं तदेतदमलं दुरवापमाह नारायणो नरसखः किल नारदाय ॥ एकान्तिनां भगवतस्तद-

ढाकिएका रहन्छन् । अतः त्यसको निवृत्ति भएपछि नै उनको दर्शन पाइन्छ ॥ २३ ॥ अब असुरभाव त्यागेर सबै प्राणीमा दया र प्रेम गर-जसले गर्दा श्रीअधोक्षज भगवान प्रसन्न होउन् ॥ २४ ॥ ती अनन्त भगवान् प्रसन्न भएपछि के दुर्लभ रहन्छ ? गुणका परिणामस्वरूप स्वतः प्राप्त हुने धर्मादिसित हामीलाई हामीलाई के प्रयोजन ! भगवान्को गुण-गान र उनको चरणामृत पान गर्न हामीलाई त मोक्षको पनि इच्छा रहन्न ॥ २५ ॥ हे बालक हो ! धर्म, अर्थ र कामरूप त्रिवर्ग, शास्त्रमा वर्णित आन्वीक्षिकी, कर्मकाण्ड, न्याय, दण्डनीति र जसमा विविध जीविकाका साधन छन्, ती सबै शास्त्र आफ्ना परम सुहृद् पुरुषोत्तम भगवान्लाई आत्मार्पण गर्नमा सहायक भए उचित छ, होइन भने ती सबै व्यर्थ हुन् ॥२६॥ यो अत्यन्त दुर्लभ र विशुद्ध ज्ञानोपदेश नर-सखा नारायणले नारदलाई दिएका थिए । त्यो ज्ञान ती प्राणीलाई स्वतः प्राप्त हुन्छ, जो भगवान्का अनन्य र निष्किञ्चन

657

चरण-कमलको पवित्र रजमा नुहाउँदै रहन्छन् ॥२७॥ यो विज्ञानयुक्त ज्ञान र विशुद्ध धर्म मैले पूर्वकालमा देवदर्शन नारदजीको मुखबाट सुनेथें ॥ २८ ॥ ती दैत्य बालकहरूले भने—हे प्रह्लाद ! हामी र तिमी त यी दुवै षण्ड-अमर्क बाहेक अरु कुनै गुरुलाई जान्दैनौं, यी सानैदेखि हाम्रा गुरु छन् ॥ २९ ॥ बाल्यकालमा पनि सदा अन्तःपुरमा रहिरहनाले तिमीले कुनै महापुरुषलाई भेटन् दुर्लभ–थियो, अनि तिम्रो नारदजीसित कसरी भेट भयो ? हे सौम्य ! यदि हामीलाई विश्वास हुने कुनै कुरा भए त्यो भनेर संशय नष्ट गर ॥ ३० ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥ ६ ॥ ( प्रह्लादले आमाको गर्भमै नारदजीको उपदेश पाउनु )—नारदजी भन्दछन्—हे राजन् ! युधिष्ठिर ! दैत्यपुत्रले सोधेपछि महाभागवत प्रह्लाद मेरो उपदेश स्मरण गर्दै छक्क परेका ती दैत्य-बालकसित भन्दछन् ॥ १ ॥ प्रह्लादले भने—हे भाइ हो ! मेरो जन्मभन्दा पहिले जब पिता तपस्या गर्न मन्दराचल पर्वतमा गए तब इन्द्रादि देवताहरूले भने–सर्प जसरी कमिलाहरूलाई खाइदिन्छ, त्यसै गरी सौभाग्यवश सबै लोकलाई दुःख दिने पापी हिरण्यकशिपुलाई उसैको

किञ्चनानां पादारविन्दरजसाप्लुतदेहिनां स्यात् ॥ २७ ॥ श्रुतमेतन्मया पूर्वं ज्ञानं विज्ञानसंयुतम् ॥ धर्मं भागवतं शुद्धं नारदाद्देवदर्शनात् ॥२८॥ दैत्यपुत्रा ऊचुः ॥ प्रह्लाद त्वं वयं चापि नर्तेऽन्यं विद्महे गुरुम् ॥ एताभ्यां गुरुपुत्राभ्यां बालानामपि हीश्वरौ ॥ २९ ॥ बालस्यान्तःपुरस्थस्य महत्संगो दुरन्वयः ॥ छिन्धि नः संशयं सौम्य स्याच्चेद्विश्रम्भकारणम् ॥३०॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादानुचरिते षष्ठोऽध्यायः ॥ ६ ॥ नारद उवाच ॥ एवं दैत्यसुतैः पृष्टो महाभागवतोऽसुरः ॥ उवाच स्मयमानांस्तान्स्मरन्मदनुभाषितम् ॥ १ ॥ प्रह्लाद उवाच ॥ पितरि प्रस्थितेऽस्माकं तपसे मन्दराचलम् ॥ युद्धोद्यमं परं चक्रुर्विबुधा दानवान्प्रति ॥ २ ॥ पिपीलिकैरहिरिव दिष्ट्या लोकोपतापनः ॥ पापेन पापोऽभक्षीति वादिनो वासवादयः ॥ ३ ॥ तेषामतिबलोद्योगं निशम्यासुरयूथपाः ॥ वध्यमानाः सुरैर्भीता दुद्रुवुः सर्वतो दिशम् ॥ ४ ॥ कलत्रपुत्रमित्राप्तान्गृहान्पशुपरिच्छदान् ॥ नावेक्षमाणास्त्वरिताः सर्वे प्राणपरीप्सवः ॥ ५ ॥ व्यलुम्पन्राजशिबिरममरा जयकांक्षिणः ॥ इन्द्रस्तु राजमहिषीं मातरं मम चाग्रहीत् ॥ ६ ॥ नीयमानां भयोद्विग्नां रुदतीं कुररीमिव ॥ यदृच्छयाऽऽगतस्तत्र देवर्षिर्ददृशे पथि ॥ ७ ॥ प्राह मैनां सुरपते नेतुमर्हस्यनागसम् ॥ मुञ्च मुञ्च महाभाग सतीं परपरिग्रहम् ॥ ८ ॥ इन्द्र उवाच ॥ आस्तेऽस्या जठरे वीर्यमविषह्यं सुरद्विषः ॥ आस्यतां यावत्प्रसवं मोक्ष्येऽर्थपदवीं गतः ॥ ९ ॥

पापले खाइदियो । अनि तत्काल तिनले युद्धको तयारी गरिदिए ॥ २-३ ॥ देवताहरूको त्यो प्रबल युद्धोद्योगको समाचार सुन्नासाथ सबै दैत्यनायक उनीहरू द्वारा कुटाई खाएर डरले स्त्री, पुत्र, मित्र बन्धु, गृह, पशु र भोगसामग्रीको पनि ख्याल नराखी आफ्नो प्राण-रक्षाका लागि चारैतिर भागे ॥ ४-५ ॥ अनि विजयाभिलाषी देवगण सहित राजा इन्द्रले राजगृह लुटेर मेरी माता राजमहिषी कयाधुलाई पक्रे ॥ ६ ॥ जब ती भयले व्याकुल भई कुररी झैं रुने मेरी मातालाई स्वर्गलोक लगिरहेका थिए, तब मार्गमा संयोगले आइरहेका देवर्षि नारद भेटिए । उनले भने—'हे देवराज ! यी निरपराध अबलालाई लैजानु उचित छैन । हे महाभाग ! तिमी यी साध्वी परनारीलाई छाडिदेउ ।' इन्द्र भन्दछन्–'हे मुने ! यसको उदरमा देवद्रोही हिरण्यशिपुको असह्य वीर्य विद्यमान छ । अतः यसलाई प्रसवकालसम्म मनेर बस्न दिनुस् । काम पूरा भएपछि म यसलाई छाडिदिनेछु' ॥ ७।८ ॥

नारदजी भन्दछन्–हे इन्द्र ! यस गर्भको बालक निर्दोष परम भगवद्भक्त, गुणमा महान्, भगवान्‌को सेवक तथा महाबलवान् हुनेछ । त्यो तिम्रो हातबाट कहिल्यै मर्नेछैन ॥ १० ॥ अनि इन्द्रले देवर्षि नारदको आदर गरेर मेरी मातालाई छाडिदिए र भक्तिपूर्वक तिनको परिक्रमा गरेर देवलोक फर्किए ॥ ११ ॥ अनि नारदले मेरी आमालाई आफ्नु आश्रममा लगे र भने–'पुत्री ! जबसम्म तिम्रो पति फर्कन्नन्, तबसम्म तिमी यहीं बस' ॥१२॥ नारदजीको कुरा सुनेर 'हुन्छ' भनी जबसम्म दैत्यपति तपस्याबाट फर्कन, तबसम्म ती निर्भय भावले उनैको आश्रममा बसिन् ॥ १३ ॥ ती गर्भवती सती ( मेरी आमा ) आफ्नो गर्भको कल्याणार्थ र इच्छानुसार प्रसव होस् यस उद्देश्यले नारदजीको भक्तिपूर्वक सेवा गर्न लागिन् । त्यसै बेला दयालु देवर्षिले मलाई र मेरी आमालाई धर्मतत्त्वको विशुद्ध ज्ञानोपदेश दिए । धेरै समय वितिसकेको हुनाले र जातीय स्वभाववश मेरी आमाको हृदयबाट त्यो ज्ञान लुप्त भयो, तर ऋषिको विशेष कृपाले मलाई अझसम्म त्यसको ज्ञान बनिरहेको छ ॥ १४-१६ ॥ हे बालक हो ! यदि मेरो भनाईमा श्रद्धा गरे,तिमीहरूलाई पनि त्यो दुर्लभ ज्ञान प्राप्त हुन्छ

नारद उवाच ॥ अयं निष्किल्बिषः साक्षान्महाभागवतो महान् ॥ त्वया न प्राप्स्यते संस्थामनन्तानुचरो बली ॥ १० ॥ इत्युक्तस्तां विहायेन्द्रो देव-
र्षेर्मानयन् वचः ॥ अनन्तप्रियभक्त्यैनां परिक्रम्य दिवं ययौ ॥ ११ ॥ ततो नो मातरमृषिः समानीय निजाश्रमम् ॥ आश्वास्येहोष्यतां वत्से यावत्ते
भर्तुरागमः ॥ १२ ॥ तथेत्यवात्सीद्देवर्षेरन्ति साऽप्यकुतोभया ॥ यावद्दैत्यपतिर्घोरात्तपसो न न्यवर्तत ॥ १३ ॥ ऋषिं पर्यचरत्तत्र भक्त्या परमया
सती ॥ अन्तर्वत्नी स्वगर्भस्य क्षेमायेच्छाप्रसूतये ॥ १४ ॥ ऋषिः कारुणिकस्तस्याः प्रादादुभयमीश्वरः ॥ धर्मस्य तत्त्वं ज्ञानं च मामप्युद्दिश्य निर्मलम्
॥ १५ ॥ तत्तु कालस्य दीर्घत्वात्स्त्रीत्वान्मातुस्तिरोदधे ॥ ऋषिणाऽनुगृहीतं मां नाधुनाऽप्यजहात्स्मृतिः ॥ १६ ॥ भवतामपि भूयान्मे यदि श्रद्धते
वचः ॥ वैशारदी धीः श्रद्धातः स्त्रीबालानां च मे यथा ॥१७॥ जन्माद्याः षडिमे भावा दृष्टा देहस्य नात्मनः ॥ फलानामिव वृक्षस्य कालेनेश्वरमूर्तिना
॥ १८ ॥ आत्मा नित्योऽव्ययः शुद्ध एकः क्षेत्रज्ञ आश्रयः ॥ अविक्रियः स्वदृग्घेतुर्व्यापकोऽसङ्ग्यनावृतः ॥ १९ ॥ एतैर्द्वादशभिर्विद्वानात्मनो
लक्षणैः परैः ॥ अहं ममेत्यसद्भावं देहादौ मोहजं त्यजेत् ॥ २० ॥ स्वर्णं यथा ग्रावसु हेमकारः क्षेत्रेषु योगैस्तदभिज्ञ आप्नुयात् ॥ क्षेत्रेषु देहेषु
तथात्मयोगैरध्यात्मविद् ब्रह्मगतिं लभेत ॥ २१ ॥ अष्टौ प्रकृतयः प्रोक्तास्त्रय एव हि तद्गुणाः ॥ विकाराः षोडशाचार्यैः पुमानेकः समन्वयात् ॥२२॥

सक्दछ र त्यही श्रद्धाले म जस्तै अन्य बालक र स्त्रीहरूको बुद्धि पनि पवित्र हुन सक्दछ ॥ १७ ॥ उसलाई ईश्वरस्वरूप कालको प्रभावले जस्तै वृक्षका फलमा जन्मादि ( जन्म, वृद्धि, परिणाम, क्षय र नाश छ विकार ) जायमान हुन्छन्, त्यस्तै शरीरको पनि जन्मादि विकार देखिन्छन् । यिनको आत्मासित कुनै सम्बन्ध छैन ॥१८॥ आत्मा त नित्य, अविनाशी, शुद्ध, एक, क्षेत्रज्ञ, अधिष्ठान, स्वयं प्रकाश, सबैका कारण, व्यापक, असङ्ग र अनावृत रहन्छ ॥१९॥ यसै निम्ति विचारवान् पुरुष आत्माका यी उत्कृष्ट लक्षणहरूको सयहायताले देहादिमा मोहजनित 'म र मेरो' भन्ने भाव त्यागिदेओस् ॥२०॥ जस्तै सुवर्णको खानना ढुङ्गा मिसिएको सुवर्ण झिक्ने विधि जान्ने स्वर्णकार युक्तिले सुवर्ण झिक्न सक्छ, त्यस्तै आत्मस्वरूपका ज्ञाता विद्वान् अध्यात्मयोग द्वारा देहरूपी क्षेत्रमा नै ब्रह्मज्ञान प्राप्त गरिलिन्छ ॥ २१ ॥ प्राचीन आचार्यहरूले मूल प्रकृति, महत्तत्त्व अहङ्कार तथा पञ्चतन्मात्राहरू आठ

प्रकृति, तिनका सत्वादि गुण, मनसमेत एघार इन्द्रिय र शब्दादि पाँच विषय, यी सोह्र विकृति र यी सबैको अनुगत यौटा पुरुष हुन् कहिएका छ ॥ २२ ॥ सबैका समवाय यो शरीर छ—जुन स्थावर र जङ्गमरूपले दुइ थरिको हुन्छ। यसमा अन्तःकरण र इन्द्रियादि अनात्मवस्तुको यो आत्मा होइन—यो आत्मा होइन यस प्रकारका बाधा गर्दै बराबर आत्मानुसन्धानमा लागिरहोस् ॥२३॥ अन्वय तथा व्यतिरेकले विशुद्ध बुद्धिद्वारा संसारको रचना, स्थिति आदिको अनुसन्धान गर्दै धैर्यसाथ विचारशील प्राणी आत्मज्ञान प्राप्त गरोस् ॥२४॥ जाग्रत्, स्वप्न र सुषुप्ति बुद्धिका यी तीनै वृत्तिहरू जो अनुभव गर्दछ, उही सर्वसाक्षी ईश्वर हो ॥ २५ ॥ जस्तै—गन्धबाट उसका आश्रयस्वरूप वायुको ज्ञान हुन्छ, उस्तै नै बुद्धिको कर्मजनित एवं सधैं गाटिने तीनै अवस्थाद्वारा यिनको साक्षी आत्माको स्वरूपलाई प्राप्त गर ॥ २६ ॥ गुण-कर्मका बन्धनस्वरूप यस संसारको मुख्य द्वार पनि देहको अध्यास नै हो। यो संसार अज्ञान जनित तथा मिथ्या भए पनि स्वप्न जस्तै जीवलाई सत्य प्रतीयमान हुन्छ ॥ २७। संसारको बन्धनबाट मुक्त हुन तिमी त्रिगुणात्मक

देहस्तु सर्वसंघातो जगत्तस्थुरिति द्विधा ॥ अत्रैव मृग्यः पुरुषो नेति नेतीत्यतत्त्यजन् ॥ २३ ॥ अन्वयव्यतिरेकेण विवेकेनोशतात्मना ॥ सर्गस्था
नसमाम्नायैर्विमृशद्भिरसत्वरैः ॥२४॥ बुद्धेर्जागरणं स्वप्नः सुषुप्तिरिति वृत्तयः ॥ ता येनैवानुभूयन्ते सोऽध्यक्षः पुरुषः परः ॥ २५ ॥ एभिस्त्रिवर्णैः
पर्यस्तैर्बुद्धिभेदैः क्रियोद्भवैः ॥ स्वरूपमात्मनो बुध्येद्गन्धैर्वायुमिवान्वयात् ॥२६॥ एतद्द्वारो हि संसारो गुणकर्मनिबन्धनः ॥ अज्ञानमूलोऽपार्थोऽपि
पुंसः स्वप्न इवेष्यते ॥२७॥ तस्माद्भवद्भिः कर्तव्यं कर्मणां त्रिगुणात्मनाम् ॥ बीजनिर्हरणं योगः प्रवाहोपरमो धियः ॥ २८ ॥ तत्रोपायसहस्राणामयं
भगवतोदितः ॥ यदीश्वरे भगवति यथा यैरञ्जसा रतिः ॥ २९ ॥ गुरुशुश्रूषया भक्त्या सर्वलब्धार्पणेन च ॥ सङ्गेन साधुभक्तानामीश्वराराधनेन च
॥३०॥ श्रद्धया तत्कथायां च कीर्तनैर्गुणकर्मणाम् ॥ तत्पादाम्बुरुहध्यानात्तल्लिङ्गेक्षार्हणादिभिः ॥ ३१ ॥ हरिः सर्वेषु भूतेषु भगवानास्त ईश्वरः ॥
इति भूतानि मनसा कामैस्तैः साधु मानयेत् ॥३२॥ एवं निर्जितषड्वर्गैः क्रियते भक्तिरीश्वरे ॥ वासुदेवे भगवति यथा संलभते रतिम् ॥ ३३ ॥
निशम्य कर्माणि गुणानतुल्यान् वीर्याणि लीलातनुभिः कृतानि ॥ यदाऽतिहर्षोत्पुलकाश्रुगद्गदं प्रोत्कण्ठ उद्गायति रौति नृत्यति ॥ ३४ ॥ यदा

कर्मका बीज नाशक एवं जाग्रदादि सबै बुद्धिवृत्तिलाई निवृत्त पार्ने योगका साधन गर ॥२८॥ आत्मानुभवका हजारौं उपाय भगवान्ले भन्नुभएको छ, तीमध्ये जुन साधनद्वारा भगवान् विष्णुमा स्वाभाविक प्रेम उत्पन्न हुन्छ, उसैको पालन गर ॥२९॥ गुरुको सप्रेम सेवा, आफ्ना सबै वस्तु भगदर्पण गरिदिनु, सत्सङ्ग, भगवानको उपासना, भगवत् कथामा श्रद्धा, प्रभुका गुण-कर्महरूको कीर्तन, उनका चरणारविन्दको चिन्तन भगवत्-प्रतिमाहरूको दर्शन र पूजा आदि साधनद्वारा स्वाभाविक प्रेम उत्पन्न हुन्छ ॥ ३० ॥ ३१ ॥ परमेश्वर सबै जीवहरूमा विराजमान छन्—यस्तो भावना द्वारा सबै प्राणीहरू प्रति मनमा सम्मान भाव राखेर यथाशक्ति उनका कामनाहरू पूर्ण पारुन् ॥३२॥ काम, क्रोध, लोभ, मोह, मद र मत्सर—यी छ शत्रुहरूलाई जितेर व्यक्ति परमेश्वरको यस्तो भक्ति गर्दछन्—जसले भगवान् वासुदेवमा उनको अनन्य प्रीति हुन्छ ॥३३॥ जब प्राणी भगवान्का लीला विग्रहहरूद्वारा गरिएका कर्म अनुपम गुण तथा पराक्रम सुनेर परमानन्दको उद्रेकले रोमाञ्चित तथा आँसुले गद्गद् कण्ठ भएर चर्को स्वरले गाउने, रुने तथा नाच्ने गर्न लाग्दछन् ॥३४॥ जब ऊ ग्रहग्रस्त झैं लाज छाडेर

कहिले हाँस्ने, कहिले रुने, कहिले ध्यान गर्ने, कहिले मानिसलाई वन्दना गर्ने र भगवान्को तन्मय भएर निःसङ्कोच भावले बारम्बार लामो सास छाड्दै—'हे हरे ! हे जगत्पते ! हे नारायण !' यस्तो भन्न थाल्दछ ॥३५॥ अनि प्रबल भक्तिको प्रभावले वासना-बीजलाई दग्ध पारेपछि चित्त र शरीरको भगवद्भावमा तुहाउनाले त्यो प्राणी सबै बन्धनहरूबाट छुटेर विष्णु भगवान्लाई प्राप्त गर्दछ ॥३६॥ यस संसारमा भगवान्लाई पाउनु नै अशुद्ध-चित्त प्राणीहरूको संसार-चक्र निवर्तन हो। विद्वान् जन त्यसैलाई ब्रह्म-निर्वाणको परम सुख भन्दछन्। अतएव तिमीहरू आफ्नू हृदयबाट ती परमेश्वरलाई भज ॥३७॥ हे असुर-बालक हो ! जुन भगवान् हृदयमा आकाश झैं सधैं स्थित रहन्छन् तिनको उपासना कुन ठूलो परिश्रमको काम हो र ? ती सबै प्राणीहरूका सखा र आत्मा हुन्, अनि तिनलाई छाडेर अन्य विषयको उपार्जन गर्नाले के लाभ ? ॥३८॥ धन, स्त्री, पशु, पुत्रादि, घर, पृथ्वी, गज, कोषादि सम्पत्ति, अर्थ, काम र चञ्चल भोग-सामग्रीहरू क्षणिक आयु हुने मनुष्यको के कल्याण गर्न सक्छन् ? ॥३९॥ यज्ञादिको पुण्यले प्राप्त स्वर्गादि लोक पनि नाशवान् र सदोष छन्। अतः जसमा

ग्रहग्रस्त इव क्वचिद्धसत्याक्रन्दते ध्यायति वन्दते जनम् ॥ मुहुः श्वसन्वक्ति हरे जगत्पते नारायणेत्यात्ममतिर्गतत्रपः ॥ ३५ ॥ तदा पुमान्मुक्तसमस्तबन्धनस्तद्भावभावानुकृताशयाकृतिः ॥ निर्दग्धबीजानुशयो महीयसा भक्तिप्रयोगेण समेत्यधोक्षजम् ॥ ३६ ॥ अधोक्षजालम्भमिहाशुभात्मनः शरीरिणः संसृतिचक्रशातनम् ॥ तद्ब्रह्मनिर्वाणसुखं विदुर्बुधास्ततो भजध्वं हृदये हृदीश्वरम् ॥ ३७ ॥ कोऽतिप्रयासोऽसुरबालका हरेरुपासने स्वे हृदि छिद्रवत्सतः ॥ स्वस्यात्मनः सख्युरशेषदेहिनां सामान्यतः किं विषयोपपादनैः ॥ ३८ ॥ रायः कलत्रं पशवः सुतादयो गृहा मही कुञ्जरकोश भूतयः ॥ सर्वेऽर्थकामाः क्षणभंगुरायुषः कुर्वन्ति मर्त्यस्य कियत्प्रियं चलाः ॥ ३९ ॥ एवं हि लोकाः क्रतुभिः कृता अमी क्षयिष्णवः सातिशया न निर्मलाः ॥ तस्माददृष्टश्रुतदूषणं परं भक्त्यैकयेशं भजतात्मलब्धये ॥ ४० ॥ यदर्थ्यध्येह कर्माणि विद्वन्मान्यसकृन्नरः ॥ करोत्यतो विपर्यासममोघं विन्दते फलम् ॥ ४१ ॥ सुखाय दुःखमोक्षाय संकल्प इव कर्मिणः ॥ सदाप्नोतीहया दुःखमनीहायाः सुखावृतः ॥ ४२ ॥ कामान्कामयते काम्यैर्यदर्थमिह पूरुषः ॥ स वै देहस्तु पारक्यो भङ्गुरो यात्युपैति च ॥ ४३ ॥ किमु व्यवहितापत्यदारागारधनादयः ॥ राज्यं कोशगजामात्यभृत्याप्ता ममतास्पदाः ॥ ४४ ॥ किमेतैरात्मनस्तुच्छैः सह देहेन नश्वरैः ॥ अनर्थैरर्थसंकाशैर्नित्यानन्दमहोदधेः ॥ ४५ ॥ निरूप्यतामिह स्वार्थः कियान्देहभृतोऽसुराः ॥

कुनै दोष नसुनिएको हास्, नदेखिएको—ती परमेश्वरको दिव्यपद प्राप्त्यर्थ एकनिष्ठ भक्तिपूर्वक भज ॥ ४० ॥ जुन विद्वान् व्यक्ति लोकमा स्वार्थको उद्देश्यले कर्म गर्दछ, उसलाई अवश्य भ्रमको विपरीत फल मिल्दछ ॥४१॥ संसारका सबै कर्मठ पुरुषका सङ्कल्प सुखको प्राप्ति र दुःख निवृत्तिको निम्ति हुन्छ, तर सकाम कर्म गर्नाले उसलाई सधैं दुःख नै भोगिरहनु पर्दछ। यसको अपेक्षा त सकाम कर्म नगरेर नै सुखी रहन्थ्यो ॥४२॥ जुन शारीरिक सुखको निम्ति पुरुष संसारमा काम्यकर्महरू द्वारा अनेक भोगहरूको इच्छा गर्दछ, त्यो शरीर नै विरानु र क्षणभंगुर छ—त्यो त बारम्बार पाइन्छ र बिछुडिन्छ ॥ ४३ ॥ अनि यो भन्दा परै बस्ने जन ममताको आश्रयस्वरूप स्त्री-पुत्र, घर, धन, राज्य, कोश, गज, मन्त्री, सेवक र आफ्ना विश्वासपात्र व्यक्तिहरूको विषयमा त के भन्नु छ ? ॥४४॥ यी तुच्छ विषयसित आत्मालाई केही प्रयोजन छैन ? यी त देहसितै नष्ट हुने र पुरुषार्थ स्वरूप ज्ञात भएर पनि

661

नित्यानन्दस्वरूप आत्माको निम्ति अनर्थरूप नै भासमान हुन्छन् ॥४५॥ हे सुर-बालक हो ! विचार गर त प्रारब्धवश गर्भाधानादि सुखहरूमा आसक्त तर कर्मले क्लिश्यमान प्राणी-लाई संसारमा सुख प्राप्त हुन्छ र ! ॥४६॥ जीव आत्मानुवर्ती लिङ्गदेह द्वारा विविध कर्म गर्दछ र आफ्ना कर्मले र आफ्ना कर्मले फेरि शरीर धारण गर्दछ—यसै प्रकार यी कर्म तथा शरीर दुवै नै अज्ञानजनित छन् ॥ ४७ ॥ अतएव जसका आश्रित धर्म, अर्थ तथा काम छन्, त्यो आफ्नो निश्चेष्ट आत्मा परमेश्वर श्रीहरिलाई सङ्कल्परहित भावले भज ॥४८॥ किनकि ती भगवान नै आफ्ना पञ्चभूत तथा महत्तत्त्वादिबाट उत्पन्न सबै प्राणीहरूको आत्मा, प्रिय प्रभु र अन्तर्यामी कहिन्छन् । हे बालक हो ! देवता, असुर, मनुष्य, यक्ष, गन्धर्व जो सुकै होस मुकुन्द भगवान्का चरणको चिन्तन गर्नाले त्यो म जस्तै सुखी रहन सक्तछन् ॥४९-५०॥ हे असुरात्मज हो ! भगवान्लाई प्रसन्न पार्नमा ब्राह्मणत्व, देवत्व, ऋषित्व, सदाचार, बहुज्ञता, तप, शौच तथा व्रत आदि समर्थ हुँदैनन् । ती त एकमात्र विशुद्ध भक्तिले नै सन्तुष्ट हुन्छन् र अरु कुरा विडम्बना मात्र हुन् ॥५१-५२॥ हे दानवगण ! तिमीहरू सबै जीवलाई

निषेकादिष्ववस्थासु क्लिश्यमानस्य कर्मभिः ॥ ४६ ॥ कर्माण्यारभते देही देहेनात्मानुवर्तिना ॥ कर्मभिस्तनुते देहमुभयं त्वविवेकतः ॥४७॥ तस्मा-दर्थाश्च कामाश्च धर्माश्च यदपाश्रयाः ॥ भजतानीहयाऽऽत्मानमनीहं हरिमीश्वरम् ॥ ४८ ॥ सर्वेषामपि भूतानां हरिरात्मेश्वरः प्रियः ॥ भूतैर्महद्भिः स्वकृतैः कृतानां जीवसंज्ञितः ॥ ४९ ॥ देवासुरो मनुष्यो वा यक्षो गन्धर्व एव वा ॥ भजन्मुकुन्दचरणं स्वस्तिमान्स्याद्यथा वयम् ॥ ५० ॥ नालं द्विजत्वं देवत्वमृषित्वं वाऽसुरात्मजाः ॥ प्रीणनाय मुकुन्दस्य न वृत्तं न बहुज्ञता ॥ ५१ ॥ न दानं न तपो नेज्या न शौचं न व्रतानि च ॥ प्रीयते-ऽमलया भक्त्या हरिरन्यद्विडम्बनम् ॥ ५२ ॥ ततो हरौ भगवति भक्तिं कुरुत दानवाः ॥ आत्मोपम्येन सर्वत्र सर्वभूतात्मनीश्वरे ॥ ५३ ॥ दैतेया यक्षरक्षांसि स्त्रियः शूद्रा व्रजौकसः ॥ खगा मृगाः पापजीवाः सन्ति ह्यच्युततां गताः ॥५४॥ एतावानेव लोकेऽस्मिन्पुंसः स्वार्थः परः स्मृतः ॥ एका-न्तभक्तिर्गोविन्दे यत्सर्वत्र तदीक्षणम् ॥५५॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादानुचरिते दैत्यपुत्रानुशासनं नाम सप्तमोऽध्यायः ॥ ७ ॥ नारद उवाच ॥ अथ दैत्यसुताः सर्वे श्रुत्वा तदनुवर्णितम् ॥ जगृहुर्निरवद्यत्वान्नैव गुर्वनुशिक्षितम् ॥ १ ॥ अथाचार्यसुतस्तेषां बुद्धिमेकान्तसंस्थि-ताम् ॥ आलक्ष्य भीतस्त्वरितो राज्ञ आवेदयद्यथा ॥२॥ श्रुत्वा तदप्रियं दैत्यो दुःसहं तनयानयम् ॥ कोपावेशचलद्गात्रः पुत्रं हन्तुं मनो दधे ॥३॥

आत्मा समान मानेर सर्वभूतात्मा परमेश्वर भगवान् श्रीहरिको भक्ति गर ॥५३॥ किनकि ती प्रभुको भक्ति गरेर अनेक दैत्य, यक्ष, राक्षस, स्त्री, शूद्र, व्रजवासी गोप, पक्षी, मृग, र अनेक पापी जीवले भगवान्लाई पाइसकेका छन् ॥ ५४ ॥ प्राणीको सबैभन्दा ठूलो स्वार्थ हो—श्रीकृष्णको दर्शन गरी श्रीगोविन्दको ऐकान्तिक भक्ति गर्दै रहोस् ॥५५॥ इति श्रीमद्भाग-वते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥ ( 'नृसिंह भगवान्को प्रादुर्भाव, हिरण्यकशिपुको वध र देवगणद्वारा स्तुति )—नारदजी भन्दछन्—हे राजन् ! युधिष्ठिर ! प्रह्लादको निर्दोष वचन सुनेर सबै दैत्य-बालकले गुरुको शिक्षा त्यागेर त्यो नै ॥१॥ उता दुवै आचार्य पुत्रले सबै बालकको बुद्धि भगवान्मित लागेको देखेर उत्पन्न भयभीतभावले गएर सबै वृत्तान्त हिरण्यकशिपुलाई सुनाए ॥ २ ॥ छोरोको त्यो अप्रिय र महिनसक्नु अनीति सुनेर हिरण्यकशिपुको शरिर रिसले काम्नलाग्यो र पुत्र र ( प्रह्लाद )

लाई मारिदिने पक्का निधो गर्‍यो ॥ ३ ॥ त्यसपछि आफ्नो सामु अति विनीतभावले हात जोरेर उभिएका जितेन्द्रिय प्रह्लादको कठोर वाणीले तिरस्कार गर्दै त्यो निष्ठुर प्रकृतिको दैत्य पदाहत सर्प झैं दीर्घनिःश्वास छाड्दै अत्यन्त कुटिल दृष्टिले हेर्दै भन्न लाग्यो—॥ ४-५ ॥ 'ए दुर्विनीत ! हे मन्दबुद्धे ! कुल नाशक अधम ! तँ ठूलो अटेरी र मेरो आज्ञा उल्लङ्घन गर्ने पापी होस् । म तँलाई अहिल्यै यमराजको घर पठाइदिन्छु ॥ ६ ॥ हे मूढ ! म रिसाएपछि सबै लोकपाल काम्न थाल्दछन् । तैंले कसको भरमा यस्तो निर्भय भएर मेरो आज्ञा टारिस् ? ॥ ६ ॥ प्रह्लादले भने—हे राजन् ! जुन महाप्रभुले ब्रह्मादेखि लिएर नाना-ठूला सबै स्थावर-जङ्गम प्राणीहरूलाई आफ्नो वशमा तुल्याएको छु, ती केवल मेरा मात्र होइन—हजुरको र अन्य सबै बलवान्हरूका पनि बल हुन् ॥ ८ ॥ ती परम पराक्रमी नै काल हुन् । तिनै इन्द्रियबल, धैर्य, देहबल र इन्द्रियका स्वरूप हुन् । उनै तीनै गुणका नियन्ता परमात्मा आफ्नो शक्तिले सम्पूर्ण जगत्को रचना, पालन, संहार गर्दछन् ॥ ९ ॥ हे पिता ! हजुर यो असुरभाव त्यागिदिनुस् र आफ्नो मन समदर्शी तुल्याउनोस् ।

क्षिप्त्वा पुरुषया वाचा प्रह्लादमतदर्हणम् ॥ आक्षेक्षमाणः पापेन तिरश्चीनेन चक्षुषा ॥ ४ ॥ प्रश्रयावनतं दान्तं बद्धाञ्जलिमवस्थितम् ॥ सर्पः पदाहत इव श्वसन्प्रकृतिदारुणः ॥ ५ ॥ हे दुर्विनीत मन्दात्मन्कुलभेदकराधम ॥ स्तब्धं मच्छासनोद्वृत्तं नेष्ये त्वाऽद्य यमक्षयम् ॥ ६ ॥ क्रुद्धस्य यस्य कम्पन्ते त्रयो लोकाः सहेश्वराः ॥ तस्य मेऽभीतवन्मूढ शासनं किम्बलोऽत्यगाः ॥ ७ ॥ प्रह्लाद उवाच ॥ न केवलं मे भगवांश्च राजन् स वै बलं बलिनां चापरेषाम् ॥ परेऽवरेऽमी स्थिरजङ्गमा ये ब्रह्मादयो येन वशं प्रणीताः ॥ ८ ॥ स ईश्वरः काल उरुक्रमोऽसावोजः सहः सत्त्वबलेन्द्रियात्मा ॥ स एव विश्वं परमः स्वशक्तिभिः सृजत्यवत्यत्ति गुणत्रयेशः ॥९॥ जह्यासुरं भावमिमं त्वमात्मनः समं मनो धत्स्व न सन्ति विद्विषः ॥ ऋतेऽजितादात्मन उत्पथस्थितात्तद्धि ह्यनन्तस्य महत्समर्हणम् ॥१०॥ दस्यून्पुरा षण्ण विजित्य लुम्पतो मन्यन्त एके स्वजिता दिशो दश ॥ जितात्मनो ज्ञस्य समस्य देहिनां साधोः स्वमोहप्रभवाः कुतः परे ॥११॥ हिरण्यकशिपुरुवाच ॥ व्यक्तं त्वं मर्तुकामोऽसि योऽतिमात्रं विकत्थसे ॥ मुमूर्षूणां हि मन्दात्मन्ननु स्युर्विप्लवा गिरः ॥ १२ ॥ यस्त्वया मन्दभाग्योक्तो मदन्यो जगदीश्वरः ॥ क्वासौ यदि स सर्वत्र कस्मात्स्तम्भे न दृश्यते ॥ १३ ॥ सोऽहं विकत्थमानस्य शिरः कायाद्धरामि ते ॥ गोपायेत हरिस्त्वाऽद्य यस्ते शरणमीप्सितम् ॥ १४ ॥ एवं दुरुक्तैर्मुहुरर्दयन्रुषा सुतं महाभागवतं

असंयत र कुमार्गगामी चित्त बाहेक अरु कोही पनि कसैको वैरी छैन । यसलाई समदर्शी तुल्याउनु नै भगवान्को ठूलो उपासना हो ॥ १० ॥ केही व्यक्ति आफ्नो सर्वस्व हरण गर्ने कामादि छ शत्रुलाई नजितेर नै आफूलाई दसै दिशाको विजयी ठान्दछन्, किन्तु जितेन्द्रिय र ज्ञानवान् साधु पुरुष सबै प्राणीहरूप्रति समानभाव राख्दछन् । तिनको त अज्ञानजनित काम-क्रोधादि शत्रु पनि रहन्नन्—अनि अन्य शत्रु कसरी टिक्न सक्छन् ? ॥ ११ ॥ हिरण्यकशिपु भन्दछन्—'ए मन्दमते ! तँ जुन बर्ता कुरा गरिरहेको छस्, यसले विदित भइरहेको छ—अब तँ मर्न खोजिरहेको छस्, किनकि जुन प्राणी मर्न तयार हुन्छ, त्यसको यस्तै फेद न टुप्पाका कुरा गर्दछन् ॥ १२ ॥ हे मन्दभाग्य ! म बाहेक जुन तुकै अन्य जगदीश्वरको तँ कुरा गरिरहेको छस्, लौ भन् त त्यो कहाँ छ ?' प्रह्लाद भन्दछन्–'ती सर्वत्र छन् ।' हिरण्यकशिपुले भन्यो–'यदि सर्वत्र छ भने यो खाँबोमा किन देखिन्न तुकै ?' प्रह्लादले उतै

663

तिर हेरेर भने–'देखिरहेको छु।' ॥ १३ ॥ जब उतातिर हेर्दा पनि पितालाई केही देखिएन तब त्यो रोषपूर्वक बोल्यो–ए! तँ धेरै गफ चुट्दो रहिछस्। लौ, अब म मेरो टाउको घाँटीबाट छुट्याइदिन्छु। तँ जसलाई आफ्नो शरण-दाता मान्दछस्, हेरौं त्यो यहाँ आएर कसरी तेरो रक्षा गर्दो रहेछ ॥ १४ ॥ यसरी रोषपूर्वक आफ्नो भगवद्भक्त पुत्रलाई बारम्बार चित्त दुखाएर त्यो महादैत्य स्वयं खड्ग खँचेर सिंहासनबाट हाम्फाल्यो र त्यो खाँबोमा उसले ठूलो वेगले मुड्की बजार्‍यो ॥ १५ ॥ त्यसले खाँबोमा निकै भयानक शब्द भयो र यस्तो लाग्यो कि मानो सारा ब्रह्माण्ड-कटाह नै फुट्यो आफाफ्ना धाममा त्यो घनघोर निनाद सुनेर ब्रह्मादि लोकपालहरूले आफ्ना लोकको संहारको सूचना ठाने ॥१६॥ छोरोलाई मारिदिनको निम्ति तत्पर हिरण्यकशिपुले पनि त्यो अपूर्व तथा अद्भुत शब्द सुन्यो, जसले सबै दैत्य-यूथपति डराए। तर त्यस सभामा त्यो शब्द गर्ने कुनै पनि व्यक्ति उसले देखेन ॥१७। त्यसै बखत भगवान् आफ्नो सेवक प्रह्लाद र ब्रह्माका वचनलाई सत्य तथा सर्वत्र आफ्नो व्यापकता देखाउनको निम्ति सभाको भित्र त्यही स्तम्भबाट बडो विचित्र रूप धारण गरेर प्रकट भए। त्यो रूप न पूर्ण पशुको थियो, न पूर्ण मनुष्यको नै थियो ॥ १८ ॥ हिरण्यकशिपुले पनि यता-उता हेर्दै ती विचित्र प्राणीलाई खम्बाबाट बाहिर निस्कन

महासुरः ॥ खड्गं प्रगृह्योत्पतितो वरासनात् स्तम्भं तताडातिबलः स्वमुष्टिना ॥ १५ ॥ तदैव तस्मिन्निनदोऽतिभीषणो बभूव येनाण्डकटाहमस्फुटत् ॥ यं वै स्वधिष्ण्योपगतं त्वजादयः श्रुत्वा स्वधामात्ययमङ्ग मेनिरे ॥१६॥ स विक्रमन्पुत्रवधेप्सुरोजसा निशम्य निर्ह्रादमपूर्वमद्भुतम् ॥ अन्तःसभायां न ददर्श तत्पदं वितत्रसुर्येन सुरारियूथपाः ॥१७॥ सत्यं विधातुं निजभृत्यभाषितं व्याप्तिं च भूतेष्वखिलेषु चात्मनः ॥ अदृश्यतात्यद्भुतरूपमुद्वहन् स्तम्भे सभायां न मृगं न मानुषम् ॥ १८ ॥ ससत्त्वमेनं परितोऽपि पश्यन् स्तम्भस्य मध्यादनु निर्जिहानम् ॥ नायं मृगो नापि नरो विचित्रमहो किमेतन्नु नृगेन्द्ररूपम् ॥१९॥ मीमांसमानस्य समुत्थितोऽग्रतो नृसिंहरूपस्तदलं भयानकम् ॥ प्रतप्तचामीकरचण्डलोचनं स्फुरत्सटाकेसरजृम्भितानंनम् ॥२०॥ करालदंष्ट्रं करवालचञ्चलक्षुरान्तजिह्वं भ्रुकुटीमुखोल्बणम् ॥ स्तब्धोर्ध्वकर्णं गिरिकन्दराद्भुतव्यात्तास्यनासं हनुभेदभीषणम् ॥ २१ ॥ दिविस्पृशत्कायमदीर्घपीवरग्रीवोरुवक्षःस्थलमल्पमध्यमम् ॥ चन्द्रांशुगौरैश्छुरितं तनूरुहैर्विष्वग्भुजानीकशतं नखायुधम् ॥ २२ ॥ दुरासदं सर्वनिजेत-

लागेको देख्यो। त्यसलाई देखेर हिरण्यकशिपु करायो—'अहो! यो त न मनुष्य छ, न पशु नै छ। अनि यो नृसिंहरूपधारी पुरुष को हो?' ॥१९॥ हिरण्यकशिपु यस्तै तर्कमा बाझिएको थियो–कि भगवान् त्यसको अघिल्तिर पुगे। तिनको त्यो रूप निकै भयानक थियो। तिनका नेत्र तताएको सुवर्ण सदृश टल्कने र डरलाग्दा थिए। मुखले 'हाई' गरिरहनाले तिनको जटाकलाप (मुखको रौं) हल्लिरहेथ्यो ॥ २० ॥ तिनका दाह्रा तीखा थिए। जिब्रो तरवार जस्तै चञ्चल र छुरा जस्तै तीक्ष्ण थियो। वक्र भृकुटीले गर्दा त्यो मुख अझ बढ्ता दारुण देखिइरहेथ्यो। उनका कान निश्चल भएर माथितर ठडिएका थिए। तिनको फैलिएको मुख र नासिकाहरू कन्दरा समान देखिन्थे र च्यापु उघ्रनाले त्यो रूप गान्है डरलाग्दो देखिइरहेथ्यो ॥२१॥ त्यस जीवको विशाल शरीर स्वर्गमा टाँसिए जस्तै थियो। तिनको गर्धन पुड्को र मोटो थियो। उनको वक्षस्थल विशाल तर उदर धेरै कृश थियो। तिनको विकराल शरीरमा चन्द्रकला झैं सेतो रोमावली फैलिएको थियो सबैतिर सयकडौं भुजाहरू सुशोभित थिए र नङ नै उनका शस्त्र थिए ॥२२॥ त्यो स्वरूप ठूलो

बनाउन्दा थियो र सबै जना तिनको नजीक जान डराउँथे ! तिनले आफ्ना विविध शस्त्र-अस्त्रले सबै दैत्य-दानवहरूलाई डराएर भगाइदिए । ती नृसिंह भगवान्‌को विषयमा हिरण्यकशिपुले विचार्‍यो–'सम्भव छ महामायावी विष्णुको मलाई मार्नको निम्ति यो उद्योग हो, तर यसले मेरो के बिग्रन्छ ?' ॥२३॥ यति भन्दै हिरण्यकशिपु भयानक सिंहनाद गर्दै हातमा गदा लिएर नृसिंह भगवान् माथि झम्टियो, तर जस्तै आगोमा परेर पुतली तत्काल हराउँछ, त्यस्तै नै त्यो नृसिंहको तेजमा परेर लुप्त भयो ॥२५॥ ती परम सत्त्वधाम भगवान्‌को निम्ति त्या कुनै विस्मयको कुरा थिएन, किनकि उनले सृष्टिको आरम्भमा आफ्नू तेजले प्रलयकालीन अन्धकारलाई पनि पिइदिए । अनि त्यस दैत्यले झम्ट्यो र अतिशय क्रोधित भई नृसिंहलाई ठूलो वेगले गदा हिर्कायो ॥२५॥ हिरण्यकशिपुले आक्रमण गरेपछि गदाधारी भगवान्‌ले गदा समेत त्यसलाई गरुडले सर्प समाए झैं समाते । अति हेलचक्र्याइँ गरेर गरुडको पञ्जाबाट उम्केको सर्प जस्तै त्यो असुर उनको हातबाट फुत्केर भाग्यो ॥२६॥ जसको हिरण्यकशिपुले निवास खोसेको थियो, ती लोकपाल र देवता बादलमा लुकेर यो सबै लीला हेरिरहेका थिए

रायुधप्रवेकविद्रावितदैत्यदानवम् ॥ प्रायेण मेऽयं हरिणोरुमायिना वधः स्मृतोऽनेन समुद्यतेन किम् ॥२३॥ एवं ब्रुवंस्त्वभ्यपतद्‌गदायुधो नदन्नृसिंहं प्रति दैत्यकुञ्जरः ॥ अलक्षितोऽग्नौ पतितः पतङ्गो यथा नृसिंहौजसि सोऽसुरस्तदा ॥२४॥ न तद्विचित्रं खलु सत्त्वधामनि स्वतेजसा यो नु पुराऽपिबत्तमः ॥ ततोऽभिपद्याभ्यहनन्महासुरो रुषा नृसिंहं गदयोरुवेगया ॥ २५ ॥ तं विक्रमन्तं सगदं गदाधरो महोरगं तार्क्ष्यसुतो यथाऽग्रहीत् ॥ स तस्य हस्तोत्कलितस्तदाऽसुरो विक्रीडतो यद्वदहिर्गरुत्मतः ॥ २६ ॥ असाध्वमन्यन्त हृतौजसोऽमरा घनच्छदा भारत सर्वधिष्ण्यपाः ॥ तं मन्यमानो निजवीर्यशङ्कितं यद्धस्तमुक्तो नृहरिं महासुरः ॥ पुनस्तमासज्जत खड्गचर्मणी प्रगृह्य वेगेन जितश्रमो मृधे ॥२७॥ तं श्येनवेगं शतचंद्रवर्त्मभिश्चरन्तमच्छिद्रमुपर्यधो हरिः ॥ कृत्वाऽट्टहासं खरमुत्स्वनोल्बणं निमीलिताक्षं जगृहे महाजवः ॥ २८ ॥ विष्वक्स्फुरन्तं ग्रहणातुरं हरिर्व्यालो यथाखुं कुलिशाक्षतत्वचम् ॥ द्वार्यूर आपात्य ददार लीलया नखैर्यथाऽहिं गरुडो महाविषम् ॥ २९ ॥ संरम्भदुष्प्रेक्ष्यकरालोचनो व्यात्ताननान्तं विलिहन्स्वजिह्वया ॥ असृग्लवाक्तारुणकेसराननो यथान्त्रमालो द्विपहत्यया हरिः ॥ ३० ॥ नखांकुरोत्पाटितहृत्सरोरुहं विसृज्य तस्यानुचरानुदायुधान् ।

तिनले भगवान्‌को हातबाट त्यो दैत्य उम्केको राम्रो मानेनन् महादैत्य हिरण्यकशिपुले पनि भगवान्‌को हातबाट उम्केपछि आफ्नो पराक्रमले डरायो भन्ने अनुमान गर्‍यो । अतः यो ढाल-तरवार लिएर ठूलो वेगले आइलाग्यो ॥२७॥ अन्त्यमा यता-उता छिद्र खोज्दै, तल-माथि उफ्रन्दै त्यस दैत्यलाई महाबलशाली भगवाले चर्को स्वरले प्रचण्ड तथा भयङ्कर अट्टहास गरेर त्यसै समाते । तिनको गर्जनले त्यसका नेत्र बन्द भएका थिए ॥२८॥ सर्पले मूसो समाएझैं त्यसलाई पक्रिएपछि आतुरभावले प्रभुका बाहुबाट उम्कनको निम्ति हात-खुट्टा पछार्न लागेको हिरण्यकशिपुलाई, जसको छाला इन्द्रको वज्रले पनि केही नहुने थियो त्यसलाई समाद्वारमा आफ्ना तिघ्रामा पछारेर प्रभुले नंग्राद्वारा जसरी गरुड सर्पलाई चिर्दछन्, त्यसै गरी चिरीदिए ॥२९॥ क्रोधले जसका नेत्र दुष्प्रेक्ष्य देखिन्थे, जो उघारिएको मुख जिब्रोले चाटिरहेथे, रक्तको छिटा पर्नाले जसको मुख र ग्रीवाका रौं राता भएका थिए, ती गजराजलाई मारेर घाँटीमा आन्द्राको माला लगाएका सिंह झैं देखिइरहेथे । नृसिंहले आफ्ना नङले जसको हृदय फोरिसकेका थिए, त्यो हिरण्यकशिपुलाई भूमिमा पछारिदिए र शस्त्र खैंचेर आफूतिर

आइलागेका त्यसका सेवक र हजारौं अनुयायीलाई आफ्ना भुजदण्डरूपी शस्त्रहरूले सखाप पारे ॥ ३०-३१ ॥ हे राजन् ! त्यसबेला नृसिंह भगवान्‌का प्रहारको आघातले मेघ छरिन लागे र नेत्रको प्रखर ज्योतिले सबै ग्रहगण तेजहीन भए, तिनको श्वास वायुको हिर्काइले समुद्रमा क्षोभ भयो र उनको सिंहनादले डराएर सबै दिग्गजहरू कराउन लागे ॥ ३२ ॥ माथि उडिरहेका विमानले भरिएको आकाश उनका कपालसित ठक्कर खाएर आफ्नो स्थानबाट हटे झैं भयो । उनको पादप्रहारले पृथ्वी पीडित भइन् । उनको प्रबल वेगले पर्वत उफ्री-उफ्री हल्लनलागे र उनको तेजले आकाश र दसै दिशाहरू निष्प्रभ भए ॥३३॥ त्यस बखत भगवानको प्रतिपक्षी कोही पनि उनको समक्ष थिएन, तापनि ती अत्यन्त क्रोधित थिए । अब आफ्नो भक्त प्रह्लादको ऐश्वर्य ठानेर कुतूहलवश ती सभामा सिंहासनमा बसे तब पूर्ण तेजस्वी र विकराल स्वरूप प्रभु नृसिंहको सेवामा भयभीत भई कोही पनि उपस्थित भइरहेको

अहन्समन्तान्नखशस्त्रपार्ष्णिभिर्दोर्दण्डयूथोऽनुपथान्सहस्रशः ॥ ३१ ॥ सटावधूता जलदाः परापतन्ग्रहाश्च तद्दृष्टिविमुष्टरोचिषः ॥ अम्भोधयः श्वास-हता विचुक्षुभुर्निर्ह्रादभीता दिगिभा विचुक्रुशुः ॥ ३२ ॥ द्यौस्तत्सटोत्क्षिप्तविमानसंकुला प्रोत्सर्पत क्ष्मा च पदातिपीडिता ॥ शैलाः समुत्पेतुरमुष्य रंहसा तत्तेजसा खं ककुभो न रेजिरे ॥ ३३ ॥ ततः सभायामुपविष्टमुत्तमे नृपासने संभृततेजसं विभुम् ॥ अलक्षितद्वैरथमत्यमर्षणं प्रचण्डवक्त्रं न बभाज कश्चन ॥३४॥ निशम्य लोकत्रयमस्तकज्वरं तमादिदैत्यं हरिणा हतं मृधे ॥ प्रहर्षवेगोत्कलितानना मुहुः प्रसूनवर्षैर्ववृषुः सुरस्त्रियः ॥३५॥ तदा विमानावलिभिर्नभस्तलं दिदृक्षतां संकुलमास नाकिनाम् ॥ सुरानका दुन्दुभयोऽथ जघ्निरे गन्धर्वमुख्या ननृतुर्जगुः स्त्रियः ॥ ३६ ॥ तत्रोपव्रज्य विबुधा ब्रह्मेन्द्रगिरिशादयः ॥ ऋषयः पितरः सिद्धा विद्याधरमहोरगाः ॥ ३७ ॥ मनवः प्रजानां पतयो गन्धर्वाप्सरचारणाः ॥ यक्षाः किंपुरुषास्तात वेतालाः सिद्धकिन्नराः ॥ ३८ ॥ ते विष्णुपार्षदाः सर्वे सुनन्दकुमुदादयः ॥ मूर्ध्नि बद्धाञ्जलिपुटा आसीनं तीव्रतेजसम् ॥ ईडिरे नरशार्दूलं नातिदूरचराः पृथक् ॥ ३९ ॥ ब्रह्मोवाच ॥ नतोऽस्म्यनन्ताय दुरन्तशक्तये विचित्रवीर्याय पवित्रकर्मणे ॥ विश्वस्य सर्गस्थितिसंयमान्गुणैः

थिएन ॥ ३४ ॥ 'हे राजन् ! तीनै लोकको निम्ति शिरःशूल समान दुःखदायी हिरण्यकशिपु भगवान द्वारा मारिन गयो, यो सुनेर हर्षले प्रफुल्लित मुख हुने देवाङ्गनाहरू उनीमाथि बारम्बार पुष्पवर्षा गर्नलाने ॥ ३५ ॥ नृसिंह भगवान्‌को दर्शनोत्सुक देवताका विमानले सारा आकाश ढाकियो । देवताका मृदङ्ग, दुन्दभी आदि बाजाहरू बजन लागे । मुख्य-मुख्य गन्धर्व उनका गुण-गान गर्नलागे र अप्सराहरू नाच्न लागे ॥ ३६ ॥ हे तात ! उसै बखत ब्रह्मा, विष्णु, शिव आदि देवता, ऋषि, पितर, विद्याधर, सर्प, मनु, प्रजापति, गन्धर्व, अप्सरा, चारण, यक्ष, किम्पुरुष, वेताल, सिद्ध, किन्नर, सुनन्द र कुमुद आदि विष्णु भगवान्‌का पार्षद त्यहीं आए । ती मस्तकमा अंजली जोरी उनको साम्न्ने उभिएर सिंहासनमा बसेका महातेजस्वी ईश्वर नृसिंह भगवानको भिन्न-भिन्न स्तुति गर्नलागे ॥ ३७-३९ ॥ ब्रह्माजी भन्दछन्–जसका शक्तिको कुनै सीमा छैन, जो विचित्र पराक्रमी र पवित्रकर्मा छन् र

※ उदाहरण–( ईश्वर जे गर्दछन्, राम्रो नै गर्दछन् )—कुनै राजाको मन्त्रीलाई यो पूर्ण विश्वास थियो कि ईश्वर जे गर्दछन् राम्रै गर्छन् । एक दिन राजा र मन्त्री दुवै शिकार खेल्न गए । संयोगले मौका मिलाउने प्रहार गर्ने बेलामा आफ्नै शस्त्रले राजाको औंलो कटियो । सबैजना त मलम-पट्टीको चिन्तामा लागे । तर मन्त्रीले भन्यो—'ईश्वर जे गर्दछन्, राम्रो नै गर्छन् । राजालाई यस्तो अवसरमा यो कुरा मनपरेन र भने–मेरो औंलो

666

आफ्नो लीलाले नै सत्वादि गुणहरू द्वारा समस्त जगत्को उत्पत्ति, स्थिति, लय गर्दै रहन्छन्, ती अव्ययात्मा अनन्तलाई नमस्कार छ ॥ ४ ॥ रुद्र भन्दछन्–हे भक्त वत्सल ! हजुरको रिसको समय प्रलयकालमा हुन्छ । हजुरले यस तुच्छ दैत्यलाई त मारिहाल्नु भयो, यसको पुत्र ( प्रह्लाद ) हजुरको शरणमा आएर उभिएको छ । हजुर आफ्नो भक्तको रक्षा गर्नुहवस् ॥४१॥ इन्द्रले भने–हे परमपुरुष ! हाम्रो रक्षा गरेर हजुरले हाम्रो यज्ञभाग फेरि फर्काइदिनुभयो । हजुरको वासस्थानस्वरूप हाम्रो हृदय-कमल यस दैत्यको डरले सुकेका थिए, तिनलाई हजुरले फेरि हरियो तुल्याइदिनु भयो । हे नाथ ! जो हजुरको सेवाका इच्छुक छन्, तिनको दृष्टिमा कालग्रस्त विषय-भोगको के मूल्य छ ? हे नृसिंहदेव ! ती जनहरू त मुक्तिलाई पनि

स्वलीलया मंदधतेऽव्ययात्मने ॥ ४० ॥ श्रीरुद्र उवाच ॥ कोपकालो युगान्तस्ते हतोऽयमसुरोऽल्पकः ॥ तत्सुतं पाह्युपसृतं भक्तं ते भक्तवत्सल॥४१॥ इन्द्र उवाच ॥ प्रत्यानीताः परम भवता त्रायता नः स्वभागा दैत्याक्रान्तं हृदयकमलं त्वद्गृहं प्रत्यबोधि ॥ कालग्रस्तं कियदिदमहो नाथ शुश्रूषतां ते मुक्तिस्तेषां न हि बहुमता नारसिंहापरैः किम् ॥ ४२ ॥ ऋषय ऊचुः ॥ त्वं नस्तपः परमात्थ यदात्मतेजो येनेदमादिपुरुषात्मगतं ससर्ज ॥ तद्वि· प्रलुप्तममुनाऽद्य शरण्यपाल रक्षागृहीतवपुषा पुनरन्वमंस्थाः ॥ ४३ ॥ पितर ऊचुः ॥ श्राद्धानि नोऽधिबुभुजे प्रसभं तनूजैर्दत्तानि तीर्थसमयेऽप्यपिब· त्तिलाम्बु ॥ तस्योदरान्नखविदीर्णवपाद्य आर्च्छत्तस्मै नमो नृहरयेऽखिलधर्मगोप्त्रे ॥ ४४ ॥ सिद्धा ऊचुः ॥ यो नो गतिं योगसिद्धामसाधुरहारषी·

प्रशस्त मान्दैनन् । अनि अन्य भोगको विषयमा के भन्ने ? ॥४२॥ ऋषिहरूले भने—हे आदिपुरुष ! जसद्वारा हजुरले आफूमा लीन यस जगत्को पुनः रचना गर्नुभयो, त्यो आफ्नो तेजस्वरूप उत्कृष्ट तपस्यालाई नै हजुरले हामीलाई उपदेश दिनुभएको थियो । हे शरणागतपालक ! यस दुष्ट दैत्यले त्यस तपको उच्छेद गरिदिएको थियो । अतः त्यसको रक्षाका लागि यो नृसिंह देह धारण गरेर हजुरले फेरि त्यस तपका स्थापना गरिदिनुभयो ॥४३॥ पितृगण भन्दछन्–हे प्रभो ! यो दुष्ट दैत्य हाम्रा छोराहरूले गरेको श्राद्ध हठपूर्वक स्वयं भोग्थ्यो र तीर्थमा दिएका तिलोदक पिइदिन्थ्यो । जसले नङद्वारा उसको पेट फोरेर हाम्रा पिण्डादि त्यसको उदरबाट झिकेर हामीलाई दिनुभयो, ती नृसिंहलाई प्रणाम छ ॥४४॥ सिद्धगणभन्छन्–

काटियो, तँ भन्दैछस्—'ईश्वर जे गर्दछ, राम्रो नै गर्दछ'। मेरो अन्न खाएर मेरो नै अनिष्ट गर्न खोज्दछ । जा, आजदेखि मलाई आफ्नो मुख नदेखाउनु ।' यति भनेर राजाले आफ्नो मन्त्रीलाई निकालिदियो । जाने बेलामा मन्त्रीले फेरि भन्यो–'ईश्वर जे गर्दछ, त्यो राम्रो नै गर्दछ ।' मन्त्रीको यो कुरा सुनेर सेनाका सबै सिपाही हाँस्तै भन्न लागे—'कस्तो मूर्ख हो । अब त जीविकाको साधन पनि रहेन तर यो उही कुरा भन्दैछ ।' मन्त्री प्रणाम गरेर गयो । केही दिनपछि राजा फेरि शिकार खेल्न गएर घोडा हरिणलाई लखेट्तै घोर जंगलमा पुगे । सबै सेना र रक्षकहरू पछाडि नै छुटेका थिए । शिकार पनि हातलागेन । त्यसैदिन जंगलमा डाकाको कालीपूजन गरेका थियो । डाकाहरू कालीलाई मनुष्यको बलि दिन्थे । जब बलिको लागि कुनै व्यक्ति पाइएन तर घोडाले राजालाई नै समातेर ल्यायो । राजालाई स्नान गराएर बलिको निम्ति उभ्याइयो तब घोडाले राजाको काटिएको औंला देख्यो । अनि नजिक देखे र अवस्थामा राजालाई अङ्गभङ्ग जानेर बलिको योग्य भएन भनी छाडिदिए । राजा कुनै प्रकार आफ्नो राज्यमा आइपुगे । अब तो भन्न लागे–यो काटिएको औंलाले नै मेरो प्राण बचायो, नभए आज मनमा लवमात्र पनि सन्देह थिएन अब राजालाई मन्त्रीको कुरामा विश्वास भयो र मन्त्रीलाई डाकेर फेरि उनकै पदमा नियुक्त गरे । एक दिन राजाले मन्त्रीलाई सोधे—मेरा त्यस औंलो काटिएको थियो, त्यसको अर्थ त मैले राम्रो गरें । त्यसैले मेरो प्राण रक्षा पनि भयो, तर जब मैले तिमीलाई निकालिदिएँ, तब पनि तिमीले भनेका थियौ–'ईश्वर जे गर्दछ राम्रो नै गर्दछ ।' त्यसको अर्थ बुझ्न सकिन । मन्त्रीले उत्तर दियो—महाराज यदि हजुरले मलाई ननिकालेको भए त्यस दिन मैले पनि शिकारमा सँगै जाने थियो र हजुर त अङ्गभङ्ग हुनाले बच्नु हुने थियो, तर म अवश्य बलिको योग्य मानिने थिएँ र कुनै प्रकार पनि बाँच्न पाउने थिइन ।

हे नृसिंह ! जुन दुष्टले आफ्नो योग तथा तपोबलले हाम्रो योगसिद्धिको गति खोसेर लिएको थियो, त्यस अभिमानी, पापीलाई जसले आफ्ना नङले मारिदिए यस्ता महाप्रभु हजुरलाई हामी नितभावले नमन गर्दछौं ॥४५॥ विद्याधर भन्दछन्–बल वीर्यले उन्मत्त जुन मूढले विविध धारणहरूले प्राप्त हाम्रो विद्या व्यर्थ पारेको थियो, त्यसलाई जसले यस युद्धस्थलमा पशुको समान नष्ट गरिदिनुभयो, ती माया-नृसिंहलाई हामी नमस्कार गर्दछौं ॥४६॥ नागगण भन्दछन्–हे देव ! जुन पापीले हामी मणि र स्त्रीहरू हरेको थियो, त्यसको छाती फोरेर जसले हाम्रा पत्नीहरूलाई आनन्द प्रदान गरे, त्यस्ता हजुरलाई हाम्रो प्रणाम छ ॥४७॥ मनु भन्दछन्–हे देव ! हजुरका आज्ञापालक हामी मनु हौं । यस दैत्यले सम्पूर्ण मर्यादा नै छिन्न-भिन्न पारिदिएको थियो । हे प्रभो ! आज हजुरले यस दुष्टको अन्त गरिदिनु भयो । अब आज्ञा हवस्–हामी हजुरको के सेवा गरौं ? ॥४८॥ प्रजापतिहरूले भने–हे परमेश्वर ! हामी हजुरले बनाएका प्रजापति हौं जुन दुष्ट दैत्यले गर्दा हामी प्रजाको सृष्टि गर्न सक्तैनथ्यौं, त्यो हजुरद्वारा विदीर्ण-वक्षस्थल भएर पृथ्वीमा पर्‍या: छ । हे सत्त्वमूर्त्त ! हजुरको

योगतपोबलेन ॥ नानादर्पं तं नखैर्विददार यस्मै तुभ्यं प्रणताः स्मो नृसिंह ॥ ४५ ॥ विद्याधरा ऊचुः ॥ विद्यां पृथग्धारणयाऽनु ां न्यषेधदज्ञो बलवीर्यदृप्तः ॥ स येन संख्ये पशुवद्धतस्तं मायानृसिंहं प्रणताः स्म नित्यम् ॥ ४६ ॥ नागा ऊचुः ॥ येन पापेन रत्नानि स्त्रीरत्नानि हृतानि नः ॥ तद्वक्षःपाटनेनासां दत्तानन्द नमोऽस्तु ते ॥४७॥ मनव ऊचुः ॥ मनवो वयं तव निदेशकारिणो दितिजेन देव परिभूतसेतवः ॥ भवता खलः स उपसंहृतः प्रभो करवाम ते किमनुशाधि किङ्करान् ॥४८॥ प्रजापतय ऊचुः ॥ प्रजेशा वयं ते परेशाभिसृष्टा न येन प्रजा वै सृजामो निषिद्धाः ॥ स एष त्वया भिन्नवक्षा नु शेते जगन्मंगलं सत्त्वमूर्तेऽवतारः ॥४९॥ गन्धर्वा ऊचुः ॥ वयं विभो ते नटनाट्यगायका येनात्मसाद्वीर्यबलौजसा कृताः ॥ स एष नीतो भवता दशामिमां किमुत्पथस्थः कुशलाय कल्पते ॥५०॥ चारणा ऊचुः ॥ हरे तवाङ्घ्रिपङ्कजं भवापवर्गमाश्रिताः ॥ यदेष साधुहृच्छयस्त्वयाऽसुरः समापितः ॥ ५१ ॥ यक्षा ऊचुः ॥ वयमनुचरमुख्याः कर्मभिस्ते मनोज्ञैस्त इह दितिसुतेन प्रापिता वाहकत्वत् ॥ स तु जनपरितापं तत्कृतं जानता ते नरहर उपनीतः पंचतां पंचविंशः ॥५२॥ किंपुरुषा ऊचुः ॥ वयं किंपुरुषास्त्वं तु महापुरुष ईश्वरः ॥ अयं कुपुरुषो नष्टो धिक्कृतः साधुभिर्यदा ॥ ५३ ॥ वैतालिका ऊचुः ॥ सभासु मत्रेषु तवामलं यशो गीत्वा सपर्यां महतीं लभामहे ॥ यस्तां व्यनैषीद्भृशमेष दुर्जनो दिष्ट्या

यो अवतार संसारको कल्याणार्थ भएको छ ॥४९॥ गन्धर्वले भने–हे विभो ! हामी हजुरका नट तथा नाच्ने गाउने भृत्य हौं । अहो ! जुन पापीले आफ्नो बल-वीर्य तथा पराक्रमले हामीलाई आफ्नो अधीन तुल्याएको थियो, त्यसलाई हजुरले यस दशामा पुर्‍याइदिनुभयो ॥५०॥ चारणगण बोले–हे हरे, हामीले हजुरका भवभयहारी चरण-कमलको आश्रय लिएका छौं । किनकि हजुरले साधु-सन्तका हृदयमा किलो गाडेको जस्तो यस दैत्यलाई मारिदिनुभयो ।.५१॥ यक्ष भन्दछन्–हे ईश ! विविध कर्म गर्ने हामी यक्षहरू हजुरका दासहरूमा प्रधान छौं, तर यो दैत्यले हामीलाई भारवाहक तुल्याएको थियो । हे नृसिंह ! हजुर चौबीस तत्त्वका नियन्ता पुराण-पुरुष पच्चीसौं तत्त्वरूपमा अवतार लिनुभएको छ यसले दिएका प्राणीहरूको पीड़ाका ज्ञाता हजुरले यसलाई मारिदिनुभयो ॥५२॥ किम्पुरुषहरूले भने–हामी किम्पुरुष हौं र हजुर सर्वेश्वर महापुरुष हुनुहुन्छ । साधुजनद्वारा तिरस्कृत यो पापी यसैनिम्ति मारियो

॥५१॥ वेतालहरू भन्दछन्–हे हरे ! सभाहरू र यज्ञ शालादिमा हजुरको गुण-गान गरेर हामी इनामपात पाउँथ्यौं । हे भगवन् ! यसले हाम्रो त्यो आजीविका नष्ट गरिदिएको थियो आज ठूलो भाग्यले रोग समान दुष्ट यो दुर्जन दैत्य मारिन गयो ॥५४॥ किन्नरले भने–हे स्वामिन् ! हामी हजुरका अनुचर किन्नर हौं । यो दैत्य हामीसित बेठ-बेगार लिन्थ्यो । हे नृसिंहदेव ! आज त्यस पापीलाई हजुरले नष्ट गरिदिनु भयो । हे नाथ ! यसै गरी हजुर सधैं हाम्रो उन्नति गर्दैरहनोस् ॥५५॥ विष्णुपार्षद भन्दछन्–हे भक्तजनका आश्रयदाता ! सबैलाई शान्तिदायक हजुरको यो विचित्र नृसिंहरूप हामीले आजै देख्यौं । हे ईश ! यो दैत्य हजुरको आज्ञा-पालक थियो, तर पछि ब्राह्मणहरूको श्रापले यो राक्षस भयो । हजुरले यसलाई मारिदिनु भयो, यो पनि हामी हजुरको अनुग्रह नै मान्दछौं ॥५६॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायामष्टमोऽध्यायः ॥८॥ ( प्रह्लादद्वारा नृसिंह भगवान्को स्तुति )–नारद भन्दछन्–हे युधिष्ठिर ! ब्रह्मा र शिव सहित सबै देवता क्रोधावेशमा बसेका ती दुर्धर्ष नृसिंह भगवान्को नजीक नगएर परैबाट स्तुति गरेर पर सरे ॥१॥ अनि देवताले

हतस्ते भगवन् यथाऽऽमयः ॥५४॥ किन्नरा ऊचुः॥ वयमीश किन्नरगणास्तवानुगा दितिजेन विष्टिममुनाऽनुकारिताः ॥ भवता हरे स वृजिनोऽवसादितो नरसिंह नाथ विभवाय नो भव ॥५५॥ विष्णुपार्षदा ऊचुः ॥ अद्यैतद्धरिनररूपमद्भुतं दृष्टं नः शरणद सर्वलोकशर्म ॥ सोऽयं ते विधिकर ईश विप्रशप्तस्तस्येदं निधनमनुग्रहाय विद्मः ॥५६॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादानुचरिते दैत्यराजवधे नृसिंहस्तवो नामाष्टमोऽध्यायः ॥८॥ नारद उवाच ॥ एवं सुरादयः सर्वे ब्रह्मरुद्रपुरःसराः ॥ नोपैतुमशकन्मन्युसंरम्भं सुदुरासदम् ॥१॥ साक्षाच्छ्रीः प्रेषिता देवैर्दृष्ट्वा तन्महदद्भुतम् ॥ अदृष्टाश्रुतपूर्वत्वात्सा नोपेयाय शंकिता ॥२॥ प्रह्लादं प्रेषयामास ब्रह्मावस्थितमन्तिके ॥ तात प्रशमयोपेहि स्वपित्रे कुपितं प्रभुम् ॥३॥ तथेति शनकै राजन्महाभागवतोऽर्भकः ॥ उपेत्य भुवि कायेन ननाम विधृतांजलिः ॥ ४ ॥ स्वपादमूले पतितं तमर्भकं विलोक्य देवः कृपया परिप्लुतः ॥ उत्थाप्य तच्छीर्ष्ण्यदधात्कराम्बुजं कालाहिवित्रस्तधियां कृताभयम् ॥५॥ स तत्करस्पर्शधुताखिलाशुभः शपद्यभिव्यक्तपरात्मदर्शनः ॥ तत्पादपद्मं हृदि निर्वृतो दधौहृष्यत्तनुः क्लिन्नहृदश्रुलोचनः ॥६॥ अस्तौषीद्धरिमेकाग्रमनसा सुसमाहितः ॥ प्रेमगद्गदया वाचा तन्न्यस्तहृदयेक्षणः ॥७॥ प्रह्लाद उवाच॥ ब्रह्मादयः

उनलाई शान्त पार्नको निम्ति महारानी लक्ष्मीलाई पठाए, तर उनसाई पहिले नदेखेको, अरू उसको विषयमा सुनेकै थिइन, त्यो अद्भुत रूप देखेर मनमा भयमानी ती पनि उनको नजीकै जान सकिनन् ॥२॥ अनि ब्रह्माजीले त्यहीं उभिएका प्रह्लादलाई पठाए र भने–'तात ! तिम्रो पितासित रिसाएका भगवान्को नजीक तिमीनै जाउ र उनलाई शान्त पार ॥३॥ हे राजन् ! भगवद्भक्त बालक प्रह्लाद 'जो आज्ञा' भनेर विस्तारै नृसिंह भगवान्को नजीक गए र हात जोरेर तथा भूमिमा लम्पसार परेर प्रणाम गरे ॥४॥ ती सानो बालकलाई निर्भयभावले आफ्ना चरणमा धोप्टिएको देखेर भगवान्ले कृपापूर्ण भएर काखामा लिनुभयो र शिरमा आफ्ना करकमल राख्नुभयो, जुन कालसर्पले ग्रस्त व्यक्तिलाई पनि निर्भय पारिदिन्छ ॥५॥ भगवान्का बाहुको स्पर्श हुनासाथ भक्त प्रह्लादका अशुभ नष्ट भए र उनलाई भगवान्को सच्चा स्वरूपको दर्शन मिल्यो । उनले परमानन्दले परिपूर्ण भएर भगवान्का चरण-कमललाई हृदयमा बसाले । अनि सम्पूर्णशरीरमा रोमाञ्च भएर आयो । उनको हृदय प्रेमले आर्द्र भयो र नेत्रबाट आनन्दका आँसु बग्नलागे ॥६॥ ती एकाग्र चित्त

669

भएर आफ्नो हृदय र नेत्रलाई भगवान्मा लगाई प्रेमपूर्वक गद्गद वाणीले स्तुति गर्नलागे ॥ ७ ॥ प्रह्लाद भन्दछन्–जसको बुद्धि सधैं तमोगुणमा स्थित रहन्छ, ती ब्रह्मादिक देवता मुनि र सिद्ध आफ्ना मधुर वचनका प्रवाह तथा धेरै गुणले पनि आराधनाद्वारा जसलाई प्रसन्न पार्न सकेनन् ती भगवान् उग्र जातिमा जन्मेको म दैत्यमाथि कसरी प्रसन्न हुन्छन् ! ॥८॥ तैपनि मेरो यस्तो विश्वास छ–धन, कुलीनता, रूप, तप, विद्या, ओज तेज, प्रभाव, बल, पौरुष, बुद्धि तथा योग–यी सबै गुण ती परमपुरुष श्रीहरिको आराधनाका साधन बन्न सक्तैनन्, किन्तु भक्तिले त ती गजेन्द्रमाथि पनि प्रसन्न भएका थिए ॥ ९ ॥ जो ब्राह्मण उपर्युक्त बाह्र गुणले सम्पन्न रहन्छ, तर भगवान् कमलनाभका चरण-कमलबाट विमुख रहन्छ भने तिनको अपेक्षा म त्यस चाण्डाललाई उत्तम ठान्दछु, जो आफ्नो मन, वचन, कर्म, धन र प्राण श्रीहरिमा लगाइराख्दछ । त्यो प्राणी आफ्नो सारा कुल पवित्र पारिदिन्छ, किन्तु 'म मेरो र म ठूलो भन्ने अभिमानी ब्राह्मण त्यस्तो गर्न सक्तैन ॥१०॥ तात्पर्य के भने भगवान् आत्मलाभले नै परिपूर्ण रहन्छन्, ती क्षुद्र पुरुषको पूजाको कामना राख्दैनन् । ती करुणा

सुरगणा मुनयोऽथ सिद्धाः सत्त्वैकतानमतयो वचसां प्रवाहैः नाराधितुं पुरुगुणैरधुनापि पिप्रुः किं तोष्टुमर्हति स मे हरिरुग्रजातेः ॥ ८ ॥ मन्ये धनाभिजनरूपतपः श्रुतौजस्तेजःप्रभावबलपौरुषबुद्धियोगाः ॥ नाराधनाय हि भवंति नरस्य पुंसो भक्त्या तुतोष भगवन्गजयूथपाय ॥९॥ विप्राद्द्विषड्गुण्युतादरविन्दनाभपादारविन्दविमुखाच्छ्वपचं वरिष्ठम् ॥ मन्ये तदर्पितमनोवचनेहितार्थप्राणं पुनाति स कुलं न तु भूरिमानः ॥ १० ॥ नैवात्मनः प्रभुरयं निजलाभपूर्णो मानं जनादविदुषः करुणो वृणीते ॥ यद्यज्जनो भगवते विदधीत मानं तच्चात्मने प्रतिमुखस्य यथा मुखश्रीः ॥ ११ ॥ तस्मादहं विगतविक्लव ईश्वरस्य सर्वात्मना महि गृणामि यथामनीषम् ॥ नीचोऽजया गुणविसर्गमनुप्रविष्टः पूयेत येन हि पुमाननुवर्णितेन ॥ १२ ॥ सर्वे ह्यमी विधिकरास्तव सत्त्वधाम्नो ब्रह्मादयो वयमिवेश न चोद्विजन्तः ॥ क्षेमाय भूतय उतात्मसुखाय चास्य विक्रीडितं भगवतो रुचिरावतारैः ॥ १३ ॥ तद्यच्छ मन्युमसुरश्च हतस्त्वयाऽद्य मोदेत साधुरपि वृश्चिकसर्पहत्या ॥ लोकाश्चनिर्वृतिमिताः प्रतियन्ति सर्वे रूपं नृसिंह विभयाय जनाः स्मरन्ति ॥ १४ ॥ नाहं बिभेम्यजित तेऽतिभयानकास्यजिह्वार्कनेत्रभ्रुकुटीरभसोग्रदंष्ट्रात् ॥ आन्त्रस्रजः क्षतजकेसरशंकुकर्णान्निर्ह्रादभीतदिगिभा-

वश भक्तहरूद्वारा गरिएको पूजा स्वीकार गर्दछन्, जस्तै मुखको शोभाले प्रतिबिम्ब शोभित पार्दछ, त्यस्तै नै भक्त भगवानप्रति जुन सम्मान प्रदर्शित गर्दछ, त्यो उही भक्तलाई नै प्राप्त हुन्छ ॥११॥ अतः नीच भएर पनि म निःशंकभावले आफ्नो बुद्धिअनुसार ती ईश्वरको महिमा वर्णन गर्दछ, जोसित अविद्यावश संसारचक्रमा परेको प्राणी तत्काल पवित्र हुन्छ ॥१२॥ हे ईश ! यी शिव-ब्रह्मादि देवता हजुर सत्वस्वरूको आज्ञा पालन गर्दछन् । हामी दैत्य जस्तो यी हजुरसित द्वेष गर्दैनन् । हे भगवन् ! हजुर आफ्नो मनोहर अवतारहरू द्वारा जुन-जुन लीलाहरू गर्नुहुन्छ, ती सबै जगत्को कल्याण, उद्भव तथा आत्मानन्दको निमित्त नै हुन्छन् ॥१३॥ अब हजुर आफ्नो क्रोध शान्त गर्नोस् किनकि त्यस असुरको संहार भइसक्यो हे देव ! सर्प तथा बिच्छी आदि मर्नाले पनि साधुजन सुख मान्दछन् । यस असुरको संहारले आनन्दित सबै हजुरको यो कोप शान्त हुने बाटो हेरिरहेका छन् । हे नृसिंह ! निर्भय हुनकालागि अबदेखि हजुरको यस अद्भुत रूपको स्मरण गर्नेछन् ॥१४॥ जसको अतिभयानक मुख, जिब्रो, सूर्य झैं बल्दा नेत्र, वक्रभ्रुकुटी र उग्रदाह्रा-र आन्द्राको माला, रगतले भिजेक

याल तथा हाड कानले युक्त छ, जसको सिंहनादले दिग्गज पनि भयभीत हुन्छ र जसका नङको अग्रभाग शत्रुलाई विदीर्ण पारिदिन्छ, हजुरको यस भयङ्कर स्वरूपको मलाई अलिकति पनि भय छिएन ॥१५॥ हे दीनवत्सल प्रभो ! म डरलादो र संसारचक्रको दुःखले भयभीत छु। मलाई मेरो कर्मले बाँधेर हिंस्र जीवका माझ फालिदिएको छ। हे श्रेष्ठतम ! अब हजुर मलाई आफ्नो मोक्षप्रद शरणदायक चरणमा कहिले डाक्नुहुन्छ ? ॥१६॥ हे भूमन् ! सबै योनिमा प्रियको वियोग र अप्रियको संयोगजनित शोकानलले सन्तप्त हुँदै आएको छु। त्यस दुःखको औषधि पनि दुःखस्वरूप नै छ। अतः म देहादि अनात्मामा आत्मभाव नगरेर चिरकालदेखि भौंतारीरहेको छु, हजुर मलाई आफ्नो दास्यभावको उपदेश दिनुस् ॥१७॥ हे नृसिंह ! हजुर सबैका प्रिय सुहृद् श्रेष्ठ देवता हुनाले हजुरको दास्यभाव पाएर म हजुरका चरण-युगलका प्रेमी ज्ञानीजनको सत्संग गर्दै रागादि अवगुणका बन्धनबाट मुक्त भई ब्रह्माद्वारा कहिएको हजुरको लीला गान गरेर सजिलैसित संसार-सागर पारी तर्नेछु ॥१८॥ हे नृसिंह ! सन्तप्त व्यक्तिको दुःखनिवृत्तिको जुन उपाय छ, हजुरद्वारा उपेक्षित

दरिभिन्नखाग्रात् ॥१५॥ त्रस्तोऽस्म्यहं कृपणवत्सल दुःसहोग्रसंसारचक्रकदनाद्ग्रसतां प्रणीतः ॥ बद्धः स्वकर्मभिरुशत्तम तेऽङ्घ्रिमूलं प्रीतोऽपवर्गमरणं ह्वयसे कदा नु ॥ १६ ॥ यस्मात्प्रियाप्रियवियोगसयोगजन्मशोकाग्निना सकलयोनिषु दह्यमानः ॥ दुःखौषधं तदपि दुःखमतद्धियाऽहं भूमन्भ्रमामि वद मे तव दास्ययोगम् ॥ १७ ॥ सोऽहं प्रियस्य सुहृदः परदेवताया लीलाकथास्तव नृसिंह विरिञ्चगीताः ॥ अञ्जस्तितर्म्यनुगृणन्गुणविप्रमुक्तोदुर्गाणि ते पदयुगालयहंससंग· ॥१८॥ बालस्य नेह शरणं पितरौ नृसिंह नार्तस्य चागदमुदन्वति मज्जतो नौः ॥ तप्तस्य तत्प्रतिविधिर्य इहाञ्जसेष्टस्तावद्विभो तनुभृतां त्वदुपेक्षितानाम् ॥१९॥ यस्मिन् यतो यर्हि येन च यस्य यस्माद्यस्मै यथा यदुत यस्त्वपरः परो वा ॥ भावः करोति विकरोति पृथक्स्व-भावः संचोदितस्तदखिलं भवतः स्वरूपम् ॥ २० ॥ माया मनः सृजति कर्ममयं बलीयः कालेन चोचितगुणानुमतेन पुंसः ॥ छन्दोमयं यदजयार्पित-षोडशारं संसारचक्रमज कोऽतितरेत्त्वदन्यः ॥२१॥ स त्वं हि नित्यविजितात्मगुणः स्वधाम्ना कालो वशीकृतविसृज्यविसर्गशक्तिः ॥ चक्रे विसृष्टम-जयेश्वर षोडशारे निष्पीड्यमानमुपकर्ष विभो प्रपन्नम् ॥२२॥ दृष्टा मया दिवि विभोऽखिलधिष्ण्यपानामायुःश्रियो विभव इच्छति यान् जनोऽयम् ॥

त्यो उपाय एक क्षणको निम्ति नै हुन्छ। बालकको निम्ति माता-पिता, रोगीका लागि औषधि र समुद्रमा डुब्नलागेको प्राणीलाई डुङ्गा यी सबैं सहायक हुँदैनन्, किनकि यी द्वारा पनि कहिले काहीं विपरीत भएको देख्न पाइन्छ ॥१९॥ हे भगवन् ! भिन्न-भिन्न स्वभावका पुरातन वा अर्वाचीन कर्ता हजुर जसद्वारा प्रेरित भएर जसमा, जब, जसको जसकालागि, जसरी जे जति जहाँ उत्पन्न गर्नुहुन्छ अथवा बदल्नु हुन्छ, त्यो हजुरकै स्वरूप हो ॥ २० ॥ हे प्रभो ! जसका गुणमा कालद्वारा क्षोभ उत्पन्न भएको छ, त्यो माया हजुरको अंशभूत पुरुषद्वारा प्रेरित भएर मनःप्रधान लिङ्गदेहको रचना गर्दछ। त्यो बलवान कर्ममय वैदिक कर्मकलापमा आसक्त तथा अविद्याद्वारा अर्पित मन, दस इन्द्रिय र पञ्चतन्मात्रा यी सोह्र विकार-रूपी आरायुक्त संसारचक्र छ। हे अजन्मा प्रभो ! हजुरदेखि पृथक् रहने यस्तो कुन पुरुष छ, जो त्यो मनरूपी संसार-चक्रमा पारितर्न सक्ला ? ॥२१॥ हे ईश्वर ! आफ्नो चैतन्यशक्ति द्वाराबुद्धिका गुणमा विजय प्राप्त गर्ने र कालरूपले साध्य साधनलाई वशमा राख्ने हजुर म शरणागतलाई, जुन मायाद्वारा यो सोह्र आरी हुने संसार-चक्रमा उर्घ्यैं पेलिइरहेको छ, आफ्नू

नमीन तार्मिलिनौंस् ॥ २२ ॥ हे विभो ! जुन स्वर्गको लागि लोकहरू व्याकुल लाभिइरहन्छन्, त्यस लोकमा प्राप्तव्य लोकपालहरूको आयु, लक्ष्मी र विभूति मैले राम्ररी देखें। त्यो विभूति त पिताको क्रोधपूर्ण हाँसोले गरिएको भृकुटि विलासले नै नष्ट भइसकेको थियो र अब उनलाई हजुरले मारिदिनुभयो ॥ २३ ॥ अतः देहधारी प्राणीका यी भोगको परिणामको ज्ञाता म ब्रह्मासम्मको पनि आयु, वैभव र इन्द्रियसम्बन्धी भोगहरू माग्दिन, किनकि ती सबै भोग पराक्रमी कालरूपी परमेश्वर ग्रसित छ, यसै निम्ति मलाई हजुर आफ्ना दासहरूकहाँ लैजानुस् ॥२४॥ अहो ! केवल सुन्नमा सुखदायी मृगतृष्णारूपी विषय भोग छन् र सबै रोगको घर यो शरीर छ, तर मनुष्य यी सबैको असारता जानेर पनि ठूलो कष्टले प्राप्त हुने भोगरूपी मधुकणले भोगेच्छारूपी अग्निलाई शान्त गर्दै यसबाट कहिले पनि विरक्त हुँदैन ॥२५॥ हे ईश ! कहाँ यो तमःप्रधान दैत्यकुलमा रजोगुणले उत्पन्न म र कहाँ

ऽस्मत्पितुः कुपितहासविजृम्भितभ्रूविस्फूर्जितेन लुलिता स तु ते निरस्तः ॥ २३ ॥ तस्मादमूस्तनुभृतामहमाशिषो ज्ञ आयुः श्रियं विभवमैन्द्रियमाविरिञ्चात् ॥ नेच्छामि ते विलुलितानुरुविक्रमेण कालात्मनोपनय मां निभृत्यपार्श्वम् ॥ २४ ॥ कुत्राशिषः श्रुतिसुखा मृगतृष्णिरूपाः क्वेदं कलेवरमशेषरुजां विरोहः ॥ निर्विद्यते न तु जनो यदपीति विद्वान्कामानलं मधुलवैः शमयन्दुरापैः ॥ २५ ॥ काहं रजःप्रभव ईश तमोऽधिकेऽस्मिञ्जातः सुरेतरकुले क तवानुकम्पा ॥ न ब्रह्मणो न तु भवस्य न वै रमाया यन्मेऽर्पितः शिरसि पद्मकरःप्रसादः ॥२६॥ नैषा परावरमतिर्भवतो ननु स्याज्जन्तोर्यथात्मसुहृदो जगतस्तथापि ॥ संसेवया सुरतरोरिव ते प्रसादः सेवानुरूपमुदयो न परावरत्वम् ॥ २७ ॥ एवं जनं निपतितं प्रभवाहिकूपे कामाभिकाममनु यः प्रपतन्प्रसङ्गात् ॥ कृत्वाऽऽत्मसात्सुरर्षिणा भगवन्गृहीतः सोऽहं कथं नु विसृजे तव भृत्यसेवाम् ॥२८॥ मत्प्राणरक्षणमनन्त पितुर्वधश्च मन्ये स्व-

हजुरको अनुकम्पा ! अहो ! जो सकल सन्तापहारी करकमल हजुरले ब्रह्मा, शिव र लक्ष्मीको शिरमा पनि कहिल्यै राख्नु भएन, त्यही हात आज मेरो कपालमा राख्नुभयो ॥ २६ ॥ संसारी जीवहरू झैं हजुरको उत्तम-अधम बुद्धि छैन, हजुर जगत्का आत्मा र सुहृद् हुनुहुन्छ। तैपनि कल्पवृक्ष जस्तै हजुरको प्रसाद पनि ठूलो सेवाले प्राप्त हुन्छ। हजुरको सेवाले नै जीवमा धर्मादिभावको उदय हुन्छ। यहाँ जातिगत उच्चता नीचता कारण होइन ॥२७॥ हे नाथ ! कालरूपी सर्पयुक्त संसार-कूपमा परेका अन्य विषयाभिलाषीको पछि-पछि म पनि संग दोषवश गिरिरहेको थिएँ। मेरा ※गुरुदेव देवर्षि नारदले मलाई अँगाले र उनैको दयाले हजुरलाई पाएँ। अब म हजुरका दासहरूको सेवा कसरी त्याग्नसक्छु ? ॥ २८ ॥ हे अनन्त !

---

※ उदाहरण ( राजाले गुरु माने )—चोटा राजाको राम्रो बगैंचा थियो। त्यसमा भरिभरिका आँप र अन्य वृक्षहरू लगाइएका थिए। एक दिन चोटी स्वामिनी त्यस बगैंचामा आँपका टिकुला देखेर घर गई र आफ्नो पतिलाई भनी— टिकुला ल्याउन।' त्यस स्वामीसित मन्त्र-विद्या थियो। त्यस मन्त्रको बलले हाँगा तल झुकेर त्यसलाई टिकुला दिन्थ्यो र आफैं फेरि माथि जान्थ्यो। यसरी त्यसले धेरै टिकुला लिएर आयो। बिहान राजाले आँपका टिकुला चोरिए भन्ने थाहा पायो। राजाले राजपुत्रलाई चोर पक्रने काम सुम्पियो। राजकुमारले निकै परिश्रम गरेर चोटा स्वामीलाई समात्यो र राजाको सामुन्ने हाजिर गरायो। अनि राजाले सोधे—'तैँले यस्ता आँप कसरी लोटिस ?' स्वामीले उत्तर दियो—'मन्त्रबलले।' राजाले फेरि सोधे—'तैँ त ठूलो चोर रहिछस्। लौ, यसलाई दण्ड दिनुपर्दछ।' त्यति सुनेर राजपुत्रले भन्यो—'हे पिता ! हजुरको कथन उचित हो; तर यो सित त्यो विद्या सामिलिनु पर्दछ। अनि जे मनुपर्ने हो, गर्ने होला।' अनि राजा उच्चासनमा बसे र स्वामी तल बसेर राजालाई त्यो मन्त्र सिकाउन लाग्यो। तर विद्या आउन सकेन। अनि राजपुत्रले भन्यो—'हे पिता ! विद्या त्यसरी आउन्न। हजुर तल बस्नुहवस् र स्वामी उच्चासनमा बसोस्।' राजाले त्यसै गरे। अनि राजालाई विद्या आयो। तर स्वामी राजाको विद्यागुरु भइसकेको थियो। अतः राजाले स्वामीलाई दण्ड दिएनन् र त्यसै छाडिदिए।

जब मेरो पिताले हातमा खड्ग लिएर भने—'म बाहेक पनि यदि कोही ईश्वर छ भने त्यो आएर तेरो रक्षा गरोस्—म अहिल्यै तेरो घाँटी काट्दछु ।' अनि हजुरले पुन मेरो गुणको रक्षा गरेर मेरा पिताको बध गर्नुभयो, त्यो प्रिय सेवक देवर्षि नारदको वचन सत्य पार्नका लागि नै उनलाई मार्नुभयो ॥२९॥ समस्त संसारमा हजुर एक मात्र हुनुहुन्छ, किनकि यसको आदि, अन्त्य र मध्यमा हजुरनै आफ्नी मायाले गुणको परिणामस्वरूप संसार रचेर यसैमा अनुप्रविष्ट भएर गुणको व्यापारले जगत्‌का स्रष्टा, रक्षक र संहारक आदि रूपले सेक्रक जस्तै देखिनुहुन्छ ॥३०॥ हे ईश ! यो सत् र असत्‌रूपी जगत् हजुरनै हुनुहुन्छ, योदेखि भिन्न परमपुरुष पनि हजुरै हुनुहुन्छ । अतः 'यो मेरो, यो बिरानो' यस्तो भेदबुद्धि व्यर्थ हो, किनकि जसको जोसित जन्म, स्थिति, लय र प्रकाश हुन्छ, त्यो तद्रूप नै हुन्छ । अतः जस्तै कार्यरूप वृक्ष र कारणरूप बीज दुवै नै गन्ध-तन्मात्रास्वरूप छन् । त्यस्तै नै यो संसार हजुरको नै स्वरूप हो ॥३१॥ हे प्रभो ! अन्त्यमा हजुरनै सारा प्रपञ्च आफूमै समेटेर आत्मसुखको अनुभव गर्दै निरीहभावले प्रलयकालीन अगाध जलमा शयन गर्नुहुन्छ । अनि योग द्वारा

भृत्यऋषिवाक्यमृतं विधातुम् ॥ खड्गं प्रगृह्य यदवोचदसद्विधित्सुस्त्वामीश्वरो मदपरोऽवतु कं हरामि ॥ २९ ॥ एकस्त्वमेव जगदेतदमुष्य यत्त्वमाद्य-
न्तयोः पृथगवस्यमि मध्यतश्च ॥ सृष्ट्वा गुणव्यतिकरं निजमाययेदं नानेव तैरवसितस्तदनुप्रविष्टः ॥ ३० ॥ त्वं वा इदं सदसदीश भवांस्ततोऽन्यो माया
यदात्मपरबुद्धिरियं ह्यपार्था ॥ यद्यस्य जन्म निधनं स्थितिरीक्षणं च तद्वै तदेव वसुकालवदष्टितर्वोः ॥ ३१ ॥ न्यस्येदमात्मनि जगद्विलयाम्बुमध्ये
शेषेऽऽत्मना निजसुखानुभवो निरीहः ॥ योगेन मीलितदृगात्मनिपीतनिद्रस्तुर्ये स्थिते न तु तमो न गुणांश्च युंक्षे ॥ ३२ ॥ तस्यैव ते वपुरिदं नि-
जकालशक्त्या सञ्चोदितप्रकृतिधर्मण आत्मगूढम् ॥ अम्भस्यनन्तशयनाद्विरमत्समाधेर्नाभेरभूत्स्वकणिकावटवन्महाब्जम् ॥ ३३ ॥ तत्सम्भवः कविरतो-
ऽन्यदपश्यमानस्त्वां बीजमात्मनि ततं स्वबहिर्विचिन्त्य ॥ नाविन्ददब्दशतमप्सु निमज्जमानो जातेऽङ्कुरे कथमुहोपलभेत बीजम् ॥३४॥ स त्वात्म-
योनिरतिविस्मित आस्थितोऽब्जं कालेन तीव्रतपसा परिशुद्धभावः ॥ त्वामात्मनीश भुवि गन्धमिवातिसूक्ष्मं भूतेन्द्रियाशयमये विततं ददर्श ॥३५॥
एवं सहस्रवदनांघ्रिशिरःकरोरुनासास्यकर्णनयनाभरणायुधाढ्यम् ॥ मायामयं सदुपलक्षितसन्निवेशं दृष्ट्वा महापुरुषमाप मुदं विरिञ्चः ॥ ३६ ॥ तस्मै

बाह्य दृष्टि चिम्लेर आत्मस्वरूपको प्रकाशले निद्रालाई पनि विलीन गरेर हजुर तुरीय अवस्थामा स्थित रहनुहुन्छ । त्यस बेला हजुर न तमोयुक्त, न विषयहरूका भोक्ता बन्नुहुन्छ ॥३२॥ यो ब्रह्माण्ड कालशक्तिले प्रकृतिका सत्वादि गुणलाई प्रेरित पार्ने हजुर परमेश्वरको नै शरीर हो । पहिले यो हजुरमै निहित थियो । जब प्रलयकालको जलमा शेषशय्यामा शयन गर्ने हजुरले योगनिद्रारूपिणी समाधि त्यागी पछि वटबीजबाट उत्पन्न महावृक्ष झैं हजुरको नाभिबाट अतिविशाल यो ब्रह्माण्ड-कमल प्रकट भयो ॥३३॥ त्यसबाट उत्पन्न सूक्ष्मदर्शी ब्रह्मा-ले जब कमल बाहेक अरु केही देखेनन् तब आफूमा व्याप्त बीजरूपी हजुरलाई बाहिर ठानेर ती सय वर्षसम्म त्यही जलभित्र खोज्दै रहे, तर तिनलाई केही प्राप्त भएन । त्यो ठीक नै छ । किनकि अंकुर उत्पन्न भएपछि बीजलाई कुनै पुरुष कसरी भिन्नरूपमा देख्न सक्छ ? ॥३४॥ अतएव आत्मयोनि ब्रह्मा छक्क परेर त्यही कमलमाथि गएर बसे । हे ईश ! धेरै समय सम्म कठोर तपस्याले अन्तःकरण शुद्ध भएपछि उनलाई पृथ्वीमा व्याप्त अतिशय सूक्ष्म गन्ध तन्मात्रा झैं भूत, इन्द्रिय तथा अन्तःकारणरूपी शरीरमा व्याप्त हजुरको सूक्ष्म स्वरूपको

दर्शन पाए ॥३५॥ हजारौं मुख, चरण, शिर, हात, उरू, नासिका, मुख, कान, नयन, आभूषण तथा आयुधयुक्त चौध्न लोकरूपी अवयवले सम्पन्न हजुर मायामय विराट् पुरुषको दर्शन पाएर ब्रह्माजीलाई ठूलो आनन्द प्राप्तभयो ॥३६॥ त्यसपछि हजुरले हयग्रीवरूपले अतिशय प्रबल तथा वेदद्रोही रजोगुण-तमोगुणरूपी मधु र कैटभ दैत्यलाई मारेर ब्रह्माजीलाई सत्वगुणरूपी चारै वेद अर्पण गरिदिनु भयो । यसैले सत्वगुण हजुरको प्रियतम रूप कहिन्छ ॥३७। हे परमपुरुष ! हजुर मनुष्य, तिर्यक्, ऋषि, देवता र मत्स्यादि अवतार लिएर सबै लोकको पालन तथा जगद्विद्रोहीहरूको विनाश गर्नुहुन्छ । ती अवतारहरू द्वारा हजुर प्रत्येक युगका धर्मको रक्षा गर्नुहुन्छ, तर कलियुगमा अवतार नलिएर गुप्त नै रहनुहुन्छ।यसैले हजुर 'त्रियुग' नामले पनि विख्यात हुनुहुन्छ ॥३८॥ हे नाथ ! मेरो मन सान्है दोषदूषित, कामातुर, हर्ष, शोक, भय तथा विविध एषणाहरूले व्याकुल छ । हजुरका कथाहरूमा यसको प्रीति छैन । यस्तो कलुषित चित्त हुने म दीन कसरी हजुरका स्वरूपको ध्यान गरूँ ? ॥३९॥ हे अच्युत ! जस्तै धेरै सौता स्वामीलाई आफू-आफूतिर तान्दछन्, त्यस्तै नैमेरो अतृप्तरसना एक-

भवान्हयशिरस्तनुवं च बिभ्रद्वेदद्रुहावतिबलौ मधुकैटभाख्यौ ॥ हत्वाऽनयच्छ्रुतिगणांस्तु रजस्तमश्च सत्त्वं तव प्रियतमां तनुमामनन्ति ॥ ३७ ॥ इत्थं नृतिर्यगृषिदेवझषावतारैर्लोकान् विभावयसि हंसि जगत्प्रतीपान् ॥ धर्मं महापुरुष पासि युगानुवृत्तं छन्नः कलौ यदभवस्त्रियुगोऽथ स त्वम् ॥ ३८ ॥ नैतन्मनस्तव कथासु विकुण्ठनाथ सम्प्रीयते दुरितदुष्टमसाधु तीव्रम् ॥ कामातुरं हर्षशोकभयैषणार्तं तस्मिन्कथं तव गतिं विमृशामि दीनः ॥ ३९ ॥ जिह्वैकतोऽच्युत विकर्षति माऽवितृप्ता शिश्नोऽन्यतस्त्वगुदरं श्रवणं कुतश्चित् ॥ घ्राणोऽन्यतश्चपलदृक् क च कर्मशक्तिर्बह्व्यःसपत्न्य इव गेहपतिं लुनन्ति ॥४०॥ एव स्वकर्मपतितं भववैतरण्यामन्योन्यजन्ममरणाशन भीतभीतम् ॥ पश्यञ्जनं स्वपरविग्रहवैरमैत्रं हन्तेति पारचर पीपृहि मूढमद्य ॥४१॥ को न्वत्र तेऽखिलगुरो भगवन्प्रयास उत्तारणेऽस्य भवसम्भवलोपहेतोः ॥ मूढेषु वै महदनुग्रह आर्तबन्धो किं तेन ते प्रियजनाननुसेवतां नः ॥ ४२ ॥ नैवोद्विजे परदुरत्ययवैतरण्यास्त्वद्वीर्यगायनमहामृतमग्नचित्तः ॥ शोचे ततो विमुखचेतस इन्द्रियार्थं मायासुखाय भरमुद्वहतो विमूढान् ॥ ४३ ॥ प्रायेण देव मुनयः स्वविमुक्तिकामा मौनं चरन्ति विजने न परार्थनिष्ठाः ॥ नैतान्विहाय कृपणान्विमुमुक्षु एको नान्यं त्वदस्य शरणं भ्रमतोऽनुपश्ये ॥ ४४ ॥

तिर, उपस्थ अर्कोतिर, त्वचा, उदर र कान तेस्रोतिर, घ्राण तथा चञ्चल नेत्र कुनै अर्कैतिर, कर्मन्द्रियहरू कुनै अर्कैतिर तानिरहेका छन् ॥४०॥ हे नित्यमुक्त ! संसाररूपिणी वैतरणी नदीमा आफ्ना कर्मवश गाडिएर परस्पर प्राप्तव्य जन्म मरण एवं खान-पानादिले अत्यन्त भयभीत एवं आफ्नो-बिरानी पुरुषषित मित्रता र द्वेष गर्ने मलाई हजुर यो वैतरणीबाट पारी तारेर प्राणीवर्गको रक्षा गर्नुहवस् ॥४१॥ हे अखिलगुरो ! हजुर जगत्को उत्पत्ति, स्थिति तथा पालनकर्ता हुनुहुन्छ, हे भगवन् ! यसबाट पारी तार्न के हजुरलाई कुनै प्रयास गर्नु पर्नेछ ? हे दीनबन्धो ! हजुर जस्ता महापुरुषको दया त मूढमाथि नै हुन पर्ने हो ॥४२॥ हे प्रभो ! जसलाई पारी तार्ने अन्यान्यलाई कठिन छ, त्यो वैतरणीको मलाई अलिकति पनि भय रहेन, किनकि मेरो चित्त त हजुरको गुण-गानरूपी परामृत पिएर आनन्दमग्न छ । मलाई केवल उनै मूढको चिन्ता लागिरहन्छ, जो भगवान्बाट विमुख भएर इन्द्रियका विषयले प्राप्तव्य मायिक सुखको निम्ति कुटुम्ब-पोषणको भारी बोक्तछन् ॥४३॥ हे देव, सबै मुनिजन प्रायः आफ्नै मुक्तिको निम्ति एकान्तमा बसेर मौनव्रत लिन्छन्, ती परोपकारमा

तत्पर रहन्नन्, तर मलाई यी दुवैलाई त्यागेर एक्लै मुक्त हुने इच्छा छैन। संसारमा अलमलिनेहरूको उद्धार गर्न हजुरबाहेक कोही देखिन्नन् ॥४४॥ हे प्रभो ! गृहस्थहरूको मैथुनादि सुख चिलाउने दाद जस्तै छन् । चिलाउँदा सँचो लाग्दछ, फेरि त्यसले अधिकाधिक कष्ट नै हुन्छ । त्यस्तै यी भोग पनि छन्। तर अनेक कष्ट भोगेर पनि यी दीनजन कहिल्यै पनि यिनीबाट तृप्त हुन्नन्, किन्तु धीर-वीर पुरुष चिलाउनेको समान नै कामादि वेगलाई अनायास सहन्छन् ॥४५॥ हे अन्तर्यामिन् ! मौनव्रत, शास्त्र-श्रवण, तप वेदाध्ययन, स्वधर्मपालन, शास्त्रहरूको व्याख्या, एकान्त-सेवन, जप तथा समाधि–यी मोक्षका दस विख्यात साधन छन् । परन्तु यी पनि प्रायः अजितेन्द्रिय पुरुषका आजीविकाको साधन बन्दछन् । दाम्भिकका लागि त यी कहिले जीविकाका साधन हुन्छन् र कहिले तिनको भेद खुलेपछि नहुन पनि सक्दछ॥४६॥वेदले बीज र अंकुरजस्तै कार्य र कारणस्वरूप हजुरका दुइ स्वरूप भनेका छन् वस्तुतः हजुर रूपरहित हुनुहुन्छ, किन्तु रूप बाहेक हजुरका ज्ञानको अर्को साधन पनि त देखिन्न । योगीजन काठमा लुकेको अग्नि झैं भक्तियोगद्वारा कार्य-कारणयी दुवैमा हजुरलाई देख्दछन् ।

यन्मैथुनादि गृहमेधिसुखं हि तुच्छं कण्डूयनेन करयोरिव दुःखदुःखम् ॥ तृप्यन्ति नेह कृपणा बहुदुःखभाजः कण्डूतिवन्मनसिजं विषहेत धीरः ॥४५॥ मौनव्रतश्रुततपोऽध्ययनस्वधर्मव्याख्यारहोजपसमाधय आपवर्ग्याः ॥ प्रायः परं पुरुष ते त्वजितेन्द्रियाणां वार्ता भवन्त्युत न वाऽत्र तु दाम्भिकानाम् ॥ ४६ ॥ रूपे इमे सदसती तव वेदसृष्टे बीजांकुराविव न चान्यदरूपकस्य ॥ युक्ताः समक्षमुभयत्र विचिन्वते त्वां योगेन वह्निमिव दारुषु नान्यतः स्यात् ॥४७॥ त्वं वायुरग्निरवनिर्वियदम्बुमात्राः प्राणेन्द्रियाणि हृदयं चिदनुग्रहश्च ॥ सर्वं त्वमेव सगुणो विगुणश्च भूमन् नान्यत्त्वदस्त्यपि मनोवचसा निरुक्तम् ॥ ४८ ॥ नैते गुणा न गुणिनो महदादयो ये सर्वे मनःप्रभृतयः सहदेवमर्त्याः ॥ आद्यन्तवन्त उरुगाय विदन्ति हि त्वामेवं विमृश्य सुधियो विरमन्ति शब्दात् ॥४९॥ तत्तेऽर्हत्तम नमः स्तुतिकर्मपूजाः कर्म स्मृतिश्चरणयोः श्रवणं कथायाम् ॥ संसेवया त्वयि विनेति षडङ्गया किं भक्तिं जनः परमहंसगतौ लभेत् ॥५०॥ नारद उवाच ॥ एतावद्वर्णितगुणो भक्त्या भक्तेन निर्गुणः ॥ प्रह्लादं प्रणतं प्रीतो यतमन्युरभाषत ॥५१॥ श्रीभगवानुवाच ॥ प्रह्लाद भद्र भद्रं ते प्रीतोऽहं तेऽसुरोत्तम ॥ वरं वृणीष्वाभिमतं कामपूरोऽस्म्यहं नृणाम् ॥ ५२ ॥ मामप्रीणत आयुष्मन्दर्शनं दुर्लभं

किनकि हजुरभन्दा पृथक् यिनको अस्तित्व नै छैन ॥४७॥ हे भूमन् ! वायु, अग्नि, पृथिवी, आकाश, जल, पञ्चतन्मात्रा, प्राण, इन्द्रिय,मन, चित्त, अहङ्कारमय जगत् र सगुण निर्गुण यी सबै हजुर नै हुनुहुन्छ र कतिसम्म भनौं, मन वा वाणीका विषयस्वरूप जति पदार्थ छन्, तीबाट केही पनि हजुरदेखि पृथक् छैनन् ॥४८॥ यी सत्त्वादि गुण, गुणहरूका परिणामस्वरूप महत्तत्त्वादि, देवता र मनुष्यसमेत मन-बुद्धि आदि कोही पनि हजुरलाई जान्न सक्तैनन्, किनकि यी सबै आदि र अन्तयुक्त छन् । किन्तु हजुरको सच्चा स्वरूप जानिसकेर पण्डितहरू शास्त्राध्ययनादिबाट पृथक् भइदिने गर्दछन् ॥४९॥ हे पूज्यतम ! प्रणाम, स्तुति, सर्वकर्मार्पण, उपासना, चरणको ध्यान र हजुरका कथाहरूको श्रवण–यी छ अंगयुक्त हजुरको सेवा बिना केवल परमहंसमाई नै प्राप्तव्य हजुरमा मनुष्यको भक्ति कसरी हुन सक्छ ? ॥ ५० ॥ नारदजी भन्दछन्–हे राजन् ! परम भक्त प्रह्लादको भक्तिपूर्वक भगवत्सम्बन्धी गुणको कीर्तन गरिएपछि नृसिंह भगवान्‌को क्रोध शान्त भयो र ती प्रसन्न भएर अति विनीत प्रह्लादजीसित भन्दछन् ॥५१॥ श्रीभगवान्‌ले भन्नु भयो–हे भद्र प्रह्लाद ! तिम्रो कल्याण होस् ।

हे असुरश्रेष्ठ ! म तिमीसित प्रसन्न छु । तिमी इच्छित वर माग । म भक्तका सबै कामना पूर्ण पार्दछु ॥ ५२ ॥ हे आयुष्मन् ! जो प्राणी मलाई प्रसन्न पार्दैन, त्यसलाई मेरो दर्शन पाउनु कठिन छ । तर मेरो दर्शन पाइसकेपछि पछितो पर्दैन ॥५३॥ म सबैको सबै मनोरथ पूर्ण गर्दछु । अतः जितेन्द्रिय र आत्म कल्याणेच्छुक समस्त भाग्यवान् साधु सबै प्रकारले मलाई प्रसन्न पार्ने उपाय गर्दछन् ॥५४॥ सबैलाई लोभमा पारिदिने अनेक वरदानको लाम देखाए पनि असुरोत्तम प्रह्लादले ती प्रलोभनलाई रोजेनन् किनकि ती त भगवान्‌का अनन्य भक्त थिए ॥४५॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥ ९ ॥ ( नृसिंह भगवान अन्तर्धान हुनु र प्रह्लादको राज्याभिषेक, त्रिपुरदहनको कथा )—श्री नारदले भने—हे राजा युधिष्ठिर ! सबै वरलाई भक्तियोगमा बाधक जानेर प्रह्लादले मुसुक्क हाँस्तै भगवान्‌सित भने ॥ १ ॥ प्रह्लाद भन्दछन्–हे प्रभो ! म त स्वभावले नै भोगासक्त जीव हुँ । मलाई यस्ता वरहरू द्वारा हजुर अझ बढी प्रलोभनमा नपार्नुहवस् । म त ती भोगहरूको आसक्तिले डराई र ती देखि विमुख भएर मोक्ष-

हि मे ॥ न दृष्ट्वा मां पुनर्जन्तुरात्मानं तप्तुमर्हति ॥५३॥ प्रीणन्ति ह्यथ मां धीराः सर्वभावेन साधवः ॥ श्रेयस्कामा महाभागाः सर्वासामाशिषां पतिम् ॥ ५४ ॥ एवं प्रलोभ्यमानोऽपि वरैर्लोकप्रलोभनैः ॥ एकान्तित्वाद्भगवति नैच्छत्तानसुरोत्तमः ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे प्रह्लादचरित्ते भगवत्स्तवो नाम नवमोऽध्यायः ॥ ९ ॥ नारद उवाच ॥ भक्तियोगस्य तत्सर्वमन्तरायतयाऽर्भकः ॥ मन्यमानो हृषीकेशं स्मयमान उवाच ह ॥ १ ॥ प्रह्लाद उवाच ॥ मा मां प्रलोभयोत्पत्त्याऽऽसक्तं कामेषु तैर्वरैः ॥ तत्सङ्गभीतो निर्विण्णो मुमुक्षुस्त्वामुपाश्रितः ॥ २ ॥ भृत्यलक्षणजिज्ञासुर्भक्त कामेष्वचोदयत् ॥ भवान्संसारबीजेषु हृदयग्रन्थिषु प्रभो ॥ ३ ॥ नान्यथा तेऽखिलगुरो घटेत करुणात्मनः ॥ यस्त आशिष आशास्ते न स भृत्यः स वै वणिक् ॥ ४ ॥ आशासानो न वै भृत्यः स्वामिन्याशिष आत्मनः ॥ न स्वामी भृत्यतः स्वाम्यमिच्छन् यो राति चाशिषः ॥ ५ ॥ अहं त्वकामस्त्वद्भक्तस्त्वं च स्वाम्यनपाश्रयः ॥ नान्यथेहावयोरर्थो राजसेवकयोरिव ॥ ६ ॥ यदि रासीश मे कामान्वराँस्त्वं वरदर्षभ ॥ कामानां हृद्यसंरोहं भवतस्तु वृणे वरम् ॥ ७ ॥ इन्द्रियाणि मनः प्राण आत्मा धर्मो धृतिर्मतिः ॥ ह्रीः श्रीस्तेजः स्मृतिः सत्यं यस्य नश्यति जन्मना ॥ ८ ॥ विमुंचति यदा कामान्मानवो मनसि स्थितान् ॥ तर्ह्येव पुण्डरीकाक्ष भगवत्त्वाय कल्पते ॥ ९ ॥ नमो भगवते तुभ्यं पुरुषाय महात्मने ॥ हरयेऽद्भुत-

प्राप्तिको इच्छाले हजुरकहाँ आएको हुँ ॥ २ ॥ हे प्रभो ! हजुरले आफ्नो यस दासको परीक्षा गर्नको निम्ति नै हृदयको ग्रन्थि र संसारका बीजरूपी सांसारिक भोगतिर यसलाई खिच्याएको हो ॥ ३ ॥ हे अखिलगुरो ! यो बाहेक अरु कुनै प्रकारले हजुर कल्याणमयको निम्ति यस्तो गर्नु सम्भव थिएन । हे नाथ ! जुन सेवक हजुरसित कुनै कामना पूर्ण गराउन इच्छा गर्छ भने त्यो सेवक होइन, व्यापारी हो ॥ ४ ॥ स्वामीसित कामना पूर्ति गराउने सेवक हुन सक्तैन र स्वामी बनिरहने इच्छुक प्रभु तथा सेवकलाई धन वा भोगादि दिने स्वामी हुन सक्तैन ॥ ५ ॥ हे प्रभो ! म त हजुरको निष्काम भक्त हुँ र हजुर मेरा निरपेक्ष स्वामी हुनुहुन्छ । स्वामी र सेवक बाहेक हजुर र मेरो कुनै अन्य नाता हुन सक्तैन ॥६॥ हे वरदाताहरूमा श्रेष्ठ ! यदि हजुरलाई वर दिन खोज्नुहुन्छ भने म यही वर माग्नेछु कि मेरो हृदयमा कहिल्यै कामनाहरूका अंकुर नउम्राउन् ॥७॥ किनकि यो अंकुर टुसाउँदै, इन्द्रिय, मन

676

प्राण, देह, धर्म, धैर्य, बुद्धि, लज्जा, श्री, तेज, स्मृति र सत्य–यी सबै नष्ट हुन्छन् ॥ ८ ॥ हे कमलनयन ! जब मनुष्य कामनाहरू छाडिदिन्छ, तब भगवद्भक्ति प्राप्तिको अधिकारी बन्दछ ॥९॥ हे नाथ ! सबैका अन्तर्यामी, महात्मा तथा अद्भुत नृसिंहरूपधारी हजुर परब्रह्म परमात्मा श्रीविष्णु भगवानूलाई नमस्कार ॥१०॥ नृसिंहदेव भन्दछन् हे प्रह्लाद ! तिमीजस्ता मेरा जो अनन्यभक्त छन्, ती इहलौकिक र पारलौकिक कुनै पनि भोगको इच्छा गर्दैनन्। तैपनि मेरो आज्ञानुसार यो मन्वन्तरको समाप्तिपर्यन्त तिमी यस लोकमा दैत्येश्वरका सारा भोगको उपभोग गर ॥ ११ ॥ सबै प्राणीमा विराजमान म यज्ञेश्वरलाई आफ्नो हृदयमा धारण गरेर मेरा प्रियकथा सुन्दै र सबै कर्म मलाई अर्पण गर्दै तिमी भक्तियोगद्वारा मेरो आराधना गर्दै रहे ॥ १२ ॥ सुखभोग जनित पुण्यद्वारा पाप त्यागेर कालक्रमले जब तिम्रो शरीर छुट्ला, तब तिमी देवलोकमा गायमान आफ्ना पवित्र कीर्ति संसारमा फिंजाएर तथा सबै कर्मबन्धनबाट मुक्त भएर अन्त्यमा मसित आएर मिल्ने छौ ॥१३॥ जो प्राणी मेरो तिम्रो स्मरण गर्दै तिमी द्वारा कथित यस स्तोत्रको कीर्तन गर्नेछ, त्यो पनि सबै

सिंहाय ब्रह्मणे परमात्मने ॥ १० ॥ नृसिंह उवाच ॥ नैकान्तिनो मे मयि जात्विहाशिष आशासतेऽमुत्र च ये भवद्विधाः ॥ अथापि मन्वन्तरमेतदत्र दैत्येश्वराणामनुभुङ्क्ष्व भोगान् ॥ ११ ॥ कथा मदीया जुषमाणः प्रियास्त्वमावेश्य मामात्मनि सन्तमेकम् ॥ सर्वेषु भूतेष्वधियज्ञमीशं यजस्व योगेन च कर्म हिन्वन् ॥ १२ ॥ भोगेन पुण्यं कुशलेन पापं कलेवरं कालजवेन हित्वा ॥ कीर्तिं विशुद्धां सुरलोकगीतां विताय मामेष्यसि मुक्तबन्धः ॥ १३ ॥ य एतत्कीर्तयेन्मह्यं त्वया गीतमिदं नरः ॥ त्वां च मां च स्मरन्काले कर्मबन्धात्प्रमुच्यते ॥ १४ ॥ प्रह्लाद उवाच ॥ वरं वरय एतत्ते वरदेशान्महेश्वर ॥ यदनिन्दत्पिता मे त्वामविद्वांस्तेज ऐश्वरम् ॥ १५ ॥ विद्धामर्षाशयः साक्षात्सर्वलोकगुरुं प्रभुम् ॥ भ्रातृहेति मृषादृष्टिस्त्वद्भक्ते मयि चाघवान् ॥१६॥ तस्मात्पिता मे पूयेत दुरन्ताद्दुस्तरादघात् ॥ पूतस्तेऽपांगसंदृष्टस्तदा कृपणवत्सल ॥१७॥ श्रीभगवानुवाच ॥ त्रिःसप्तभिः पिता पूतः पितृभिः सह तेऽनघ ॥ यत्साधोऽस्य गृहे जातो भगान् वै कुलपावनः ॥१८॥ यत्र यत्र च मद्भक्ताः प्रशांताः समदर्शिनः ॥ साधवः समुदाचारास्ते पूयन्त्यपि कीकटाः ॥ १९ ॥ सर्वात्मना न हिंसन्ति भूतग्रामेषु किंचन ॥ उच्चावचेषु दैत्येन्द्रमद्भावेन गतस्पृहाः ॥ २० ॥ भवन्ति पुरुषा लोके मद्भक्तास्त्वामनुव्रताः ॥ भवान्मे खलु भक्तानां सर्वेषां प्रतिरूपधृक् ॥ २१ ॥ कुरु त्वं प्रेतकार्याणि पितुः पूतस्य सर्वशः ॥ मदंगस्पर्शनेनांग लोकान्

कर्मबन्धनबाट छुट्ने छ ॥१४॥ प्रह्लादले भने–हे महेश्वर ! हजुर सबै वरदाताहरूका स्वामी हुनाले म यौटा वर अरू माग्दछु। त्यो के भने–मेरा पिताले हजुरको ईश्वरीय तेज जान्न नसकेर 'यो मेरो भाइको घातक हो' यो उल्टो दृष्टि राखेर असहिष्णु भई हजुर सर्वेश्वरको अनेकशः निन्दा र हजुरको भक्तसित द्रोह गरे। यो दुरन्त दुस्तर दोषले मेरा पिता मुक्त होउन्। हे दीनवत्सल ! हुनत जब तीमाथि हजुरको दृष्टिपात भयो, त्यसै बेलादेखि ती शुद्ध भए ॥१५-१७॥ भगवानूले भन्नुभयो–हे अनघ ! हे साध्वे, तिम्रा पिता त आफ्ना एकाइस कुलका पितृसमेत पवित्र भइसके, किनकि उनीकहाँ तिमी जस्ता कुल पावन पुत्र जन्म्यौ ॥ १८ ॥ जहाँ मेरा भक्त एवं शान्तचित्त, समदर्शी र सदाचारी साधुजन रहन्छन्। अनि मगध जस्ता देश पनि पवित्र हुन्छन् ॥ १९ ॥ हे दैत्यपते ! जसलाई कुनै कामना रहन्न, ती मेरा भक्त सबैमा आत्मदृष्टि राख्दै साना-ठूला सबै प्राणीलाई कुनै पनि कष्ट दिंदैनन्।

677

॥२०॥ संसारमा जो तिम्रो पथमा हिंड्नन्, ती पनि मेरा भक्त हुनेछन् । तिमी त मेरा भक्तहरूमा आदर्श भक्त हौ ॥२१॥ हे वत्स ! मेरो अङ्गको स्पर्श हुनासाथ तिम्रो पिता पवित्र भइसकेका थिए, तैपनि तिमी गएर तिनको और्ध्व दैहिक कर्म गर । तिमी झैं सुपुत्रको पिता हुनाले अवश्य उत्तम लोक पाउने छन् ॥२२॥ हे तात ! तिमी पिताको राजसिंहासनमा बस । सबै वेदवादी मुनिहरूको आज्ञा पालन गर र मतिर मन लगाई मेरै सेवामा तत्पर रहेर तिमी सबै कार्य सम्पन्न गर्दै *समयको सदुपयोग गर ॥२३॥ नारदजीले भने–हे युधिष्ठिर ! भगवान्को आज्ञानुसार प्रह्लादले आफ्ना दिवङ्गत पिताको सबै और्ध्वदैहिक क्रिया सम्पन्न गरे । त्यसपछि ब्रह्माजीले तिनको राज्याभिषेक गरे ॥२४॥

यास्यसि सुप्रजाः ॥ २२ ॥ पित्र्यं च स्थानमातिष्ठ यथोक्तं ब्रह्मवादिभिः ॥ मय्यावेश्य मनस्तात कुरु कर्माणि मत्परः ॥ २३ ॥ नारद उवाच ॥
प्रह्लादोऽपि तथा चक्रे पितुर्यत्सांपरायिकम् ॥ यथाऽऽह भगवान् राजन्नभिषिक्तो द्विजोत्तमैः ॥ २४ ॥ प्रसादसुमुखं दृष्ट्वा ब्रह्मा नरहरिं हरिम् ॥
स्तुत्वा वाग्भिः पवित्राभिः प्राह देवादिभिर्वृतः ॥ २५ ॥ ब्रह्मोवाच ॥ देवदेवाखिलाध्यक्ष भूतभावन पूर्वज ॥ दिष्ट्या ते निहतः पापो लोकसंता-
पनोऽसुरः ॥ २६ ॥ योऽसौ लब्धवरो मत्तो न वध्यो मम सृष्टिभिः ॥ तपोयोगबलोन्नद्धः समस्तनिगमानहन् ॥ २७ ॥ दिष्ट्याऽस्य तनयः साधुर्महा-

ब्रह्माजीले नृसिंह भगवान्लाई प्रसन्न र सौम्यरूप देखेर पवित्र वचन द्वारा उनको स्तुति गर्दै भने ॥२५॥ ब्रह्माजी भन्दछन्–हे देवदेव ! हे अखिलाध्यक्ष ! हे भूतभावन ! हे पूर्वज ! सबै लोकलाई सन्तप्त पार्ने यो दुष्टलाई मारिदिनु भयो, हाम्रो सौभाग्यले यो ठूलो कुरा भयो ॥२६॥ मबाट वर पाएर यो सार्है उद्धत भएको थियो । मैले रचेको संसारका कुनै पनि प्राणीद्वारा यसको मृत्यु सम्भव थिएन । यसैले आफ्नो तप, योग र बलले उन्मत्त भएर यसले सबै वेदविधिको उन्मूलन गरिदियो ॥२७॥ हजुरले यसका परम भगवद्भक्त तथा

---

* उदाहरण ( समयको सदुपयोग )—कुनै नदीको किनारमा थोरै कृषकको खेत थियो । जब खेतको अन्न पाक्न लाग्यो तब किसान मचान बनाएर खेतको रक्षा गर्नलाग्यो । एक दिन त्यो नदी तटमा शौच गर्न गयो त्यहाँ उसले मणिले भरिएको थोरा हाँडी पायो । किसानले ठान्यो यो ढुङ्गा हो, तैपनि त्यो बोकेर मचानमा राख्यो । जब जब पक्षी खेतमा आउँथे, तब-तब थोरा लाल फालेर धपाउँथ्यो । त्यसले पक्षी उडिजान्थे र लाल नदीमा पर्दथ्यो । यसरी एक-एक गरेर उसले सबै लाल फ्यौंकिदियो । केवल थोरा लाल को त्यसको छोरो खेल्दथ्यो, रहिगयो । साँझको बेला त्यसकी स्त्री छोरो बोकेर घर गई । घरमा नून थिएन । स्त्री त्यही लाल लिएर नून किन्न बजार गई । थोरा पसलेसित भनी–'मलाई यो ढुङ्गाको साटो अलिकति नून देऊ ।' दैवयोगले त्यहाँ थोरा जौहरी उभिएको थियो । उसले लाल लिएर एक पैसाको नून दिलाई दियो र भन्यो—'मोल तिमीले यो ढुङ्गाको मोल पाउने छौ ।' भोलिपल्ट जौहरीले एक लाख रुपियाँ किसानको घर पठाइदियो । किसानकी स्त्रीले अलिकति रुपियाँले घर बनाई, केही जम्मा राखी । एक दिन स्त्रीले खेतमा गएर आफ्नो पतिलाई भनी–'तपाई यहाँ बसेको निकै दिन भयो, अब घर जाऊँ ।' किसान जब गाउँमा गयो तब आफ्नो घरको झुपडीको स्थानमा महल बनेको देख्यो । स्त्री महलतिर हिंडी । किसानले भन्यो—'ए ! उता कता गएको ? यो त कुनै महाजन धनीको महल हो । ठेक्कले धोकाइदेला नि ।' स्त्रीले भनी–'स्वामी ! यो साहुको महल होइन, यो त हजुरको घर हो । थोरा लाल को नदर्शकियर रहेको थियो, त्यसैको मोलले यो सबै यति छिटै नै तयार भयो । अझ अब धन जम्मा पनि छ ।' किसान पश्चात्ताप गर्नलाग्यो—'यस्तै मणित असंख्य लाल थिए, तर मैले ढुंगा ठानेर चरा धपाउन फालिदिएँ ।' स्त्रीले पतिलाई बुझाई—'नाथ ! जो गयो त्यो अब पाउन सकिन्न । जो रहेको छ, त्यसैलाई राम्रो काममा लगाउनुस् ।' दृष्टान्त हो—यस शरीररूपी हाँडीमा श्वासरूपी लाल भरिएका छन् । जीवात्मा ( मनुष्य ) ती लाल विषयरूपी पक्षीलाई धपाउन विषय भोगमा व्यर्थ गुमाइरहेको छ यति लाल हराए, ती त पाइन्नन् । तर अझ जति बाँकेका छन्, तिनलाई सत्कर्ममा व्यय गर्नु उचित छ ।

प्राणी दीक्षो नगर अब, भजिलेओ रघुबीर । अंदेशन-पति श्वासमा मणिरूपी सब हीर ॥

6.75

साधु-स्वभाव पुत्र प्रह्लादलाई मृत्युको मुखबाट जोगाए, यो मलाई आनन्दको कुरा भयो । यो हजुरको शरणमा आयो—यो अझ बढी आनन्दको विषय छ ॥२८॥ हे भगवन् ! जो प्राणी एकाग्रचित्तले हजुरको यो नृसिंहरूपको ध्यान गर्नेछ, उसलाई यो स्वरूप सबै प्रकारका भय र मृत्युबाट पनि बचाउने छ ॥२९॥ नृसिंह भगवान् भन्नुहुन्छ—हे कमलयोने ! तिमीले यस-लाई यस्तो वर दिनु उचित थिएन । स्वभावतः क्रूर व्यक्तिलाई दिएको वरदान सर्पलाई ख्वाएको अमृतको काम गर्दै अन्त्यमा अनिष्टकारक हुन्छ ॥३०॥ नारदजी भन्दछन्—हे राजन् ! यति भनेर ब्रह्माजी द्वारा पूजित भएर नृसिंह भगवान् त्यहीं अन्तर्धान हुनुभयो । त्यसपछि कुनै पनि प्राणीले उनलाई देख्न पाएनन् ॥३१॥ भक्तवर प्रह्लादले भगवान्‌का अंश ब्रह्मा, शिव, प्रजापति आदि सबैको पूजा गरेर दण्डवत् प्रणाम गरे ॥३२॥ तब शुक्राचार्य आदि मुनिहरू र ब्रह्माजीले प्रह्लादलाई सबै दैत्य र दानवहरूका स्वामी तुल्याए ॥३३॥ ब्रह्मा-आदि सबै देवता प्रह्लादद्वारा पूजित भएर उनको प्रशंसा गर्दै शुभाशिर्वाद दिएर आफ्ना-आफ्ना लोकमा प्रस्थान गरे ॥३४॥ हे राजन् ! ती विष्णु-पार्षद जुन सनकादि मुनिहरूको

भागवतोऽर्भकः ॥ त्वया विमोचितो मृत्योर्दिष्ट्या त्वां समितोऽधुना ॥ २८ ॥ एतद्वपुस्ते भगवन्ध्यायतः प्रयतात्मनः सर्वतो गोप्तृ सन्त्रासान्मृ-
त्योरपि जिघांसतः ॥ २९ ॥ नृसिंह उवाच ॥ मैवं वरोऽसुराणां ते प्रदेयः पद्मसम्भव ॥ वरः क्रूरनिसर्गाणामहीनाममृतं तथा ॥३०॥ नारद उवाच ॥
इत्युक्त्वा भगवान् राजँस्तत्रैवान्तर्दधे हरिः ॥ अदृश्यः सर्वभूतानां पूजितः परमेष्ठिना ॥ ३१ ॥ ततः सम्पूज्य शिरसा ववन्दे परमेष्ठिनम् ॥ भवं
प्रजापतीन्देवान्प्रह्लादो भगवत्कलाः ॥ ३२ ॥ ततः काव्यादिभिः सार्धं मुनिभिः कमलासनः ॥ दैत्यानां दानवानां च प्रह्लादमकरोत्पतिम् ॥ ३३ ॥
प्रतिनन्द्य ततो देवाः प्रयुज्य परमाशिषः ॥ स्वधामानि ययू राजान्ब्रह्मद्याः प्रतिपूजिताः ॥ ३४ ॥ एवं तौ पार्षदौ विष्णोःपुत्रत्वं प्रापितौ दितेः ॥
हृदि स्थितेन हरिणा वैरभावेन तौ हतौ ॥ ३५ ॥ पुनश्च विप्रशापेन राक्षसौ तौ बभूवतुः ॥ कुम्भकर्णदशग्रीवौ हतौ तौ रामविक्रमैः ॥ ३६ ॥
शयानौ युधि निर्भिन्नहृदयौ रामसायकैः तच्चित्तौ जहतुर्देहं यथाप्राक्तनजन्मनि ॥ ३७ ॥ ताविहाथ पुनर्जातौ शिशुपालकरूषजौ ॥ हरौ वैरानुब-
न्धेन पश्यतस्ते शमीयतुः ॥ ३८ ॥ एनः पूर्वकृतं यत्तद्राजानः कृष्णवैरिणः ॥ जहुस्त्वन्ते तदात्मानः कीटः पेशस्कृतो यथा ॥ ३९ ॥ यथा यथा
भगवतो भक्त्या परमया भिदा ॥ नृपाश्चैद्यादयः सात्म्यं हरेस्तच्चिन्तया ययुः ॥ ४० ॥ आख्यातं सर्वमेतत्ते यन्मां त्वं परिपृष्टवान् ॥ दमघोष-

श्रापले अघिल्लो जन्ममा दितिका पुत्र भएथे, ती आफ्नो हृदयमा विराजमान भगवान् विष्णुसित शत्रुता गरेर उनकै हातले मारिए ॥३५॥ तर विप्र श्रापले गर्दा फेरि ती रावण र कुम्भकर्ण दुइ राक्षस भए र रामद्वारा मारिए ॥३६॥ रावण र कुम्भकर्ण पनि श्रीरामका बाणले भिन्न-हृदय भएर रणभूमिमै मरेका थिए । पूर्वजन्म जस्तै अब पनि उनको स्मरण गर्दै आफ्नो देह त्यागेका थिए ॥३७॥ उनै दुवै शिशुपाल र वक्रपुत्र दन्तवक्र भएर पृथ्वीमा आएका थिए, जो श्रीकृष्णसित शत्रुता गर्नाले तिमीले देख्दा-देख्दै उनैमा लीन भएर गए ॥३८॥ हे राजन् ! जस्तै पेशस्कृत ( एक प्रकारका भ्रमरा ) को ध्यान गर्दै रहनाले समातेको कीरा पनि उस्तै बन्दछ,त्यस्तै यी कृष्णद्रोही राजाहरू दैत्यभावले उनैको चिन्तन गर्दा गर्दै आफ्ना पूर्वकृत पापबाट मुक्त भएर अन्त्यमा तद्रूप भए ॥३९॥ हे धर्मराज युधिष्ठिर ! जस्तै भगवद्भक्त भगवानका उत्कृष्ट र अनन्य भक्ति गरेर उनमै लय हुन्छन्

त्यसतै नै उनीसित शत्रुता र उनैको चिन्तन गरिरहनाले शिशुपाल आदि राजा पनि श्रीहरिको सारूप्यमा प्राप्त भए ॥४०॥ हे राजन्! तिम्रो जुन प्रश्न थियो—शिशुपाल आदि भगवद्द्वेषीहरूलाई उनको सायुज्य मुक्ति कसरी प्राप्त भयो? त्यो मैले सुनाएँ ॥४१॥ ब्रह्मण्यदेव परमात्मा श्रीकृष्णको यो अति पवित्र अवतार-कथा,जसमा आदिदैत्य हिरण्यकशिपु र हिरण्याक्ष वधको प्रसंग वर्णित छ, मैले सुनाएँ ॥४२॥ यस उपाख्यानमा महाभागवत प्रह्लादजीको चरित्र, उनको भक्ति, ज्ञान-वैराग्य, संसारको उत्पत्ति, स्थिति एवं प्रलयका स्वामी भगवान्को वास्तविक तत्व, उनको गुण एवं कर्मको वर्णन, देवताहरू र दैत्यगणका स्थानको कालकृत महान् परिवर्तन, जसले भगवानको प्राप्ति हुन्छ, ती भगवद्भक्तहरूको धर्म तथा आत्मानात्मविवेक आदि सबै विषयको राम्ररी निरूपण गरिएको छ ॥४३-४५॥ जो प्राणी भगवत्पराक्रमले परिपूर्ण यो पवित्र कथालाई श्रद्धापूर्वक पढ्छ अथवा केवल सुन्दछ, त्यो सदाको निम्ति कर्म-बन्धनबाट मुक्त हुनेछ ॥४६॥ आदिपुरुष भगवान्ले नृसिंह रूपले गरिएका हिरण्यकशिपु र अन्य दैत्य-यूथपहरूको वधरूपी यो पवित्र चरित्र र

सुतादीनां हरेः सात्म्यमपि द्विषाम् ॥ ४१ ॥ एषा ब्रह्मण्यदेवस्य कृष्णस्य च महात्मनः ॥ अवतारकथा पुण्या वधो यत्रादिदैत्ययोः ॥ ४२ ॥
प्रह्लादस्यानुचरितं महाभागवतस्य च ॥ भक्तिर्ज्ञानं विरक्तिश्च याथात्म्यं चास्य वै हरेः ॥ ४३ ॥ सर्गस्थित्यप्ययेशस्य गुणकर्मानुवर्णनम् ॥ परावरेषां स्थानानां कालेन व्यत्ययो महान् ॥४४॥ धर्मो भागवतानां च भगवान् येन गम्यते ॥ आख्यानेऽस्मिन्समाम्नातमाध्यात्मिकमशेषतः ॥ ४५ ॥
य एतत्पुण्यमाख्यानं विष्णोर्वीर्योपबृंहितम् ॥ कीर्तयेच्छ्रद्धया श्रुत्वा कर्मपाशैर्विमुच्यते ॥ ४६ ॥ एतद्य आदिपुरुषस्य मृगेन्द्रलीलां दैत्येन्द्रयूथपवधं प्रयतः पठेत ॥ दैत्यात्मजस्य च सतां प्रवरस्य पुण्यं श्रुत्वाऽनुभावमकुतोभयमेति लोकम् ॥ ४७॥ यूयं नृलोके बत भूरिभागा लोकं पुनाना मुनयोऽभियन्ति ॥ येषां गृहानावसतीति साक्षाद्गूढं परब्रह्म मनुष्यलिङ्गम् ॥ ४८ ॥ स वा अयं ब्रह्म महद्विमृग्यकैवल्यनिर्वाणसुखानुभूतिः ॥ प्रियः सुहृद्वः खलु मातुलेय आत्मार्हणीयो विधिकृद्गुरुश्च ॥४९॥ न यस्य साक्षाद्भवपद्मजादिभी रूपं धिया वस्तुतयोपवर्णितम् ॥ मौनेन भक्त्योपशमेन पूजितः प्रसीदतामेष स सात्वतां पतिः ॥५०॥ स एष भगवान्राजन्व्यतनोद्विहतं यशः ॥ पुरा रुद्रस्य देवस्य मयेनानन्तमायिना ॥५१॥ राजोवाच ॥ कस्मिन्कर्मणि देवस्य मयोऽहञ्जगदीशितुः ॥ यथा चोपचिता कीर्तिः कृष्णेनानेन कथ्यताम् ॥ ५२ ॥ नारद उवाच ॥ निर्जिता असुरा देवैर्यु-

भगवत्तनय एवं साधुश्रेष्ठ श्रीप्रह्लादको पावन प्रभावलाई जो सुन्दछ, त्यो निर्भय भएर वैकुण्ठलोक पाउने छ ॥४७॥ हे राजन्! मर्त्यलोकमा तिमी भाग्यमानी छौ, किनकि मनुष्य-रूपमा साक्षात् परब्रह्म परमात्मा तिम्रो घरमा बस्तछन्। उनैको दर्शन गर्नका लागि आफ्नो दर्शन दिएर सबै लोकलाई पवित्र तुल्याउने मुनिजन चारैतिरबाट तिमीकहाँ आउँछन् ॥४८॥ संसारका सबै व्यक्ति जसलाई निरन्तर खोज्दछन्, ती उपाधि शून्य परमानन्दानुभवस्वरूप परब्रह्मनै तिम्रा सुहृद्, मामाका छोरा, आत्मा, पूज्य, आज्ञापालक, गुरु छन् ॥४९॥ जसका यथार्थ स्वरूपको वर्णन भगवान् शंकर र ब्रह्मा पनि गर्न सक्तैनन्। हामीद्वारा मौन-भक्ति र मनले पूजित ती भक्तप्रतिपालक भगवान् हामीदेखि प्रसन्न हुन् ॥५०॥ हे राजन्! पूर्व समयमा जब महामायावी मयासुर भगवान् रुद्रको सुयश नष्ट पारिरहेको थियो, तब इनै भगवानले उनको सुयश फेरि फिंजाएका थिए ॥५१॥ यो सुनेर युधिष्ठिरले सोधे—

त्यो मयासुरले जगदीश्वर महादेवको सुयश कसरी नष्ट गर्‍यो र श्रीकृष्णले उनलाई कसरी बचाए ? ॥५२॥ नारदजी भन्दछन्–हे राजन् ! एक दिन उत्कर्ष प्राप्त देवताहरूले दैत्यलाई युद्धमा जिते । अनि सबै असुर-मायावीहरूको गुरु मयासुरको शरणमा गए ॥५३॥ तदनुसार मयासुरले सुन, चाँदी र फलामका तीन पुरी बनाएर तिनलाई दियो । ती पुरीहरू यस्ता थिए कि तिनको आवागमन थाहा हुँदैनथ्यो र तिनमा अपरिमित सामग्री भरिएको हुन्थ्यो ॥५४॥ हे राजन् ! तीनै पुरीमा लुकेका सबै असुर-सेनापति पूर्व-शत्रुता स्मरण गरेर लोकपालसमेत तीनै लोकको विनाश गर्नलागे ॥५५॥ अनि इन्द्रादि लोकपाल र सम्पूर्ण प्रजाले शङ्कर भगवान्कहाँ गएर भने–हे देवदेव ! यी त्रिपुरनिवासी असुर हामीलाई नष्ट पार्दैछन् । हे प्रभो ! हामी त हजुरका भक्त हौं, हजुर हाम्रो रक्षा गर्नुहवस् ॥ ५६ ॥ रुद्र भगवानले देवगणमाथि कृपा गरेर 'डराउन पर्दैन' भन्दै आफ्नो धनुषमा पाशुपत वाण सन्धानेर ती पुरीहरूमा छाडिदिए ॥५७॥ सूर्यका किरण जस्तै ती वाण अग्नि समान अनेक वाण निस्के, जसले ती तीनै पुरत्र्याटनष्ट भए ॥५८॥ ती

ध्यनेनोवृंहितैः ॥ मायिनां परमाचार्य मयं शरणमाययुः ॥ ५३ ॥ स निर्माय पुरस्तिस्रो हैमी रौप्यायसीर्विभुः ॥ दुर्लक्ष्यापायसंयोगा दुर्वितर्क्यपरिच्छदाः ॥ ५४ ॥ ताभिस्तेऽसुरसेनान्यो लोकांस्त्रीन्सेश्वरान्नृप ॥ स्मरन्तो नाशयाञ्चक्रुः पूर्ववैरमलक्षिताः ॥ ५५ ॥ ततस्ते सेश्वरा लोका उपासाद्येश्वरं विभो ॥ त्राहि नस्तावकान्देव विनष्टांस्त्रिपुरालयैः ॥ ५६ ॥ अथानुगृह्य भगवान्मा भैष्टेति सुरान्विभुः ॥ शरं धनुषि संधाय पुरेष्वस्त्रं व्यमुञ्चत ॥५७॥ ततोऽग्निवर्णा इषव उत्पेतुः सूर्यमण्डलात् ॥ यथा मयूखसंदोहा नादृश्यन्त पुरो यतः ॥५८॥ तैः स्पृष्टा व्यसवः सर्वे निपेतुः स्म पुरौकसः ॥ तानानीय महायोगी मयः कूपरसेऽक्षिपत् ॥५९॥ सिद्धामृतरससंस्पृष्टा वज्रसारा महौजसः ॥ उत्तस्थुर्मेघदलना वैद्युता इव वह्नयः ॥ ६० ॥ विलोक्य भग्नसंकल्पं विमनस्कं वृषध्वजम् ॥ तदाऽयं भगवान्विष्णुस्तत्रोपायमकल्पयत् ॥ ६१ ॥ वत्स आसीत्तदा ब्रह्मा स्वयं विष्णुरयं हि गौः ॥ प्रविश्य त्रिपुरं काले रसकूपामृतं पपौ ॥६२॥ तेऽसुरा ह्यपि पश्यन्तो न न्यषेधन्विमोहिताः ॥ तद्विज्ञाय महायोगी रसपालानिदं जगौ ॥६३॥ स्वयं विशोकः शोकार्तान्स्मरन्दैवगतिं च ताम् ॥ देवोऽसुरा नरोऽन्यो वा नेश्वरोऽस्तीह कश्चन ॥ ६४ ॥ आत्मनोऽन्यस्य वा दिष्टं दैवेनापोहितुं द्वयोः ॥ अथासौ

वाणको स्पर्श हुनासाथ तीनै पुरका निवासी मरेर तल झरे । अनि महामायावी मयले मृत दैत्यगणलाई ल्याएर अमृतको कुण्डमा चोभिदियो ॥५९॥ अमृतको स्पर्शले ती दैत्य वज्र झैं बलिया देह र निकै तेजस्वी भएर मेघलाई विदीर्ण पार्नसक्ने विद्युतरूपी अग्नि झैं सबै उठे ॥६०॥ उता शिवलाई संकल्प भङ्ग हुनाले खिन्न देखेर विष्णु भगवान्ले त्यो अमृत कुण्डलाई नष्ट पार्ने यौटा उपाय खोज्नुभयो ॥६१॥ तदनुसार ब्रह्माजी बाछो, विष्णु भगवान् गाई बनेर मध्याह्नमा त्रिपुरमा गएर ती कूपका सबै अमृत पिइदिए ॥६२॥ त्यसका रक्षक असुरहरूले भगवान्को मायाले मोहित भएर गाईले अमृत पिएको देखेर पनि छेकेनन् । अनि सर्वथा शोकरहित महायोगी मयले सर्वरहस्य जान्ने भगवान्को गति स्मरण गर्दै शोकातुर रक्षकहरूसित भने–'आफ्ना र बिराना दुवैको निम्ति विधाताले जुन विधान बनाइदिएका छन्, त्यसलाई मेट्न देवता, असुर, मनुष्य आदि कोही पनि समर्थ छैनन् ।' त्यसपछि विष्णु भगवान्ले श्रीशिवको निम्ति धर्म, ज्ञान, वैराग्य, ऐश्वर्य, तप, विद्या तथा क्रिया आदि आफ्ना शक्तिहरूले रथ, सारथी, ध्वजा, अश्व, धनुष,

कवच र वाण आदि युद्ध-सामग्री तयार पारे ॥ ६३-६६॥ त्यसले सन्नद्ध भएर शंकरजी धनुष-वाण लिई रथमा बसेर वाण प्रहार गरी अभिजित् मुहूर्तमा ती तीनै दुर्भेद्य पुरहरूलाई भस्म पारिदिए । त्यसले स्वर्गमा दुन्दुभी बज्नलागे र विमानमा बसेर सयकडौं देवता, ऋषि, पितर तथा सबै सिद्धेश्वर प्रसन्न भएर जय-जयकार गर्दै उनीमाथि पुष्पवर्षा गर्न लागे र अप्सरागण नाच्न-गाउन थाले ॥६७-६९॥ हे राजन् ! तीनै पुरलाई भस्म पारेर भगवान् त्रिपुरारिले ब्रह्मादि देवताद्वारा आराधित भएर आफ्नो धाममा प्रवेश गर्नुभयो ॥६०॥ हे धर्मराज युधिष्ठिर ! ऋषिहरूले आफ्नो मायाले स्वयं मानव शरीर धारण गर्ने जगद्गुरु विष्णु भगवान्‌का यस्ता अनेक त्रिलोक पावन चरित्र कहिएका छन् । अब म अरु के भनौं ? त्यो भन ॥७१॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥१०॥ (ब्राह्मणादि चारै वर्ण र नारीधर्मको निराकरण)–शुकदेवजी भन्दछन्–हे राजन् !

शक्तिभिः स्वाभिः शम्भोः प्राधनिकं व्यधात् ॥६५॥ धर्मज्ञानविरक्त्यृद्धितपोविद्याक्रियादिभिः ॥ रथं सूतं ध्वजं वाहान् धनुर्वर्म शरादि यत् ॥६६॥ सन्नद्धो रथमास्थाय शरं धनुरुपाददे ॥ शरं धनुषि संधाय मुहूर्तेऽभिजितीश्वरः ॥ ६७ ॥ ददाह तेन दुर्भेद्या हरोऽथ त्रिपुरो नृप ॥ दिवि दुन्दुभयो नेदुर्विमानशतसंकुलाः ॥ ६८ ॥ देवर्षिपितृसिद्धेशा जयेति कुसुमोत्करैः ॥ अवाकिरञ्जगुर्हृष्टा ननृतुश्चाप्सरोगणाः ॥ ६९ ॥ एवं दग्ध्वा पुरस्तिस्रो भगवान्पुरहा नृप ॥ ब्रह्मादिभिः स्तूयमानः स्वधाम प्रत्यपद्यत ॥ ७० ॥ एवंविधान्यस्य हरेः स्वमायया विडम्बमानस्य नृलोकमात्मनः ॥ वीर्याणि गीतान्यृषिभिर्जगद्गुरोर्लोकान्पुनान्यपरं वदामि किम् ॥ ७१ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे युधिष्ठिरनारदसंवादे त्रिपुरविजयो नाम दशमोऽध्यायः ॥ १० ॥ श्रीशुक उवाच ॥ श्रुत्वेहितं साधुसभासभाजितं महत्तमाग्रस्य उरुक्रमात्मनः ॥ युधिष्ठिरो दैत्यपतेर्मुदा युतः पप्रच्छ भूयस्तनयं स्वयम्भुवः ॥१॥ युधिष्ठिर उवाच ॥ भगवञ्छ्रोतुमिच्छामि नृणां धर्मं सनातनम् ॥ वर्णाश्रमाचारयुतं यत्पुमान्विन्दते परम् ॥ २ ॥ भगवान्प्रजापतेः साक्षादात्मजः परमेष्ठिनः ॥ सुतानां संमतो ब्रह्मँस्तपोयोगसमाधिभिः ॥ ३ ॥ नारायणपरा विप्रा धर्मं गुह्यं परं विदुः ॥ करुणा साधवः शान्तास्त्व-द्विधा न तथापरे ॥ ४ ॥ नारद उवाच ॥ नत्वा भगवतेऽजाय लोकानां धर्महेतवे ॥ वक्ष्ये सनातनं धर्मं नारायणमुखाच्छ्रुतम् ॥ ५ ॥ योऽवतीर्या-त्मनोऽंशेन दाक्षायण्यां तु धर्मतः ॥ लोकानां स्वस्तयेऽध्यास्ते तपो बदरिकाश्रमे ॥ ६ ॥ धर्ममूलं हि भगवान्सर्ववेदमयो हरिः ॥ स्मृतं च तद्विदां

महापुरुषमा अग्रणी र भगवान्‌का असाधारण भक्त दैत्यराज प्रह्लादको साधु-समाजमा सम्मानित पवित्र चरित्र सुनेर राजा युधिष्ठिरले प्रसन्न भएर ब्रह्माजीका पुत्र नारदजीसित सोधे ॥ १ ॥ युधिष्ठिरले भने—हे भगवन् ! अब म वर्णाश्रमाचारयुक्त मनुष्यका सनातन धर्म सुन्ने इच्छा छ, जसद्वारा मनुष्यलाई भक्ति तथा ज्ञान प्राप्त हुन्छ ॥२२॥ हे ब्रह्मन् ! हजुर त साक्षात् प्रजापति ब्रह्माजीका सुपुत्र तथा आफ्नो तप, योग एवं समाधिले उनका सबै पुत्रमा सम्मानित हुनुहुन्छ । हे प्रभो ! हजुर जस्तै भगवद्भक्त, दयालु, सदाचारी तथा शान्त स्वभाव विप्र सबै श्रेष्ठ धर्महरू जस्तो जान्दछन्, त्यस्तो अरु कोही जान्दैनन् ॥३-४॥ नारद भन्दछन्–हे राजन् ! जन-कल्याणार्थ धर्मद्वारा दक्ष-पुत्री मूर्तिको गर्भबाट आफ्नो अंशद्वारा अवतार लिएर जो बदरिकाश्रममा तप गरिरहेका छन् सबै धर्मका मूल कारण ती अजन्मा भगवान् नारायणलाई नमस्कार गरेर उनैको मुखबाट सुनेको सनातनधर्मको म

वर्णन गर्दछु ॥ ५-६ ॥ हे राजन् ! सर्ववेदमय विष्णु भगवान्, धर्मतत्त्वज्ञानी महर्षिहरूका स्मृतिहरू तथा चित्त प्रसन्न पार्ने आचरण नै धर्मका मूल हुन् ॥७॥ हे राजन् ! सत्य दया, तप, शौच, तितिक्षा, युक्तायुक्तको विचार, शम,दम, अहिंसा, ब्रह्मचर्य, त्याग, स्वाध्याय, सन्तोष समदर्शित्व, महात्माहरूको सेवा, अभ्यासद्वारा सांसारिक भोगबाट निवृत्ति मनुष्यलाई तिनका प्रयत्नको विपरीत नै फल मिल्दछ, यस्तो विचार्नु, मौन रहनु, आत्मचिन्तन गर्नु, सबै प्राणीलाई समुचित भाग दिनु, सबै प्राणीहरू र विशेष गरेर मनुष्यमा इष्टदेव बुद्धि राख्नु तथा महात्माजनका आश्रयरूप श्रीहरिको श्रवण, कीर्तन, स्मरण, सेवा, पूजा, नम्रता, दास्य, उनको प्रति सखाभाव राख्नु र आत्मसमर्पण गरिदिनु–यी तीस थरिका आचरणले मनुष्यका उत्तम धर्म कहिएका छन् । यस धर्मको पालन गर्नाले सर्वात्मा भगवान् प्रसन्न हुन्छन् ॥८-१२॥ हे धर्मराज ! जसका गर्भाधानादि संस्कार अविच्छिन्न रूपले सम्पन्न भएका रहन्छन् र जसलाई ब्रह्माजीले पनि संस्कारयोग्य भनेका छन, उनै 'द्विज' हुन् । ती जन्म-कर्मले शुद्ध विप्रका निम्ति यज्ञ, अध्ययन र दानादि कर्म विहित मानिन्छन् र उनकै निम्ति,

राजन् येन चात्मा प्रसीदति ॥७॥ सत्यं दया तपःशौचं तितिक्षेक्षा शमो दमः ॥ अहिंसा ब्रह्मचर्यं च त्यागः स्वाध्याय आर्जवम् ॥८॥ सन्तोषः समदृक्सेवा ग्राम्येहोपरमः शनैः ॥ नृणां विपर्ययेहेक्षा मौनमात्मविमर्शनम् ॥९॥ अन्नाद्यादेः संविभागो भूतेभ्यश्च यथार्हतः ॥ तेष्वात्मदेवताबुद्धिः सुतरां नृषु पाण्डव ॥१०॥ श्रवणं कीर्तनं चास्य स्मरणं महतां गतेः ॥ सेवेज्यावनतिर्दास्यं सख्यमात्मसमर्पणम् ॥ ११ ॥ नृणामयं परो धर्मः सर्वेषां समुदाहृतः ॥ त्रिंशल्लक्षणवान्राजन्सर्वात्मा येन तुष्यति ॥१२॥ संस्कारा यत्राविच्छिन्नाः स द्विजोऽजो जगाद यम् ॥ इज्याध्ययनदानानि विहितानि द्विजन्मनाम् ॥ जन्मकर्मावदातानां क्रियाश्चाश्रमचोदिताः ॥१३॥ विप्रस्याध्ययनादीनि षडन्यस्याप्रतिग्रहः ॥ राज्ञो वृत्तिः प्रजागोप्तुरविप्राद्वा करादिभिः ॥१४॥ वैश्यस्तु वार्तावृत्तिश्च नित्यं ब्रह्मकुलानुगः ॥ शूद्रस्य द्विजशुश्रूषा वृत्तिश्च स्वामिनो भवेत् ॥ १५ ॥ वार्ता विचित्रा शालीनयायावरशिलोञ्छनम् ॥ विप्रवृत्तिश्चतुर्धेयं श्रेयसी चोत्तरोत्तरा ॥ १६ ॥ जघन्यो नोत्तमां वृत्तिमनापदि भजेन्नरः ॥ ऋते राजन्य मापत्सु सर्वेषामपि सर्वशः ॥१७॥ ऋतामृताभ्यां जीवेन मृतेन प्रमृतेन वा ॥ सत्यानृताभ्यां जीवेत नश्ववृत्त्या कथञ्चन ॥ १८ ॥ ऋतमुञ्छशिलं प्रोक्तममृतं यदया·

यज्ञाध्ययनादि आश्रमोचित्त कर्मका विधान गरिएका छन् ॥१३॥ अध्ययन-अध्यापन, दान दिनु-दान लिनु, यज्ञ गर्नु र यज्ञ गराउनु–यी छ कर्म ब्राह्मणका कहिएका छन्, किन्तु अन्य अर्थात् क्षत्रियलाई दान लिने विधान गरिएको छैन, प्रजापालक राजा ब्राह्मणबाहेक अरु सबै प्रजाबाट दण्ड-करादि लिएर वृत्ति चलाओस् ॥ १४ ॥ वैश्य ब्राह्मणहरूको अनुगामी भएर कृषि-वाणिज्यादिबाट जीविकार्जन गर्दै द्विजातिहरूको सेवा गरून् । शूद्र आफ्नु जीविका आफ्ना स्वामीसित प्राप्त गरून् ॥१५॥ ब्राह्मणका चार वृत्ति छन्–वार्ता (यज्ञ-अध्यनादि गराएर धन लिनु ), शालीन ( नमागीकन जे पाइयो, त्यसैले निर्वाह गर्नु ), यायावर (दिनहुँ धान्यादि मागेर ल्याउनु), शिलोञ्छ (अन्न काटेर लगिसकेपछि पृथ्वीमा जे जति झरेका अन्नका कण रहन्छन्, तिनलाई 'शिल' तथा बजारमा छरिएका दानालाई 'उञ्छ' भन्दछन् । ती शिला र उञ्छ बटुलेर आफ्नो निर्वाह गर्नु 'शिलोञ्छ वृत्ति हो ), इनमा उत्तरोत्तरका वृत्ति श्रेष्ठतर हुन्छ ॥१६॥ हे राजन् ! आपत्तिकाल छैन भने क्षत्रियबाहेक निम्न वर्णका पुरुष उच्चवर्णको वृत्ति नगरोस । क्षत्रिय पनि परिग्रह (दानलिनु) बाहेक अन्य ब्राह्मण-वृत्तिलाई

नै स्वीकार गरोस् । तर आपत्तिकालमा सबैले सबैको वृत्तिको आश्रय लिन सक्छ ॥१७॥ हे राजन् ! ऋत, अमृत, मृत, प्रमृत तथा सत्यानृत यीमध्ये कुनै पनि वृत्तिको अवलम्बन गरोस्, किन्तु श्ववृत्ति अर्थात् नीच-सेवावृत्ति (नोकरी) को आश्रय कदापि नलेओस् ॥१८॥ विद्वान्हरूले शिलोञ्छ वृत्तिलाई ऋत, अयाचितलाई अमृत, नित्य मागेर ल्याउनेलाई मृत र कृषिवृत्तिलाई अमृत भनेका छन् ॥१९॥ वाणिज्य सत्यानृत, तथा नीच वर्णको सेवा श्ववृत्ति कहिएको छ । ब्राह्मण र क्षत्रिय स्यम वृत्तिलाई त्यागी रहुन्, किनकि ब्राह्मण सर्ववेदमय र राजा सर्वदेवमय हुन्छन् ॥२०॥ शम, दम, तप, शौच, सन्तोष, क्षमा, आर्जव, ज्ञान, दया, भगवत्परायण तथा सत्य–यी ब्राह्मणका लक्षण हुन् ॥२१॥ शूरता, पुरुषार्थ, धैर्य, तेज-

चित्तम् ॥ मृतं तु नित्ययाच्ञा स्यात्प्रमृतं कर्षणं स्मृतम् ॥ १९ ॥ सत्यानृतं तु वाणिज्यं श्ववृत्तिर्नीचसेवनम् ॥ वर्जयेत्तां सदा विप्रो राजन्यश्च जुगुप्सिताम् ॥ सर्ववेदमयो विप्रः सर्वदेवमयो नृपः ॥ २० ॥ शमो दमस्तपः शौचं संतोषः क्षान्तिरार्जवम् ॥ ज्ञानं दयाऽच्युतात्मत्वं सत्यं च ब्रह्मलक्षणम् ॥ २१ ॥ शौर्यं वीर्यं धृतिस्तेजस्त्याग आत्मजयः क्षमा ॥ ब्रह्मण्यता प्रसादश्च रक्षा च क्षत्रलक्षणम् ॥ २२ ॥ देवगुर्वच्युते भक्तिस्त्रिवर्गपरिपोषणम् ॥ आस्तिक्यमुद्यमो नित्यं नैपुणं वैश्यलक्षणम् ॥२३॥ शूद्रस्य संनतिः शौचं सेवा स्वामिन्यमायया ॥ अमन्त्रयज्ञो ह्यस्तेयं सत्यं गोविप्ररक्षणम् ॥ २४ ॥ स्त्रीणां च पतिदेवानां तच्छुश्रूषाऽनुकूलता ॥ तद्बन्धुष्वनुवृत्तिश्च नित्यं तद्व्रतधारणम् ॥ २५ ॥ संमार्जनोपलेपाभ्यां गृहमण्डलवर्तनैः ॥ स्वयं च मण्डिता नित्यं परिमृष्टपरिच्छदा ॥ २६ ॥ कामैरुच्चावचैः साध्वी प्रश्रयेण दमेन च ॥ वाक्यैः सत्यैः प्रियैः प्रेम्णा काले काले

स्विता, त्याग, मनोजय, क्षमा, ब्राह्मणमा श्रद्धा, अनुग्रह र प्रजापालन–यी क्षत्रियका लक्षण हुन् । देवता, गुरु र भगवान्को भक्ति, अर्थ तथा कामको पुष्टि, आस्तिकता, नित्य उद्यमशीलता र व्यवहार कौशल–यी वैश्यका लक्षण हुन् । उच्चवर्णको समक्ष नम्रता, शौच, स्वामीको निष्कपट सेवा, वैदिक मन्त्रले हीन यज्ञ, चोरी नगर्नु, सत्य बोल्नु र गाई तथा ब्राह्मणको रक्षा गर्नु–यी शूद्रका धर्म हुन् ॥२२-२४॥ स्त्रीहरूका धर्म–तिनको सेवा गर्नु, सदा पतिको अनुकूल रहनु, पतिका सम्बन्धीहरूको कुरा मान्नु र पतिका नियमको पालन गर्नु–यी पतिव्रता स्त्रीहरूका धर्म हुन् ॥२५॥ सती-साध्वी स्त्री घर कुच्चो, लीप-पोत र टाल-टुल गरेर घरलाई र राम्रा आभूषण पहिरेर शरीरलाई सधैं अलंकृत राखुन् पतिका साना-ठूला सबै

☆ दृष्टान्तर ( क्षमा ) बौटा महात्मा नदी तर्न डुङ्गामा बसेर त्यसैमा बौटा दुष्ट पनि आएर बस्यो । डुङ्गामा अब पनि अनेक व्यक्ति बसेका थिए । डुङ्गा किनाराबाट हिँडेपछि दुष्टले महात्मालाई जिस्क्याउन थाल्यो, तर ती केही बोलेनन् । जब दुष्टले देख्यो–मेरो दुष्टताको केही प्रभाव परिरहेको छैन, तब त्यसले महात्मालाई एक दुई लप्टा पनि हिर्काइदियो । तैपनि महात्मा मुखमा विभो नै नमए बस्ता भएर एक शब्द बोलेनन् । ईश्वरले त्यो अन्याय सहन सकेनन् । तत्काल आकाशवाणी भयो–'महात्मन् ! यदि तपाईंको इच्छा भए यो दुष्ट सहित डुङ्गा अहिल्यै डुबाइदिउँ !' महात्माले भने–'के म यस्तो पापी हुँ कि मेरो पतिका मनुष्य मरून् !' फेरि शब्द सुनियो–'यदि भन्छौ भने यस दुष्टलाई नै नदीमा डुबाइदिउँ !' महात्माले भने—'के मसित बसेको फल यही हो !' फेरि आकाशवाणीले भन्यो—'यस दुष्टलाई अवश्य दण्ड दिनैपर्छ !' महात्माले भने–'भगवन् ! यदि दिनै चाहनु हुन्छ भने यसलाई यही दण्ड दिनोस् कि यसको धर्ममा प्रवृत्ति होस् !' आकाशवाणीले भन्यो–'तथाऽस्तु !' भगवानको प्रेरणा र महात्माको इच्छाले त्यो दुष्ट धर्मात्मा बन्यो ।

लोक–अर्काको हित निमित्त अमृत सरी वृक्षादि दिन्छन् फल । त्यस्तै सज्जन गर्दछन् हृदयमा, केही नराखी छल ॥ डुङ्गाले ढेलले प्रहार गर तै दिन्छन् ति मीठा फल । गर्दैनन् छल कसै कुनै सुजनले, हुन्छन् सदा निर्मला ।

इच्छाहरूको पूर्ति गर्दै रहून् । विनय, इन्द्रिय-संयम, सत्य र प्रिय वचनले प्रेमपूर्वक पतिको सेवा गरोस् ॥२६-२७॥ आफूलाई जे मिल्दछ त्यसैमा सन्तुष्ट, विषयभोगमा अनासक्तभाव र कार्यकुशल, धर्मज्ञ, सत्य तथा प्रिय बोल्ने, सावधान, पवित्र एवं प्रेममयी बनेर आफ्नो धर्मात्मा पतिको सेवा गरोस् ॥२८॥ लक्ष्मीजी झैं पतिपरायणा जो स्त्री पतिलाई भगवद्भावले भज्दछन्, ती वैकुण्ठलोकमा विष्णु-सारूप्य प्राप्त पतिका साथमा बसेर उस्तै नै आनन्दित हुन्छे, जस्तै विष्णु भगवान्‌सित लक्ष्मीजी सुख भोग्दछिन् ॥ २९ ॥ हे राजन् ! जो शूद्र चोरी आदि पाप गर्दैनन्, ती रजक-चर्मकार आदि अन्त्यज तथा चाण्डालादि अन्तेवासी वर्णसङ्कर जातहरूका त्यही वृत्ति हुन् जो उनको कुल-परम्परादेखि चलिआएको हुन्छ ॥३०॥ हे राजन् ! वेदज्ञाता मुनीश्वरहरूले युग-युगमा मनुष्यको स्वभाव अनुसार जुन-जुन धर्म निश्चित गरेका छन्, ती सबै इहलोक र परलोकमा हितकारी हुन्छन् ॥३१॥ जो आफ्नो स्वभाविक वृत्तिको भरमा वर्णाश्रम-विहित धर्मको पालन गर्दछन् त्यो बिस्तार-बिस्तार स्वाभाविक धर्मको त्याग गर्दै गुणातीत बन्नजान्छ ॥ ३२ ॥ जस्तै बारम्बार बिउ छर्ने खेत स्वतः

भजेत्पतिम् ॥२७॥ संतुष्टाऽलोलुपा दक्षा धर्मज्ञा प्रियसत्यवाक् ॥ अप्रमत्ता शुचिःस्निग्धा पतिं त्वपतितं त्वपतितं भजेत् ॥२८॥ या पतिं हरिभावे
भजेच्छ्रीरिव तत्परा ॥ हर्यात्मना हरेर्लोके पत्या श्रीरिव मोदते ॥ २९ ॥ वृत्तिः सङ्करजातीनां तत्तत्कुलकृता भवेत् ॥ अचौराणामपापानामन्त्यजा-
न्तेऽवसायिनाम् ॥ ३० ॥ प्रायः स्वभावविहितो नृणां धर्मो युगे युगे ॥ वेददृग्भिः स्मृतो राजन्प्रेत्य चेह च शर्मकृत् ॥ ३१ ॥ वृत्त्या स्वभावकृतया
वर्तमानः स्वकर्मकृत् ॥ हित्वा स्वभावजं कर्म शनैर्निर्गुणतामियात् ॥ ३२ ॥ उप्यमानं मुहुः क्षेत्रं स्वयं निर्वीर्यतामियात् ॥ न कल्पते पुनः सूत्या
उप्तं बीजं च नश्यति ॥ ३३ ॥ एवं कामाशयं चित्तं कामानामतिसेवया ॥ विरज्येत यथा राजन्नाग्निवत्कामबिन्दुभिः ॥३४॥ यस्य यल्लक्षणं प्रोक्तं
पुंसो वर्णाभिव्यञ्जकम् ॥ यदन्यत्रापि दृश्येत तत्तेनैव विनिर्दिशेत् ॥३५॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे युधिष्ठिरनारदसंवादेसदाचारनिर्णयो
नामैकादशोऽध्यायः ॥ ११ ॥ नारद उवाच ॥ ब्रह्मचारी गुरुकुले वसन्दान्तो गुरोर्हितम् ॥ आचरन्दासवन्नीचो गुरौ सुदृढसौहृदः ॥ १ ॥ सायं
प्रातरुपासीत गुर्वग्न्यर्कसुरोत्तमान् ॥ उभे सन्ध्ये च यतवाग्जपन्ब्रह्म समाहितः ॥ २ ॥ छन्दस्यांधीयीत गुरोराहूतश्चेत्सुयन्त्रितः ॥ उपक्रमेऽवसाने च

शक्तिहीन हुन्छ । फेरि त्यसमा अंकुर उत्पन्न हुन्नन् र त्यसमा छरेको बीज पनि नष्ट भएर जान्छ । यस्तै वासनाहरूको आश्रयरूपी चित्त भोगहरूको अत्यधिक सेवन गर्नाले स्वयं वाक्क हुन्छ, तर स्वल्प भोगमा त्यस्तो हुँदैन । जस्तै आगो एक-एक थोपा घिउले शान्त हुँदैन । हे राजन् ! जुन प्राणीको वर्ण प्रकट गर्ने जुन लक्षण कहिएको छ, त्यो यदि अन्य वर्ण हुनेमा मिल्दछ भने त्यसलाई पनि त्यही वर्णको मान्नु पर्दछ ॥ ३३-३५ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायामेकादशोऽध्यायः ॥ ११ ॥ ( वानप्रस्थ र ब्रह्मचर्याश्रमको विहित नियम )—नारदजी भन्दछन्—हे धर्मराज ! ब्रह्मचारी गुरुकुलमा बस्दा इन्द्रिय संयम गरेर दास झैं आफूलाई नीच मानेर सदा गुरुको हित विचारोस् उनमा बलियो अनुराग राखोस् ॥१॥ बेलुका र बिहानको बेला गुरु, अग्नि, सूर्य र देवताहरूको आराधना, एकाग्रतापूर्वक गायत्रीमन्त्रको जप गर्दै सायं-प्रातः दुवै समय मौनावलम्बनपूर्वक सन्ध्योपासना गरोस् ॥२॥ जब गुरुले डाक्छन्, तब सावधानपूर्वक वेदाध्ययन गरी पाठको आरम्भ र पाठ सकिएपछि उनको चरणमा

शिर निहुराएर प्रणाम गरुन् ॥३॥ वेदविहित विधिले मेखला, मृगचर्म, वस्त्र, जटा, दण्ड, कमण्डलु र यज्ञोपवीत धारण गरेर हातमा कुश लिइरहोस् ॥४॥ सायं तथा प्रातःकाल भिक्षा मागेर लाई गुरुलाई अर्पण गरोस् । गुरुले आज्ञा दिएपछि खाओस्, होइन भने भोकै बसोस् ॥५॥ सुशील, अल्पाहारी, दक्ष, श्रद्धालु तथा जितेन्द्रिय रहोस् र जबसम्म आवश्यकता रहन्छ, तबसम्म स्त्री तथा स्त्रीनिर्जित पुरुषका साथमा व्यवहार गरोस् ॥६॥ ब्रह्मचारी सर्वदा स्त्रीहरूको चर्चा त्यागिदेउन, किनकि चञ्चल इन्द्रिय योगीको मन पनि तान्न सक्दछन् ॥७। नवयुवक ब्रह्मचारी गुरुपत्नीसित कपाल सम्याउन नलगाउन्, शरीर मिच्न नलाउन् र स्नान तथा धुकुवा नमगाउन् ॥८। किनकि स्त्री आगो हुँ र पुरुष घिउको कलश हुँ हुन्छन् । पुरुषले आफ्नी छोरीसित पनि एकान्तमा बस्नु हुँदैन । अन्यत्र पनि जति बेर आवश्यक छ, त्यति बेरसम्म मात्र बस्नु ॥९॥ हे राजन् ! तत्त्वज्ञानमा समर्थ पुरुष पनि स्त्री आदि भोग्य पदार्थको आभास मात्र पाएपछि जबसम्म तिनको चिन्तन गर्दै रहन्छ, तबसम्म त्यसको द्वैतबुद्धि निवृत्त हुन सक्तैन र त्यसको पतन प्रायःनिश्चित रहन्छ

चरणौ शिरसा नमेत् ॥ ३ ॥ मेखलाऽजिनवासांसि जटादण्डकमण्डलून् ॥ बिभृयादुपवीतं च दर्भपाणिर्यथोदितम् ॥४॥ सायं प्रातश्चरेद्भैक्षं गुरवे तन्निवेदयेत् ॥ भुञ्जीत यद्यनुज्ञातो नोचेदुपवसेत्क्वचित् ॥५॥ सुशीलो मितभुग्दक्षः श्रद्दधानो जितेन्द्रियः ॥ यावदर्थं व्यवहरेत्स्त्रीषु स्त्रीनिर्जितेषु च ॥६॥ वर्जयेत्प्रमदागाथामगृहस्थो बृहद्व्रतः ॥ इन्द्रियाणि प्रमाथीनि हरन्त्यपि यतेर्मनः ॥ ७ ॥ केशप्रसाधनोन्मर्दस्नपनाभ्यञ्जनादिकम् ॥ गुरुस्त्रीभिर्युवतिभिः कारयेन्नात्मनो युवा ॥ ८ ॥ नन्वग्निः प्रमदा नाम घृतकुम्भसमः पुमान् ॥ सुतामपि रहो जह्यादन्यदा यावदर्थकृत् ॥ ९ ॥ कल्पयित्वाऽऽत्मना यावदाभासमिदमीश्वरः ॥ द्वैतं तावन्न विरमेत्ततो ह्यस्य विपर्ययः ॥ १० ॥ एतत्सर्वं गृहस्थस्य समाम्नातं यतेरपि ॥ गुरुवृत्तिर्विकल्पेन गृहस्थस्यर्तुगामिनः ॥ ११ ॥ अञ्जनाभ्यञ्जनोन्मर्दस्त्र्यवलेखामिषं मधु ॥ स्रग्गन्धलेपालंकारांस्त्यजेयुर्ये धृतव्रताः ॥१२॥ उषित्वैवं गुरुकुले द्विजोऽधीत्यावबुध्य च ॥ त्रयीं साङ्गोपनिषदं यावदर्थं यथाबलम् ॥ १३ ॥ दत्त्वा वरमनुज्ञातो गुरोः कामं यदीश्वरः ॥ गृहं वनं वा प्रविशेत्प्रव्रजेत्तत्र वा वसेत् ॥ १४ ॥ अग्नौ गुरावात्मनि च सर्वभूतेष्वधोक्षजम् ॥ भूतैः स्वधामभिः पश्येदप्रविष्टं प्रविष्टवत् ॥ १५ ॥ एवंविधो ब्रह्मचारी वानप्रस्थो यतिर्गृही ॥ चरन्विदितविज्ञानः परं ब्रह्माधिगच्छति ॥ १६ ॥ वानप्रस्थस्य वक्ष्यामि नियमान्मुनिसम्मतान् ॥ यानातिष्ठन्मुनिर्गच्छेदृषिलोकमिहाञ्जसा

॥१०॥ पूर्वोक्त सुशीलत्व आदि साधारण धर्म गृहस्थ तथा संन्यासी दुवैका निम्ति हुन्, तर गृहस्थको लागि गुरुवृत्ति विकल्पले कहिएको छ अर्थात् ऋतुकाल बाहेक अन्य समयमा नै यो नियम विहित छ ॥११॥ ब्रह्मचर्य-व्रतधारीहरूको दतव्य छ कि अंजन वा तेल लगाउनु, धुकुवा पग्नु, स्त्रीहरूको तस्वीर बनाउनु, मांसाहार, मद्यपान, माला, चन्दन र आभूषण आदि त्यागिदिउन् ॥१२॥ गुरुगृहमा बस्ता आफ्नो शक्ति तथा आवश्यकताको अनुसार शिक्षा-कल्प आदि वेदका अंगहरू र उपनिषद् समेत तीनै वेदको अध्ययन र मनन गरुन् ॥१३॥ अनि यदि सामर्थ्य छ भने गुरुलाई अभिलषित गुरु-दक्षिणा देओस् । उनको आज्ञा लिएर मात्र गृहस्थ, वानप्रस्थ र संन्यास आश्रममा प्रविष्ट होस नैष्ठिक ब्रह्मचारी बनेर जीवनभरि उनकै घरमा बसोस् ॥१४॥ यद्यपि भगवान् वासुदेवस्वरूपले कुनै पदार्थमा अनुप्रविष्ट हुँदैनन् तापनि अग्नि, गुरु,आत्मा सबै प्राणी र आफ्ना आश्रितजीवमा उनलाई व्याप्त देखोस्

6.86

॥१५॥ हे धर्मराज ! यस्तो आचरण गर्ने ब्रह्मचारी, वानप्रस्थ, संन्यासी तथा गृहस्थ पुरुष स्वयं वस्तुका साक्षात्कार गरेर परब्रह्मलाई पाउँदछ ॥१६॥ हे राजन् ! म तिमीलाई मुनिजनोक्त वानप्रस्थ आश्रमको नियम भन्दछु। जिनको आचरण गरेर मुनि सहजै ऋषिलोक पाउँदछन् ॥१७॥ वानप्रस्थी जोतेको भूमिमा उत्पन्न अन्न नखाउन्, नजोतिएका भूमिमा उत्पन्न भएको पनि जुन समयभन्दा पहिल्यै पाकेको होस्, अग्निको संयोगले पाकेको अथवा काँचै होस्, त्यो पनि नखाओस्। केवल स्वयं तापले पाकेका कन्द-मूलले खाओस्॥१८॥ नीवार आदि वनका धानले वेला-वेलामा विहित चरु तथा पुरोडाशको होम गरोस् र नयाँ अन्न पाएपछि पुरानो संचित अन्न त्याग गर्दओस् ॥१९॥ यज्ञीय अग्नीको रक्षार्थ पर्णकुटी तथा पर्वत-कन्दराको आश्रय लेओस्। स्वयं शीत, वायु, अग्नि र ग्रीष्मको तापादि खपोस् ॥२०॥ शिरमा जटा, रौं, नङ, दाह्री-जुँगा, मल कमण्डलु, मृगचर्म, वल्कलवस्त्र तथा स्रुक स्रुवा आदि अग्निहोत्रका पात्र राखुन् ॥२१॥ जसमा तपस्याको कष्टले बुद्धि भ्रष्ट नहुने किसिमले बाह्र, आठ, चार, दुइ तथा एक वर्षसम्म वानप्रस्थ आश्रमका सबै नियमहरूक

॥ १७ ॥ न कृष्टपच्यमश्नीयादकृष्टं चाप्यकालतः ॥ अग्निपक्वमथामं वा अर्कपक्वमुताहरेत् ॥ १८ ॥ वन्यैश्चरुपुरोडाशान्निर्वपेत्कलचोदितान् ॥ लब्धे नवे नवेऽन्नाद्ये पुराणं तु परित्यजेत् ॥ १९ ॥ अग्न्यर्थमेव शरणमुटजं वाऽद्रिकन्दराम् ॥ श्रयेत हिमवाय्वग्निवर्षार्कातपषाट् स्वयम् ॥ २० ॥ केशरोमनखश्मश्रुमलानि जटिलो दधत् ॥ कमण्डल्वजिने दण्डवल्कलाग्निपरिच्छदान् ॥ २१ ॥ चरेद्वने द्वादशाब्दानष्टौ वा चतुरो मुनिः ॥ द्वावेकं वा यथा बुद्धिर्न विपद्येत कृच्छ्रतः ॥२२॥ यदाऽकल्पः स्वक्रियायां व्याधिभिर्जरयाऽथवा ॥ आन्वीक्षिक्यां वा विद्यायां कुर्यादनशनादिकम् ॥ २३ ॥ आत्मन्यग्नीन्समारोप्य संन्यस्याहंममात्मताम् ॥ कारणेषु न्यसेत्सम्यक् संघातं तु यथार्हतः ॥२४॥ खे खानि वायौ निःश्वासांस्तेजस्तूष्माणमात्मवान् ॥ अप्स्वसृक्श्लेष्मपूयानि क्षितौ शेषं यथोद्भवम् ॥ २५ ॥ वाचमग्नौ सवक्तव्यामिन्द्रे शिल्पं करावपि ॥ पदानि गत्या वयसि रत्योपस्थं प्रजापतौ ॥ २६ ॥ मृत्यौ पायुं विसर्गं च यथास्थानं विनिर्दिशेत् ॥ दिक्षु श्रोत्रं सनादेन स्पर्शमध्यात्मनि त्वचम् ॥ २७ ॥ रूपाणि चक्षुषा राजञ्ज्योतिष्यभिनिवेशयेत् ॥ अप्सु प्रचेतसा जिह्वां घ्रेयैर्घ्राणं क्षितौ न्यसेत् ॥ २८ ॥ मनो मनोरथैश्चन्द्रे बुद्धिं बोध्यैः कवौ परे ॥ कर्माण्यध्यात्मना रुद्रे यदहं·

पालन गरोन् ॥२२॥ हे राजन् ! जब वानप्रस्थी मुनि रोग वा वृद्धावस्थाले आफ्ना कर्म तथा वेदान्तसम्बन्धी विचार गर्नमा असमर्थ हुन्छ, तब अनशनादि व्रत धारण गरोस्, अनशन गर्नुभन्दा पहिले आहवनीयादि अग्निलाई आफ्नो आत्मामा लीन पारेर अहंता-ममता त्यागेर भगवान्‌द्वारा शरीरलाई उसको उत्पत्तिको कारणस्वरूप आकाशादि पञ्चतत्त्वमा लय पारोस्। आफाफ्ना उत्पत्ति-स्थान अनुसार इन्द्रिय-गोलकहरूलाई आकाशमा, प्राणलाई वायुमा, उष्णता अग्निमा, रक्तश्लेष्मा अर्थात् कफ र रक्त, पूय (पीप) आदि जलमा तथा अस्थि आदि शरीरका कठिन वस्तुलाई पृथ्वीमा लीन गरिदेओस् ॥२३-२५॥ वाणी र त्यसको कर्म भाषणलाई अग्निमा, हात र शिल्प इन्द्रमा, गतिसमेत चरणकाललरूपधारी विष्णुमा, रति सहित उपस्थ इन्द्रियलाई प्रजापतिमा पायु र मलोत्सर्गलाई उनको आश्रय मृत्युमा लीन गरोस्। हे राजन् ! नादस्वर सहित श्रवणेन्द्रियलाई सबै दिशाहरूमा, स्पर्श तथा त्वचालाई वायुमा, नेत्रसमेत रूपलाई ज्योतिमा, मधुर आदि रससमेत रसनेन्द्रियलाई जलमा, र गन्धसमेत घ्राणेन्द्रियलाई पृथिवीमा लय गरिदेओस् ॥२६-२८॥ मनोरथसहित मनलाई चन्द्रमामा,

बोध्य पदार्थसमेत बुद्धिलाई ब्रह्ममा र अहङ्कारसहित कर्महरूलाई ती रुद्रमा लीन पार्नु–जसबाट अहंता-ममतारूपिणी क्रियाहरू सम्पन्न हुन्छन् । चेतना रहित चित्तलाई क्षेत्र अर्थात् जीवमा र गुणहरूका कारण विकार सदृश प्रतीयमान जीवलाई परब्रह्ममा लीन गरिदेओस् ॥२९॥ पृथ्वीलाई जलमा, जललाई अग्निमा, अग्निलाई वायुमा, वायु आकाशमा, आकाशलाई अहङ्कारमा, अहङ्कारलाई महत्तत्त्वमा, महतत्त्वलाई अव्यक्तमा, अव्यक्तलाई परमात्मामा लीन गरोस् ।।३०॥ यस प्रकार लय-चिन्तन गरेर अवशिष्ट चिन्मात्र परमात्मालाई अक्षररूपले जानोस् र स्वयं अद्वैदभावमा स्थित भएर आफ्नो आश्रयस्वरूप काष्ठादि भस्म भइसकेपछि शान्त अग्निको समान शान्त होइजान्छ ॥३१॥ इति श्रीमद्भागवते महापुराणे नेपाली भाषा-टीकायां द्वादशोऽध्यायः॥१२॥(योगीहरूका धर्मको निरूपण र प्रह्लाद-अवधूत संवाद)–नारदजी भन्दछन्–हे धर्मराज ! उपर्युक्त वानप्रस्थी यदि ब्रह्मविचारमा समर्थ भए संन्यास लेओस् र शरीरबाहेक अन्य सबै वस्तुहरू त्यागिदेओस् । यौटा गाउँमा एक रात मात्र बस्ने नियम लिएर केही इच्छा नराखेर पृथ्वीमा स्वच्छन्द विचरण गरोस् ॥१॥यदि लुगा लगाउन इच्छा

ममता क्रिया ॥ सत्त्वेन चित्तं क्षेत्रज्ञे गुणैर्वैकारिकं परे ॥ २९ ॥ अप्सु क्षितिमपो ज्यौतिष्यदो वायौ नभस्यमुम् ॥ कूटस्थे तच्च महति तदव्यक्ते-ऽक्षरे च तत् ॥ ३० ॥ इत्यक्षरतयाऽऽत्मानं चिन्मात्रमवशेषितम् ॥ ज्ञात्वाऽद्वयोऽथ विरमेद्दग्धयोनिरिवानलः ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे युधिष्ठिरनारदसम्वादे सदाचारनिर्णयो नाम द्वादशोऽध्यायः ॥ १२ ॥ नारद उवाच ॥ कल्पस्त्वेवं परिव्रज्य देहमात्रावशेषितः ॥ ग्रामै-करात्रविधिना निरपेक्षश्चरेन्महीम् ॥ १ ॥ बिभृयाद्यद्यसौ वासः कौपीनाच्छादनं परम् ॥ त्यक्तं न दण्डलिङ्गादेरन्यत्किञ्चिदनापदि ॥ २ ॥ एक एव चरेद्भिक्षुरात्मारामोऽनपाश्रयः ॥ सर्वभूतसुहृच्छान्तो नारायणपरायणः ॥३॥ पश्येदात्मन्यदो विश्वं परे सदसतोऽव्यये ॥ आत्मानं च परं ब्रह्म सर्वत्र सदसन्मये ॥४ ॥ सुप्तप्रबोधयोः सन्धावात्मनो गतिमात्मदृक् ॥ पश्यन्बन्धं च मोक्षं च मायामात्रं न वस्तुतः ॥ ५ ॥ नाभिनन्देद्ध्रुवं मृत्यु-मध्रुवं वाऽस्य जीवितम् ॥ कालं परं प्रतीक्षेत भूतानां प्रभवाप्ययम् ॥ ६ ॥ नासच्छास्त्रेषु सज्जेत नोपजीवेत जीविकाम् ॥ वादवादांस्त्यजेत्तर्कान्पक्षं कंचन नाश्रयेत् ॥ ७ ॥ न शिष्याननुबध्नीत ग्रन्थान्नैवाभ्यसेद्बहून् ॥ न व्याख्यामुपयुञ्जीत नारम्भानारभेत्क्वचित् ॥ ८ ॥ न यतेराश्रमः प्रायो

गर्दछ भने केवल कौपीन मात्र लगाओस् र जबसम्म कुनै ठूलो विपत्ति आइलाग्दैन तबसम्म दण्ड र आश्रम-चिन्हको अतिरिक्त अरू कुनै वस्तु धारण नगरोस् ॥२॥ सबै प्राणीको हितैषी, शान्तचित्त तथा नारायण-परायण भएर कसैको आश्रय नलेओस् र आत्माराम भावले एक्लै डुलोस् ॥३॥ जो सत् (कार्य) तथा असत् ( कारण ) दुवै देखि भिन्न छ, त्यो अविनाशी आत्मामा प्रपञ्चलाई अध्यस्त जानोस् र कार्य-कारणरूपी संसारमा सर्वत्र आफ्नो परब्रह्मस्वरूप आत्मालाई व्याप्त जानोस् ॥४॥ आत्मदर्शी यदि सुषुप्ति तथा जागृतिको सन्धिमा आत्म-स्वरूपको साक्षात्कार गरेर बन्धन र मोक्ष केवल मायामात्र हुन्, वास्तवमा तिनको केही अस्तित्व छैन–यस्तो जानेर सर्वत्र परब्रह्मस्वरूप आत्माको नै दर्शन गरोस् ॥५॥ शरीरलाई प्राप्तव्य मृत्यु वा अनिश्चित जीवनको अभिनन्दन नगरोस् सबै प्राणीका उत्पत्ति र नाशका कारणस्वरूप कालको प्रतीक्षा गर्दै रहोस् ॥६॥ अनात्मविषयक शास्त्रमा प्रीति नगरोस् । कुनै विकारको आश्रय नलेओस्, विवादको निम्ति गरिने तर्कलाई सर्वथा त्यागिदेओस् र कुनै पक्ष पनि नस्वीकारोस् ॥ ७ ॥ शिष्यहरू जम्मा नपारोस् , धेरै ग्रन्थको अभ्यास नगरोस्,

शास्त्रहरूको व्याख्या नगरोस् र मठ-स्थापनादि नयाँ-नयाँ काम आरम्भ नगरोस् ॥ ८ ॥ शान्त र समदर्शी महात्मा यतिको आश्रय धर्माचरणको निम्ति हुँदैन । अतः त्यो आफ्नो आश्रम चिन्ह धारण गरोस् वा त्यागिदिओस् ॥९॥ बाह्य चिह्नले रहित तर आत्मानुसन्धानमा संलग्न ज्ञानी बुद्धिमान भएर पनि अन्य व्यक्तिको समक्ष उन्मत्त तथा बालक झैं र विद्वान् भएर पनि लाटो झैं आफूलाई जनाओस् ॥१०॥ हे राजन् ! पण्डितहरू यस विषयमा अजिंगर-वृत्तिधारी यौटा मुनि र प्रह्लादको संवादको प्रसंगमा यस इतिहासको दृष्टान्त दिन्छन्॥११॥ एक समय लोकतत्त्वको जिज्ञासाले केही मन्त्री सहित डुलिरहेका भगवद्भक्त प्रह्लादले यौटा मुनीश्वरलाई सह्य पर्वतको टाकुरो र कावेरी नदीको तटमा भूमिमा लडिबडी गरेको देखे । त्यस बखत उनको विमल तेज धूलिधूसरित अंगले ढाकिएको थियो ॥१२।१३॥ उनको कर्म, तिनको आकार, उनको वाणी तथा तिनको वर्णाश्रम आदिका चिन्हले मानिस यो बुझन सक्तैनथे–'यो सिद्ध पुरुष हुन् वा अरु कोही ।' त्यहाँ गएर श्रेष्ठ प्रह्लादले तिनका पाउमा शिर राखेर प्रणाम गरे र विधिवत् पूजा गरेर जिज्ञासु भावले सोधे–॥१४-१५॥ हे भगवन् !

धर्महेतुर्महात्मनः ॥ शान्तस्य समचित्तस्य बिभृयादुत वा त्यजेत् ॥ ९ ॥ अव्यक्तलिङ्गो व्यक्तार्थो मनीष्युन्मत्तबालवत् ॥ कविर्मूकवदात्मानं स दृष्ट्या दर्शयेन्नृणाम् ॥१०॥ अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ॥ प्रह्लादस्य च सम्वादं मुनेराजगरस्य च ॥११॥ तं शयानं धरोपस्थे कावेर्याः सह्यसानुनि ॥ रजस्वलैस्तनूदेशैर्निगूढामलतेजसम् ॥ १२ ॥ ददर्श लोकान्विचरँल्लोकतत्त्वविवित्सया ॥ वृतोऽमात्यैः कतिपयैः प्रह्लादो भगवत्प्रियः ॥ १३ ॥ कर्मणाऽऽकृतिभिर्वाचा लिंगैर्वर्णाश्रमादिभिः ॥ न विदन्ति जना यं वै सोऽसाविति न वेति वा ॥ १४ ॥ तं नत्वाऽभ्यर्च्य विधिवत्पादयोः शिरसा स्पृशन् ॥ विवित्सुरिदमप्राक्षीन्महाभागवतोऽसुरः ॥ १५ ॥ बिभर्षि कायं पीवानं सोद्यमो भोगवान्यथा ॥ वित्तं चैवोद्यमवतां भोगो वित्तवतामिह ॥ भोगिनां खलु देहोऽयं पीवा भवति नान्यथा ॥ १६ ॥ न ते शयानस्य निरुद्यमस्य ब्रह्मन्नु ह्यर्थो यत एव भोगः ॥ अभोगिनोऽयं तव विप्र देहः पीवा यतस्तद्वद नः क्षमं चेत् ॥ १७ ॥ कविः कल्पो निपुणदृक् चित्रप्रियकथः समः ॥ लोकस्य कुर्वतः कर्म शेषे तद्वीक्षितापि वा ॥ १८ ॥ नारद उवाच ॥ स इत्थं दैत्यपतिना परिपृष्टो महामुनिः ॥ स्मयमानस्तमभ्याह तद्वागमृतयन्त्रितः ॥ १९ ॥ ब्राह्मण उवाच ॥ वेदेदमसुरश्रेष्ठ भवान्नन्वार्यसम्मतः ॥ ईहोपरमयोर्नृणां पदान्यध्यात्मचक्षुषा ॥ २० ॥ यस्य नारायणो देवो भगवान्हृद्गतः सदा ॥ भक्त्या केवलया ज्ञानं

हजुर उद्योगी तथा भोगीको जस्तो पुष्ट कलेवर धारण गर्नु भएको छ । संसारमा उद्यमीलाई नै धन प्राप्त हुन्छ । जो धनी हुन्छन्, उनैलाई भोग प्राप्त हुन्छन् र जो भोगी हुन्छन् तिनैको शरीर मोटो-ताजा र बलियो हुन्छ ॥ १६ ॥ तर यस प्रकार निरुद्यम हजुरसित केही पनि धन छैन, जसले हजुरलाई भोग प्राप्त हुन सकोस्, तैपनि हे ब्रह्मन् ! हजुरको शरीर यति बर्ता हृष्ट-पुष्ट किन छ ? यदि भन्न हुने भए भन्नुहवस् ॥१७॥ हजुर विद्वान, समर्थ र बाठो हुनुहुन्छ । मानिसलाई प्रसन्न पार्ने कुरा पनि हजुरलाई ज्ञात छ । अनि सबैलाई कर्म गरेको देखेर पनि हजुर उदासीन किन हुनुहुन्छ ? ॥१८॥ नारदजी भन्दछन्-हे धर्मराज युधिष्ठिर ! दैत्यपति प्रह्लादले सोधेपछि तिनको वचनामृतले आकृष्ट महामुनि हाँस्तै बोले ॥१९॥ब्राह्मण भन्दछन्–हे असुरश्रेष्ठ ! तिमी साधु-समाजमा सम्मानित छौ । अतएव मनुष्यहरूको प्रवृत्तिले के फल मिल्दछ यो कुरालाई तिमी ज्ञान दृष्टिले नै देखेर जानि लिन्छौ ॥ २० ॥ किनकि

पवित्र भक्तिले गर्दा भगवान् सर्वदा तिम्रो हृदयमा विराजमान रहन्छन् ; जस्तै सूर्य अन्धकारलाई नष्ट पार्दछ, त्यस्तै नै ती तिम्रो अज्ञानलाई नष्ट पार्दैरहन्छन्॥२१॥ तैपनि हे राजन् ! मैले जस्तो सुनेको छु, तदनुसार तिम्रो प्रश्नको उत्तर दिइरहेको छु। जो व्यक्ति आफ्नो अन्तःकरण शुद्ध पार्न चाहन्छन्, तिनले तिम्रो सम्मान गर्नैपर्दछ॥२२॥ हे प्रह्लाद ! अभिलषित भोगहरूलाई पनि जो कष्टपूर्वक तृप्त हुन सक्छिन् र जो जन्म-मरणरूपी संसारचक्र चलाउँछिन् ती तृष्णा मद्वारा विविध कर्म गराएर मलाई सात योनिहरूमा ठक्कर खवाइसकीं* ॥२३॥ कर्मको प्रेरणाले विविध योनिहरूमा डुले पनि सौभाग्यवश मलाई यो मानव जन्म मिलेको छ–जुन स्वर्ग, तिर्यग्योनि, मोक्ष तथा मानवयोनिकोप्राप्ति-द्वार हो ॥२४॥ यसयोनिमापनि

धुनोति ध्वान्तमर्कवत् ॥ २१ ॥ अथापि ब्रूमहे प्रश्नाँस्तव राजन् यथाश्रुतम् ॥ सम्भावनीयो हि भवानात्मनः शुद्धिमिच्छताम् ॥ २२ ॥ तृष्णया भववाहिन्या योग्यैः कामैरपूरया ॥ कर्माणि कार्यमाणोऽयं नानायोनिषु योजितः ॥२३॥ यदृच्छया लोकमिमं प्रापितः कर्मभिर्भ्रमन् ॥ स्वर्गापवर्गयोर्द्वारं तिरश्चां पुनरस्य च ॥२४॥ अत्रापि दम्पतीनां च सुखायान्यापनुत्तये ॥ कर्माणि कुर्वतां दृष्ट्वा निवृत्तोऽस्मि विपर्ययम् ॥ २५ ॥ सुखमस्यात्मनो रूपं सर्वेहोपरतिस्तनुः ॥ मनःसंस्पर्शजान्दृष्ट्वा भोगान्स्वप्स्यामि संविशन् ॥ २६ ॥ इत्येतदात्मनः स्वार्थं सन्तं विस्मृत्य वै पुमान् ॥ विचित्रामसति द्वैते घोरामाप्नोति संसृतिम् ॥२७॥ जलं तदुद्भवैश्छन्नं हित्वाऽज्ञो जलकाम्यया ॥ मृगतृष्णामुपाधावेद्यथान्यत्रार्थदृक् स्वतः ॥२८॥ देहा-

स्त्री-पुरुषको सुखको प्राप्ति र कष्टको निवृत्तिको निम्ति अनवरत प्रयत्न गर्दा पनि विपरीत फल आइलागेको देखेर म कर्मबाट पृथक् भएको छु ॥२५॥ हे राजन् ! सुख आत्माको स्वरूप हो र सबै चेष्टाहरूमा निवृत्त भएपछि त्यो स्वतः प्रकट हुन्छ। अनि सबै भोगहरूलाई तुच्छ ठानेर म प्रारब्ध-भोग भोग गर्दै यहाँ सुतिरहन्छु ॥२६॥ प्राणी आफ्नू वास्तविक स्वार्थ बिर्सेर द्वैत प्रपञ्च वस्तुतः असत् हुनाले पनि जन्म-मरणरूपी विचित्र र भयङ्कर संसारचक्रमा निरन्तर घुमिरहन्छ ॥२७॥ जसरी अज्ञानी पुरुष जलबाट नै उत्पन्न स-साना काठ र सेवाली आदिले ढाकिएको जललाई छाडेर जलको कामनाले मृग-मरीचिकातिर दगुर्दै रहन्छ। त्यस्तै नै आत्माले पुरुषार्थ मान्ने प्राणी आत्मानुसन्धानबाट विमुख भएर

---

* दृष्टान्त ( कर्म अनुसार जन्म पाइन्छ )—एउटा दाउरे आफ्नी पत्नी र छोरा-छोरीसहित जंगलमा गएर दाउरा काट्दथ्यो र त्यो बेचेर जीविका चलाउँथ्यो। एक दिन नारद मुनि त्यहीं जङ्गलको बाटो भएर जाँदा उनले तिनीहरूलाई कठोर परिश्रम गर्नलागेका देखे र दया लाग्यो अनि भगवान्कहाँ गएर तिनलाई सुखी पार्ने प्रार्थना गरे। भगवान्ले आज्ञा भयो—'मनुष्यको पूर्वजन्मको संस्कार अनुसार जन्म प्राप्त हुन्छ। तापनि तिमी तिनीहरूलाई केही दिने सोच्दछौ भने ती तीनै जनालाई एक-एक वरदान देऊ।' अनि जङ्गलमा गएर नारदजीले सबैभन्दा पहिले दाउरेकी पत्नीसित वर माग्न भने। त्यसले भनी–'म राजाकी रानी बन्ने वर माग्दछु।' नारदले 'तथास्तु' भने। त्यसै बखत त्यो रूपवती भएर एउटा राजाकी रानी बनी। अनि राजा त्यो नयाँ रानीलाई लिएर त्यहीं जङ्गलमा डुल्न हिंड्यो। त्यो देखेर दाउरे सार्है दुःखी भयो र क्रोधित भएर त्यसले नारदसित यो वर माग्यो—'यो स्त्री जंगलमा डुल्ने कुकुरनी होओस्।' अब त्यो कुकुरनी भएर त्यहीं डुल्नलागी। आमालाई दुःखी देखेर छोरोले यो वरदान माग्यो—'मेरी आमा फेरि पहिले जस्तै होउन्।' त्यसले फेरि त्यो दाउरेकी स्त्री भई। ती तीनै जना फेरि उसै गरी दाउरा काटी, शिरमा बोकेर बेची आजीविका चलाउन लागे। जब नारदजी फेरि त्यतातिर आए, तब तिनलाई पहिले जस्तै स्थितिमा देखेर विचार गरे—'भगवान्को कथन नै उचित रहेछ। मेरो वरदान व्यर्थ गयो।'

विषयहरूतिर दगुर्दछ ॥२८॥ जो मनुष्य दैवतन्त्रले शरीरादिले सुख प्राप्ति तथा दुःख निवृत्तिको चेष्टा गर्दछ, त्यस भाग्यहीन पुरुषले गरेका सारा क्रिया हरू व्यर्थ हुन्छन् ॥२९॥ कदाचित् केही सफलता प्राप्त भए पनि आध्यात्मिकादि दुःखहरूले कहिले पनि नछुट्ने मरणशील पुरुषलाई कष्टसाध्य अर्थ तथा भोगादि द्वारा के सुख प्राप्त हुन्छ ? ॥३०॥ धनका लोभी एवं अजितेन्द्रिय धनीहरूको क्लेश देखिरहेको छु। तिनलाई सर्वत्र सन्देह रहन्छ र भयले गर्दा निद्रा लाग्दैन ॥३१॥ प्राण तथा धन-सम्पन्न मनुष्यलाई राजा, चोर, शत्रु, स्वजन, पशु-पक्षी, याचक, काल एवं स्वयं आफ्नासित पनि भय बनिरहन्छ ॥३२॥ अतएव बुद्धिमान पुरुष शोक, मोह, भय, क्रोध, राग, भीरुता, श्रम आदिको चक्रमा पार्ने धन तथा प्राणको इच्छा सर्वथा त्यागिदेओस्॥३३॥ हे प्रह्लाद ! संसारमा महको मौरी तथा अजिंगर यी दुवै मेरा परम गुरु हुन्। जिनीसित शिक्षा लिएर मैले वैराग्य तथा सन्तोष पाएको छु ॥३४॥ मह जस्तै ठूलो कष्टले एकत्र पारेको धन धनस्वामीलाई मारेर अन्य व्यक्ति बलपूर्वक खोसेर लैजान्छन्। यस प्रकार मौरीबाट मैले भोगबाट सधैं विरक्त रहने

दिभिर्दैवतन्त्रैरात्मनः सुखमीहतः ॥ दुःखात्ययं चानीशस्य क्रिया मोघाः कृताः कृताः ॥ २९ ॥ आध्यात्मिकादिभिर्दुःखैरविमुक्तस्य कर्हिचित् ॥ मर्त्यस्य कृच्छ्रोपनतैरर्थैः कामैः क्रियेत किम् ॥ ३० ॥ पश्यामि धनिनां क्लेशं लुब्धानामजितात्मनाम् ॥ भयादलब्धनिद्राणां सर्वतोऽभिविशङ्किनाम् ॥ ३१ ॥ राजतश्चोरतः शत्रोः स्वजनात्पशुपक्षितः ॥ अर्थिभ्यः कालतः स्वस्मान्नित्यं प्राणार्थवद्भयम् ॥३२॥ शोकमोहभयक्रोधरागक्लैब्यश्रमादयः ॥ यन्मूलाः स्युर्नृणां जह्यात्स्पृहां प्राणार्थयोर्बुधः ॥३३॥ मधुकारमहासर्पौ लोकेऽस्मिन्नो गुरूत्तमौ ॥ वैराग्यं परितोषं च प्राप्ता यच्छिक्षया वयम् ॥३४॥ विरागः सर्वकामेभ्यः शिक्षितो मे मधुव्रतात् ॥ कृच्छ्राप्तं मधुवद्वित्तं हत्वाऽप्यन्यो हरेत्पतिम् ॥ ३५ ॥ अनीहः परितुष्टात्मा यदृच्छोपनतादहम् ॥ नो-चेच्छये बह्वहानि महाहिरिवसत्त्ववान् ॥३६॥ क्वचिदल्पं क्वचिद्भूरि भुंजेऽन्नं स्वाद्वस्वादु वा ॥ क्वचिद्भूरि गुणोपेतं गुणहीनमुत क्वचित् ॥३७॥ श्रद्धयोपाहृतं क्वापि कदाचिन्मानवर्जितम् ॥ भुंजे भुक्त्वाऽथ कस्मिंश्चिद्दिवा नक्तं यदृच्छया ॥ ३८ ॥ क्षौमं दुकूलमजिनं चीरं वल्कलमेव वा ॥ वसेऽन्यदपि संप्राप्तं दिष्टभुक् तुष्टधीरहम् ॥३९॥ क्वचिच्छये धरोपस्थे तृणपर्णाश्मभस्मसु ॥ क्वचित्प्रासादपर्यंके कशिपौ वा परेच्छया ॥ ४० ॥ क्वचित्स्नातोऽनुलिप्ताङ्गः सुवासाः स्रग्व्यलंकृतः ॥ रथेभाश्वैश्चरे क्वापि दिग्वासा ग्रहवद्विभो ॥ ४१ ॥ नाहं निन्दे न च स्तौमि स्वभावविषमं जनम् ॥ एतेषां श्रेय आशासे

शिक्षा पाएँ। म अजिंगर जस्तै निश्चेष्टभावले पल्टिइरहेर दैववश जे मिल्दछ, त्यसैमा सन्तुष्ट रहन्छु। कहिले केही नपाए पनि धेरै दिनसम्म (निराहार) यसै बसिरहन्छु ॥३५॥३६॥ म कहिले थोरै खान्छु र कहिले धेरै वर्ता। कहिले स्वादिष्ट, कहिले नमिठो, अनेक गुणले युक्त, कहिले गुणहीन कहिले श्रद्धापूर्वक ल्याइएको र कहिले निरादरपूर्वक पाएको अन्न नै खाइदिन्छु कहिले एकपल्ट भोजन गरेर दिन या रातमा फेरि खाइदिन्छु ॥३७॥३८॥ म प्रारब्धभोक्ता र सन्तोषी जीव हुँ। मलाई रेशमी वा सूती वस्त्र, मृगचर्म, चीर, वल्कल तथा जस्तो वस्त्र प्राप्त हुन्छ, त्यही लगाइदिन्छु ॥३९॥ म कहिले पृथिवी, तृण, पात, ढुङ्गा तथा खरानीको थुप्रामा बसिरहन्छु र कहिले अर्काको इच्छाले महलमा पलंग तथा डसनाहरूमा सुतिदिन्छु ॥४०॥ हे समर्थ ! म कहिले स्नान गरेर देहमा चन्दन घसी, राम्रा वस्त्र र माला आदि पहिरेर रथ, हात्ती तथा घोडामा चढेर हिंड्दछु र कहिले

निधान जस्तै नाक्को-बुक्को पैदल डुलिरहन्छु ॥ ४१ ॥ म विभिन्न स्वभाव हुने मनुष्यमध्ये कसैको निन्दा वा स्तुति गर्दिन । म त सर्वदा सबैको मङ्गलकामना गर्दछु ॥४२॥ सत्यको खोजी गर्ने पुरुष द्रव्य-जाति आदि विभिन्न विकल्पको आफ्नो भेदग्राहिणी चित्तवृत्तिलाई पदार्थमा र पदार्थमा र पदार्थलाई भ्रमोत्पादक मनमा होमिदेओस् । मनको सात्त्विक अहङ्कारमा, अहङ्कारलाई क्रमशः महत्तत्व द्वारा मायामा र मायालाई आत्मानुभवमा होमिदेओस् । यसप्रकार आत्माको अनुभव द्वारा आत्मस्वरूपमा स्थित भई अरु सबै कर्म त्यागेर सर्वथा उपरत होओस् ॥४३-४४॥ हे असुर श्रेष्ठ ! लोक र शास्त्र विरुद्ध देखिने आफ्नो सबै वृत्तान्त अति गोप्य भएर पनि मैले तिमीलाई सुनाएँ, किनकि तिमी भगवान्का परम भक्त छौ ॥४५॥ नारदजी भन्दछन्—हे राजन् ! ती मुनीश्वरको मुखबाट परमहंसको धर्म सुनेर दैत्यपति प्रह्लादले तिनको पूजा गरे र आज्ञा लिएर प्रसन्न मनले घर फर्केर गए ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥ १३ ॥ ( गृहस्थको सदाचार निरूपण )—राजा युधिष्ठिरले भने—हे देवर्षे ! गृह आदिमा आसक्तचित्त

उतैकात्म्यं महात्मनि ॥ ४२॥ विकल्पं जुहुयाच्चित्तौ तां मनस्यर्थविभ्रमे ॥ मनो वैकारिके हुत्वा तन्मायायां जुहोत्यनु ॥ ४३ ॥ आत्मानुभूतौ तां मायां जुहुयात्सत्यदृङ् मुनिः ॥ ततो निरीहो विरमेत्स्वानुभूत्याऽऽत्मनि स्थितः ॥ ४४ ॥ स्वात्मवृत्तं मयेत्थं ते सुगुप्तमपि वर्णितम् ॥ व्यपेतं लोकशास्त्राभ्यां भवान् हि भगवत्परः ॥ ४५ ॥ नारद उवाच ॥ धर्मं पारमहंस्यं वै मुनेः श्रुत्वाऽसुरेश्वरः ॥ पूजयित्वा ततः प्रीत आमन्त्र्य प्रययौ गृहम् ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे युधिष्ठिरनारदसंवादे यतिधर्मे त्रयोदशोऽध्यायः ॥ १३ ॥ युधिष्ठिर उवाच ॥ गृहस्थ एतां पदवीं विधिना येन चाञ्जसा ॥ याति देवऋषे ब्रूहि मादृशो गृहमूढधीः ॥१॥ नारद उवाच ॥ गृहेष्ववस्थितो राजन्क्रियाः कुर्वन्गृहोचिताः ॥ वासुदेवार्पणं साक्षादुपासीत महामुनीन् ॥ २ ॥ शृण्वन्भगवतोऽभीक्ष्णमवतारकथामृतम् ॥ श्रद्दधानो यथाकालमुपशान्तजनावृतः ॥ ३ ॥ सत्सङ्गाच्छनकैः सङ्गमात्मजायात्मजादिषु ॥ विमुच्येन्मुच्यमानेषु स्वयं स्वप्नवदुत्थितः ॥ ४ ॥ यावदर्थमुपासीनो देहे गेहे च पण्डितः ॥ विरक्तो रक्तवत्तत्र नृलोके नरतां न्यसेत् ॥ ५ ॥ ज्ञातयः पितरौ पुत्रा भ्रातरः सुहृदोऽपरे ॥ यद्वदन्ति यदिच्छन्ति चानुमोदेत निर्ममः ॥ ६ ॥ दिव्यं भौमं चान्तरिक्षं वित्तमच्युतनिर्मितम् ॥ तत्सर्वमुपयुञ्जान एतत्कुर्यात्स्वतो बुधः ॥ ७ ॥ यावद्भ्रियेत जठरं तावत्स्वत्वं हि देहिनाम् ॥ अधिकं योऽभिमन्येत स स्तेनो दण्डमर्हति ॥ ८ ॥

म झैं गृहस्थ पुरुष पनि जसले सहसा यो पद पाउनसकोस् त्यो उपाय मलाई भन्नुहवस् ॥ १ ॥ नारद भन्दछन्—हे राजन् ! गृहस्थाश्रमी पुरुष गृहस्थोचित काममा भगवदर्पण-पूर्वक गर्दै शान्त पुरुषसित बसेर भगवान्का अमृतमयी अवतार कथाहरूलाई श्रद्धापूर्वक सुनोस् र महामुनिहरूको सेवा गरोस् ॥२-३॥ जस्तै स्वप्नबाट बिउँझेको पुरुष स्वप्नका कल्पित सम्बन्धीहरूमा आसक्त हुँदैनन्, त्यस्तै नै सत्सङ्ग द्वारा बिस्तार-बिस्तार छुट्ने स्त्री-पुत्रादिको आसक्तिलाई स्वयं त्यागोस् ॥ ४ ॥ बुद्धिमान पुरुष केवल प्रयोजन-सिद्धिको निम्ति घर र शरीरसित सम्बन्ध राखेरभित्रबाट विरक्त र माथिबाट रागी झैं आचरण गर्दै मृत्युलोकमा आफ्नू पुरुषार्थ साधन गरोस् ॥ ५ ॥ स्वजन, पितर, बालक, भाई, मित्र र अन्य सम्बन्धी जो भनुन् वा चाहुन् त्यसको ममताशून्य भावले अनुमोदन गरुन् ॥६॥ वर्षा आदिले उत्पन्न पृथ्वीबाट जायमान र अकस्मात् प्राप्त हुने द्रव्यादि तथा दैवी पदार्थको उपयोग गर्दै अवशिष्ट

पदार्थ साधुसेवादि राम्रा काम लगाओस् ॥ ७ ॥ किनकि सबैको अधिकार केवल त्यति नै द्रव्यमा छ, जतिले उदर पूर्ति हुन सकोस्। जो त्यो भन्दा बढी वस्तुमा आफ्नो अधिकार मान्दछ, त्यो चोर र दण्डको भागी हो ॥ ८ ॥ मृग, ऊंट, गदहा, मूसो, सर्प, पक्षी, माखो आदिलाई पनि छोरो झैं ठान्दछ, किनकि उनमा र छोरोमा अन्तर नै के छ ? ॥९॥ गृहस्थ पुरुष धर्म, अर्थ र कामोपार्जनमा विशेष नभई बरु देश-काल अनुसार दैवयोगले जे जति प्राप्त हुन्छ, त्यसैमा सन्तुष्ट रहोस् ॥१०॥ त्यो सबै भोग-सामग्री कुकुर, पतित, चाण्डालादिपर्यन्त सबै प्राणीहरूलाई यथायोग्य बाँडेर भोगोस्—यतिसम्म भने आफ्नी स्त्रीलाई पनि—जसलाई मनुष्य आफ्नी मान्दछ—अतिथि आदिको सेवामा लगाइरहोस् ॥११॥ हे राजन् ! जुन स्त्रीको निम्ति मनुष्य प्राण पनि दिन सक्दछ, माता-पिता र गुरुलाई पनि मारिदिन्छ, त्यस स्त्रीमा जसले ममताको अभिमान राख्दैन, त्यो अजेय पुरुष परमात्मालाई पनि जित्न सक्दछ ॥१२॥ कहाँ अन्त्यमा कृमि, विष्ठा वा भस्म हुने यो तुच्छ देह, कहाँ उसैको निम्ति जसमा प्रेम हुन्छ, त्यो स्त्री तथा कहाँ आकाशलाई ढाक्ने आत्मा ! ( तात्पर्य के भने—

मृगोष्ट्रखरमर्काखुसरीसृप्खगमक्षिकाः ॥ आत्मनः पुत्रवत्पश्येत्तैरेषामन्तरं कियत् ॥९॥ त्रिवर्गं नातिकृच्छ्रेण भजेत गृहमेध्यपि ॥ यथादेशं यथाकालं यावद्दैवोपपादितम् ॥ १० ॥ आश्वाघान्तेवसायिभ्यः कामान्संविभजेद्यथा ॥ अप्येकामात्मनो दारां नृणां स्वत्वग्रहो यतः ॥ ११ ॥ जह्याद्यदर्थे स्वप्राणान्हन्याद्वा पितरं गुरुम् ॥ तस्यां स्वत्वं स्त्रियं जह्याद्यस्तेन ह्यजितो जितः ॥१२॥ कृमिविड्भस्मनिष्ठान्तं क्वेदं तुच्छं कलेवरम् ॥ क्वतदीयरतिर्भार्या क्वायमात्मा नभश्छदिः ॥ १३ ॥ सिद्धैर्यज्ञावशिष्टार्थैः कल्पयेद्वृत्तिमात्मनः ॥ शेषे स्वत्वं त्यजन्प्राज्ञः पदवीं महतामियात् ॥१४॥ देवानृषीन्नृभूतानि पितॄनात्मानमन्वहम् ॥ स्ववृत्त्यागतवित्तेन यजेत पुरुषं पृथक् ॥१५॥ यर्ह्यात्मनोऽधिकाराद्याः सर्वाः स्युर्यज्ञसम्पदः ॥ वैतानिकेन विधिना अग्निहोत्रादिना यजेत् ॥ १६ ॥ न ह्यग्निमुखतोऽयं वै भगवान्सर्वयज्ञभुक् ॥ इज्येत हविषा राजन् यथा विप्रमुखे हुतैः ॥१७॥ तस्माद्ब्राह्मणदेवेषु मर्त्यादिषु यथार्हतः ॥ तैस्तैः कामैर्यजस्वैनं क्षेत्रज्ञं ब्राह्मणाननु ॥ १८ ॥ कुर्यादापरपक्षीयं मासि प्रौष्ठपदे द्विजः ॥ श्राद्धं पित्रोर्यथावित्तं तद्बन्धूनां च वित्तवान् ॥ १९ ॥ अयने विषुवे कुर्याद्व्यतीपाते दिनक्षये ॥ चन्द्रादित्योपरागे च द्वादशीश्रवणेषु च ॥ २० ॥ तृतीयायां शुक्लपक्षे नवम्यामथ

अरु कुराको चिन्ता नगरेर केवल आत्मचिन्तन गरोस् ) ॥ १३ ॥ गृहस्थ पुरुष दैवयोगले स्वतः प्राप्त तथा पञ्चयज्ञादिको अवशिष्ट अन्नले नै जीवन निर्वाह गरोस्। जो पुरुष यज्ञशिष्ट अन्नबाहेक अन्य पदार्थमा स्वत्व राख्दैन, त्यो महापुरुषको पद पाउँदछ ॥ १४ ॥ हे राजन् ! गृहस्थ पुरुष वर्णाश्रमविहित वृत्तिले प्राप्त द्रव्य नित्य देवता, ऋषि, मनुष्य, भूत, पितर र आफ्नो आत्माको पूजा गरोस्। यस्तो गर्नाले सर्वान्तरयामी परमेश्वरको आराधना हुन्छ ॥ १५ ॥ यदि आफूलाई अधिकारादि सारा यज्ञ सम्पत्तिहरू प्राप्त भए यज्ञविधि प्रतिपादक शास्त्रहरूको अनुसार अग्निहोत्रादि द्वारा भगवान्को पूजा गरोस्! ब्राह्मणका मुखमा अर्पित अन्नादिले सर्वयज्ञभुक् भगवान्को जस्तो पूजा हुन्छ, त्यस्तै अग्निको मुखमा हवन गरिएको हविले पनि हुन्छ ॥१७॥ अतः ब्राह्मण, देवता र मनुष्यादिमा उनको समुचित भागद्वारा अन्तर्यामी नारायणको पूजा गरोस्। अरूलाई ब्राह्मणको पछि पूजोस् ॥१८॥ विप्र आफ्नो सम्पत्तिको अनुसारको दोस्रो पक्षमा माता-पिताको महालय श्राद्ध गरोस् र पछि धनी भए त्यस धनले बन्धुहरूको पनि श्राद्ध गरोस् ॥ १९ ॥

693

अयन, विषुव, व्यतीपात, दिनक्षय, चन्द्रग्रहण, तथा सूर्यग्रहणको अवसरमा, द्वादशी, श्रवणादि तीन नक्षत्रमा तथा वैशाख शुक्लपक्षको तृतीया, कार्तिक शुक्ल नवमी एवं हेमन्त र शिशिर ऋतुका चार तिथिहरूमा माघशुक्लको सप्तमी तिथि, मघा नक्षत्र तथा पूर्णचन्द्र पूर्णिमाको योग भएमा, पूर्णचन्द्र अथवा एक कलाले हीन चन्द्रमायुक्त पूर्णिमासित चित्रा, ज्येष्ठा, आषाढ आदि मानस सबको योग भएमा, द्वादशी तिथिमा अनुराधा, श्रवण र तीनै उत्तरा नक्षत्र अथवा उत्तरा नक्षत्रहरूमा एकादशी योग भएमा र जन्म-नक्षत्र र श्रवण नक्षत्र परेमा पितृको श्राद्ध गरोस् ॥ २०-२३ ॥ हे राजन् ! श्रेय साधनका योग्य यी सबै काल मनुष्यका कल्याणको वृद्धि गर्दछन्। अनि यी अवसरमा श्राद्ध गरोस्, किनकि यसैमा जीवनको सफलता छ ॥२४॥ यी अवसरमा स्नान, जप, होम, व्रत एवं देवता तथा ब्राह्मणको जो पूजा गरिन्छ अथवा देवता, पितर, मनुष्य एवं अन्य जीवलाई जे गति दिइन्छ, त्यानै अक्षय फलदायक हुन्छ ॥२५॥ हे राजन् ! स्त्रीका पुंसवनादि, सन्तानका जातकर्मादि, आफ्ना यज्ञदीक्षादि वार्षिक श्राद्धको समय तथा आभ्युदयिक कर्महरूको अवसरमा पनि

कार्तिके ॥ चतसृष्वप्यष्टकासु हेमन्ते शिशिरे तथा ॥ २१ ॥ माघे च सितसप्तम्यां मघाराकासमागमे ॥ राकया चानुमत्या वा मासर्क्षाणि युतान्यपि ॥ २२ ॥ द्वादश्यामनुराधा स्याच्छ्रवणस्तिस्र उत्तराः ॥ तिसृष्वेकादशी वाऽऽसु जन्मर्क्षश्रोणयोगयुक् ॥ २३ ॥ त एते श्रेयसः काला नृणां श्रेयोविवर्धनाः ॥ कुर्यात्सर्वात्मनैतेषु श्रेयोऽमोघं तदायुषः ॥ २४ ॥ एषु स्नानं जपो होमो व्रतं देवद्विजार्चनम् ॥ पितृदेवनृभूतेभ्यो यद्दत्तं तद्ध्यनश्वरम्॥२५॥ संस्कारकालो जायाया अपत्यस्यात्मनस्तथा ॥ प्रेतसंस्था मृताहश्च कर्मण्यभ्युदये नृप ॥ २६ ॥ अथ देशान्प्रवक्ष्यामि धर्मादिश्रेय आवहन् ॥ स वै पुण्यतमो देशः सत्पात्रं यत्र लभ्यते ॥ २७ ॥ बिम्बं भगवतो यत्र सर्वमेतच्चराचरम् ॥ यत्र ह ब्राह्मणकुलं तपोविद्यादयान्वितम् ॥ २८ ॥ यत्र यत्र हरेरर्चा स देशः श्रेयसां पदम् ॥ यत्र गङ्गादयो नद्यः पुराणेषु च विश्रुताः ॥ २९ ॥ सरांसि पुष्करादीनि क्षेत्राण्यर्हाश्रितान्युत ॥ कुरुक्षेत्रं गयशिरः प्रयागः पुलहाश्रमः ॥३०॥ नैमिषं फाल्गुनं सेतुः प्रभासोऽथ कुशस्थली ॥ वाराणसी मधुपुरी पम्पा बिन्दुसरस्तथा ॥ ३१ ॥ नारायणाश्रमो नन्दा सीतारामाश्रमादयः ॥ सर्वे कुलाचला राजन्महेन्द्रमलयादयः ॥३२॥ एते पुण्यतमा देशा हरेरर्चाश्रिताश्च ये ॥ एतान्देशान्निषेवेत श्रेयस्कामो ह्यभीक्ष्णशः ॥ धर्मो ह्यत्रेहितः पुंसां समस्ताधिफलोदयः ॥ ३३ ॥ पात्रं त्वत्र निरुक्तं वै कविभिः पात्रवित्तमैः ॥ हरिरेवैक उर्वीश मन्मयं वै चराचरम्

गरिएका स्नानादि कर्म अक्षय फल दिन्छन् ॥२६॥ हे राजन् ! म अब धर्मादि श्रेयःप्राप्तिकारक देश भन्दछु । जुन देशमा सुपात्र पुरुष भेटिन्छन्, त्यही देश सबभन्दा बढी पवित्र हुन्छ ॥२७॥ जुन महाप्रभुमा चराचर जगत् स्थित छ, जहाँ ती भगवान्को प्रतिमा छ, जहाँ तप, विद्या र दया आदि गुणले युक्त ब्राह्मण-कुल छ, जहाँ भगवान्को पूजा हुन्छ, ती सबै देश परम कल्याणदायी हुन्छन् । जहाँ सिद्धजन-सेवित क्षेत्र छन्, ती सबै देश धेरै पवित्र हुन्छन् । जस्तै—कुरुक्षेत्र, गया, प्रयाग, पुलहाश्रम, नैमिषारण्य, फल्गुक्षेत्र, सेतुबन्ध, प्रभास, काशी, मथुरा, बिन्दुसरोवर, बदरिकाश्रम, नन्दा, महारानी सिता र रामचन्द्रका आश्रमादि महेन्द्र एवं मलयाचलादि कुल पर्वत र जहाँ जहाँ भगवान्का प्रतिमा छन् ती सबै देश परम पवित्र छन् । जसलाई आफ्नो कल्याण इच्छा छ, तिनले यी स्थानको बारम्बार सेवन गरुन्, किनकि यी स्थानमा गरिएका पुण्यकर्म हजार गुणा बढी फल दिन्छन् ॥२८-३३॥

हे पृथिवीपते ! पात्रज्ञ तथा विचारवान् व्यक्तिले केवल श्रीहरिलाई नै सत्पात्र भनेका छन्, किनकि समस्त जगत्को स्वरूप उनै हो ॥३४॥ तिम्रो यज्ञमा देवता, ऋषि,सिद्ध र ब्रह्मपुत्र सनकादिक छँदाछँदै पनि अग्रपूजाका अधिकारी श्रीअच्युत नै मानिएका थिए ॥३५॥ जीवसमूहले पूर्ण यस ब्रह्माण्डरूपी महावृक्षका मूल ती भगवान् नै हुन् । अतः उनको पूजाले सबै जीवलाई तृप्ति मिल्दछ ॥३६॥ उनले मनुष्य. तिर्यक्, ऋषि तथा देवतादिका शरीररूपी पुरी रचेको छ । उनै ती पुरीमा जीवरूपले शयन गर्दछन् यसैले मानिसहरू उनलाई 'पुरुष' भन्दछन् ॥३७॥ हे राजन् ! मनुष्यादि शरीरमा तारतम्यभावले सर्वत्र भगवान् नै विराजमान छन् । अतः ती पुरुष नै सर्वश्रेष्ठ पात्र हुन् । जुन मानव शरीरमा भगवान्को अंश जति बर्ता रहन्छ, त्यो उति नै बर्ता श्रेष्ठ हुन्छन् ॥३८॥ हे राज० ! पुरुषहरूमा परस्पर अपमानादिको प्रवृत्ति देखेर विद्वान्हरूले त्रेता आदि युगमा उपासनाको निम्ति भगवत्प्रतिमाको कल्पना गरेका थिए । त्यसैवेलादेखि ठूलो श्रद्धा र प्रचुर सामग्रीले प्रतिमामै भगवान्को पूजा गर्नलागे, तर ती परम पुरुषका द्वेषी व्यक्तिलाई प्रतिमा पूजनले पनि पुरुषार्थको सिद्धि प्राप्त हुँदैन ।

॥३४॥ देवर्ष्यर्हत्सु वै सत्सु तत्र ब्रह्मात्मजादिषु ॥ राजन् यदग्रपूजायां मतः पात्रतयाऽच्युतः ॥३५॥ जीवराशिभिराकीर्ण आण्डकोशांघ्रिपो महान् ॥ तन्मूलत्वादच्युतेज्या सर्वजीवात्मतर्पणम् ॥ ३६ ॥ पुराण्यनेन सृष्टानि नृतिर्यगृषिदेवताः ॥ शेते जीवेन रूपेण पुरेषु पुरुषो ह्यसौ ॥ ३७ ॥ तेष्वेषु भगवान् राजँस्तारतम्येन वर्तते ॥ तस्मात्पात्रं हि पुरुषो यावानात्मा यथेयते ॥ ३८ ॥ दृष्ट्वा तेषां मिथो नृणामवज्ञानात्मतां नृप ॥ त्रेतादिषु हरेरर्चा क्रियायै कविभिः कृता ॥३९॥ ततोऽर्चायां हरिं केचित्संश्रद्धाय सपर्यया ॥ उपासत उपास्ताऽपि नार्थदा पुरुषद्विषाम् ॥ ४० ॥ पुरुषेष्वपि राजेन्द्र सुपात्रं ब्राह्मणं विदुः ॥ तपसा विद्यया तुष्ट्या धत्तेवेदं हरेस्तनुम् ॥४१॥ नन्वस्य ब्राह्मणा राजन्कृष्णस्य जगदात्मनः ॥ पुनन्तः पादरजसा त्रिलोकीं दैवतं महत् ॥४२॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे सदाचारनिर्णयो नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥ नारद उवाच ॥ कर्मनिष्ठा द्विजाः केचित्तपोनिष्ठा नृपापरे ॥ स्वाध्यायेऽन्ये प्रवचने ये केचिज्ज्ञानयोगयोः ॥ १ ॥ ज्ञाननिष्ठाय देयानि कव्यान्यानन्त्यमिच्छता ॥ दैवे च तदभावे स्यादितरेभ्यो यथार्हतः ॥२॥ द्वौ दैवे पितृकार्ये त्रीनेकैकमुभयत्र वा ॥ भोजयेत्सुसमृद्धोऽपि श्राद्धे कुर्यान्न विस्तरम् ॥३॥ देशकालोचितश्रद्धाद्रव्यपात्रा-

हे राजेन्द्र ! त्यो पुरुष-शरीरमा ब्राह्मणलाई नै सुपात्र मानिएको छ, किनकि ती आफ्नो तप, विद्या तथा सन्तोष आदि गुणले नारायणको वेदस्वरूप शरीर धारण गर्दछ ॥३९-४१॥ हे राजन् ! आफ्नो चरण-रजले तीनै लोकलाई पवित्र पार्ने ब्राह्मण भगवान्का पनि परम इष्टदेव हुँदै आएका छन् ॥४२॥ इति श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे नेपाली भाषा-टीकायां चतुर्दशोऽध्यायः ॥१४॥ ( गृहस्थको निम्ति मोक्षको वर्णन )—नारदजी भन्दछन्–हे राजन् ! केही ब्राह्मण कर्मनिष्ठ र केही तपोनिष्ठ हुन्छन् । केही वेदाध्ययनमा तत्पर रहन्छन्, केही शास्त्रको व्याख्या गर्दछन् र केही ज्ञान एवं योगको अभ्यासमा लागिरहन्छन् ॥ १ ॥ गृहस्थ पुरुष आफ्नो कृत्यको अनन्त फल पाउन ज्ञानी विप्रलाई नै पितृ र देवताहरूको उद्देश्यले हव्य र कव्य प्रदान गरुन् । यदि त्यस्ता ब्राह्मण पाइएनन् भने अन्यलाई उनको योग्यतानुसार हव्य-कव्यको दान दिनु ॥२॥ देवतासम्बन्धी काममा दुइ र पितृसम्बन्धीक ममा तीन ब्राह्मण अथवा दुवै कार्यमा एक-एक ब्राह्मणलाई भोजन गराउनु । धनी भएर पनि श्राद्ध-कर्ममा बर्ता बिस्तार नगरून् ॥ ३ ॥ किनकि धेरै स्वजनलाई डाकेर बर्ता विस्तार

695

गर्नाले देशकालोचित श्रद्धा, पदार्थ, पात्र र पूजन आदिको उचित निर्वाह हुँदैन ॥४॥ यदि देश-काल अनुसार मुनिजनको योग्य खानेकुरा भगवदर्पण गरेर श्रद्धापूर्वक सुयोग्य व्यक्तिलाई खान दियो भने त्यसले सबै कामनाहरू पूर्ण पार्दछ र अक्षय फलदायक हुन्छ ॥ ५ ॥ हे राजन् ! देवता, ऋषि, पितर, भूतगण तथा स्वयं आफ्नो र आफ्ना स्वजन सम्बन्धीहरूको अन्नबाट यथोचित भाग दिनू र सबैलाई परमात्माको रूपमा देखोस् ॥ ६ ॥ धर्मको मर्मज्ञ मनुष्य श्राद्धमा मांस नपस्कनू र स्वयं पनि नखाउनू । पितृहरूलाई मुनिजनको व्रीहि अन्नले जति प्रसन्नता हुन्छ, त्यति पशुहिंसासले हुँदैन ॥७॥ संसारका प्राणीहरूको मन, वाणी र शरीरले अहित नगरोस् । सद्धर्माभिलाषीहरूको निम्ति योभन्दा ठूलो अरु कुनै धर्म छैन ॥ ८ ॥ यज्ञ-तत्त्वज्ञ अनेक निष्काम तथा ज्ञानी जन ज्ञानाग्निले प्रज्वलित मनोनिग्रहरूपी यज्ञाग्निमा यी कर्ममय यज्ञहरू होमिदिन्छन्, किनकि द्रव्यमय यज्ञद्वारा भगवान्‌का पूजक पुरुषलाई देखेर सबै जना मनमनै यो विचार गरेर डराउँछन्–आफ्नो प्राणको पोषक यो निर्दयी अज्ञानी पुरुष मलाई अवश्य मारिदिनेछ ॥ ९-१० ॥

र्हणानि च ॥ सम्यग्भवन्ति नैतानि विस्तरात्स्वजनार्पणात् ॥ ४ ॥ देशे काले च सम्प्राप्ते मुन्यन्नं हरिदैवतम् ॥ श्रद्धया विधिवत्पात्रे न्यस्तं कामधुगक्षयम् ॥ ५ ॥ देवर्षिपितृभूतेभ्य आत्मने स्वजनाय च ॥ अन्नं संविभजन्पश्येत्सर्वं तत्पुरुषात्मकम् ॥ ६ ॥ न दद्यादामिषं श्राद्धे न चाद्याद्धर्मतत्त्ववित् ॥ मुन्यन्नैः स्यात्परा प्रीतिर्यथा न पशुहिंसया ॥ ७ ॥ नैतादृशः परो धर्मो नृणां सद्धर्ममिच्छताम् ॥ न्यासो दण्डस्य भूतेषु मनोवाक्कायजस्य यः ॥८॥ एके कर्ममयान्यज्ञान् ज्ञानिनो यज्ञवित्तमाः ॥ आत्मसंयमनेऽहीना जुह्वति ज्ञानदीपिते ॥९॥ द्रव्ययज्ञैर्यक्ष्यमाणं दृष्ट्वा भूतानि बिभ्यति ॥ एष माऽकरुणो हन्यादतज्ज्ञो ह्यसुतृब्ध्रुवम् ॥१०॥ तस्माद्दैवोपपन्नेन मुन्यन्नेनापि धर्मवित् ॥ सन्तुष्टोऽहरहः कुर्यान्नित्यनैमित्तिकीः क्रियाः ॥११॥ विधर्मः परधर्मश्च आभास उपमा छलः ॥ अधर्मशाखाः पञ्चेमा धर्मज्ञोऽधर्मवत्त्यजेत् ॥१२॥ धर्मबाधो विधर्मः स्यात्परधर्मोऽन्यचोदितः ॥ उपधर्मस्तु पाखण्डो दम्भो वा शब्दभिच्छलः ॥ १३ ॥ यस्त्विच्छया कृतः पुम्भिराभासो ह्याश्रमात्पृथक् ॥ स्वभावविहितो धर्मः कस्य नेष्टः प्रशान्तये ॥ १४ ॥ धर्मार्थमपि नेहेत यात्रार्थं वाऽधनो धनम् ॥ अनीहानीहमानस्य महाहेरिव वृत्तिदा ॥ १५ ॥ सन्तुष्टस्य निरीहस्य स्वात्मारामस्य यत्सुखम् ॥ कुतस्तत्कामलोभेन धावतोऽर्थेहया दिशः ॥१६॥ सदा सन्तुष्टमनसः सर्वाः सुखमया दिशः ॥ शर्कराकण्टकादिभ्यो यथोपानत्पदः शिवम् ॥१७॥ सन्तुष्टः

अतएव धर्मज्ञ पुरुष नित्य प्रारब्धवश प्राप्त मुनि-अन्न द्वारा नै सन्तोषपूर्वक सबै नित्य-नैमित्तिक कार्य गरुन ॥११॥ हे राजन् ! धर्मात्मा पुरुष विधर्म, परधर्म परधर्म, आभास, उपमा तथा छल-अधर्मका यी पाँच शाखालाई अधर्मको नै सदृश ठानेर सर्वथा त्यागिदिओस् ॥ १२ ॥ जुन कार्य धर्म-बुद्धिले गर्दा पनि स्वधर्ममा बाधा पार्दछ, त्यो 'विधर्म' हो, कुनै अरु द्वारा अन्य व्यक्तिको निम्ति उपदिष्ट धर्म 'परधर्म, पाखण्ड र दम्भलाई 'उपधर्म' र अर्थान्तर गरेर वाक्यको अर्को अर्थ झिकिदिनु 'छल' कहिन्छ ॥१३॥ आफ्नो आश्रमको विपरीत पुरुषहरूको मनपर्दो धर्म 'आभास' कहिन्छ । हे राजन् । स्वभावानुसार शास्त्र-विहित धर्मले कसलाई शान्ति प्रदान गर्दैन र ? ॥१४॥ हे राजन् ! धनहीन पुरुष धर्म गर्नु अथवा शरीर निम्ति पनि धनेच्छा नगरोस्, किनकि निरुद्योगी एवं अजिङ्गर झैं निवृत्ति-परायण पुरुषको निर्वाह त्यसको निवृत्तिले नै गरिदिन्छ ॥ १५ ॥ सन्तुष्ट, निवृत्ति परायण पुरुषलाई

जुन सुख प्राप्त हुन्छ, त्यो सुख कामना र लोभवश धनको निम्ति दगुर्ने व्यक्तिलाई कसरी प्राप्त हुन सक्छ ? ॥ १६ ॥ सन्तुष्ट चित्त पुरुषलाई सबै दिशाहरू उस्तै नै सधैं सुख दिन्छन्, जस्तै जुत्ता लगाएको व्यक्ति बाटोमा काँढा आदिले दुःखी हुँदैनन् ॥ १७ । जुन पुरुष उपस्थ र जिब्रोका विषयका वासनाले अधीन रहन्छ, त्यो कृपण प्राणी घरको रक्षार्थ पालेका कुकुर समान हीन भएर जान्छ । हे राजन् ! यो सबैं हुँदाहुँदै पनि मनुष्य दैवयोगले प्राप्त केवल जलले नै सन्तुष्ट किन रहन्न ? ॥ १८ ॥ जुन ब्राह्मण सन्तोषी हुँदैन, त्यसको तेज, विद्या, तप तथा यश त्यसको इन्द्रिय-लोलुपताले क्षीण भएर जान्छन् र विवेक पनि नष्ट हुन्छ ॥ १९ ॥ भोक प्यासको शान्ति भएपछि अन्न-जलको कामना नष्ट हुन्छ । क्रोधको परिणाम हिंसादि भइसकेपछि त्यो पनि शान्त हुन्छ, तर दसै दिशाहरू जितेर भूमिको भोग गरेर पनि मनुष्यको लोभ समाप्त हुँदैन ॥ २० ॥ हे राजन् ! विविध क्रियाहरूका ज्ञाता, अर्काको अनेक संशयका उच्छेदक र अनेक सभाहरूका सभापति अगणित पण्डित पनि असन्तोषले गर्दानै पतित भएर जान्छन् ॥ २१ ॥ हे धर्मराज !

केन वा राजन्न वर्तंतापि वारिणी ॥ औपस्थ्यजैह्व्यकार्पण्याद्गृहपालायते जनः ॥ १८ ॥ असन्तुष्टस्य विप्रस्य तेजो विद्या तपोयशः ॥ स्रवन्ती-
न्द्रियलौल्येन ज्ञानं चैवावकीर्यते ॥ १९ ॥ कामस्यान्तं च क्षुत्तृड्भ्यां क्रोधस्यैतत्फलोदयात् ॥ जनो याति न लोभस्य जित्वा भुक्त्वा दिशो भुवः
॥२०॥ पण्डिता बहवो राजन्बहुज्ञाः संशयच्छिदः ॥ सदसस्पतयोऽप्येके असन्तोषात्पतन्त्यधः ॥२१॥ असङ्कल्पाज्जयेत्कामं क्रोधं कामविवर्जनात् ॥
अर्थानर्थेक्षया लोभं भयं तत्त्वावमर्शनात् ॥२२॥ आन्वीक्षिक्या शोकमोहौ दम्भं महदुपासया ॥ योगान्तरायान्मौनेन हिंसां कायाद्यनीहया ॥ २३ ॥
कृपया भूतजं दुःखं दैवं जह्यात्समाधिना ॥ आत्मजं योगवीर्येण निद्रां सत्त्वनिषेवया ॥ २४ ॥ रजस्तमश्च सत्त्वेन सत्त्वं चोपशमेन च ॥ एतत्सर्वं
गुरौ भक्त्या पुरुषो ह्यञ्जसा जयेत् ॥ २५ ॥ यस्य साक्षाद्भगवति ज्ञानदीपप्रदे गुरौ ॥ मर्त्यासद्धीः श्रुतं तस्य सर्वं कुञ्जरशौचवत् ॥ २६ ॥ एष वै
भगवान्साक्षात्प्रधानपुरुषेश्वरः ॥ योगेश्वरैर्विमृग्यांघ्रिर्लोको वै मन्यते नरम् ॥ २७ ॥ षड्वर्गसंयमैकान्ताः सर्वा नियमचोदनाः ॥ तदन्ता यदि नो
योगानावहेयुः श्रमावहाः ॥२८॥ यथा वार्तादयो ह्यर्था योगस्यार्थं न बिभ्रति ॥ अनर्थाय भवेयुस्ते पूर्तमिष्टं तथाऽसतः ॥२९॥ यश्चित्तविजये यत्तः

सङ्कल्पको त्यागले कामलाई, कामनाको त्यागले क्रोधलाई, अर्थमा अनर्थबुद्धि गरेर, लोभलाई र तत्त्व-चिन्तनले भयलाई जितोस् ॥ २२ ॥ अध्यात्मविद्याले शोक मोहलाई, महापुरुषको सेवाले दम्भलाई, मौनले योगका विघ्नलाई, शरीरको निश्चेष्टताले हिंसालाई, कृपाले आधिभौतिक दुःखलाई, समाधिले आधिदैविक वेदनालाई, योगबलले आध्यात्मिक कष्टलाई, आहारादिले निद्रालाई, सत्त्वगुणले रजोगुण र तमोगुणलाई र उपरतिले सत्त्वगुणलाई जितोस् । प्रत्येक पुरुष यी बाधालाई गुरुभक्ति द्वारा जित्न सक्छ ॥ २३-२५ ॥ हे राजन् ! ज्ञानदीपद्वारा प्रकाशदाता तथा साक्षात् भगवस्वरूप गुरुमा जुन व्यक्तिको 'यो मनुष्य हो' यस्तो दुर्बुद्धि हुन्छ, तिनको ज्ञान गज-स्नान झैं निरर्थक हुन्छ ॥२६॥ ठूला-ठूला योगेश्वर जसका चरण-कमलको खोजी गर्दछन् र जो प्रधान पुरुषका पनि स्वामी छन्, तिनै भगवान् सबैका गुरुदेव हुन् । जो तिनलाई मनुष्य मान्दछन्, ती भूल गर्दछन् ॥२७॥ हे राजन् ! सबै नियमको लक्ष्य यौटै छ र त्यो हो—छ इन्द्रिय ( मन र पाँच ज्ञानेन्द्रिय ) लाई जित्नु । यदि ती नियम योग अर्थात् धारण, ध्यान र समाधि आदिका साधक बन्न सकेन भने

697

श्रममात्र हुन् ॥ २८ ॥ जस्तै खेती आदि कार्य योगका साधक नभएर अनर्थरूपी संसारलाई बढाउँछन्, त्यस्तै–ईश्वरदेखि बहिर्मुख व्यक्तिका इष्टापूर्तादि सबै कर्मबन्धनका नै कारण हुन्दछन् ॥ २९ ॥ हे धर्मराज ! जो व्यक्ति मनमा विजय पाउन चाहन्छन्, परिग्रह र संग त्यागेर संन्यास लिउन् र एकान्तमा एक्लै बसेर भिक्षा वृत्तिले प्राप्त स्वल्प भोजन गरोस् ॥३०॥ हे राजन् ! त्यो पुरुष सम्म भूमिमा आसन लगाई शरीर सोझो र स्थिर पारेर सुखले बसोस् र ॐकारको जप गरोस् ॥३१॥ जबसम्म त्यसको चित्तले सङ्कल्प-विकल्पको त्याग गर्दैन तबसम्म त्यो नासिकाको अग्रभागमा दृष्टि गाडेर पूरक, कुम्भक र रेचक प्राणायामद्वारा प्राण तथा अपान वायुको गति रोकोस् ॥३२॥ कामनाको वशमा भएर रुमलिंदै मन जहाँ-जहाँ जान्छ, बुद्धिमान् पुरुष त्यसलाई उहाँबाट फर्काई बिस्तार-बिस्तार आफ्नो हृदयमा रोकोस् ॥३३॥ निरन्तर अभ्यासशील योगीको मन केही दिनपछि काष्ठ हीन आगो झैं शान्त हुन्छ ॥३४॥ कामादि वासनाका क्षोभले रहित योगीको मन चञ्चल हुँदैन र ब्रह्मानन्दको अनुभव गरेर त्यस पुरुषका सबै वृत्ति शान्त हुन्छन् ॥ ३५ ॥ जो प्राणी संन्यासी

स्यान्निःसङ्गोऽपरिग्रहः ॥ एको विविक्तशरणो भिक्षुर्भिक्षामिताशनः ॥ ३० ॥ देशे शुचौ समे राजन्संस्थाप्यासनमात्मनः ॥ स्थिरं समं सुखं तस्मिन्ना·
सीतर्ज्वङ्ग ओमिति ॥३१॥ प्राणापानौ संनिरुन्ध्यात्पूरकुम्भकरेचकैः ॥ यावन्मनस्त्यजेत्कामान्स्वनासाग्रनिरीक्षणः ॥ ३२ ॥ यतो यतो निःसरति मनः
कामहतं भ्रमत् ॥ ततस्तत उपाहृत्य हृदि रुन्ध्याच्छनैर्बुधः ॥३३॥ एवमभ्यसतश्चित्तं कालेनाल्पीयसा यतेः ॥ अनिशं तस्य निर्वाणं यात्यनिन्धन·
ह्निवत् ॥३४॥कामादिभिरनाविद्धं प्रशान्ताखिलवृत्ति यत् ॥ चित्तं ब्रह्मसुखस्पृष्टं नैवोत्तिष्ठेत कर्हिचित् ॥३५॥यः प्रव्रज्य गृहात्पूर्वं त्रिवर्गावपनात्पुनः ॥
यदि सेवेत तान्भिक्षुः स वै वान्ताश्यपत्रपः ॥३६॥ यैः स्वदेहः स्मृतोऽनात्मा मर्त्यो विट्क्रिमिभस्मसात् ॥ त एनमात्मसात्कृत्वा श्लाघयन्ति ह्यसत्तमाः
॥३७॥ गृहस्थस्य क्रियात्यागो व्रतत्यागो वटोरपि ॥ तपस्विनो ग्रामसेवा भिक्षोरिन्द्रियलोलता ॥ ३८॥ आश्रमापसदा ह्येते खल्वाश्रमविडम्बकाः ॥
देवमायाविमूढांस्तानुपेक्षेतानुकम्पया ॥३९॥ आत्मानं चेद्विजानीयात्परं ज्ञानधुताशयः ॥ किमिच्छन्कस्य वा हेतोर्देहं पुष्णाति लम्पटः ॥४०॥ आहुः
शरीरं रथमिन्द्रियाणि हयानभीषून्मन इन्द्रियेशम् ॥ वर्त्मानि मात्रा धिषणां च सूतं सत्त्वं बृहद्बन्धुरमीशसृष्टम् ॥ ४१ ॥ अक्षं दशप्राणमधर्मधर्मौ

भएर पनि धर्म र कामका दाता गृहस्थाश्रम त्यागेर फेरि उनै गृहस्थ-धर्मादिको सेवन गर्दछ त्यो मानो आफ्नै वमन खानो भएको ठूलो निर्लज्ज पुरुष हो ॥३६॥ आफ्नो देहलाई अनात्मा, मरणशील र परिणाममा विष्ठा, कृमि र भस्म मान्ने मूढ नै फेरि उसको सहनी गर्छन् ॥ ३७ ॥ हे राजन् ! गृहस्थ पुरुषले कर्म त्याग्नु, ब्रह्मचारीले व्रत त्याग्नु, तपस्वीले गाउँमा बस्नु र संन्यासीले इन्द्रिय लोलुप हुनु–यी चारै थरि नीच कर्म हुन् र आफ्आफ्ना आश्रमको विडम्बना गर्छन् । ईश्वरी मायाले विमोहित यस्ता मूर्खप्रति दया गरेर सर्वदा तिनका प्रति उपेक्षा नै गर्दैरहोस् ॥ ३८-३९ ॥ जो आफ्नो आत्मालाई ब्रह्मस्वरूप मानिसकेको छ र आत्मज्ञानद्वारा असका वासना क्षीण भएका छन् अनि त्यो पुरुष कुन इच्छा र के हेतु इन्द्रियलोलुप बनेर आफ्नो शरीर परिपुष्ट पार्ला ? ॥४०॥ पंडित जनको कथन छ–यो शरीर रथ हो, इन्द्रियाधिपति मन लगाम हो शब्दादि विषय मार्ग हुन् बुद्धि सारथी हो, चित्त विशाल बन्धन हो, दसै प्राण धुरा हुन् धर्म र अधर्म दुइ चक्का हुन् र अभिमानी जीव यस रथको रथी हो त्यस रथीको धनुष ॐकार, बाण जीव र लक्ष्य परब्रह्म हो

जस्तै धनुषमा बाण राखेर लक्ष्यमा छाडिन्छ, त्यस्तै ॐकार जप गरेर मनलाई अन्तरात्मामा लीन गरिदेओस् ॥ ४१-४२ ॥ राग, द्वेष, लोभ शोक, मोह भय, मानापमान, असूया (ईर्ष्या), छल, मत्सर, हिंसा, प्रमाद, क्षुधा र निद्रा—यी तथा जीवका अरु पनि अनेक शत्रु छन् । रजोगुण, तमोगुण र सतोगुण पनि शत्रुमात्रले प्रकट देखिन्छ ॥४३॥४४॥ अतः जबसम्म जीव इन्द्रियादि सबै सामग्रीले युक्त र आफ्नो अधीन यो मानव देहरूपी रथ धारण गरेको छ, अनिमात्र गुरुजनका चरण-सेवाको तीक्ष्ण ज्ञानरूपी खड्ग लिएर श्रीअच्युत भगवान्‌का चरणको आश्रय लेओस् । यी शत्रुलाई नष्ट गरेर मात्र शान्त होओस् अनि आत्मानन्दमा मग्न रहेर शरीररूपी रथको पनि उपेक्षा गरिदेओस् ॥४५॥ नभए असत् इन्द्रियरूपी घोडा र बुद्धिरूपी सारथी रथका स्वामीरूपी जीवलाई कुबाटोमा लगेर विषयरूपी डाकाको हातमा सुम्पिदेलान् र ती डाका सारथी र घोडाको संगसंगै यसलाई मृत्युरूपी डरलाग्दो अन्धकारमय संसार-कूपमा धुचेटी दिनेछन् ॥४६॥ हे राजन् ! वैदिक कर्म दुइ प्रकारका हुन्छन्-प्रवृत्तिपरक र निवृत्तिपरक । कर्मद्वारा जन्म-मरण प्राप्त हुन्छ र निवृत्तिपरक कर्मले अमृत पाइन्छ॥४७॥

चक्रेऽभिमानं रथिनं च जीवम् ॥ धनुर्हि तस्य प्रणवं पठन्ति शरं तु जीवं परमेव लक्ष्यम् ॥४२॥ रागो द्वेषश्च लोभश्च शोकमोहौ भयं मदः ॥ मानोऽवमानोऽसूया च माया हिंसा च मत्सरः ॥४३॥ रजः प्रमादः क्षुन्निद्रा शत्रवस्त्वेवमादयः ॥ रजस्तमःप्रकृतयः सत्त्वप्रकृतयः क्वचित् ॥४४॥ यावन्नृकायरथमात्मवशोपकल्पं धत्ते गरिष्ठचरणार्चनया निशातम् ॥ ज्ञानासिमच्युतबलो दधदस्तशत्रुः स्वाराज्यतुष्ट उपशान्त इदं विजह्यात् ॥४५॥ नो चेत्प्रमत्तमसदिन्द्रियवाजिसूता नीत्वोत्पथं विषयदस्युषु निक्षिपन्ति ॥ ते दस्यवः सहयसूतममुं तमोऽन्धे संसारकूप उरुमृत्युभये क्षिपन्ति ॥ ४६ ॥ प्रवृत्तं च निवृत्तं च द्विविधं कर्म वैदिकम् ॥ आवर्तेत प्रवृत्तेन निवृत्तेनाश्नुतेऽमृतम् ॥ ४७ ॥ हिंस्रं द्रव्यमयं काम्यमग्निहोत्राद्यशान्तिदम् ॥ दर्शश्च पूर्णमासश्च चातुर्मास्यं पशुः सुतः ॥४८॥ एतदिष्टं प्रवृत्ताख्यं हुतं प्रहुतमेव च ॥ पूर्तं सुरालयारामकूपाजीव्यादिलक्षणम् ॥ ४९ ॥ द्रव्यसूक्ष्मविपाकश्च धूमो रात्रिरपक्षयः ॥ अयनं दक्षिणं सोमो दर्श ओषधिवीरुधः ॥ ५० ॥ अन्नं रेत इति क्ष्मेश पितृयानं पुनर्भवः ॥ एकैकश्येनानुपूर्वं भूत्वा भूत्वेह जायते ॥ ५१ ॥ निषेकादिश्मशानान्तैः संस्कारैः संस्कृतो द्विजः ॥ इन्द्रियेषु क्रियायज्ञान् ज्ञानदीपेषु जुह्वति ॥५२॥ इन्द्रियाणि मनस्यूर्मौ

शास्त्रोक्त श्येनयागादि हिंसामय कर्म मानिन्छन् । अग्निहोत्र, दर्शमास, चातुर्मास, पशुयाग, सोमयाग, हुत (वैश्वदेव) र प्रहुत (बलिहरण) आदि द्रव्यमय कर्म 'इष्ट' कहिन्छन् । देवालय, बगैंचा, कूप र पौशाला निर्माण आदि 'आपूर्त' कर्म कहिन्छन् । यी सबै कर्म प्रवृत्तिपरक हुन्छन् । यदि यी सकामभावले गरिन्छन् भने अत्यन्त अशान्ति उत्पन्न गर्दछन् ॥४८-४९॥ हे राजन् । सबै प्रवृत्तिपरायण पुरुष चरु-पुरोडाशादि द्रव्यको सूक्ष्म भागले बनेको शरीर धारण गरी धूमाभिमानी देवगणकहाँ जान्छन् र क्रमशः रात्रि, कृष्णपक्ष तथा दक्षिणायनका अभिमानी देवताकहाँ भएर ती चन्द्रलोकमा पुग्दछन् । भोग समाप्त भएपछि त्यहाँबाट औंसीमा अदृश्य चन्द्रमा झैं क्षीण भएर ती पितृयान-मार्गबाट क्रमशः ओषधि, लता, अन्न र वीर्यको रूपमा परिणत भएर फेरि संसारमा जन्म पाउँछन् । गर्भाधान संस्कारबाट लिएर श्मशान सम्मका संस्कृत द्विज इष्टापूर्तादि कर्मलाई ज्ञानले प्रकाशित इन्द्रियमा हवन गरिदिन्छ ॥५२॥ ती इन्द्रियलाई सङ्कल्परूपी मनमा, वैकारिक मनलाई वाणीमा, वाणीलाई वर्णसमुदायमा, वर्णसमुदायलाई अमय यी स्वररूपी ॐकारमा, ॐकार-

लाई बिन्दुमा, बिन्दुलाई नादमा, नादलाई सूत्रात्मास्वरूप प्राणमा, प्राणलाई ब्रह्ममा लीन गरिदिन्छ ॥५३॥ निवृत्तिपरायण ज्ञानी, अग्नि, सूर्य, दिन, सायंकाल, शुक्लपक्ष, उत्तरायणका अभिमानी देवताकहाँ भएर ब्रह्मलोकमा पुग्दछ र भोग सकिएपछि स्थूलोपाधिक 'विश्व' मा आफ्नो स्थूल उपाधिलाई लीन गरेर सूक्ष्मोपाधि 'तैजस' स्वरूप हुन्छ । सूक्ष्म उपाधिलाई कारणमा लीन गरी 'प्राज्ञ' रूपमा स्थित हुन्छ र अन्त्यमा कारणोपाधि पनि लीन भएपछि त्यो सर्वसाक्षी 'तुरीय' रूपमा स्थित हुन्छ । यस प्रकार हिंडेर त्यो क्रमशः मोक्षपद पाउँदछ॥५४॥यसैलाई देवयान-मार्ग भन्दछन् । यस मार्गको पथिक आत्मा पोषक र शान्तात्मा प्राणी क्रमशः अग्निआदिका अभिमानी देवतामा प्राप्त हुँदै आत्मस्वरूपमा स्थित हुन पुग्दछ । त्यो फेरि यस ( जन्म-मरणरूपी ) संसारमा आउन्न ॥५५॥ हे राजन् ! जुन पुरुष शास्त्ररूपी नेत्रद्वारा पितृयान तथा देवयान नामक वेदोक्तमार्गहरूलाई देख्दछ, त्यो जनसमुदायमा रहेर पनि मोहग्रस्त हुँदैन ॥५६॥ किनकि अबाधरूपले शरीरको आदि अन्त्य, भित्र-बाहिर, अग्लो-होचो, ज्ञान-ज्ञेय, वचन वाच्य, अथवा अन्धकार एवं प्रकाशरूप

वाचि वैकारिकं मनः ॥ वाचं वर्णसमाम्नाये तमोङ्कारे स्वरे न्यसेत् ॥ ओङ्कारं बिन्दौ नादे तं तं तु प्राणे महत्यमुम् ॥ ५३ ॥ अग्निः सूर्यो दिवा प्राह्णः शुक्लो राकोत्तरं स्वराट् ॥ विश्वश्च तैजसः प्राज्ञस्तुर्य आत्मा समन्वयात् ॥ ५४ ॥ देवयानमिदं प्राहुर्भूत्वा भूत्वाऽनुपूर्वशः ॥ आत्मयाज्युपशान्तात्मा ह्यात्मस्थो न निवर्तते ॥ ५५ ॥ य एते पितृदेवानामयने वेदनिर्मिते ॥ शास्त्रेण चक्षुषा वेद जनस्थोऽपि न मुह्यति ॥ ५६ ॥ आदावन्ते जनानां सद्बहिरन्तः परावरम् ॥ ज्ञानं ज्ञेयं वचो वाच्यं तमो ज्योतिस्त्वयं स्वयम् ॥ ५७ ॥ आबाधितोऽपि ह्याभासो यथा वस्तुतया स्मृतः ॥ दुर्घटत्वादैन्द्रियकं तद्वदर्थविकल्पितम् ॥५८॥ क्षित्यादीनामिहार्थानां छाया न कतमाऽपि हि ॥ न सङ्घातो विकारोऽपि न पृथङ्नान्वितो मृषा ॥५९॥ धातवोऽवयवित्वाच्च तन्मात्रावयवैर्विना ॥न स्युर्ह्यसत्यवयविन्यसन्नवयवोऽन्ततः ॥ ६० ॥ स्यात्सादृश्यभ्रमस्तावद्विकल्पे सति वस्तुनः ॥ जाग्रत्स्वापौ यथा स्वप्ने तथा विधिनिषेधता ॥ ६१ ॥ भावाद्वैतं क्रियाद्वैतं द्रव्याद्वैतं तथात्मनः ॥ वर्तयन्स्वानुभूत्येह त्रीन्स्वप्नान्धुनुते मुनिः ॥ ६२ ॥ कार्यकारणवस्त्वैक्यमर्शनं पटतन्तुवत् ॥ अवस्तुत्वाद्विकल्पस्य भावाद्वैतं तदुच्यते ॥ ६३ ॥ यद्ब्रह्मणि परे साक्षात्सर्वकर्मसमर्पणम् ॥ मनोवाक्तनुभिः

जुन वस्तु छ, त्यो त स्वयमेव ज्ञानी छ ॥५७॥ जस्तै प्रतिबिम्बादि आभास बाधित भएर पनि वास्तविक ज्ञात हुन्छन्, त्यस्तै नै इन्द्रियका विषय असम्भव भए पनि सत्यझैं देखिन्छन् ॥५८॥ पृथ्वी आदि पञ्चभूतको छायारूपिणी यो देह वस्तुतः ती भूतहरूका संघात, विकार र परिणाम केही पनि होइन, किनकि यो आफ्ना अवयवले न पृथक् छ, न तिनमा अनुगत नै छ, अतः यो मिथ्या छ ॥५९॥ शरीरको कारण पञ्चभूत पनि अवयवी हुनाले अवयवस्वरूप नै हुन् र अवयवी असत् सिद्ध भएपछि अन्ततः अवयव पनि असत् नै हुन्छन्॥६०॥ जबसम्म मनुष्यमा अविद्याद्वारा कल्पित वस्तुको विकल्प बनिरहन्छ, तबसम्म सादृश्य भ्रम पनि रहिरहन्छ । जस्तै स्वप्नमा कहिले जागृतितिर र कहिले स्वप्नकै प्रतीति हुन्छ, त्यस्तै नै शास्त्रका विधिनिषेध पनि स्वप्न झैं देखिन्छन् ॥६१॥ हे राजन् ! भावाद्वैत, क्रियाद्वैत र द्रव्याद्वैतको विवेचन मुनि आत्मानुभव द्वारा जाग्रत, स्वप्न तथा सुषुप्तिरूपी तीनैथरि स्वप्नहरू अर्थात् अवस्थाहरूलाई त्यागिदिन्छन् ॥६२॥ जस्तै लुगा तन्तुरूप छ, त्यस्तै नै कार्य-कारणरूप वस्तु पनि यौटा नै रहन्छ, किनकि विकल्प वस्तुतः असत्य छ । यो विचार भावाद्वैत कहिन्छ

॥६३॥ ! हे पार्थ ! मन, वाणी तथा शरीरद्वारा गरिने कर्म परब्रह्मलाई अर्पण गरिदिनु नै क्रियाद्वैत कहिन्छ ॥६४॥ स्त्री, पुत्रादि तथा अन्य सबै प्राणीहरूका स्वार्थ र भोग-हरूको एकता गर्नु नै द्रव्याद्वैत कहिन्छ ॥६५॥ हे राजन् ! जुन पुरुषलाई जुन द्रव्य जुन बेला, जुन उपायले र जसबाट ग्रहण गर्नु शास्त्र-विरुद्ध छैन भने त कुनै आपत्ति-काल नहुँदा पनि उसैद्वारा आफ्ना सबै कार्य सम्पन्न गरोस्—अरुद्वारा होइन ॥६६॥ हे राजन् ! यी कर्महरूको अनुसार व्यवहार गर्दैरहनाले मनुष्य भगवद्भक्ति पाएर गृहस्थीमा रहेर पनि प्रभुको भक्ति प्राप्त गर्दछ । हे नरेन्द्र ! भगवान् कृष्णको कृपाले जसरी तिमी दुस्तर विपत्तिहरूलाई नाघिसकेका छौ र उनकै चरण-कमलको सेवाको प्रभावले जसरी तिमीले दिग्गज-सम्मलाई जितेर राजसूय आदि यज्ञ गर्यौ, त्यस्तै नै ती प्रभुको कृपाले तिमी संसार-सागरबाट पारी तर्न सक्नेछौ ॥६७,६८॥ हेराजन् ! गत महाकल्पमा म सबै गन्धर्वद्वारा सम्मानित उपबर्हण नामको यौटा गन्धर्व थिएँ ॥६९॥ रूप, सुकुमारता, मधुरता तथा मनोहर सुगन्धले गर्दा मेरो दर्शन सबैलाई निकै प्रिय थियो । स्त्रीहरूलाई त म सान्है नै मनपर्दथें । यसैले

पार्थ क्रियाद्वैतं तदुच्यते ॥ ६४ ॥ आत्मजायासुतादीनामन्येषां सर्वदेहिनाम् ॥ यत्स्वार्थकामयो रैक्यं द्रव्याद्वैतं तदुच्यते ॥६५॥ यद्यस्य वाऽनिषिद्धं स्याद्येन यत्र यतो नृप ॥ स तेनेहेत कर्माणि नरो नान्यैरनापदि ॥ ६६ ॥ एतैरन्यैश्च वेदोक्तैर्वर्तमानः स्वकर्मभिः ॥ गृहेऽप्यस्य गतिं यायाद्राजंस्त-द्भक्तिभाङ्नरः ॥६७॥ यथा हि यूयं नृपदेव दुस्त्यजादापद्गणादुत्तरतात्मनः प्रभोः ॥ यत्पादपंकेरुहसेवयाभवानहारषीन्निर्जितदिग्गजः क्रतून् ॥६८॥ अहं पुराऽभवं कश्चिद्गन्धर्व उपबर्हणः ॥ नाम्नाऽतीते महाकल्पे गन्धर्वाणां सुसम्मतः ॥ ६९ ॥ रूपपेशलमाधुर्यसौगन्ध्यप्रियदर्शनः ॥ स्त्रीणां प्रियतमो नित्यं मत्तस्तु पुरुलम्पटः ॥ ७० ॥ एकदा देवसत्रे तु गन्धर्वाप्सरसां गणाः ॥ उपहूता विश्वसृग्भिर्हरिगाथोपगायने ॥ ७१ ॥ अहं च गायंस्तद्वि-द्वान्स्त्रीभिः परिवृतो गतः ॥ ज्ञात्वा विश्वसृजस्तन्मे हेलनं शेपुरोजसा ॥ याहि त्वं शूद्रतामाशु नष्टश्रीः कृतहेलनः ॥ ७२ ॥ तावद्दास्यामहं जज्ञे तत्रापि ब्रह्मवादिनाम् ॥ शुश्रूषयाऽनुषङ्गेण प्राप्तोऽहं ब्रह्मपुत्रताम् ॥ ७३ ॥ धर्मस्ते गृहमेधीयो वर्णितः पापनाशनः ॥ गृहस्थो येन पदवीमञ्जसा न्यासिनामियात् ॥ ७४ ॥ यूयं नृलोके बत भूरिभागा लोकं पुनाना मुनयोऽभियन्ति ॥ येषां गृहानावसतीति साक्षाद्गूढं परं ब्रह्म मनुष्यलिङ्गम् ॥ ७५ ॥ स वा अयं ब्रह्म महद्विमृग्यकैवल्यनिर्वाणसुखानुभूतिः ॥ प्रियः सुहृद्वः खलु मातुलेय आत्माऽर्हणीयो विधिकृद्गुरुश्च ॥ ७६ ॥ न यस्य

म नित्य उन्मत्त रहन्थें ॥७०॥ एक समय प्रजापतिहरूले भगवान्को चरित्र गानको निम्ति देवयज्ञमा अनेक गन्धर्व तथा अप्सराहरूलाई डाके ॥७१॥ थाहा पाएपछि म पनि अगणित स्त्रीहरूका साथै उन्मत्तभावले गाउँदै त्यहाँ पुगें । मेरो त्यो उच्छृङ्खलता देखेर प्रजापतिहरूले मलाई श्राप दिंदै भने—'तैंले हाम्रो अपमान गरिस् । यसै निम्ति तत्काल श्रीहीन भ र शूद्र योनिमा जा' ॥७२॥ तदनुसार मैले तुरुन्त यौटी दासीको गर्भबाट जन्म लिए । तर त्यहाँ पनि ब्रह्मवादीहरूको सेवा र सत्सङ्ग गर्नाले म फेरि ब्रह्माजीको पुत्र हुन पुगें ॥७३॥ हे राजन् ! मैले तिमीलाई यो पापनाशक गृहस्थ-धर्म सुनाएँ—यसको आचरण गरेर गृहस्थ पुरुष पनि अनायास संन्यासीहरूको गति पाउँछ ॥७४॥ हे युधिष्ठिर ! साँच्चै नै तिमीहरू ठूलो भाग्यमानी छौ, किनकि तिम्रो घरमा मनुष्य रूपमा लुकेका साक्षात् परब्रह्म निवास गर्दछन् । अतएव आफ्नो दर्शनले लोकलाई पवित्र पार्ने मुनिजन सबै तिरबाट

७८१

तिमीकहाँ जान्छन् ॥ ७५ ॥ हे राजन् ! जसलाई महात्माहरू खोज्ने गर्दछन्, ती अद्वितीय र निरुपाधिक परमानन्दानुभवस्वरूप परब्रह्म नै तिम्रा प्रिय सुहृद् मामाका छोरा आत्मीय, पूज्य, आज्ञाकारी तथा गुरु भगवान श्रीकृष्ण हुनुहुन्छ ॥ ७६ ॥ अहो ! साक्षात् शिवजी र ब्रह्माजी आदि पनि ठीक-ठीक जसको स्वरूप वर्णन गर्न सक्नेनन् । हामीद्वारा भक्ति, मौन, र मनः संयमले पूजित ती भक्तवत्सल भगवान हामीमाथि प्रसन्न होउन् ॥७७॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! नारदजीको यो कथन सुनेर भरतवंशमा श्रेष्ठ राजा युधिष्ठिरले प्रेमविह्वल

साक्षाद्भवपद्मजादिभी रूपं धिया वस्तुतयोपवर्णितम् ॥ मौनेन भक्त्योपशमेन पूजितः प्रसीदतामेष स सात्वतां पतिः ॥७७॥ श्रीशुक उवाच ॥ इति देवर्षिणा प्रोक्तं निशम्य भरतर्षभः ॥ पूजयामास सुप्रीतः कृष्णं च प्रेमविह्वलः ॥ ७८ ॥ कृष्णपार्थावुपामन्त्र्य पूजितः प्रययौ मुनिः श्रुत्वा कृष्णं परं ब्रह्म पार्थः परमविस्मितः ॥ ७९ ॥ इति दाक्षायणीनां ते पृथग्वंशाः प्रकीर्तिताः ॥ देवासुरमनुष्याद्या लोका यत्र चराचराः ॥ ८० ॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां सप्तमस्कन्धे प्रह्लादानुचरिते युधिष्ठिरनारदसंवादे सदाचारनिर्णयो नाम पञ्चदशोऽध्यायः ॥ १५ ॥

भएर अतिशय प्रसन्नतापूर्वक नारद मुनि र श्रीकृष्णचन्द्रको पूजा गरे ॥७८॥ त्यसपछि भगवान श्रीकृष्ण तथा युधिष्ठिरसित अनुमति लिएर उनीद्वारा नमस्कृत भई नारदजी हिंडे । श्रीकृष्णचन्द्र परब्रह्म परमात्मा हुन् । यो जानेर राजा युधिष्ठिर निकै विस्मित भए ॥ ७९ ॥ हे राजन् ! यसरी मैले तिमीलाई देव, दैत्य तथा मनुष्यादि सबै जीवहरूकी जननी दक्षकन्याहरूको भिन्न-भिन्न वंशहरूको वृत्तान्त भनेर सुनाएँ ॥ ८० ॥ श्रीमद्भागवते महापुराणे सप्तमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां पञ्चदशोऽध्यायः ॥१५॥

॥ इति समाप्तोऽयं सप्तम स्कन्धः ॥

702

इति 'वासिष्ठी' भाषाटीकासहिते

श्रीमद्भागवते सप्तमः स्कन्धः समाप्तः ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते अष्टमः स्कन्धः प्रारभ्यते।

704

श्रीहरिः ( चारै मन्वन्तरको वर्णन )–राजा परीक्षितले सोधे–हे गुरुवर ! जसले प्रजापतिहरूको वंशपरम्परा बलेख्यो, ती स्वायम्भुव मनुको वंश मैले राम्ररी सुनें । अब अन्य म-हरूको वृत्तान्त सुन्न चाहन्छु ॥१॥ हे ब्रह्मन् ! जुन प्रसङ्गमा महामहिम श्रीहरिको जन्म-कर्मको कविहरूले वर्णन गरेका हुनन्, त्यो सबै हामी श्रोताहरूलाई सुनाउनोस् ॥२॥ हे ब्रह्मन् ! विश्वभावन भगवान्ले विगत मन्वन्तरमा जुन-जुन कर्म गरे, वर्तमान मन्वन्तरमा जे गरिरहेका छन् र जुन अगाडि गर्ने छन्, त्यो सबै भन्नुहवस् ॥३॥ शुकदेवजी भन्नु हुन्छ हे राजन् ! यस कल्पमा स्वायम्भुव आदि छ मन्वन्तर बिते । तीमध्ये जसमा देवता आदि उत्पन्न भएथे, त्यो पहिलो मन्वन्तरको वृत्तान्त मैले तिमीलाई सुनाइसकें ॥४॥ स्वायम्भुवमनुकी पुत्री आकूति र देवहूतिको गर्भबाट भगवान् धर्म तथा ज्ञानको उपदेश दिनका लागि यज्ञपुरुषको रूपमा अवतार लिएका थिए ॥५॥ हे कौरव ! देवहूतिका तनय भगवान् कपिलको वर्णन त मैले पहिल्यै गरिसकें । अब भगवान् यज्ञपुरुषले जे गति गरेथे–त्यो भन्दछु ॥६॥ हे राजन् ! शतरूपाका पति मनु सबै कामना र भोगबाट विरक्त भए र आफ्नो राज्य-पाठ

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ स्वायम्भुवस्येह गुरो वंशोऽयं विस्तराच्छ्रुतः ॥ यत्र विश्वसृजां सर्गो मनून्यान् वदस्व नः ॥ १ ॥
यत्र यत्र हरेर्जन्म कर्माणि च महीयसः ॥ गृणन्ति कवयो ब्रह्मँस्तानि नो वद शृण्वताम् ॥ २ ॥ यद्यस्मिन्नन्तरे ब्रह्मन्भगवान्विश्वभावनः ॥ कृत-
वान्कुरुते कर्ता ह्यतीतेऽनागतेऽद्य वा ॥३॥ ऋषिरुवाच ॥ मनवोऽस्मिन्व्यतीताः षट् कल्पे स्वायम्भुवादयः ॥ आद्यस्ते कथितो यत्र देवादीनां च
संभवः ॥४॥ आकूत्यां देवहूत्यां च दुहित्रोस्तस्य वै मनोः ॥ धर्मज्ञानोपदेशार्थं भगवान्पुत्रतां गतः ॥५॥ कृतं पुरा भगवतः कपिलस्यानुवर्णितम् ॥
आख्यास्ये भगवान् यज्ञो यच्चकार कुरूद्वह ॥ ६ ॥ विरक्तः कामभोगेषु शतरूपापतिः प्रभुः ॥ विसृज्य राज्यं तपसे सभार्यो वनमाविशत् ॥ ७ ॥
सुनन्दायां वर्षशतं पदैकेन भुवं स्पृशन् ॥ तप्यमानस्तपो घोरमिदमन्वाह भारत ॥ ८ ॥ मनुरुवाच ॥ येन चेतयते विश्वं विश्वं चेतयते न यम् ॥
यो जागर्ति शयानेऽस्मिन्नायं तं वेद वेद सः ॥ ९ ॥ आत्मावास्यमिदं विश्वं यत्किञ्चिज्जगत्यां जगत् ॥ तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम्
॥ १० ॥ यं न पश्यति पश्यन्तं चक्षुर्यस्य न रिष्यति ॥ तं भूतनिलयं देवं सुपर्णमुपधावत ॥ ११ ॥ न यस्याद्यन्तौ न मध्यं च स्वः
परो नान्तरं बहिः ॥ विश्वस्यामूनि यद्यस्माद्विश्वं च तदृतं महत् ॥ १२ ॥ स विश्वकायः पुरुहूत ईशः सत्यः स्वयंज्योतिरजः पुराणः ॥ धत्तेऽस्य

त्यागेर तपस्या गर्न पत्नीसहित वनमा हिंडे ॥७॥ हे भारत ! त्यहाँ सुनन्दा नदीको तटमा केवल यौटा खुट्टाले उभिएर कठोर तप गर्दै ती भन्ने गर्दथे ॥८॥ ती मनुजी भन्दथे–जसबाट सारा विश्व चेतना प्राप्त गर्दछ, तर समस्त विश्व जसलाई सचेत गर्न सक्तैन । जो विश्व निदाए पछि पनि जागै रहन्छ । यो जगत् जसलाई जान्न सक्तैन, तर त्यो परमात्मा यस जगत्लाई राम्ररी जान्दछ । संसारका सबै जीवसमुदाय परमात्माले व्याप्त छ । अतः त्यस परमात्मालाई नै अर्पण गरेर धनादिको उपभोग गर्नुपर्दछ । आफ्नो वा बिरानो कसैको पनि धनमा आसक्त हुनु हुँदैन । जुन सर्वसाक्षी ईश्वरलाई चक्षु आदि इन्द्रियहरू देख्न सक्तैनन् र जसको ज्ञान कहिले पनि क्षीण हुँदैन, ती सर्वान्तर्यामी तथा असङ्ग परमात्माको तिमी भजन गर ॥९–११॥ जसको आदि, अन्त्य, मध्य, आफ्नो-बिरानो र बाहिर-भित्र केही पनि छैन, तर जो स्वयं जगत्को

सबै हो । जसले यो सारा जगत् उत्पन्न भएको छ, त्यही सत्य र पूर्णब्रह्म हो ॥१२॥ ती परमात्मा विश्वरूप नाउँ हुने ईश्वर, सत्यरूप, अजन्मा र पुरातन छ । त्यो आफ्नी माया-शक्तिद्वारा नै जगत्‌को रचना, पालनादि कार्य गर्दछ । त्यो आफ्नो नित्यसिद्ध ज्ञानशक्तिले आसक्ति त्यागेर सधैं निरीह भावमा स्थित रहन्छ-॥१३॥ अतः सबै मुनि पनि नैष्कर्म्य सिद्धिको निम्ति कर्म गर्दछन्, किनकि निष्काम कर्म गर्ने पुरुष नै निरीह (अत्यागी) हुन सक्तछ ॥ १४ ॥ भगवान् पनि कर्म गर्दछन्, किन्तु आत्मलाभले सदैव पूर्णकाम हुनाले नै ती त्यसमा आसक्त हुँदैनन् । त्यसै प्रकार उनका अनुयायी पुरुष पनि कर्ममा आसक्त हुँदैनन् ॥१५॥ अहो ! जुन ज्ञानवान, अहङ्कार रहित तथा पूर्णकाम हुनाले निष्काम

जन्माद्यजयाऽऽत्मशक्त्या तां विद्ययोदस्य निरीह आस्ते ॥१३॥ अथाग्रे ऋषयः कर्माणीहन्तेऽकर्महेतवे ॥ ईहमानो हि पुरुषः प्रायोऽनीहां प्रपद्यते ॥१४॥ ईहते भगवानीशो नहि यत्र विषज्जते ॥ आत्मलाभेन पूर्णार्थो नावसीदन्ति येऽनु तम् ॥ १५ ॥ तमीहमानं निरहंकृतं बुधं निराशिषं पूर्णम-नन्यचोदितम् ॥ नॄन् शिक्षयन्तं निजवर्त्मसंस्थितं प्रभुं प्रपद्येऽखिलधर्मभावनम् ॥१६ । श्रीशुक उवाच ॥ इति मंत्रोपनिषदं व्याहरन्तं समाहितम् ॥ दृष्ट्वाऽसुरा यातुधाना जग्धुमभ्यद्रवन्क्षुधा ॥१७॥ तांस्तथाऽवसितान् वीक्ष्य यज्ञः सर्वगतो हरिः ॥ यामैः परिवृतो देवैर्हत्वाऽशासत्त्रिविष्टपम् ॥१८॥ स्वारोचिषो द्वितीयस्तु मनुरग्नेः सुतोऽभवत् ॥ द्युमत्सुषेणरोचिष्मत्प्रमुखास्तस्य चात्मजाः ॥ १९ ॥ तत्रेन्द्रो रोचनस्त्वासीद्देवाश्च तुषितादयः ॥

रहन्छन् र कुनै अन्यद्वारा प्रेषित हुँदैनन्, जो अन्यलाई अर्ति दिनको निम्ति आफ्नो बाटोमा स्थित भएर कर्मको राम्ररी आचरण गर्दछन्, ती परमेश्वरको म शरणमा छु॥१६॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! यस प्रकार मनुलाई एकाग्र चित्तले तन्त्रोपनिषद्‌को उच्चारण गर्न लागेका देखेर भोकले व्याकुल असुर, राक्षस तिनलाई खान त्यहाँ आए ॥१७॥ सर्वान्तर्यामी भगवान् यज्ञपुरुष तिनको त्यस्तो विचार जानेर याम नामक देवताहरूका साथै त्यहाँ आएर असुरहरूको संहार गरी स्वर्गको शासन गर्नलागे ॥१८॥ हे राजन् ! ती स्वायंभुव मनुपछि अग्निपुत्र स्वारोचिष नामका दोस्रा मनु भए । तिनका, द्युमान्, सुषेण र रोचिष्मान् आदि पुत्र थिए ॥१९॥ त्यो स्वारोचिष मन्वन्तरमा रोचन नामक इन्द्र, तुषित आदि

---

※ दृष्टान्त (योग्य त्यागी)—एकपल्ट व्यासजीले शुकदेवलाई जनकजीकहाँ उपदेश लिन पठाए । शुकदेवले राजाको द्वारमा गएर आफू आएको सूचना पठाए । जनकजीले—हेरौं इनलाई रिस उठ्छ कि उठ्दैन-यस्तो विचार गरेर भन्न पठाए-'अहिले त्यहीं पर्खिरहनू !' तीन घण्टासम्म शुकदेवजी ढोकामै उभिइरहे तर तिनलाई अलिकति पनि रिस उठेन । अनि राजा जनक स्वयं आएर उनलाई भित्र लगे । शुकदेवजीले भित्र गएर देखे-बस्नको लागि स्वर्णसिंहासन राखिएको छ । सारै ऐश्वर्यका सबै सामग्री उपस्थित छ । सेवाको लागि दासीहरूको अभाव छैन । शुकदेवले विचार गरे-'जुन राजा यस प्रकारका भोग-विलासमा मग्न छ, त्यो म त्यागीलाई के उपदेश दिन सक्ला !' त्यसै बेला दौडा सेवक कराउँदै आयो र राजासित भन्नलाग्यो—'महाराज ! नगरमा आगो लागेको छ र त्यो राजभवनसम्म पनि आइसक्यो । यदि चाँडै नै उपाय नगरे राजभवन पनि भस्म हुनेछ।' जनकजी आसिनन् साधारण बसिरहे, तर शुकदेवले भने-'महाराज ! द्वारमा मेरो दण्ड,कमण्डलु बसेको छ । म लिएर आउँछु, नत्र त्यो पनि डढ्नेछ ।' त्यति सुन्नासाथ जनकजीले भने-'अनन्तवत्तु मे वित्तं यस्मे नास्ति किञ्चन । मिथिलायां प्रदग्धायां न मे दह्यति किञ्चन ॥ अर्थात् 'आत्मारूपी धन अनन्त छ, त्यसको नाश हुन सक्तैन । यो जलिरहेको मिथिलापुरीमा मेरो केही पनि डढ्न सक्तैन ।' यति सुनेपछि शुकदेवजीले बुझे-जनकजीलाई गर्नाई सत्य हो । घर त्यागेर नै कोही त्यागी बन्न सक्तैन ! गृहस्थाश्रममा रहेर नै जो राजा जनकको जस्तै पदार्थहरूमा अनासक्त छ, त्यही योग्य र सच्चा त्यागी हो ।

706

देवता तथा वेदवादी ऊर्जस्तम्भ आदि सप्तर्षिगण थिए ॥२०॥ मुनिवर वेदशिराकी तुषिता नामकी पत्नी थिइन् । त्यस बखत तिनको गर्भबाट भगवान्ले विभुनामले प्रसिद्ध भएर अवतार
लिएर ॥ २१ ॥ हे राजन् ! कौमार्य अवस्थादेखि नै ब्रह्मचर्यव्रती र यम-नियमादि साधनले युक्त अठासी हजार ऋषिहरूले ती विभुको आचरणलेनै व्रतको दीक्षा लिए ॥२२॥ हे राजन् !
महाराज प्रियव्रतका छोरा उत्तम तेस्रा मनु थिए । उनका पवन, सृञ्जय तथा यज्ञहोत्रादि छोरा भए ॥२३॥ वसिष्ठका प्रमद आदि पुत्र त्यस मन्वन्तरमा सप्तर्षि थिए । सत्य, वेदश्रुत,
नामक देवता र सत्यजित् नामका इन्द्र थिए ॥२४॥ त्यस समय धर्मकी सूनृता पत्नीबाट भगवान् पुरुषोत्तमले सत्यसेन नामले विख्यात भएर आफ्ना सत्यव्रत सहित अवतार लिएर
॥२५॥ देवराज सत्यजित्का सखा भएर उनले असत्यपरायण, दुःशील र असत्स्वभाव हुने यक्ष-राक्षस एवं प्राणीहरूका द्रोही सबै जीवहरू नष्ट पारिदिएका थिए ॥२६॥ उत्तमका भाई

ऊर्जस्तम्भादयः सप्त ऋषयो ब्रह्मवादिनः ॥ २० ॥ ऋषेस्तु वेदशिरसस्तुषिता नाम पत्न्यभूत् ॥ तस्यां जज्ञे ततो देवो विभुरित्यभिविश्रुतः ॥२१॥
अष्टाशीतिसहस्राणि मुनयो ये धृतव्रताः ॥ अन्वशिक्षन्व्रतं तस्य कौमारब्रह्मचारिणः ॥ २२ ॥ तृतीय उत्तमो नाम प्रियव्रतसुतो मनुः ॥ पवनः सृञ्जयो
यज्ञहोत्राद्यास्तत्सुता नृप ॥ २३ ॥ वसिष्ठतनयाः सप्त ऋषयः प्रमदादयः ॥ सत्यवेदश्रुता भद्रा देवा इन्द्रस्तु सत्यजित् ॥ २४ ॥ धर्मस्य सूनृतायां
तु भगवान्पुरुषोत्तमः ॥ सत्यसेन इति ख्यातो जातः सत्यव्रतैः सह ॥२५॥ सोऽनृतव्रतदुःशीलानसतो यक्षराक्षसान् ॥ भूतद्रुहो भूतगणांस्त्ववधीत्स-
त्यजित्सखः ॥ २६ ॥ चतुर्थ उत्तमभ्राता मनुर्नाम्ना च तामसः ॥ पृथुः ख्यातिर्नरः केतुरित्याद्या दश तत्सुताः ॥ २७ ॥ सत्यका हरयो वीरा
देवास्त्रिशिख ईश्वरः ॥ ज्योतिर्धामादयः सप्त ऋषयस्तामसोऽन्तरे ॥ २८ ॥ देवा वैधृतयो नाम विधृतेस्तनया नृपः ॥ नष्टाः कालेन यैर्वेदा विधृताः
स्वेन तेजसा ॥ २९ ॥ तत्रापि जज्ञे भगवान्हरिण्यां हरिमेधसः ॥ हरिरित्याहृतो येन गजेन्द्रो मोचितो ग्रहात् ॥ ३० ॥ राजोवाच ॥ बादरायण
एतत्ते श्रोतुमिच्छामहे वयम् ॥ हरिर्यथा गजपतिं ग्राहग्रस्तममूमुचत् ॥३१॥ तत्कथासु महत्पुण्यं धन्यं स्वस्त्ययनं शुभम् ॥ यत्र यत्रोत्तमश्लोको
भगवान्गीयते हरिः ॥३२॥ सूत उवाच ॥ परीक्षितैवं स तु बादरायणिः प्रायोपविष्टेन कथासु चोदितः ॥ उवाच विप्राः प्रतिनन्द्य पार्थिवं मुदा
मुनीनां सदसि स्म शृण्वताम् ॥३३॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे मन्वन्तरानुचरिते प्रथमोऽध्यायः ॥१॥

तामस नामका चतुर्थ मनु भए । उनका पृथु, नर तथा केतु आदि दस पुत्र भए ॥२७॥ तामस मन्वन्तरमा सत्यक, हरि, वीर नामक देवता र त्रिशिख इन्द्र तथा ज्योतिर्धामादि सप्तर्षि
भए ॥२८॥ हे राजन् ! त्यस मन्तरमा विधृति नामका केही अरु पनि देवता भए, उनले कालक्रमद्वारा नष्ट वेदहरूको आफ्नो तेजले रक्षा गरे ॥२९॥ त्यसै बखत हरिमेधा ऋषिकी
भार्या हरिणीबाट भगवान्ले 'हरि' अवतार लिएर गजलाई ग्राहबाट मुक्त पारेका थिए ॥३०॥ राजा परीक्षितले सोधे–हे व्यासतनय ! श्रीहरिले त्यो गजलाई जसरी छुटाए, त्यो चरित्र
म हजुरको मुखबाट सुन्न खोज्दछु ॥३१॥ किनकि सबै कथामा त्यो प्रसङ्ग परम पवित्र, धन्य, मङ्गलकारी र शुभ हुन्छ, जसमा पवित्रकीर्ति हरिको गुण-गान रहन्छ ॥३२॥ सूतभन्दछन्–
हे विप्र हो ! अन्न-जल त्याग गरेर बसेका राजा परीक्षित द्वारा यस प्रकार प्रेरित भएर शुकदेवजी कथा-श्रवणेच्छुक मुनिहरूको समूहमा राजा परीक्षितको प्रशंसा गर्दै भन्दछन्–॥३३॥

इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धे पं॰ गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां प्रथमोऽध्यायः ॥ १ ॥

( गजराज ग्राहद्वारा पक्रिनु )—श्रीशुकदेव भन्दछन्—हे राजन् ! क्षीरसागरले परिवेष्टित 'त्रिकूट' नामले विख्यात एउटा पर्वत थियो । त्यो निकै राम्रो र दस हजार योजन अग्लो थियो ॥ १ ॥ विस्तारमा पनि त्यो सबैतिरबाट उतिनै फैलिएको थियो । त्यो आफ्नो सुन, चाँदी र फलामका तीन शिखरले समुद्र, दिशा र आकाशलाई अलंकृत पारेको थियो ॥२॥ विविध प्रकारका रत्न तथा धातुहरूले चित्रित शृङ्ग, थरि-थरिका वृक्ष, लता, गुल्म र छहराहरूका निनादले सबै दिशाहरूलाई मुखरित पारिरहेको थियो ॥३॥ मूल प्रदेशमा क्षीरसागरको दुग्धमयी तरङ्गले पखालिएर त्यो हरितवर्णका मरकतमयी शिलाहरूले पृथ्वीलाई श्यामल वर्णकी बनाइरहेको थियो ॥४॥ क्रीडासक्त सिद्ध चारण, विद्याधर, नाग किन्नर र अप्सराहरूले त्यसका कन्दरा सुशोभित रहन्थे ॥ ५॥ तिनका गान-वाद्यको ध्वनिले कन्दराहरू प्रतिध्वनित भइरहन्थे र त्यस प्रदेशका निवासी सिंह अर्को सिंह आउने शंकाले ईर्ष्या र

श्रीशुक उवाच ॥ आसीद्गिरिवरो राजंस्त्रिकूट इति विश्रुतः ॥ क्षीरोदेनावृतः श्रीमान्योजनायुतमुच्छ्रितः ॥१॥ तावता विस्तृतः पर्यक् त्रिभिः शृङ्गैः पयो-
निधिम् ॥ दिशः खं रोचयन्नास्ते रौप्यायसहिरण्मयैः ॥२॥ अन्यैश्च ककुभः सर्वा रत्नधातुविचित्रितैः ॥ नानाद्रुमलतागुल्मैर्निर्घोषैर्निर्झराम्भसाम् ॥३॥
स चावनिज्यमानाङ्घ्रिः समन्तात्पयऊर्मिभिः ॥ करोति श्यामलां भूमिं हरिन्मरकताश्मभिः ॥४॥ सिद्धचारणगन्धर्वविद्याधरमहोरगैः ॥ किन्नरैरप्सरोभिश्च
क्रीडद्भिर्जुष्टकन्दरः ॥५॥ यत्र संगीतसन्नादैर्नदद्गुहममर्षया ॥ अभिगर्जन्ति हरयः श्लाघिनः परशंकया ॥६॥ नानारण्यपशुव्रातसंकुलद्रोण्यलंकृतः ॥
चित्रद्रुमसुरोद्यानकलकण्ठविहङ्गमः ॥७॥ सरित्सरोभिरच्छोदैः पुलिनैर्मणिवालुकैः ॥ देवस्त्रीमज्जनामोदसौरभाम्ब्वनिलैर्युतः ॥ ८ ॥ तस्य द्रोण्यां
भगवतो वरुणस्य महात्मनः ॥ उद्यानमृतुमन्नाम आक्रीडं सुरयोषिताम् ॥९॥ सर्वतोऽलंकृतं दिव्यैर्नित्यं पुष्पफलद्रुमैः ॥ मन्दारैः पारिजातैश्च पाटला-
शोकचम्पकैः ॥१०॥ चूतैः प्रियालैः पनसैराम्रैराम्रातकैरपि ॥ क्रमुकैर्नारिकेलैश्च खर्जूरैर्बीजपूरकैः ॥११॥ मधूकैः सालतालैश्च तमालैरसनार्जुनैः ॥
अरिष्टोदुम्बरप्लक्षैर्वटैः किंशुकचन्दनैः ॥ १२ ॥ पिचुमन्दैः कोविदारैः सरलैः सुरदारुभिः ॥ द्राक्षेक्षुरम्भाजम्बूभिर्बदर्यक्षाभयामलैः ॥ १३ ॥ बिल्वैः
कपित्थैर्जम्बीरैर्वृतो भल्लातकादिभिः ॥ तस्मिन्सरः सुविपुलं लसत्काञ्चनपङ्कजम् ॥ १४ ॥ कुमुदोत्पलकह्लारशतपत्रश्रियोर्जितम् ॥ मत्तषट्पदनिर्घुष्टं

असहिष्णुतावश सधैं गर्जिरहन्थे ॥६॥ त्यस पर्वतका कन्दराहरूमा विविध जङ्गली जीवका समूह निवास गरेर त्यसको शोभा बढाइरहेका थिए । अनेक थरिका वृक्षले संकुलित देवोद्यानहरूमा पक्षी मधुर ध्वनि गर्दथे ॥७॥ विमल जलले भरिएका र तटमा मणिमयी वालुवाले सुशोभित अनेक नदी तथा तलाउ थिए । त्यहाँको जल-वायु देवाङ्गनाहरूको अवगाहनले सधैं आमोदित रहन्थ्यो ॥ ८ ॥ त्यस पर्वतको गुफामा वरुणजीको 'ऋतुमान्' नामको यौटा सुरम्य बगैचा थियो, जुन देवाङ्गनाहरूको क्रीडाभूमि थियो । त्यो सदैव फल-फूलले सुशोभित रहन्थ्यो । मन्दार,पारिजात, पाटल, चम्पक, अशोक, प्रियाल, आम्र, आम्रातक, क्रमुक, नरिवल, खजूर, बिजौरा, मधूक, साल, ताल, ताल,तमाल असन,अर्जुन, अरिष्ट, उदुम्बर,पाकरी वर, किंशुक, चन्दन, पिचुमन्द, सरल देवदारु, दाख, उखु, केरा, जामुन, बयर, बर्रो, हर्रो, अमला, बेल, कपित्थ, कागती, भलायो आदिका वृक्षहरूले त्यो बगैचा भरिएको थियो ।

यही पर्वतमा यौटा सुनौलो कमलहरूले भरिएको सरोवर थियो ॥ ९-१४ ॥ कुमुद, उत्पल, कल्हार र शतपत्रादिले त्यसको शोभा बर्ता बढेको थियो । उन्मत्त भ्रमर कलरवकारी विहङ्गम सधैं बोल्दै रहन्थे । त्यो सरोवर हंस, कारण्डव, चक्रवाक, तथा सारसादिले पूर्ण एवं जलकुक्कुट, कोयष्टि तथा चखेवा आदिले कूजित रहन्थ्यो ॥१५-१६॥ त्यसको स्वच्छ जल कल्लोल गर्दै माछा तथा कछुआको धक्काले हल्लने कमल पुष्पबाट झरेका केसरले युक्त कदम्ब, बेत, नरकट, नीप तथा बञ्जुल आदिले आवेष्टित थियो ॥१७॥ त्यो सरोवरको तटमा उम्रेका कुन्द, कुरबक, अशोक शिरीष, कुटज, इन्दुक, कुब्जक ( सुनौला जूही ) नाग, पुन्नाग, मल्लिका, शतपत्र, माधवी र आलक आदि वृक्ष तथा सबै ऋतुका तरुवरहरूले शोभायमान थियो ॥ १८॥१९ ॥ एक दिन त्यही पर्वतको बनमा बस्ने यौटा यूथपति गजराज, जसको गन्धमात्रले सिंह, व्याघ्र, हात्ती, सर्प, मृग, गैंडा, नाग तथा काला-खैरा रङ्गका सरभ र चमरी गाई आदि जङ्गली जीव डराएर भाग्दथे । त्यसको कृपाले सुँगुर, राँगो, भालु, ब्वाँसो, गोपुच्छ, कुकुर, वानर, हरिण र खरायो आदि क्षुद्र जीव निर्भय भावले डुल्दै

शकुन्तैश्चकलस्वनैः ॥ १५ ॥ हंसकारण्डवाकीर्णं चक्राह्वैः सारसैरपि ॥ जलकुक्कुटकोयष्टिदात्यूहकुलकूजितम् ॥ १६ ॥ मत्स्यकच्छपसञ्चारचलत्पद्मरजःपयः ॥ कदम्बवेतसनलनीपवंजुलकैर्वृतम् ॥ १७ ॥ कुन्दैः कुरबकाशोकैः शिरीषैः कुटजेङ्गुदैः ॥ कुब्जकैः स्वर्णयूथीभिर्नागपुन्नागजातिभिः ॥ १८ ॥ मल्लिकाशतपत्रैश्च माधवीजालकादिभिः ॥ शोभितं तीरजैश्चान्यैर्नित्यर्तुभिरलं द्रुमैः ॥ १९ ॥ तत्रैकदा तद्गिरिकाननाश्रयः करेणुभिर्वारणयूथपश्चरन् ॥ सकण्टकान्कीचकवेत्रवद्रिशालगुल्मं प्ररुजन्वनस्पतीन् ॥ २० ॥ यद्गन्धमात्राद्धरयो गजेन्द्रा व्याघ्रादयो व्यालमृगाः सखड्गाः ॥ महोरगाश्चापि भयाद्द्रवन्ति सगौरकृष्णाः शरभाश्चमर्यः ॥ २१ ॥ वृका वराहा महिषर्क्षशल्या गोपुच्छसालावृकमर्कटाश्च ॥ अन्यत्र क्षुद्रा हरिणाः शशादयश्चरन्त्यभीता यदनुग्रहेण ॥ २३ ॥ स धर्मतप्तः करिभिः करेणुभिर्वृतो मदच्युत्कलभैरनुद्रुतः ॥ गिरिं गरिम्णा परितः प्रकम्पयन्निषेव्यमाणोऽलिकुलैर्मदाशनैः ॥२३॥ सरोऽनिलं पंकजरेणुरूषितं जिघ्रन्विदूरान्मदविह्वलेक्षणः ॥ वृतः स्वयूथेन तृषार्दितेन तत्सरोवराभ्याशमथागमद्द्रुतम् ॥२४॥ विगाह्य तस्मिन्नमृतांबु निर्मलं हेमारविन्दोत्पलरेणुवासितम् ॥ पपौ निकामं निजपुष्करोद्धृतमात्मानमद्भिः स्नपयन्गतक्लमः ॥२५॥ स्वपुष्करेणोतद्धृसीकरांबुभिर्निपाययन्संस्नपयन्यथा गृही ॥ घृणी करेणूः कलभांश्च दुर्मदो नाचष्ट कृच्छ्रं कृपणोऽजमायया ॥२६॥ तं तत्र कश्चिन्नृप दैवचो-

रहन्थे । पर्वबाट त्यस सरोवरका कमल केसरले सुशोभित पवनको गन्ध सुँघेर आफ्नी ढोईहरूसित डुल्दै-फिर्दै काँढा, हिलो, बाँस, बेत तथा ठूला-ठूला झाडीहरू किच्दै-मिच्दै आफ्ना गजयूथ सहित त्यो त्यस तडागको तटमा आयो । त्यस गजको कपोलबाट मद चुहिरहेको थियो र त्यो घामबाट आत्तिएको थियो । त्योसित धेरै हात्ती र ढोईहरूथिए । तिनका बचा पछि-पछि दगुर्द थिए । त्यो आफ्नो दम्काले सारा पर्वत थर्काइरहेथ्यो । मदका लोभी मधुकर समूह त्यसको गण्डस्थलमा टाँसिइरहन्थे र त्यस गजका नेत्र मदले विह्वल भइरहेका थिए ॥२०-२४॥ त्यहाँ गएर त्यो सरोवरमा पस्यो र नुहायो । श्रमहीन भएर त्यसले आफ्नू सूँढले सरोवरको पहेंलो र रातो कमलको केसरले सुरभित सुधा झैं सुस्वादु जल पेटभरि पियो ॥२५॥ अनि त्यो गजराज गृहस्थ पुरुष जस्तै मोहग्रस्त भई सूँडको अग्रभागले जलको फुहारा छाडी-छाडी माथ । ढोईहरू र बच्चाहरूलाई नुहाउन र जल प्याउन लाग्यो ।

तर भगवान्‌को मायाले मोहित त्यो उन्मत्त गजराजले आउनलागेको महाकष्ट जान्न सकेन ॥२६॥ हे राजन् ! त्यसै बखत दैवेच्छाले यौटा महाबलवान ग्राहले रोषपूर्वक त्यसको खुट्टा समायो अकस्मात् विपत्तिग्रस्त भएपछि गजराजले ग्राहको मुखबाट खुट्टा फुस्काउने भएभरको सबै शक्ति लगायो, तर सफल भएन । आफ्नो यूथपतिको अतिबलवान् ग्राह-द्वारा बलपूर्वक तानिनाले व्याकुल भएको देखेर नजीकै उभिएका अन्य हात्ती र ढोईहरू अति आतुर भएर गर्जन लागे, किन्तु ती पनि त्यस सङ्कटबाट निकाल्नमा समर्थ भएनन् ॥२७-२८॥ हे राजन् ! ती महाबली गजराज तथा ग्राहले परस्पर युद्ध गर्दै र यौटाले अर्कोलाई जल भित्र र बाहिर तान्दा-तान्दै एक हजार वर्ष बित्यो । यसले देवताहरूलाई पनि ठूलो विस्मय भयो ॥२९॥ धेरै दिनसम्म पानीभित्र बारम्बार तानिनाले शिथिल गजराजको उत्साह बल तथा तेज विस्तार-विस्तार क्षीण हुन लाग्यो र त्यो जलचर ग्राहको निम्ति सबै कुरा त्यसको विपरी भए ( अर्थात् त्यसको बल यस संघर्षले झन् बढ्दै गयो ) ॥३०॥ जब गजराजमाथि प्राणसंकट उपस्थित भयो र त्यो आफूलाई मुक्त पार्न सर्वथा असमर्थभयो अनि धेरै समयसम्म विचरा

दितो ग्राहो बलीयांश्चरणे रुषाऽग्रहीत् ॥ यदृच्छयैवं व्यसनं गतो गजो यथाबलं सोऽतिबलो विचक्रमे ॥२७॥ तथातुरं यूथपतिं करेणवो विकृष्यमाणं तरसा बलीयसा ॥ विचक्रुशुर्दीनधियोऽपरे गजाः पार्ष्णिग्रहास्तारयितुं न चाशकन् ॥२८॥ नियुध्यतो रेवमिभेन्द्रनक्रयोर्विकर्षतोरन्तरतो बहिर्मिथः ॥ समाः सहस्रं व्यगमन्महीपते सप्राणयोश्चित्रममंसतामराः ॥२९॥ ततो गजेन्द्रस्य मनोबलौजसां कालेन दीर्घेण महानभूद्व्ययः ॥ विकृष्यमाणस्य जलेऽवसीदतो विपर्ययोऽभूत्सकलं जलौकसः ॥ ३० ॥ इत्थं गजेन्द्रः स यदाऽऽप सङ्कटं प्राणस्य देही विवशो यदृच्छया ॥ अपारयन्नात्मविमोक्षणे चिरं दध्याविमां बुद्धिमथाभ्यपद्यत ॥३१॥ न मामिमे ज्ञातय आतुरं गजाः कुतः करिण्यः प्रभवन्ति मोचितुम् ॥ ग्राहेण पाशेन विधातुरावृतोऽप्यहं च तं यामि परं परायणम् ॥ ३२ ॥ यः कश्चनेशो बलिनोऽन्तकोरगात्प्रचण्डवेगादभिधावतो भृशम् ॥ भीतं प्रपन्नं परिपाति यद्भयान्मृत्युः प्रधावत्यरणं तमीमहि ॥ ॥३३॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे मन्वन्तरानुवर्णने गजेन्द्रोपाख्याने द्वितीयोऽध्यायः ॥२॥

श्रीशुक उवाच ॥ एवं व्यवसितो बुद्ध्या समाधाय मनो हृदि ॥ जजाप परमं जाप्यं प्राग्जन्मन्यनुशिक्षितम् ॥१॥ गजेन्द्र उवाच ॥ ॐनमो भगवते तस्मै यत एतच्चिदात्मकम् ॥ पुरुषायादिबीजाय परेशायाभिधीमहि ॥२॥ यस्मिन्निदं यतश्चेदं येनेदं य इदं स्वयम् ॥ योऽस्मात्परस्ताच्च परस्तंप्रपद्ये

गरेर यस निश्चयमा पुग्यो ॥ ३१ ॥ अहो ! दैवप्रेरित यस ग्राहरूपी पाशमा परेर अत्यन्त आतुर मलाई जब यी मेरा साथी हातीले नै उतार्न सकेनन्, अनि ढोईहरू कसरी मुक्त पार्न सक्नन् ? अतः अब म सबैका परमाश्रय ती श्रीहरिको शरण पर्छु ॥ ३२-३३ ॥ इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धे पं० गौरीशंकर 'वसिष्ट' कृत नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥ २ ॥

( गजेन्द्रले भगवान् श्रीहरिको स्तुति गरेर मुक्त हुनु )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! यस्तो निश्चय गरेर गजेन्द्रले आफ्नो मन हृदयदेशमा स्थिर पार्‍यो र आफ्नो पूर्वजन्ममा सिकेको यो अत्यन्त श्रेष्ठ स्तोत्र पढ्न लाग्यो ॥ १ ॥ गजेन्द्रले भन्यो—यस शरीरलाई जसबाट चेतना प्राप्त हुन्छ, ती जगत्का आदिकारण परपुरुष भगवान्‌लाई म

नमस्कार र स्मरण गर्दछु ॥२॥ सारा जगत् जसमा स्थित छ, यो जसबाट उत्पन्न भएको छ, जसले व्याप्त छ, जो स्वयमेव जगत् छन् र जो कार्य-कारणरूप जगत्भन्दा पनि पर छन्, ती भगवान् स्वयम्भूको म शरणमा छु ॥३॥ जसको दृष्टि कहिल्यै लुप्त हुँदैन, ती प्रभु आफ्नो मित्र र आफ्नो माया द्वारा स्थापित कहिले प्रकट, कहिले तिरोहित हुने भएका यी कार्य-कारण स्वरूप प्रपञ्चलाई साक्षी रूपले रही देखिरहन्छन् । कालक्रमले सबै लोक, लोकपाल र जगत्का कारणहरू नष्ट भएपछि, जब अति गहन र गम्भीर अन्धकार मात्र शेष रहन्छ, तब जो सर्वव्यापक भगवान् अन्धकारको पारिपट्टि विराजमान छन्, ती आत्मयोनि प्रभु मलाई बचाउन् ॥४॥५॥ अहो ! देवता र ऋषि पनि जसको स्वरूप जान्दैनन्, उनलाई अरु प्राणी कसरी जान्न वा भन्न सक्दछ ? विविध भेषधारी नट झैं विचित्र चेष्टाशील र दुर्गम लीलाधारी प्रभु मेरो उद्धार गरुन् ॥ ६ ॥ जसको स्वरूप देख्नको निम्ति सबै जीवका आत्मा, सुहृद्, असङ्ग तथा साधु स्वभाव मुनिजन वनमा बसेर अखण्ड भावले ब्रह्मचर्यादि व्रत पालन गर्दछन्, ती भगवान् मेरा गति हुन् ॥७॥ जसको जन्म-कर्म, नाम-रूप तथा गुण-दोषादि केही पनि

स्वयम्भुवम् ॥३॥ यः स्वात्मनीदं निजमाययाऽर्पितं क्वचिद्विभातं क्व च तत्तिरोहितम् ॥ अविद्धदृक्साक्ष्युभयं तदीक्षते स आत्ममूलोऽवतु मां परात्परः ॥ ४ ॥ कालेन पंचत्वमितेषु कृत्स्नशो लोकेषु पालेषु च सर्वहेतुषु ॥ तमस्तदाऽऽसीद्गहनं गभीरं यस्तस्य पारेऽभिविराजते विभुः ॥५॥ न यस्य देवा ऋषयः पदं विदुर्जन्तुः पुनः कोऽर्हति गन्तुमीरितुम् ॥ यथा नटस्याकृतिभिर्विचेष्टतो दुरत्ययानुक्रमणः स माऽवतु ॥ ६ ॥ दिदृक्षवो यस्य पदं सुमङ्गलं विमुक्तसङ्गा मुनयः सुसाधवः ॥ चरन्त्यलोकव्रतमव्रणं वने भूतात्मभूताः सुहृदः स मे गतिः ॥ ७ ॥ न विद्यते यस्य च जन्म कर्म वा न नामरूपे गुणदोष एव वा ॥ तथापि लोकाप्ययसम्भवाय यः स्वमायया तान्यनुकालमृच्छति ॥ ८ ॥ तस्मै नमः परेशाय ब्रह्मणेऽनन्तशक्तये ॥ अरूपायोरुरूपाय नम आश्चर्यकर्मणे ॥ ९ ॥ नम आत्मप्रदीपाय साक्षिणे परमात्मने ॥ नमो गिरां विदूराय मनसश्चेतसामपि ॥ १० ॥ सत्त्वेन प्रतिलभ्याय नैष्कर्म्येण विपश्चिता ॥ नमः कैवल्यनाथाय निर्वाणसुखसंविदे ॥ ११ ॥ नमः शान्ताय घोराय मूढाय गुणधर्मिणे ॥ निर्विशेषाय साम्याय नमो ज्ञानघनाय च ॥ १२ ॥ क्षेत्रज्ञाय नमस्तुभ्यं सर्वाध्यक्षाय साक्षिणे ॥ पुरुषायात्ममूलाय मूलप्रकृतये नमः ॥ १३ ॥ सर्वेन्द्रियगुणद्रष्ट्रे सर्वप्रत्ययहेतवे ॥ असताच्छाययोक्ताय सदाभासाय ते नमः ॥ १४ ॥ नमो नमस्तेऽखिलकारणाय निष्कारणाद्भुतकारणाय ॥ सर्वागमाम्नायमहार्णवाय नमोऽपव-

हुँदैन, तापनि लोकहरूको रचना र प्रलयार्थ जो आफ्नो मायाले समयानुसार तिनलाई अंगीकार गरिलिन्छन्, ती अनन्त शक्तिसम्पन्न, आश्चर्यकर्मा र रूपरहित भएर पनि अनेक रूपधारी परब्रह्म परमेश्वरलाई बारम्बार प्रणाम छ ॥८॥९॥ जो स्वयं प्रकाशशील, सबैका साक्षी र चित्तबाट पनि टाढा छन्, ती परमात्मालाई अनेकशः प्रणाम छ ॥१०॥ जो संन्यास मार्ग द्वारा शुद्ध चित्तमा उपलब्ध हुन्छन, ती निर्वाणानन्दानुभवरूपी मोक्षपतिलाई नमस्कार छ ॥११॥ जो शान्त, घोर, मूढरूप तथा सत्वादि गुणहरूको धर्मको अनुसरण गर्दछन्, ती निर्विशेष सर्वत्र समान भावले स्थित तथा विज्ञानघन परमात्मालाई नमस्कार गर्दछु ॥ १२ ॥ जो क्षेत्रज्ञ, सर्वाध्यक्ष, साक्षी, सबैभन्दा पहिलेदेखि विद्यमान, जीवका आदिकारण र मूल प्रकृतिका पनि उद्भवस्थान छन्, ती प्रभुलाई मेरो नमस्कार छ ॥१३॥ जो सबै इन्द्रियका विषयहरूलाई देख्दछन्, जो सबै प्रतीतीहरूका कारण छन्, छायारूपी असत् अहङ्कारादि द्वारा जसको सत्ता

दृष्टिगोचर हुन्छ र जो सबै वस्तुहरूमा प्रकाशित हुन्छन्, त्यस्ता हजुरलाई प्रणाम छ ॥१४॥ जो सबैका कारण, कारणरहित तथा अद्भुत कारणस्वरूप हुनु, जो सबै वेद र शास्त्र हरूका महासागर, मोक्षस्वरूप र श्रेष्ठ पुरुषका आधार हुनु, त्यस्ता हजुरलाई प्रणाम छ ॥१५॥ जो गुणरूपी अरणिमा ज्ञानाग्निस्वरूप छन्, गुण-क्षोभले नै जसमा मनःस्फूर्ति हुन्छ, आत्मतत्त्वको भावनाले विधि-निषेधरूपी शास्त्रको उपेक्षा गरिदिने ज्ञानीहरूका प्रति जो स्वयं प्रकाशमय हुन्छन्, यस्ता हजुरलाई म नमस्कार गर्दछु ॥१६॥ जो मजस्ता शरणागत पशुपरूका पनि

र्गाय परायणाय ॥ १५ ॥ गुणारणिच्छन्नचिदूष्मपाय तत्क्षोभविस्फूर्जितमानसाय ॥ नैष्कर्म्यभावेन विवर्जितागमस्वयंप्रकाशाय नमस्करोमि ॥ १६ ॥ मादृक्प्रपन्नपशुपाशविमोक्षणाय मुक्ताय भूरिकरुणाय मनोलयाय ॥ स्वांशेन सर्वतनुभृन्मनसि प्रतीतप्रत्यग्दृशे भगवते बृहते नमस्ते ॥ १७ ॥ आत्मात्मजाप्तगृहवित्त जनेषु सक्तैर्दुष्प्रापणाय गुणसङ्गविवर्जिताय ॥ मुक्तात्मभिः स्वहृदये परिभाविताय ज्ञानात्मने भगवते नम ईश्वराय ॥ १८ ॥ यं धर्मकामार्थविमुक्तिकामा भजन्त इष्टां गतिमाप्नुवन्ति ॥ किं त्वाशिषो रात्यपि देहमव्ययं करोतु मेऽदभ्रदयो विमोक्षणम् ॥ १९ ॥ एकान्तिनो यस्य न

सहायक छन्, जो मुक्तस्वरूप अति करुणामय तथा आलस्यहीन छन्, आफ्ना अंशले सबै देहधारीहरूका अन्तःकरणमा प्रतीयमान ती अपरिच्छिन्न तथा अन्तर्यामी भगवान्लाई प्रणाम छ ॥१७॥ जो देह, पुत्र, स्वजन, गृह, धन तथा सेवकादिमा आसक्त चित्त पुरुषलाई दुष्प्राप्य तथा गुणसंगले रहित छन् र जीवन्मुक्त पुरुषद्वारा हृदयमा सम्झिन्छन्, ती ज्ञानस्वरूप भगवान्लाई नमस्कार छ ॥१८॥ धर्म, अर्थ, काम र मोक्षका इच्छुक पुरुष जसलाई भजेर अभीष्ट गति प्राप्त गर्दछन् र जो प्रभु उनलाई विविध भोग र बलियो शरीर दिन्छन्,

❀ उदाहरण ( जसको ईश्वर सहायता गर्दछ, त्यसको कसैले पनि हानि गर्न सक्तैन )—कुनै गाममा यौटा ब्राह्मण बसथ्ये। एक दिन ती राजाको दरबारमा पुगे। तिलक-चन्दन लगाएका ब्राह्मणलाई देखेर राजाले यी कुनै विद्वान् पुरुष होलान् भन्ने ठाने, अनि सोधे–'हे ब्राह्मण ! मेरो मुठीमा के छ ?' ब्राह्मणले भने—'सारा देशको हालत म के जानौं ?' राजाले त्यस कुराको अर्थ यस्तो लगाए–समस्त देश नै हजुरको मुठीमा छ। अनि म सबैको हालत कसरी भन्न सक्छु। त्यसै दिनदेखि राजाले ब्राह्मणको सम्मान गर्नलागे। यो कुरा अन्य दरबारीहरूलाई कत्ति पनि मनपरेन। ती दरबारीहरू ब्राह्मणको कुभलो चिताउन लागे। ती ब्राह्मणलाई राजा देखिबाट लखाउने विचार गरेर तिनीहरूले ब्राह्मणसित भने–'आज जब राजा आउँछन्, तब तिमी तिनको शिरको मुकुट खिकिदिनु।' विचरा ब्राह्मण साह्रै सोझा थिए। छक्का पंजा केही पनि जान्दैनथे। राजा जब दरबारमा आए तब तिनले राजाको मुकुट खिकिदिए। दैवसंयोग मुकुटबाट यौटा सर्पको बच्चा निस्कियो। राजा ब्राह्मणको त्यस कामले निकै प्रसन्न भए र पहिले भन्दा पनि बढ्ता सम्मान गर्नलागे। दरबारीहरूले अर्को उपाय सोचे। ब्राह्मणलाई भने–'आज राजा साहब दरबारमा आएपछि उनलाई एकान्तमा लगेर उनको दाउको हातले मुसार्नु।' ब्राह्मणले त्यस्तै गरे। ब्राह्मणले राजालाई एकान्तमा लैजाने बित्तिकै महलको एक भाग अकस्मात् भत्कियो। त्यसमा थेरै व्यक्ति थिचिए। राजाले ब्राह्मणलाई प्राण रक्षक ठानेर धेरै बिर्ता दिए। यौटा मूर्ख ब्राह्मणले धन र बिर्ता पाएको देखेर दरबारीहरूले खप्न सकेनन्। अतएव तिनले ब्राह्मणलाई न्यूराउन यौटा अर्को उपाय सिके। तदनुसार राजासित दरबारीहरूले झुठो कुरा भने—'हे महाराज ! यो ब्राह्मण शिकार खेल्न निकै सिपालु छ। हजुर ब्राह्मणलाई लिएर एक दिन शिकार खेल्न पाल्नुहोस्।' भोलिपल्ट शिकार खेल्ने तयारी भयो। राजाले ब्राह्मणलाई पनि सँगै जाने आज्ञा दिए। विचरा ब्राह्मण यौटा माला र रामको नाम लिई हिंड्यो। वनमा यौटा सिंह देखियो। सबै जना यता उता भाग्नलागे। ब्राह्मणले अरु कुनै उपाय नदेखी दगुर्दै यौटा रूखमा चढ्यो। सिंह त्यहीं कतै भनि आएर गर्जन लाग्यो। ब्राह्मण डरले काम्नलाग्यो। काम्नेको हुनाले हातबाट माला तल खस्यो। सिंहले माथितर मुख गरेको थियो, अतः माला त्यसको मुखमा पस्यो। त्यस चोटले सिंह ढल्न थ्रमेर पछिल्यो र मर्‍यो। राजा साहेबले ठाने–अवश्य ब्राह्मण शिकार खेल्नमा कुशल छन्, नभए सिंहलाई कसरी मारे ? अब ब्राह्मण पहिले भन्दा पनि बढ्ता सम्मानको योग्य मानिन लागे। तात्पर्य–'भाग्यं फलति सर्वत्र न विद्या न च पौरुषम्।' भाग्यमा छैन भने पुरुषार्थ र विद्याले पनि केही गर्न सक्तैन।

712

ती परम दयालु प्रभु मलाई यस महासंकटबाट छुटाउन् ॥ १९ ॥ संसारका भगवत्परायण तथा अनन्य भक्त जसका अद्भुत र मङ्गलमय चरित्रहरूको गान गर्दै परमानन्दको समुद्रमा मग्न केही पनि इच्छा गर्दैनन्, ती अविनाशी परमेश्वर, अव्यक्त, आ-मज्ञानले ज्ञेय, अतीन्द्रिय, सूक्ष्म, अति पर, अनन्त, आद्य एवं परिपूर्ण परब्रह्मको म स्तुति गर्दछु ॥२०-२१॥ जसका अति सूक्ष्म अंश र नाम-रूपका भेदले ब्रह्मादि देवताहरू, सबै वेद तथा चराचर लोकहरूको सृष्टि भएको छ ॥२२॥ जस्तै अग्निका ज्वाला र सूर्यको किरण सधैं अग्नि र सूर्यबाट नै निस्कन्छन् र उनैमा लय हुन्छन् । त्यस्तै नै जसबाट बुद्धि, मन तथा शरीरका गुणहरूको प्रवाह हुँदै रहन्छ, ती भगवान् देवता, असुर, मनुष्य, तिर्यक्, स्त्री, नपुंसक, पुरुष तथा जीव केही पनि होइनन्, फेरि न त ती गुण, कर्म सत् अथवा असत् नै छन् । अतः सबैले निषेध गरिदिदा पनि जो निषेधावधिरूपले शेष रहिरहन्छन् ती सर्वरूप परमेश्वरको जय होस् ॥२३-२४॥ म यस ग्राहको मुखबाट छुटेर बाँची रहन चाहन्न, किनकि बाहिर-भित्र सबैतिर अज्ञानले ढाकिएको हात्तीको योनिमा मेरो के लाभ हुन्छ ! म त आत्म-प्रकाशलाई ढाकिदिने अज्ञानबाट

कश्चनार्थं वाञ्छन्ति ये वै भगवत्प्रपन्नाः ॥ अत्यद्भुतं तच्चरितं सुमङ्गलं गायन्त आनन्दसमुद्रमग्नाः ॥ २० ॥ तमक्षरं ब्रह्म परं परेशमव्यक्तमाध्यात्मिकयोगगम्यम् ॥ अतीन्द्रियं सूक्ष्ममिवातिदूरमनन्तमाद्यं परिपूर्णमीडे ॥ २१ ॥ यस्य ब्रह्मादयो देवा वेदा लोकाश्चराचराः ॥ नामरूपविभेदेन वल्व्य च कलया कृताः ॥ २२ ॥ यथार्चिषाग्नेः सवितुर्गभस्तयो निर्यान्ति संयान्त्यसकृत्स्वरोचिषः ॥ तथा यतोऽयं गुणसंप्रवाहो बुद्धिर्मनःखानि शरीरसर्गाः ॥२३॥ स वै न देवासुरमर्त्यतिर्यङ् न स्त्री न षण्ढो न पुमान्न जन्तुः ॥ नायं गुणः कर्म न सन्न चासन्निषेधशेषो जयतादशेषः ॥२४॥ जिजीविषे नाहमिहामुया किमन्तर्बहिश्चावृतयेभयोन्या ॥ इच्छामि कालेन न यस्य विप्लवस्तस्यात्मलोकावरणस्य मोक्षम् ॥ २५ ॥ सोऽयं विश्वसृजं विश्वमविश्वं विश्ववेदसम् ॥ विश्वात्मानमजं ब्रह्म प्रणतोऽस्मि परं पदम् ॥ २६ ॥ योगरन्धितकर्माणि हृदि योगविभाविते ॥ योगिनो यं प्रपश्यन्ति योगेशं तं नतोऽस्म्यहम् ॥ २७ ॥ नमो नमस्तुभ्यमसह्यवेगशक्तित्रयायाखिलधीगुणाय ॥ प्रपन्नपालाय दुरन्तशक्तये कदिन्द्रियाणामनवाप्यवर्त्मने ॥२८॥ नायं वेद स्वमात्मानं यच्छक्त्याऽहंधिया हतम् ॥ तं दुरत्ययमाहात्म्यं भगवन्तमितोऽस्म्यहम् ॥२९॥ श्रीशुक उवाच ॥ एवं गजेन्द्रमुपवर्णित-निर्विशेषं ब्रह्मादयो विविधलिङ्गभिदाभिमानाः ॥ नैते यदोपससृपुर्निखिलात्मकत्वात्तत्राखिलामरमयो हरिराविरासीत् ॥ ३० ॥ तं तद्वदार्त्तमुपलभ्य

मुक्त हुन खोजिरहेको छु, जसको कालले पनि अन्त्य गर्न सक्तैन ॥ २५ ॥ संसारबाट मुक्त हुनको इच्छुक म ती परब्रह्मको शरणमा छु, जो समस्त विश्वका रचयिता, विश्वरूप, विश्वातीत, विश्वस्वरूप सामग्रीले कौतुक गर्ने भएका, विश्वका अन्तरात्मा छन् ॥२६॥ योगाभ्यासले दग्धकर्मा योगीजन जसको आफ्नो योग विशुद्ध अन्तःकरणमा साक्षात्कार गर्दछन् ती योगेश्वरलाई प्रणाम छ ॥२७॥ असह्य वेगमयी तीन शक्तिहरूले सम्पन्न, इन्द्रियहरूका शब्दादि गुण-रूपले प्रतीयमान, शरणागतका रक्षक र अजितेन्द्रिय पुरुष जसको प्राप्तिको बाटो फेला पाउन सक्तैनन्, ती अनन्त-शक्ति सम्पन्न भगवान्लाई प्रणाम छ ॥२८॥ यो जीव जसको मायाले उत्पन्न अहं-बुद्धिद्वारा आत्मस्वरूपलाई जान्न सक्तैन, ती दुस्तर महिमामय प्रभुलाई प्रणाम छ ॥२९॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! गजेन्द्रले यसरी निर्विशेषभावले स्तुति गरेपछि जब भिन्न-भिन्न रूपका अभिमानी ब्रह्मादि देवताबाट कोही पनि उसलाई मुक्त पार्न

आएनन्, अनि सर्वरूपमय तथा सर्वदेवमय हरि स्वयं प्रकट भए ॥३०॥ गजेन्द्रलाई अत्यन्त आर्त देखेर तथा उनको स्तोत्र सुनेर जगन्निवास श्रीहरि, देवमय, गरुड्मा सवार भएर हातमा चक्ररूपी आयुध लिएर स्तुति गरिहेका देवताहरूका साम्नुन्ने, जहाँ गजेन्द्र थियो, उहीं शीघ्र पुगे ॥३१॥ सरोवरभित्र महाबली ग्राहद्वारा ग्रस्त तथा आर्त गजराजले जब आकाशबाट चक्रधारी श्रीहरिलाई गरुड्मा चढेर आउन लागेका देख्यो तब आफ्नो सुँढमा यौटा कमल-पुष्प लियो र त्यसलाई मास्तिर उचालेर ठूलोक्लदुःखले भन्यो–'हे नारायण ! हे अखिल-

जगन्निवासः स्तोत्रं निशाम्य दिविजैः सह संस्तुवद्भिः ॥ छन्दोमयेन गरुडेन समुह्यमानश्चक्रायुधोऽभ्यगमदाशु यतो गजेन्द्रः ॥३१॥ सोऽन्तः सरस्युरुबलेन गृहीत आर्तो दृष्ट्वा गरुत्मति हरिं ख उपात्तचक्रम् ॥ उत्क्षिप्य साम्बुजकरं गिरमाह कृच्छ्रान्नारायणाखिलगुरो भगवन्नमस्ते ॥ ३२ ॥ तं वीक्ष्य पीडितमजः सहसाऽवतीर्य सग्राहमाशु सरसः कृपयोज्जहारः ॥ ग्राहाद्विपाटितमुखादरिणा गजेंद्रं संपश्यतां हरिरमूमुचदुच्छ्रियाणम् ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धे गजेन्द्रमोक्षणे तृतीयोऽध्यायः ॥३॥

गुरो ! हे भगवन् ! हजुरलाई प्रणाम छ ॥३२॥ गजेन्द्रलाई पीडित देखेर अजन्मा हरि गरुडको गति मन्द देखेर हाम्फाली कृपापूर्वक दगुरेर आफ्नो हातले ग्राहसहित गजलाई बाहिर झिकेर सबै देवताहरूका समक्ष श्रीहरिले सुदर्शन चक्रले ग्राहको मुख फोरेर गजराजलाई छुटाउनुभयो ॥३३॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥

---

दृष्टान्त ( विपत्तिमा जसको बुद्धि ठेगानमा रहन्छ, त्यसले अनेक कष्टदेखि निस्कन सक्छ )—कुनै नदीको किनारमा जामुनोको वृक्षमाथि यौटा बानर बस्तथ्यो। त्यो नित्य पाके पाकेका जामुन खाने गर्दथ्यो। यौटा ग्राहले बानरलाई देखेर भन्यो—'मित्र ! कस्तो हल्लाइदेउ, पानीमा केही जामुनो खसून्, अनि म पनि खाउँला।' बानरले बल हल्लादियो र ग्राहले खूब जामुनो खायो। यसै गरी ग्राह नित्य जामुनो खानको निमित्त खसमनि आउने गर्दथ्यो। यहँबस्तथ्ता दुवैको गहीरो मैत्री भयो। एक दिन ग्राहले आफ्नी पत्नीको निम्ति पनि अलिकति जामुनो लगिदियो। ग्राहिनीले जामुन खाएर ग्राहसित भनी—'यो अमृत सरी मीठो फल तपाईंले कहाँबाट ल्याउनु भयो ?' ग्राहले बानरसितको मित्रताको कुरा सबै सुनाइदियो। अनि उसले भनी—'जुन बानर यस्तो मीठो फल दिनछ्ँ खान्छ त्यसको कलेजो निकै स्वादिष्ट होला। अतः तिमी मेरो निम्ति त्यसको कलेजो ल्याइदेऊ।' ग्राहले धेरै बुझायो तर पत्नीले मानिन। अतएव ग्राह बानरलाई फकाएर नदीपार ल्याउनको निम्ति उसको नजीकै गएर भन्यो—'मित्र ! म त सधैं तिमीकहाँ आउँछु। तर तिमी कहिले पनि मेरो घर आउँदैनौ। यो कुरा मित्रताको रीतिको विपरीत छ। तिमी कृपा गरेर आज मेरो घर हिंड। तिम्रो माउन तिमीलाई हेर्न उत्कण्ठित छ।' बानरले भन्यो—'म पानीमा कसरी हिंड्न सक्नेछु।' उसले भन्यो—मेरो पिठिउँमा बस, म तिमीलाई घर लिएर जान्छु।' बानरले स्वीकार गर्‍यो। तब बानरलाई आफ्नो पिठिउँमा बसालेर जब नदीको माझमा लग्यो, तब भन्न लाग्यो-मित्र ! मैले आफ्नी पत्नीको कुरा मानेर तिम्रो कलेजा लिनको लागि यो चाल चलेको हुँ। अब म मेरी स्त्री तिमीलाई मारेर तिम्रो कलेजा खान्छे।' यति कुरा सुन्नासाथ बानरले आफ्नो मनमा विचार गर्‍यो—मैले राम्रो गरीन, यो विजातीमा विश्वास गरें, तर यो पश्चात्तापले अब केही लाभ छैन। बरू अब प्राण रक्षा गर्ने कुनै युक्ति खिस्नु पर्‍यो। बानरले यति विचार गरेर ग्राहसित भन्यो—'मित्र ! यस्तो भए तिमीले मलाई पहिले नै किन भनेनौ ? मैले त कलेजो झिकेर त्यही रूखमा झुन्ड्याइदिएको छु। त्यसैले म यौटा डांगाबाट अर्को डांगामा हाम्फाल्दै रहन्छु। अब मलाई छिटमा पुर्‍याउ, म कलेजो लिउँ, अनि तिम्री पत्नीकहाँ जाउँला।' ग्राहले त्यसै गर्‍यो। बानर किनारमा पुगेर रूखमा चढ्यो। ग्राहले भन्यो—मित्र ! छिटै आउ, अबेर भइरहेको छ।' बानरले भन्यो—'हे मूर्ख ! कतैले आफ्नो कलेजा पनि झिकेर रूखमा झुण्ड्याउन सक्छ ? जा, अब म तेरो जालमा अल्झने होइन। आजदेखि तैंले जामुनो पनि पाउनेछस्।' ग्राह चिन्ता गर्दै गयो—समुत्पन्नेषु कार्येषु बुद्धिर्यस्य हीयते, स एव दुर्गं तरति जलस्थो वानरो यथा।' अर्थात्—जसको बुद्धि मौकामा नष्ट हुँदैन, त्यो त्यसै प्रकार बाँच्दछ, जसरी जलमा स्थित त्यो बाँदर बाँचेको थियो।

7.14

( गज र ग्राहको पूर्वजन्मको वृत्तान्त र तिनको उद्धार )---शुकदेवजी भन्दछन्—हे राजन् ! भगवान्‌को यो लीला देखेर ब्रह्मा, शिव र अरु देवता, ऋषि र गन्धर्व भगवान्‌को भक्तवत्सलताको प्रशंसा गर्दै उनमाथि पुष्प-वर्षा गर्नलागे ॥१॥ स्वर्गमा दिव्य दुन्दुभीहरू बज्नलागे र गन्धर्व नाच्न-गाउन थाले। उता ऋषि, चारण तथा सिद्धगण पुरुषोत्तम भगवान्‌को स्तुति गर्नलागे ॥२॥ हे राजन् ! त्यो ग्राह पूर्वजन्ममा गन्धर्वश्रेष्ठ हूहू थियो। अब भगवत्-करस्पर्शले उसले महात्मा देवलको श्रापबाट मुक्त भएर तुरुन्त आश्चर्यपूर्ण र दिव्य शरीर धारण गर्‍यो। त्यसपछि कीर्तनीय गुण एवं चरित्र हुने, कीर्तिधाम, उत्तमश्लोक र अविनाशी जगदीश्वरलाई उसले प्रणाम गरेर उनको पुनीत सुयश गाउन लाग्यो। भगवान्‌को कृपा-प्राप्त गरेर हूहूले उनको परिक्रमा गरेर सबैको समक्ष भगवान्‌लाई प्रणाम गरी तथा सबै पाप नष्ट पारेर आफ्नो लोकमा गयो ॥३-५॥ भगवान्‌का बाहुको स्पर्श पाएर गजराज पनि अज्ञानरूपी बन्धनबाट मुक्त भयो र पीताम्बरधारी चतुर्भुज स्वरूप धारण गरेर भगवान्‌को सारूप्यमा प्राप्त भयो ॥६॥ त्यो गजेन्द्र पूर्वजन्ममा पाण्ड्य-देशको 'इन्द्रद्युम्न' नामक सम्राट् थियो। उस

श्रीशुक उवाच ॥ तदा देवर्षिगन्धर्वा ब्रह्मेशानपुरोगमाः ॥ मुमुचुः कुसुमासारं शंसन्तः कर्म तद्धरेः ॥१॥ नेदुर्दुन्दुभयो दिव्यागन्धर्वानन्तुर्जगुः ॥ ऋषयश्चारणाः सिद्धास्तुष्टुवुः पुरुषोत्तमम् ॥२॥ योऽसौ ग्राहः स वै सद्यः परमाश्चर्यरूपधृक् ॥ मुक्तो देवलशापेन हूहूर्गन्धर्वसत्तमः ॥३॥ प्रणम्य शिरसाऽधीशमुत्तमश्लोकमव्ययम् ॥ अगायत यशोधाम कीर्तन्यगुणसत्कथम् ॥ ४ ॥ सोऽनुकम्पित ईशेन परिक्रम्य प्रणम्य तम् ॥ लोकस्य पश्यतो लोकं स्वमगान्मुक्तकिल्बिषः ॥५॥ गजेन्द्रो भगवत्स्पर्शाद्विमुक्तोऽज्ञानबन्धनात् ॥ प्राप्तो भगवतो रूपं पीतवासाश्चतुर्भुजः ॥ ६ ॥ स वै पूर्वमभूद्राजा पाण्ड्यो द्रविडसत्तमः ॥ इन्द्रद्युम्न इति ख्यातो विष्णुव्रतपरायणः ॥७॥ स एकदाराधनकाल आत्मवान्गृहीतमौनव्रतईश्वरं हरिम् ॥ जटाधरस्तापस आप्लुतोऽच्युतं समर्चयामास कुलाचलाश्रमः ॥८॥ यदृच्छया तत्र महायशा मुनिः समागमच्छिष्यगणैः परिश्रितः ॥ तं वीक्ष्य तूष्णीमकृतार्हणादिकं रहस्युपासीनमृषिश्चुकोप ह ॥९॥ तस्मा इमं शापमदादसाधुरयं दुरात्माऽकृतबुद्धिरद्य ॥ विप्रावमन्ता विशतां तमोऽन्धं यथा गजः स्तब्धमतिः स एव ॥१०॥ श्रीशुक उवाच ॥ एवं शप्त्वा गतोऽगस्त्यो भगवान्नृप सानुगः ॥ इंद्रद्युम्नोऽपि राजर्षिर्दिष्टं तदुपधारयन् ॥११॥आपन्नः कौञ्जरीं योनिमात्मस्मृतिविनाशिनीम् ॥ हर्यर्चनानुभावेन यद्गजत्वेऽप्यनुस्मृतिः ॥१२॥ एवं विमोक्ष्य गजयूथपमब्जनाभस्तेनापि पार्षदगतिं गमितेन युक्तः ॥ गन्धर्वसिद्धविबुधैरुपगीय-

जन्ममा त्यो विष्णु भगवान्‌का अनन्य उपासक र द्रविडजातिमा सर्वश्रेष्ठ राजा थियो ॥ ७ ॥ एक दिन त्यो राजा जटा बढाएर तपस्यामा लीन रहेर मलयपर्वतको आफ्नो आश्रममा स्नान गरेर मौनावलम्बनपूर्वक अच्युत परमेश्वर श्रीहरिको उपासना गर्दै थिए ॥८॥ त्यसै बेला आफ्ना शिष्यगणसहित यशस्वी मुनिवर अगस्त्य त्यहाँ आइपुगे। उनले देखे—मेरो पूजन सत्कार आदि नगरेर राजा चुपचाप बसेका छन्—ती राजामाथि रिसाए ॥९॥ मुनिले तिनलाई श्राप दिंदै भने—तँ असाधु, दुरात्मा र मूर्ख रहिस्, त्यसैले त तैंले आज यस प्रकार ब्राह्मण-जातिको अपमान गरिस्। तँ हात्तीको जस्तै जडबुद्धि छस्। अतः उही अज्ञानमयी हात्तीको योनिमा जन्म लिन जा ॥१०॥ शुकदेवजी भन्दछन्—हे राजन् ! यस्तो श्राप दिएर अगस्त्यजी शिष्यसहित त्यहाँबाट फर्किए। राजा इन्द्रद्युम्नले त्यो प्रारब्ध भोग ठाने र आत्मज्ञानहीन हात्तीको योनि पाए। यस जन्ममा भक्तिपूर्वक भगवान्‌का आराधना गर्नाले

715

गजयोनिमा पनि उसलाई आत्मास्वरूपको स्मृति बनिरह्यो ॥११॥१२॥ त्यसको उद्धार गरेर भगवान् कमलनाभ पार्षदत्व प्राप्त गजेन्द्रलाई साथै लिएर गरुडमा बसी गन्धर्व, सिद्ध तथा देवताहरूको मुखबाट आफ्नो गुणगान सुन्दै आफ्नो धाममा गए ॥ १३ ॥ हे महाराज ! भगवान्को गजेन्द्र-मोक्षस्वरूप प्रभाव मैले सुनाएँ। यो कलिकालका सबै दोष तथा श्रोताहरूको दुःस्वप्नादि नष्ट गरेर उनलाई स्वर्ग तथा सुयश प्राप्त गराउँछ ॥१४॥ यसै निम्ति कल्याणेच्छु द्विज दुःस्वप्नादिको शान्तिकानिम्ति बिहानै उठेर पवित्र भई यसको पाठ गर्दछन्॥१५॥ हे कुरुसत्तम ! जाने बेलामा सर्वभूतमय भगवान्ले सबै प्राणीहरूको समक्ष गजेन्द्रप्रति भन्नुभयो ॥ १६ ॥ भगवान् आज्ञाहुन्छ—हेगजेन्द्र ! जो प्राणी बिहानीपख उठेर इन्द्रियनिग्रह-पूर्वक एकाग्र मनले मलाई, तिमीलाई, यो सरोवर, पर्वत, कन्दरा, बन बेंत, कीचक बाँसहरूको समूह, देववृक्ष, पर्वत-शिखर, मेरो, ब्रह्माजीको तथा श्रीशङ्करको निवास स्थान, मेरो प्रियधाम

मानकर्माद्भुतं स्वभवनं गरुडासनोऽगात् ॥१३॥ एतन्महाराज तवेरितो मया कृष्णानुभावो गजराजमोक्षणम् ॥ स्वर्ग्यं यशस्यं कलिकल्मषापहं दुःस्वप्ननाशं कुरुवर्य शृण्वताम् ॥१४॥ यथाऽनुकीर्तयन्त्येतच्छ्रेयस्कामा द्विजातयः ॥ शुचयः प्रातरुत्थाय दुःस्वप्नाद्युपशान्तये ॥१५॥ इदमाह हरिः प्रीतो गजेन्द्रं कुरुसत्तम ॥ शृण्वतां सर्वभूतानां सर्वभूतमयो विभुः ॥१६॥ श्रीभगवानुवाच ॥ ये मां त्वां च सरश्चेदं गिरिकन्दरकाननम् ॥ वेत्रकीचकवेणूनां गुल्मानि सुरपादपान् ॥ १७ ॥ शृङ्गाणीमानि धिष्ण्यानि ब्रह्मणो मे शिवस्य च ॥ क्षीरोदं मे प्रियं धाम श्वेतद्वीपं च भास्वरम् ॥ १८ ॥ श्रीवत्सं कौस्तुभं मालां गदां कौमोदकीं मम ॥ सुदर्शनं पाञ्चजन्यं सुपर्णं पतगेश्वरम् ॥ १९ ॥ शेषं च मत्कलां सूक्ष्मां श्रियं देवीं मदाश्रयाम् ॥ ब्रह्माणं नारदमृषिं भवं प्रह्लादमेव ॥ २० ॥ मत्स्यकूर्मवराहाद्यैरवतारैः कृतानि मे ॥ कर्माण्यनन्तपुण्यानि सूर्यं सोमं हुताशनम् ॥ २१ ॥ प्रणवं सत्यमव्यक्तं गोविप्रान्धर्ममव्ययम् ॥ दाक्षायणीर्धर्मपत्नीः सोमकश्यपयोरपि ॥ २२ ॥ गङ्गां सरस्वतीं नन्दां कालिन्दीं सितवारणम् ॥ ध्रुवं ब्रह्म ऋषीन्सप्त पुण्यश्लोकाँश्च मानवान् ॥ २३ ॥ उत्थायापररात्रान्ते प्रयताः सुसमाहिताः ॥ स्मरन्ति मम रूपाणि मुच्यन्ते ह्येनसोऽखिलात् ॥ २४ ॥ ये मां स्तुवन्त्यनेनाङ्ग प्रतिबुध्य निशात्यये ॥ तेषां प्राणात्यये चाहं ददामि विमलां मतिम् ॥२५॥ श्रीशुक उवाच ॥ इत्यादिश्य हृषीकेशः प्रध्माय जलजोत्तमम् ॥ हर्षयन्विबुधानीकमारुरोह खगाधिपम् ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे गजेन्द्रमोक्षणं नाम चतुर्थोऽध्यायः ॥ ४ ॥

वैकुण्ठ, क्षीरसागर, प्रकाशमय श्वेतद्वीप, श्रीवत्स, कौस्तुभमणि, वनमाला, कौमोदकी गदा, सुदर्शन चक्र, पाञ्चजन्य शङ्ख, पक्षिराज गरुड, मेरा सूक्ष्मस्वरूप शेष, मेरो आश्रित रहने देवी लक्ष्मीजी, ब्रह्मा, देवर्षि नारद, शिवजी, प्रह्लाद, मत्स्य, कूर्म, वराह आदि अवताहरू द्वारा गरिएका मेरा पुण्ययुक्त चरित्र, सूर्य, चन्द्र, अग्नि, ॐकार, सत्य, अव्यक्त, गाई, ब्राह्मण, धर्म, चन्द्रमा, कश्यपकी पत्नीहरू, दक्षकन्याहरू, गङ्गा, सरस्वती, नन्दा, कालिन्दी, ऐरावत, ध्रुव, सात ब्रह्मर्षि तथा पवित्रकीर्ति मनुष्यादि मेरा रूपको स्मरण गर्न छन्, ती पापबाट मुक्त हुनेछन् ॥१७-२४॥ हे प्रिय ! जा-जो जन तिमीले गरिएको स्तोत्रले मेरो स्तुति गर्नेछन्, तिनलाई मर्न बेलामा म पवित्र पारिदिनेछु ॥ २५ ॥ शुकदेवजी भन्छन्–हे राजन् ! भगवान् हृषीकेश यति भनेर आफ्नो शङ्ख बजाई देवताहरूलाई आनन्दित पार्दै गरुडमा चढ्नु भयो ॥२६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥४॥

716

( दैत्यहरू द्वारा पराजित देवताहरू ब्रह्माजीकहाँ जानु र ब्रह्माजीले देवताहरूको कष्ट निवारणको निमित्त भगवान्‌सित प्रार्थना गर्नु )–शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! यस प्रकार मैंले पापहारी गजेन्द्रमोक्ष नामक भगवान्‌को पवित्र चरित्र सुनाएँ । अब रैवत मन्वन्तरको वृत्तान्त सुन ॥१॥ महात्मा तामस मनुका भाई रैवत पाँचौं मनु भए । उनका अर्जुन, बलि, विन्ध्यादि अनेक छोरा थिए ॥२॥ हे राजन् ! त्यस मन्वन्तरमा विभु नामका इन्द्र, भूतरयादि देवता र हिरण्यरोमा, वेदशिरा र ऊर्ध्वबाहु आदि सप्तर्षि थिए ॥३॥ शुभ्र-ऋषिकी भार्या विकुण्ठाको गर्भबाट भगवान्‌ले देवताहरू र आफ्नो अंशले वैकुण्ठ अवतार लिए ॥४॥ उनले लक्ष्मीजीको प्रीत्यर्थ उनको प्रार्थनाले लोक-नमस्कृत वैकुण्ठधाम रचेका थिए ॥५॥ वैकुण्ठ भगवानका परम उदार गुण र माहात्म्यको संक्षिप्त वृत्तान्त मैंले पहिल्यै ( तृतीयस्कन्धमा ) भनिसकेको छु । त्यसो त जो प्राणी विष्णु भगवान्‌का सबैगुण गाउन सक्नन्,

श्रीशुक उवाच ॥ राजन्नुदितमेतत्ते हरेः कर्माघनाशनम् ॥ गजेन्द्रमोक्षणं पुण्यं रैवतं त्वन्तरं शृणु ॥ १ ॥ पञ्चमो रैवतो नाम मनुस्ता-
मससोदरः ॥ बलिविन्ध्यादयस्तस्य सुता अर्जुनपूर्वकाः ॥२॥ विभुरिन्द्रः सुरगणा राजन्भूतरयादयः ॥ हिरण्यरोमा वेदशिरा उर्ध्वबाह्वादयो द्विजाः
॥३॥ पत्नी विकुण्ठा शुभ्रस्य वैकुण्ठैः सुरसत्तमैः ॥ तयोः स्वकलया जज्ञे वैकुण्ठो भगवान् स्वयम् ॥४॥ वैकुण्ठः कल्पितो येन लोको लोकनमस्कृतः ॥
रमया प्रार्थ्यमानेन देव्या तत्प्रियकाम्यया ॥५॥ तस्यानुभावः कथितो गुणाश्च परमोदयाः ॥ भौमान्रेणून्स विममे यो विष्णोर्वर्णयेद्‌गुणान् ॥ ६ ॥
षष्ठश्च चक्षुषः पुत्रश्चाक्षुषो नाम वै मनुः ॥ पूरुपूरुषसुद्युम्नप्रमुखाश्चाक्षुषात्मजाः ॥ ७ ॥ इन्द्रो मन्त्रद्रुमस्तत्र देवा आप्यादयो गणाः ॥ मुनयस्तत्र वै
राजन्हविष्मद्वीरकादयः ॥८॥ तत्रापि देवः संभूत्यां वैराजस्याभवत्सुतः ॥ अजितो नाम भगवानंशेन जगतः पतिः ॥ ९ ॥ पयोधिं येन निर्मथ्य
सुराणां साधिता सुधा ॥ भ्रममाणोऽम्भसि धृतः कूर्मरूपेण मन्दरः ॥ १० ॥ राजोवाच ॥ यथा भगवता ब्रह्मन्मथितः क्षीरसागरः ॥ यदर्थं वा
यतश्चाद्रिं दधाराम्बुचरात्मना ॥ ११ ॥ यथाऽमृतं सुरैः प्राप्तं किञ्चान्यदभवत्ततः ॥ एतद्भगवतः कर्म वदस्व परमाद्भुतम् ॥ १२ ॥ त्वया संकथ्य-
मानेन महिम्ना सात्वतां पतेः ॥ नातितृप्यति मे चित्तं सुचिरं तापतापितम् ॥ १३ ॥ सूत उवाच ॥ सम्पृष्टो भगवानेवं द्वैपायनसुतो द्विजाः ॥
अभिनन्द्य हरेर्वीर्यमभ्याचष्टुं प्रचक्रमे ॥ १४ ॥ श्रीशुक उवाच ॥ यदा युद्धेऽसुरैर्देवा बाध्यमानाः शितायुधैः ॥ गतासवो निपतिता नोत्तिष्ठेरन्स्म

ती पृथ्वीका परमाणु पनि गन्न सक्नन् ॥६॥ छैठौं मनु चक्षुका छोरा चाक्षुष भए । उनका पूरु, पूरुष र सुद्युम्नादिअनेकपुत्रथिए ॥७॥ त्यस मन्वन्तरमा मन्त्रद्रुम इन्द्र, आप्यादि देवता तथा हविष्मान् र वीरक आदि सप्तर्षि थिए ॥८॥ चाक्षुष मन्वन्तरमा जगत्पति भगवान् आफ्नू अंशले वैराजकी भार्या सम्भूतिको गर्भबाट उत्पन्न भएर (अजित) नामले प्रसिद्ध भए ॥९॥ उनले समुद्र मथेर देवताहरूलाई अमृत पिलाएर र जलमा घुमिरहेको मन्दराचललाई कूर्मरूपले आफ्नो पिठिउँमा धारण गरेका थिए ॥१०॥ राजा परीक्षित्‌ले सोधे–हे ब्रह्मन् ! भगवान्‌ले क्षीरसागरलाई जसरी मथे, जसको निमित्त भगवान्‌ले कूर्मरूपद्वारा मन्दराचललाई पिठिउँमा धारण गरे , जस्तै––देवताहरूलाई अमृत मिलेको होस् र अरु पनि जुन-जुन पदार्थ निस्के भगवान्‌का सबै चरित्र सुनाउनोस् ॥११॥१२॥ विविध तापहरूले सन्तप्त मेरो मन हजुरले भनेका भगवान्‌का महिमा बारम्बार सुनेर पनि तृप्त भइरहेका छैनन् ॥१३॥ श्रीसूतजी भन्दछन्–

हे विभो ! राजाले त्यति भनेपछि व्यासपुत्र शुकदेवजीले तिनको फेरि-फेरि प्रशंसा गरे र श्रीहरिका चरित्रको वर्णन गर्नलागे ॥१४॥ शुकदेवजीले भने–हे राजन् ! जब देव दानव युद्धमा असुरका तीक्ष्ण आयुधले व्यथित एवंप्राणहीन भएर भूमिमा ढले, देवताहरूमा अधिकांश देवता उठ्न सकेनन् ॥१५॥ जब *दुर्वासा ऋषिको श्रापले इन्द्र समेत तीनैलोक श्रीविहीन भयो र यज्ञादि कर्महरूको मूलोच्छेदन भयो । यो दुर्दशा देखेर जब इन्द्र, वरुणादि देवता परस्पर मन्त्रणा गरेर पनि स्वयं कुनै निश्चय गर्न सकेनन्, तब ती सबै सुमेरु-शिखरमा स्थित ब्रह्माजीको सभामा पुगे र अति विनयभावले सबै कुरा ब्रह्माजीलाई भने ॥ १६–१८॥ ब्रह्माजीले देखे—इन्द्र, वायु आदि सबै देवता निःसत्व तथा कान्तिहीन भइरहेका छन् र लोक दुर्दशाग्रस्त भएका छन् । उता दैत्यगणको दशा सर्वथा त्यसको उल्टो छ । अनि भगवान् परमेष्ठीले एकाग्र मनले श्रीनारायणको चिन्तन गरेर प्रसन्न वदन भई उनीसित

भूयशः ॥ १५ ॥ यदा दुर्वाससः शापात्सेन्द्रा लोकास्त्रयो नृप ॥ निःश्रीकाश्चाभवंस्तत्र नेशुरिज्यादयः क्रियाः ॥ १६ ॥ निशाम्यैतत्सुरगणा महे·
न्द्रवरुणादयः ॥ नाध्यगच्छन्स्वयं मन्त्रैर्मन्त्रयन्तो विनिश्चयम् ॥ १७ ॥ ततो ब्रह्मसभां जग्मुर्मेरोर्मूर्धनि सर्वशः ॥ सर्वं विज्ञापयाञ्चक्रुः प्रणताः परमे·
ष्ठिने ॥१८॥ स विलोक्येन्द्रवाय्वादीन्निःसत्वान्विगतप्रभान् ॥ लोकानमङ्गलप्रायानसुरानयथा विभुः ॥ १९ ॥ समाहितेन मनसा संस्मरन्पुरुषं परम् ॥
उवाचोत्फुल्लवदनो देवान्स भगवान्परः ॥ २० ॥ अहं भवो यूयमथोऽसुरादयो मनुष्यतिर्यग्द्रुमघर्मजातयः ॥ यस्यावतरांशकलाविसर्जिता व्रजाम
सर्वे शरणं तमव्ययम् ॥ २१ ॥ न यस्य वध्यो न च रक्षणीयो नोपेक्षणीयादरणीयपक्षः ॥ अथापि सर्गस्थितिसंयमाय धत्ते रजः सत्त्वतमांसि
काले ॥ २२ ॥ अयं च तस्य स्थितिपालनक्षणः सत्त्वं जुषाणस्य भवाय देहिनाम् ॥ तस्माद्व्रजामः शरणं जगद्गुरुं स्वानां स नो धास्यति शं
सुरप्रियः ॥ २३ ॥ श्रीशुक उवाच ॥ इत्याभाष्य सुरान्वेधाः सह देवैररिन्दम ॥ अजितस्य पदं साक्षाज्जगाम तमसः परम् ॥ २४ ॥ तत्राद‍ृष्टस्व·

भने–॥१९॥२०॥ हे देवता हो ! म, शिवजी, तिमीहरू, सबै असुर तथा मनुष्य, तिर्यक् , वृक्ष र स्वेदजादि सबै जीव पुरुषावतारका एक अंशको पनि अंशले रचित छन्, हामी उनै अविनाशी प्रभुका शरणमा जाऊँ ॥२१॥ उनको दृष्टिमा कोही वध्य, रक्षणीय, उपेक्षणीय अथवा आदरणीय छैनन् । तैपनि संसारको उत्पत्ति, स्थिति तथा संहारको निम्ति ती बेला-बेलामा क्रम-क्रमले रजोगुण, सत्वगुण तथा तमोगुण धारण गर्दछन् ॥२२॥ यस बेला सबै प्राणीहरूको कल्याणार्थ ती सत्वगुण धारण गरेका छन् । यही उनले जगत्को रक्षा गर्ने सुअवसर छ । अतः हामी उनै जगद्गुरुको शरण लिन्छौं ती देवताहरूका प्रिय छन् । यसनिम्ति अवश्य हाम्रो मङ्गल गर्नेछन् ॥२३॥ शुकदेवजी भन्दछन्–हे शत्रुदमन ! देवतासित यति भनेर ब्रह्मालाई साथै लिई तमोगुणको पारी स्थित भगवान्को निवासस्थानमा गए ॥२४॥ त्यहाँ पुगेर इन्द्रिय एकाग्र पारेर जसको स्वरूप कहिल्यै कसैले देख्न पाएको थिएन तर

---

* उदाहरण—एक दिन दुर्वासा ऋषि वैकुण्ठलोकबाट आइरहेका थिए । बाटोमा ऐरावतमा चढेका देवराज इन्द्र भेटिए । दुर्वासाले उनलाई त्रिलोकाधिपति ठानेर भगवान्को प्रसाद फूलको माला दिए । इन्द्रले मद-मत्त भएर त्यसको केही पनि आदर नगरेर त्यो माला ऐरावतको मस्तकमा पर्याकिदिए । ऐरावतले त्यो माला सुँडमा लिएर खुट्टाले कुल्ची दियो । अनि दुर्वासाले रिसाई इन्द्रलाई श्राप दिए—'तिमी तीनै लोक सहित शीघ्र श्रीहीन होऊ ।'

पहिले सुनिसकिएको छ, ती भगवान्‌को वैदिकी वाणीले स्तुति गर्दै थाले ॥ २५ ॥ ब्रह्माजी भन्दछन्–जो निर्विकार, सत्य, अनन्त, आदिपुरुष, बुद्धिरूपिणी गुफामा स्थित, अतर्क्य, मनभन्दा अघि जाने, वाणीले अगोचर र भजनीय छन्, ती श्रेष्ठ देवतालाई हाम्रो प्रणाम छ ॥२६॥ जो प्राण, मन, बुद्धि तथा अहङ्कारका ज्ञाता, शब्दादि विषय एवं इन्द्रियहरूले भासमान अज्ञान-निद्राले शून्य तथा देहहीन छन् । जसमा जीवको प्रकाश तथा छाया वा गृध्रपक्षरूपिणी अविद्या दुवै छैनन्, तो अक्षर आकाश-शरीर त्रियुगीको हामी शरणामा छौं ॥२७॥ जुन मनरचक्रमा पन्ध्र धुरी र त्रिगुणमयी नाभि छ, जो बिजुलीको सदृश चञ्चल तथा शीघ्रगामी छ, प्रकृति नै जसको नेमि छ र जो अजन्मा मायाले प्रेरित जीवको शरीररूपी चक्रमा आधार छन्, हामी ती सत्यस्वरूप भगवान्‌को शरणमा छौं ॥२८॥ जो ज्ञानस्वरूप, प्रकृतिदेखि पर, अदृश्य, अव्यक्त, अनन्तपार (परिच्छेद-शून्य) र जीवमा नियन्तारूपले छन्, ठूलठूला ज्ञानी योगमार्गद्वारा जसको उपासना गर्दछन् ॥२९॥ जोसित मोहित जीव आत्मस्वरूपलाई जान्न पाउन्न, जसको माया अपार छन् किन्तु जसले आफ्नी माया-शक्ति जितिलिएको छ,

रूपाय श्रुतपूर्वाय वै विभो ॥ स्तुतिमब्रूत दैवीभिर्गीर्भिस्त्ववहितेन्द्रियः ॥२५॥ ब्रह्मोवाच ॥ अविक्रियं सत्यमनंतमाद्यं गुहाशयं निष्कलमप्रतर्क्यम् ॥
मनोऽग्रयानं वचसाऽनिरुक्तं नमामहे देववरं वरेण्यम् ॥ २६ ॥ विपश्चितं प्राणमनोधियात्मनामर्थेन्द्रियाभासमनिद्रमव्रणम् ॥ छायातपौ तत्र न गृध्रपक्षौ
तमक्षरं खं त्रियुगं व्रजामहे ॥ २७ ॥ अजस्य चक्रं त्वजयेर्यमाणं मनोमयं पञ्चदशारमाशु ॥ त्रिणाभि विद्युच्चलमष्टनेमि यदक्षमाहुस्तमृतं प्रपद्ये
॥ २८ ॥ य एकवर्णं तमसः परं तदलोकमव्यक्तमनन्तपारम् ॥ आसाञ्चकारोपसुपर्णमेनमुपासते योगरथेन धीराः ॥ २९ ॥ न यस्य कश्चातिति-
तर्ति मायां यया जनो मुह्यति वेद नार्थम् ॥ तं निर्जितात्मात्मगुणं परेशं नमाम भूतेषु समं चरन्तम् ॥ ३० ॥ इमे वयं यत्प्रिययैव तन्वा सत्त्वेन
सृष्टा बहिरन्तराविः ॥ गतिं न सूक्ष्मामृषयश्च विद्महे कुतोऽसुराद्या इतरप्रधानाः ॥ ३१ ॥ पादौ मही यं स्वकृतैव यस्य चतुर्विधो यत्र हि भूतसर्गः ॥
स वै महापूरुष आत्मतन्त्रः प्रसीदतां ब्रह्म महाविभूतिः ॥ ३२ ॥ अम्भस्तु यद्रेत उदारवीर्यं सिद्ध्यन्ति जीवन्त्युत वर्धमानाः ॥ लोकास्त्रयोऽथाखि-
ललोकपालाः प्रसीदतां ब्रह्म महाविभूतिः ॥ ३३ ॥ सोमं मनो यस्य समामनन्ति दिवौकसां वै बलमन्ध आयुः ॥ ईशो नगानां प्रजनः प्रजानां
प्रसीदतां नः स महाविभूतिः ॥ ३४ ॥ अग्निर्मुखं यस्य तु जातवेदा जातः क्रियाकाण्डनिमित्तजन्मा ॥ अन्तःसमुद्रेऽनुपचन्स्वधातून् प्रसीदतां नः

सबै प्राणीहरूमा समान भावले स्थित ती परमेश्वरलाई हाम्रो प्रणाम छ ॥३०॥ रजोगुण प्रधान असुरादिको के कुरा, सात्त्विकांशले जायमान जसका प्रिय हामी देवता तथा ऋषिगण पनि आफ्नो बाहिर-भित्र व्याप्त सूक्ष्म स्वरूपलाई जान्न पाउन्नौं, ती जगदीश्वरलाई हाम्रो प्रणाम छ ॥३१॥ जरायुज, अण्डज, स्वेदज र उद्भिज्ज यी चार थरिका प्राणीहरूको निवासस्थान पृथ्वी नै जसका चरण छन्, ती परम स्वतन्त्र परमेश्वर हामीमाथि प्रसन्न होउन् ॥३२॥ जसद्वारा तीनै लोक एवं सबै लोकपाल उत्पन्न हुँदै, बढ्दै तथा बाँच्दै छन्, महाशक्तिसम्पन्न जल जसको वीर्य छ, ती परम ऐश्वर्यसम्पन्न ब्रह्म हामीमाथि प्रसन्न होउन् ॥३३॥ देवताहरूको बल अन्न, वृक्षहरूका अधीश्वर तथा प्रजावर्धक चन्द्रमा जसको मन छ, ती परमऐश्वर्यशाली प्रभु हामीमाथि प्रसन्न होउन् ॥३४॥ यज्ञादि कर्मकाण्डको सम्पादनार्थ जसको जन्म भएको छ जो जठराग्निरूपले देहभित्र, बडवानलरूपले समुद्रमा स्थित भएर सबै धातु, अन्न र जल पचाउँछ

द्रव्यहरूको उत्पत्तिका कारण अग्नि जसको मुख छ, ती ऐश्वर्यसम्पन्नईश्वर हामीमाथि प्रसन्न होउन् ।।३५।। अर्चिरादि मार्गका अधिष्ठाता, वेदत्रयीमय, परब्रह्मोपासनाका आधार मुक्तिका द्वार एवं अमृतमय सूर्यदेव जसका नेत्र छन्, ती ऐश्वर्यसम्पन्न भगवान् प्रसन्न होउन् ।। ३६ ।। जो सचराचर जीवका मानसिक, शारीरिक तथा ऐन्द्रियक बल छ तथा चक्रवर्ती सम्राट्का अनुयायीहरू झैं हामी जसको अनुगमन गर्दछौं यी प्राणवायु जसका प्राणबाट उत्पन्न भएको छ, ती परम ऐश्वर्यवान् परमेश्वर हामीमाथि प्रसन्न होउन् ।।३७।। जसका श्रोतले दिशाहरू हृदयले इन्द्रियगोलक, नाभिले प्राण, इन्द्रिय, मन, नाग, कूर्म, कृकल, देवदत्त, धनञ्जय शरीरका आश्रय उत्पन्न भएको छ, ती परम ऐश्वर्यशाली प्रभु हामीमाथि प्रसन्न होउन् ।।३८।। जसको बलले इन्द्र, प्रसादले देवता, क्रोधले शिवजी बुद्धिले ब्रह्मा, इन्द्रियहरूले वेद र ऋषिगण तथा शिश्नले प्रजापति उत्पन्न भए, ती परम ऐश्वर्यसम्पन्न भगवान् हामीमाथि प्रसन्न होउन् ।।३९।। जसको वक्षस्थलबाट लक्ष्मी, छायाबाट पितृ, स्तनबाटधर्म, पिठिउँबाट अधर्म मस्तकबाट आकाश र विहारबाट अप्सरा जन्मेका छन्, ती ऐश्वर्यवान् प्रभु हामीमाथि प्रसन्न होउन्

स महाविभूतिः ।। ३५ ।। यच्चक्षुरासीत्तरणिर्देवयानं त्रयीमयो ब्रह्मण एष धिष्ण्यम् ।। द्वारं च मुक्तेरमृतं च मृत्युः प्रसीदतां नः स महाविभूतिः ।। ३६ ।। प्राणादभूद्यस्य चराचराणां प्राणः सहो बलमोजश्च वायुः ।। अन्वास्म सम्राजमिवानुगा वयं प्रसीदतां नः स महाविभूतिः ।। ३७ ।। श्रोत्राद्दिशो यस्य हृदश्च खानि प्रजज्ञिरे खं पुरुषस्य नाभ्याः ।। प्राणेन्द्रियात्मासु शरीरकेतं प्रसीदतां नः स महाविभूतिः ।। ३८ ।। बलान्महेन्द्रस्त्रिदशाः प्रसादान्मन्योर्गिरीशो धिषणाद्विरिञ्चिः ।। खेभ्यश्च छन्दांस्यृषयो मेढ्रतः कः प्रसीदतां नः स महाविभूतिः ।। ३९ ।। श्रीर्वक्षसः पितरश्छाययाऽऽसन्धर्मः स्तनादितरः पृष्ठतोऽभुत् ।। द्यौर्यस्य शीर्ष्णोऽप्सरसो विहारात्प्रसीदतां नः स महाविभूतिः ।।४०।। विप्रो मुखं ब्रह्म च यस्य गुह्यं राजन्य आसीद्भुजयोर्बलं च ।। ऊर्वोर्विडोजोऽङ्घ्रिरवेदशूद्रौ प्रसीदतां नः स महाविभूतिः ।। ४१ ।। लोभोऽधरात्प्रीतिरुपर्यभूद्द्युतिर्नस्तः पशव्यः स्पर्शेन कामः ।। भ्रुवोर्यमः पक्ष्मभवस्तु कालः प्रसीदतां नः स महाविभूतिः ।। ४२ ।। द्रव्यं वयः कर्मगुणान्विशेषं यद्योगमायाविहितान्वदन्ति ।। यद्दुर्विभाव्यं प्रबुधापबाधं प्रसीदतां नः स महाविभूतिः ।। ४३ ।। नमोऽस्तु तस्मा उपशान्तशक्तये स्वाराज्यलाभप्रतिपूरितात्मने ।। गुणेषु मायारचितेषु वृत्तिभिर्न सज्जमानाय नभस्वदूतये ।।४४।। स त्वं नो दर्शयात्मानमस्मत्करणगोचरम् ।। प्रपन्नानां दिदृक्षूणां सस्मितं ते मुखाम्बुजम् ।।४५।। तैस्तैः

।।४०।।जसको मुखबाट ब्राह्मण र ब्रह्म (वेद) बाहुबाट क्षत्रिय र बल, ऊरुबाट वैश्य र वैश्यवृत्ति अनि पाउबाट शुश्रूषादि वृत्तियुक्त शूद्र उत्पन्न भएका हुन् ती परमऐश्वर्य सम्पन्न नारायण हामीमाथि प्रसन्न होऊन् ।।४१।। जसको तल्लो ओठबाट लोभ, माथिल्लोबाट प्रीति, नासिकाबाट कान्ति, स्पर्शबाट पशुप्रिय काम, भृकुटीबाट यम, तथा आँखाका परेलाबाट काल जन्मेको छ ती ईश्वर हामीमाथि प्रसन्न होउन् ।।४२।। पञ्चभूत, काल, कर्म, सत्वादि तीनै गुण, अनिर्वचनीय एवं विद्वान्हरूद्वारा अनात्मरूपले त्याज्य सबै भौतिक प्रपञ्च यी जसरी योगमायबाट जायमान रहिन्छन्, ती महाविभूति प्रभु हामीमाथि प्रसन्न होउन् ।।४३।। जसमा सबै शक्तिहरू शान्त हुन्छन्, जसको मन आत्मानन्दको लाभले परिपूर्ण रहन्छ, जो दर्शनादिका वृत्तिहरूले मायिक गुणादिमा आसक्त हुँदैनन्, ती वायु झैं सर्वत्र असङ्गभावले क्रीडाशील परमात्मालाई प्रणाम छ ।। ४४ ।। उपर्युक्त महाविभूति हरूले सम्पन्न हजुर आफ्नो हास्यपूर्ण

मुखारविन्दका दर्शनेच्छु हामी दासहरूलाई आफ्नो त्यो रूप देखाउनोस्, जो हाम्रा आँखाले देख्न सकून् ॥४५॥ हे प्रभो ! वेला-वेलामा हजुर स्वेच्छाले विभिन्न रूप धारण गरेर हाम्रो निम्ति कठिन एवं दुष्कर काम गर्दछन् ॥४६॥ विषयासक्त पुरुषका कर्म क्लेशमय, सारहीन र निष्फल हुन्छन्, तर हजुरलाई समर्पित कर्म क्लेशमय, सारहीन र निष्फल हुन्नन् ॥४७॥ हजुर सबै जीवका आत्मा, प्रिय तथा हितकारी हुनुहुन्छ । अतः हजुरलाई समर्पित कर्माभास पनि विफल हुँदैन ॥४८॥ जस्तै वृक्षको जरोले जल पाएपछि पात र शाखाहरू पनि सिंचिन्छन्, त्यस्तै नै हजुरको आराधनाले सबै देवताहरू र आत्माको पनि आराधना हुन्छ ॥ ४९ ॥ जो अनन्त, अचिन्त्यकर्मा, निर्गुण, गुणाधीश र सत्वस्थ हुनुहुन्छ, त्यस्ता हजुरलाई प्रणाम छ ॥५०॥ इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां पञ्चमोऽध्यायः ॥५॥

(श्रीविष्णु भगवान्‌को आज्ञानुसार सबै देवताहरूद्वारा असुरगणसित समुद्र मन्थनको आयोजन)—शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! ती देवगणले विनय गरेपछि

स्वेच्छाधृते रूपैः काले काले स्वयं विभो ॥ कर्म दुर्विषहं यन्नो भगवांस्तत्करोति हि ॥ ४६ ॥ क्लेशभूर्यल्पसाराणि कर्माणि विफलानि वा ॥ देहिनां विषयार्तानां न तथैवार्पितं त्वयि ॥ ४७ ॥ नावमः कर्मकल्पोऽपि विफलायेश्वरार्पितः ॥ कल्पते पुरुषस्यैष स ह्यात्मा दयितो हितः ॥ ४८ ॥ यथा हि स्कन्धशाखानां तरोर्मूलावसेचनम् ॥ एवमाराधनं विष्णोः सर्वेषामात्मनश्च हि ॥ ४९ ॥ नमस्तुभ्यमनन्ताय दुर्वितर्क्यात्मकर्मणे ॥ निर्गुणाय गुणेशाय सत्त्वस्थाय च साम्प्रतम् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धेऽमृतमथने पञ्चमोऽध्यायः ॥ ५ ॥

श्रीशुक उवाच ॥ एवं स्तुतः सुरगणैर्भगवान्हरिरीश्वरः ॥ तेषामाविरभूद्राजन्सहस्रार्कोदयद्युतिः ॥ १ ॥ तेनैव महसा सर्वे देवाः प्रतिहतेक्षणाः ॥ नापश्यन्खं दिशः क्षोणिमात्मानं च कुतो विभुम् ॥ २ ॥ विरिञ्चो भगवान्दृष्ट्वा सह शर्वेण तां तनुम् ॥ स्वच्छां मरकतश्यामां कञ्जगर्भारुणेक्षणाम् ॥३॥ तप्तहेमावदातेन लसत्कौशेयवाससा ॥ प्रसन्नचारुसर्वाङ्गीं सुमुखीं सुन्दरभ्रुवम् ॥४॥ महामणिकिरीटेन केयूराभ्यां च भूषिताम् ॥ कर्णाभरणनिर्भातकपोलश्रीमुखाम्बुजाम् ॥ ५ ॥ काञ्चीकलापवलयहारनूपुरशोभिताम् ॥ कौस्तुभाभरणां लक्ष्मीं बिभ्रतीं वनमालिनीम् ॥६॥ सुदर्शनादिभिः स्वास्त्रैर्मूर्तिमद्भिरुपासिताम् ॥ तुष्टाव देवप्रवरः सशर्वः पुरुषं परम् ॥ सर्वामरगणैः साकं सर्वाङ्गैरवनिं गतैः ॥ ७ ॥ ब्रह्मोवाच ॥ अजातजन्मस्थितिसंयमाया-

हजार सूर्य झैं प्रकाशशील श्रीहरि प्रकट भए ॥ १ ॥ भगवान्‌को अतुल तेजले आँखा तिर्मिराएपछि प्रभुलाई मात्र होइन—आकाश, दिशा, पृथ्वी र स्वयं आफूलाई पनि देख्न सकेनन् ॥१॥ शिवजी र ब्रह्माले श्रीहरिको मणिमय श्याम तथा कमलको शबिम–अरुण नयनयुक्त विमल देह देखे । ती खारेको सुवर्ण जस्तै तेजयुक्त पीताम्बरले सुशोभित, प्रसन्न, राम्रा अंगयुक्त मनोहर मुख सुन्दर भृकुटि र मणिमय किरीट, केयूरले विभूषित थियो । उनको मुखकमल कानमा झलेका कुण्डलको कान्तिले शोभित कपोलयुक्त थियो ती कंचुकीका लड र कंकण, हार र नूपुरले अलंकृत थिए । उनको कौस्तुभ मणि मण्डित वक्षस्थलमा लक्ष्मी थिइन् र घाँटीमा वनमाला । सुदर्शनचक्रादि आयुध विद्यमान थिए । उनलाई देख्नासाथ शिवजी पृथ्वीमा साष्टाङ्ग पल्टे, अरू देवता, ब्रह्माजी ती परमपुरुषको स्तुति गर्नलागे ॥२-७॥ ब्रह्माजीले भने–जसको जन्म, स्थिति र नाशकहिल्यै हुँदैन, ती निर्गुण, आनन्दका समुद्र,

अणु, अपरिच्छिन्न र महामहिम प्रभुलाई हाम्रो बारम्बार प्रणाम छ ॥८॥ हे पुरुषोत्तम ! आफ्नो श्रेय खोज्नेहरूको कर्तव्य हो—हजुरको यस दिव्यरूपको वैदिक तथा तान्त्रिक विधिले पूजा गर्नु । हे धातः ! हजुरको यस विश्वमूर्तिमा मलाई देवतासहित तीनैलोक देखिरहेछन् ॥९॥ सारा जगत् पहिले हजुरमै लीन थियो । मध्य र अन्त्यमा पनि हजुर स्वतन्त्र ईश्वरमा नै लीन रहने छ । घडाको उपादान कारण माटो जस्तै हजुर यस जगत्‌का आदि, मध्य र अन्त्यमा स्थित रहनु हुन्छ ॥१०॥ आफ्नो आश्रित मायाले हजुर यो जगत् रचेर यसमा अनुप्रविष्ट हुनुभएको छ । अतः ज्ञानी र शास्त्रज्ञ व्यक्ति गुणहरूका कार्यरूप संसारमा पनि सर्वत्र हजुरलाई नै देख्दछन् ॥११॥ जस्तै मनुष्य काठबाट अग्नि, गाईबाट दूध, भूमिबाट अन्न र जल तथा व्यापारबाट जीविका पाउँछन्, त्यस्तै नै व्यक्ति आफ्नो विशुद्ध बुद्धिले सबै विषयहरूमा हजुरलाई उपलब्ध गरेर हजुरका गुण-गान गर्दछन् ॥१२॥ हे पद्मनाभ ! जस्तै

गुणाय निर्वाणसुखार्णवाय ॥ अणोरणिम्नेऽपरिगण्यधाम्ने महानुभावाय नमो नमस्ते ॥ ८ ॥ रूपं तवैतत्पुरुषर्षभेज्यं श्रेयोऽर्थाभिर्वैदिकतान्त्रिकेण ॥ योगेन धातः सह नस्त्रिलोकान्पश्याम्यमुष्मिन्नु ह विश्वमूर्तौ ॥ ९ ॥ त्वय्यग्र आसीत्त्वयि मध्य आसीत्त्वय्यन्त आसीदिदमात्मतन्त्रे ॥ त्वमादिरन्तो जगतोऽस्य मध्यं घटस्य मृत्स्नेव परः परस्मात् ॥ १० ॥ त्वं माययात्माश्रयया स्वयेदं निर्माय विश्वं तदनुप्रविष्टः ॥ पश्यन्ति युक्ता मनसा मनीषिणो गुणव्यवायेऽप्यगुणं विपश्चितः ॥ ११ ॥ यथाऽग्निमेधस्यमृतं च गोषु भुव्यन्नमम्बूद्यमने च वृत्तिम् ॥ योगैर्मनुष्या अधियन्ति हि त्वां गुणेषु बुद्ध्या कवयो वदन्ति ॥ १२ ॥ तं त्वां वयं नाथ समुज्जिहानं सरोजनाभातिचिरेप्सितार्थम् ॥ दृष्ट्वा गता निर्वृतिमद्य सर्वे गजा दवार्ता इव गाङ्गमम्भः ॥ १३ ॥ स त्वं विधत्स्वाखिललोकपाला वयं यदर्थास्तव पादमूलम् ॥ समागतास्ते बहिरन्तरात्मन्किं वाऽन्यविज्ञाप्यमशेषसाक्षिणः ॥ १४ ॥ अहं गिरित्रश्च सुरादयो ये दक्षादयोऽग्नेरिव केतवस्ते ॥ किंवा विदामेश पृथग्विभाता विधत्स्व शं नो द्विजदेवमन्त्रम् ॥ १५ ॥ श्रीशुक उवाच ॥ एवं विरिञ्चादिभिरीडितस्तद्विज्ञाय तेषां हृदयं तथैव ॥ जगाद जीमूतगभीरया गिरा बद्धाञ्जलीन्संवृतसर्वकारकान् ॥ १६ ॥ एक एवेश्वरस्तस्मिन्सुरकार्ये सुरेश्वरः ॥ विहर्तुकामस्तानाह समुद्रोन्मथनादिभिः ॥ १७ ॥ श्रीभगवानुवाच ॥ हन्त ब्रह्मन्नहो शम्भो हे देवा मम भाषितम् ॥ शृणुतावहिताः सर्वे श्रेयो वः स्याद्यथा सुराः ॥ १८ ॥ यात दानवदैतेयैस्तावत्सन्धिर्विधीयताम् ॥ कालेनानुगृहीतैस्तैर्यावद्वो भव आत्मनः ॥ १९ ॥ अरयोऽपि

दावाग्निले पिल्सिएको हात्ती गङ्गाजल पिएर शान्त हुन्छ, त्यस्तै चिरकालदेखि दर्शनेच्छुक हामी हजुरलाई देखेर परमानन्दित भएका छौं ॥ १३ ॥ हे बहिरन्तरात्मन् ! हामी लोकपाल जुन कामले हजुरको शरणमा आएका छौं, हाम्रो यो काम हजुर पूरा गरिदिनोस् । हजुर त सबैका स्वामी हुनुहुन्छ, अनि हामी हजुरलाई विशेष के भनौं ? ॥१४॥ म, शिव, सबै देवता, दक्षादि प्रजापति अग्निबाट उत्पन्न झिल्काझैं छौं । अनि आफूलाई हजुरदेखि भिन्न जानेर के हामी आफ्नो श्रेयको बाटो स्वयं बुझ्न सक्छौं ? हे ईश ! अब हजुर नै हामी देवगण तथा ब्राह्मणहरूको निम्ति उचित कर्तव्यको आज्ञा दिनुहोस् ॥१५॥ शुकदेवजी भन्छन्—ब्रह्मादि देवताले स्तुति गरेपछि श्रीहरिले तिनको आन्तरिक भाव बुझ्नुभयो । अनि सबै इन्द्रिय बटुलेर हात जोरी उभिएका देवताहरूसित मेघ झैं गम्भीर वाणीमा भन्नुभयो ॥१६॥ हे राजन् ! यद्यपि ती देवेश्वर देवताहरूको कार्य गर्न समर्थ थिए तैपनि समुद्रमन्थनादि लीला गर्नका लागि

722

विचारेर भने ॥१७॥ श्रीभगवान् भन्नुहुन्छ—हे ब्रह्मन् ! हे शङ्करजी ! हे देवता हो ! तिमीहरू सावधान भएर मेरो कुरा सुन—यसले तिम्रो अवश्य कल्याण हुनेछ ॥१८॥ तिमीहरू जाओ । जबसम्म तिमीहरूको अभ्युदयको बेला आउन, त्यतिसम्मलाई दैत्य र दानवहरूसित सन्धि गर, किनकि यो समय उनीहरूकै अनुकूल छ ॥१९॥ हे देवता हो ! कुनै ठूलो काम निभाउन छ भने शत्रुसित पनि सन्धि गरिलिनु पर्दछ । काम पूरा भइसकेपछि सर्प र मूसो झैं व्यवहार गरोस्* ॥२०॥ दैत्यगणसित सन्धि गरेर तिमीहरू सबै मिलेर त्यो अमृत झिक्ने उद्योग गर, जसलाई पिएपछि मरणशील जीव पनि अमर बन्दछ ॥२१॥ पहिले क्षीरसागरमा सबै प्रकारका तृण,लता र औषधिहरू हाल, अनि मन्दराचलको मथानी र वासुकि नागको डोरी बनाओ र मसित मिलेर त्यसलाई मथ । यसले ती दैत्यलाई केवल क्लेश मिल्नेछ र उसको सम्पूर्ण फल तिमीहरूलाई प्राप्त हुनेछ ॥२२॥२३॥ हे देवता हो ! यस बखत ती दैत्यले

हि सन्धेयाः सति कार्यार्थगौरवे ॥ अहिमूषकवद्देवा ह्यर्थस्य पदवीं गतैः ॥२०॥ अमृतोत्पादने यत्नः क्रियतामविलम्बितम् ॥ यस्य पीतस्य वै जन्तुर्मृत्युग्रस्तोऽमरो भवेत् ॥२१॥ क्षिप्त्वा क्षीरोदधौ सर्वा वीरुत्तृणलतौषधीः ॥ मन्थानं मन्दरं कृत्वा नेत्रं कृत्वा तु वासुकिम् ॥२२॥ सहायेन मया देवा निर्मन्थध्वमतन्द्रिताः ॥ क्लेशभाजो भविष्यन्ति दैत्या यूयं फलग्रहाः ॥ २३ ॥ यूयं तदनुमोदध्वं यदिच्छन्त्यसुराः सुराः ॥ न संरम्भेण सिद्ध्यन्ति सर्वेऽर्थाः सान्त्वया यथा ॥ २४ ॥ न भेतव्यं कालकूटाद्विषाज्जलधिसम्भवात् ॥ लोभः कार्यो न वो जातु रोषः कामस्तु वस्तुषु ॥ २५ ॥ श्रीशुक उवाच ॥ इति देवान्समादिश्य भगवान्पुरुषोत्तमः ॥ तेषामन्तर्दधे राजन्स्वच्छन्दगतिरीश्वरः ॥ २६ ॥ अथ तस्मै भगवते नमस्कृत्य पितामहः ॥ भवश्च जग्मतुः स्वं स्वं धामोपेयुर्बलिं सुराः ॥ २७ ॥ दृष्ट्वाऽरीनप्यसंयत्ताञ्जातक्षोभान्स्वनायकान् ॥ न्यषेधद्दैत्यराट् श्लोक्यः सन्धिविग्रहकालवित् ॥ २८ ॥ ते वैरोचनिमासीनं गुप्तं चासुरयूथपैः ॥ श्रिया परमया जुष्टं जिताशेषमुपागमन् ॥ २९ ॥ महेन्द्रः श्लक्ष्णया वाचा सान्त्वयित्वा महामतिः ॥ अभ्यभाषत तत्सर्वं शिक्षितं पुरुषोत्तमात् ॥ ३० ॥ तदरोचत दैत्यस्य तत्रान्ये येऽसुराधिपाः ॥ शम्बरोऽरिष्टनेमिश्च ये च

भन्दछन्, त्यही मानिलेओ, किनकि जसरी शान्तिपूर्वक कार्य सम्पन्न हुन्छन्, त्यसरी रिसले सम्पन्न हुँदैनन् ।२४॥ त्यस समुद्रबाट जुन कालकूट निस्कनेछ, त्यसले तिमीहरू नडराउनु अन्य रत्नका लागि पनि लोभ र कामना वा रिस नगर्नु ॥२५॥ शुकदेवजी भन्नुहुन्छ—हेराजन् ! देवताहरूलाई यस्तो आज्ञा दिएर स्वच्छन्द गति जगदीश्वर तिनको सामुन्ने अन्तर्धान हुनुभयो ॥२६॥ अनि भगवान्लाई नमस्कार गरेर ब्रह्माजी र शिवजी आफआफ्ना लोकमा फर्किए र सबै देवता बलिलाई भेट्न हिंडे ॥२७॥ अतः शत्रुगणलाई युद्धको निम्ति तत्पर भएका नदेखेर सन्धि-विग्रह योग्य अवसरका ज्ञाता बलिले आफ्ना क्षुब्ध सेना-नायकहरूलाई देवताहरूसित निहुँ खोज्न रोकिदिए ॥२८॥ अनि देवता असुर-सेनापतिसित सुरक्षित, राजसिंहासनासीन, अत्यन्त शोभासम्पन्न र सम्पूर्ण लोकका विजेता विरोचन-सुवन बलिको नजीकै गए ॥२९॥ त्यहाँ पुगेर महामति इन्द्रले मधुर वाणीमा राजा बलिसित यी सबै कुरा भने—

* दृष्टान्त—कौटा मूसा कहीं पिटारोमा थुनिएको थियो । त्यसमा मौटा सर्प पहिलेदेखिनै बन्द थियो । सर्पले मूसोसित त्यो पिटारो कतरी दिन भन्यो र बतायो कि बाटो बनेपछि हामी दुवै त्यहीं मार्गबाट बाहिर निस्कौंला । मूसोले सर्पको कुरा स्वीकार गर्‍यो र बाटो बनाइदियो । छिद्र तयार भएपछि सर्पले मूसोलाई खाइदियो र पिटारीबाट बाहिर निस्क्यो ।

जुन तिनलाई पुरुषोत्तम भगवान्‌ले सिकाएका थिए ॥३०॥ इन्द्रको कुरा दैत्यपति बलि तथा त्यहाँ बसेका शम्बर, अरिष्टनेमि आदि त्रिपुरवासी असुर-यूथपलाई पनि मनपर्‍यो ॥३१॥ हे परन्तप ! अनि देवता र असुरहरूले सन्धि गरेर अमृतको निम्ति दुवैथरि मिलेर महान्‌ उद्योग गर्नलागे ॥ ३२ ॥ परिघ सदृश बाहु हुने शक्तिसम्पन्न, दुर्मद देवगण तथा दैत्यहरूले ठूलो उत्साहपूर्वक मन्दराचल उखेले र गर्जन्दै त्यसलाई समुद्रको नगीचै ल्याए ॥३३॥ तर त्यो विशाल पर्वतलाई धेरै परसम्म ल्याउनाले इन्द्रादि देवता तथा राजा बलि आदि असुर थाके र अझ अगाडि लैजानमा असमर्थ भएर तिनीहरुले उसलाई बाटोमा पच्छारिदिए ॥ ३४ ॥ पच्छारिन लागेको मन्दराचलले आफ्नो ठूलो भारीले अनेक देवता र दानवलाई धूलो-पीठो पारिदियो ॥३५॥ देवता र दानवहरूको बाहु, ऊरु, काँध आदि अंग घायल भएका छन्‌ र तिनको उत्साह मन्द परिसकेको छ भन्ने जानेर त्यहाँ भगवान्‌ प्रकट हुनुभयो ॥३६॥ उनले देवगण र असुरहरूलाई पर्वत ढले र थिचिएका देखेर देवताहरूलाई आफ्नो दृष्टिले हेरेर नै स्वस्थ र जीवित पारिदिए—मानो उनलाई चोटै लागेको नहोस्‌ ॥३७॥ अनि

त्रिपुरवासिनः ॥ ३१ ॥ ततो देवासुराः कृत्वा संविदं कृतसौहृदाः ॥ उद्यमं परमं चक्रुरमृतार्थे परंतप ॥ ३२ ॥ ततस्ते मन्दरगिरिमोजसोत्पाट्य दुर्मदाः ॥ नदन्त उदधिं निन्युः शक्ताः परिघबाहवः ॥ ३३ ॥ दूरभारोद्वहश्रान्ताः शक्रवैरोचनादयः ॥ अपारयन्तस्तं वोढुं विवशा विजहुः पथि ॥३४॥ निपत्य स गिरिस्तत्र बहूनमरदानवान्‌ ॥ चूर्णयामास महता भारेण कनकाचलः ॥ ३५ ॥ तांस्तथा भग्नमनसो भग्नबाहूरुकन्धरान्‌ ॥ विज्ञाय भगवांस्तत्र बभूव गरुडध्वजः ॥ ३६ ॥ गिरिपातविनिष्पिष्टान्विलोक्यामरदानवान्‌ ॥ ईक्षया जीवयामास निर्जरान्निर्व्रणान्यथा ॥ ३७ ॥ गिरिं चारोप्य गरुडे हस्तेनैकेन लीलया ॥ आरुह्य प्रययावब्धिं सुरासुरगणैर्वृतः ॥ ३८ ॥ अवरोप्य गिरिं स्कन्धात्सुपर्णः पततां वरः ॥ ययौ जलान्त उत्सृज्य हरिणा स विसर्जितः ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे अमृतमथने मन्दराचलानयनं नाम षष्ठोऽध्यायः ॥ ६ ॥

श्रीशुक उवाच ॥ ते नागराजमामन्त्र्य फलभागेन वासुकिम्‌ ॥ परिवीय गिरौ तस्मिन्नेत्रमब्धिं मुदान्विताः ॥ १ ॥ आरेभिरे सुसंयत्ता अमृतार्थं कुरूद्वह ॥ हरिः पुरस्ताज्जगृहे पूर्वं देवास्ततोऽभवन्‌ ॥२॥ तन्नैच्छन्दैत्यपतयो महापुरुषचेष्टितम्‌ ॥ न गृह्णीमो वयं पुच्छमहेरङ्गममङ्गलम्‌ ॥ ३ ॥ स्वाध्यायश्रुतसम्पन्नाः प्रख्याता जन्मकर्मभिः ॥ इति तूष्णीं स्थितान्दैत्यान्विलोक्य पुरुषोत्तमः ॥ स्मयमानो विसृज्याग्रं पुच्छं जग्राह सामरः ॥ ४ ॥

त्यस पर्वतलाई उनले ख्याल-ख्यालमै यौटा हातले उठाएर गरुडमाथि राखे अनि आफू पनि त्यसैमा चढेर देवता तथा असुरहरूका साथै समुद्रतटमा आए ॥३८॥ पक्षिश्रेष्ठ गरुडले पर्वतलाई काँधबाट जलमा बहाली दिए र भगवान्‌ले बिदा दिएपछि फर्किए ॥३९॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥६॥

( श्री शिवजी द्वारा विष-पान )—शुकदेवजी भन्नुहुन्छ—हे राजन्‌ ! अनि उनले समुद्र-मन्थनबाट प्राप्तव्य फलमा साझीदार तुल्याएर नागराज वासुकीलाई आमन्त्रित गरी उनलाई पर्वतमा डोरी झैं बेन्हेर अमृत प्राप्तिको निम्ति देवता र दैत्य समुद्र मथ्नलागे । पहिले श्रीहरिले वासुकीको मुख समाए, अनि अरु देवता पनि उतैतिर लागे॥१॥२॥ दैत्यगणलाई हरिको यो चेष्टा मनपरेन । तिनले भने—हामी वेद-शास्त्रका ज्ञाता र जन्म-कर्मादिमा पनि उच्च छौं । अतः हामी सर्पको अमङ्गल अंग पुच्छर समाउन्नौं ।' यति भनेर दैत्यहरू चुपचाप बसेका देखेर

पुरुषोत्तम हरिले मुसुक्क हाँसेर मुख छाडिदिए र देवताहरू सहित गएर वासुकीको पुच्छर समाए ॥३॥४॥ यस प्रकार स्थानको विभाजन गरेर देवता तथा असुर दुवै थरि अमृत प्राप्तिको निम्ति ठूलो तत्परताले समुद्र मथ्नलागे ॥५॥ हे पाण्डुनन्दन ! समुद्र मन्थन गर्दा बलवान् देवता र असुरहरूको थाम्दा-थाम्दै पनि निराधार र ठूलो पर्वत जलमा भासिन लाग्यो ॥६॥ अतः बलवान् दैवद्वारा आफ्नो पुरुषार्थ नष्ट हुनलागेको देखेर ती मनमनै निकै खिन्न भए र ितनका मुखको कान्ति मलीन भयो ॥७॥ विघ्नेश्वर गणेशजी द्वारा उपस्थित गरिएको विघ्न देखेर अनन्त-पराक्रमी तथा अमोघ-सङ्कल्पधारी भगवान्ले अद्भुत र महान् कूर्मरूप धारण गरेर जलमा प्रवेश गर्नुभयो पर्वतलाई पिठिउँमा राखेर उचालिदिनुभयो ॥ ८ ॥ पर्वत अग्लो उठेको देखेर देवता तथा असुर फेरि समुद्र मथ्नलागे । अनि भगवान्ले अनि द्वीप जस्तै त्यो एकलाख योजन विस्तृत पर्वत आफ्नो पिठिउँमा धारण गर्नुभयो॥९॥ हे प्रिये ! देवताहरू र असुरगणको बाहुबलले प्रेरित भएर पिठिउँमा घुमिरहेको पर्वतलाई आदि कच्छप भगवान्ले आफ्नो अङ्गको चिलाई मेट्ने साधन ठाने ॥१०॥ त्यस बखत भगवान् असुरहरूको बल-वीर्य

कृतस्थानविभागास्त एवं कश्यपनन्दनाः ॥ मन्मथुः परमायत्ता अमृतार्थं पयोनिधिम् ॥ ५ ॥ मथ्यमानेऽर्णवे सोऽद्रिरनाधारो ह्यपोऽविशत् ॥
ध्रियमाणेऽपि बलिभिर्गौरवात्पाण्डुनन्दन ॥ ६ ॥ ते सुनिर्विण्णमनसः परिम्लानमुखश्रियः ॥ आसन्स्वपौरुषे नष्टे दैवेनातिबलीयसा ॥ ७ ॥
विलोक्य विघ्नेशविधिं तदेश्वरो दुरन्तवीर्योऽवितथाभिसन्धिः ॥ कृत्वा वपुः कच्छपमद्भुतं महत्प्रविश्य तोयं गिरिमुज्जहार ॥ ८ ॥ समुत्थितं वीक्ष्य
कुलाचलं पुनः समुत्थिता निर्मथितुं सुरासुराः ॥ दधार पृष्ठेन स लक्षयोजनप्रस्तारिणा द्वीप इवापरो महान् ॥ ९ ॥ सुरासुरेन्द्रैर्भुजवीर्यवेपितं परि-
भ्रमन्तं गिरिमङ्ग पृष्ठतः ॥ बिभ्रत्तदावर्तनमादिकच्छपो मेनेऽङ्गकण्डूयनमप्रमेयः ॥ १० ॥ तथाऽसुरानाविशदासुरेण रूपेण तेषां बलवीर्यमीरयन् ॥
उद्दीपयन्देवगणांश्च विष्णुर्दैवेन नागेन्द्रमबोधरूपः ॥ ११ ॥ उपर्यगेन्द्रं गिरिराडिवान्य आक्रम्य हस्तेन सहस्रबाहुः ॥ तस्थौ दिवि ब्रह्मभवेन्द्रमुख्यै-
रभिष्टुवद्भिः सुमनोऽभिवृष्टः ॥ १२ ॥ उपर्यधश्चात्मनि गोत्रनेत्रयोः परेण ते प्राविशता समेधिताः ॥ ममन्थुरब्धिं तरसा मदोत्कटाः महाद्रिणा
क्षोभितनक्रचक्रम् ॥ १३ ॥ अहीन्द्रसाहस्रकठोरदृङ्मुखश्वासाग्निधूमाहतवर्चसोऽसुराः ॥ पौलोमकालेयबलील्वलादयो दवाग्निदग्धाः सरला इवाभ-
वन् ॥१४॥ देवांश्च तच्छ्वासशिखाहतप्रभान्धूम्राम्बरस्रग्वरकंचुकाननान् ॥ समभ्यवर्षन्भगवद्वशा घना ववुः समुद्रोर्म्युपगूढवायवः ॥ १५ ॥ मथ्य-

बृद्धिको निम्ति असुररूप, देवताहरूमा उत्साह बढाउनको निम्ति देवरूप तथा नागराज वासुकीमा निद्रारूपले प्रविष्ट भए ॥११॥ जब ती सहस्रबाहु प्रभु अन्य पर्वतराज झैं विशालरूप धारण गरेर त्यस पर्वतलाई हातले रोकेर माथितिर स्थित भए, तब स्वर्गलोकमा स्थित ब्रह्मा, शिव र इन्द्रादि देवता स्तुति गर्दै उनीमाथि पुष्पवर्षा गर्नलागे॥१२॥त्यस पर्वतको तल-माथि आफ्नो शरीरमा, पर्वतमा तथा नेतीमा प्रविष्ट परमात्माको शक्तिले सम्पन्न तथा मदोन्मत्त देवता तथा असुर त्यो महान् पर्वतद्वारा ठूलो वेगसित समुद्रलाई त्यसको भित्र बस्ने नक्रादि जीवहरूलाई व्याकुल पार्दै मथ्नलागे । अनि नागराज वासुकीका हजारौं आँखा मुख तथा श्वासबाट निस्केका विषाग्निको धुवाँले निस्तेज भएर पौलोम, कालेय, बलि तथा इल्वलादि दैत्य दावानलले डढेका वृक्ष झैं कालो हुन गए ॥१३॥१४॥ वासुकीको श्वासाग्निले नष्ट-कान्ति र जसका वस्त्र, माला, कंचुक अनुहार खैरो भएका थिए, ती देवतामाथि भगवान्का

७२५

अनुचर मेघ जल-वर्षा गर्नलागे र समुद्रका तरङ्गको स्पर्शले शीतल वायु बग्नलाग्यो ॥ १५॥ जब निकै बेरसम्म देवताहरू र असुर यूथपहरूले मथ्दा पनि समुद्रबाट अमृत ननिस्कनाले भगवान् अजित स्वयं आएर मथ्नलागे॥१६॥अहो ! जसका कानमा स्वर्णकुण्डल बिजुली जस्तै झल्किरहेथ्यो, जसको शिरमा हल्लेको अलकावली सुशोभित थियो, जो वनमाला पहिरेका थिए, ती पीताम्बरधारी,अरुणनयन तथा मेघ झैं श्याम-देह भगवान् जगत्लाई अभयदायक एवं आफ्ना विजयी बाहुद्वारा वासुकीलाई समाएर जब मन्दराचलरूपी मथानीले मथ्नलागे तब ती दोस्रो पर्वत झैं देखिए ॥१७॥ त्यसरी मथेपछि जसका माछा आत्तिए, सर्प तथा कच्छप माथितिर आए र तिमि मत्स्य, जल-हात्ती, ग्राह एवं तिमिङ्गिलादि जीव आत्तिए, अनि समुद्रबाट सर्वप्रथम हलाहलविष निस्क्यो॥ ।.१८॥ सबै दिशा-विदिशाहरूमा तल-माथि फैलिने त्यस उग्रवेग तथा असह्य विषले अरक्षित प्रजापति र प्रजा भयभीत भएर श्रीशिवको

मानात्तथा सिन्धोर्देवासुरवरूथपैः ॥ यदा सुधा न जायेत निर्ममन्थाजितः स्वयम् ॥ १६ ॥ मेघश्यामः कनकपरिधिः कर्णविद्योतविद्युन्मूर्ध्नि भ्राज-द्विलुलितकचः स्रग्धरो रक्तनेत्रः ॥ जैत्रैर्दोर्भिर्जगदभयदैर्दन्दशूकं गृहीत्वा मथ्नन्मथ्ना प्रतिगिरिरिवाशोभताथोद्धृताद्रिः ॥ १७ ॥ निर्मथ्यमानादुद-धेरभूद्विषं महोल्बणं हालहलाह्वमग्रतः ॥ सम्भ्रान्तमीनोन्मकराहिकच्छपात्तिमिद्विपग्राहतिमिङ्गिलाकुलात् ॥ १८ ॥ तदुग्रवेगं दिशि दिश्युपर्यधो विस-र्पदुत्सर्पदसह्यमप्रति ॥ भीताः प्रजा दुद्रुवुरङ्ग सेश्वरा अरक्ष्यमाणाः शरणं सदाशिवम् ॥ १९ ॥ विलोक्य तं देववरं त्रिलोक्या भवाय देव्याऽभिमतं मुनीनाम् ॥ आसीनमद्रावपवर्गहेतोस्तपो जुषाणं स्तुतिभिः प्रणेमुः ॥ २० ॥ प्रजापतय ऊचुः ॥ देवदेव महादेव भूतात्मन्भूतभावन ॥ त्राहि नः शरणापन्नांस्त्रैलोक्यदहनाद्विषात् ॥२१॥ त्वमेकः सर्वजगत ईश्वरो बन्धमोक्षयोः ॥ तं त्वामर्चन्ति कुशलाः प्रपन्नार्तिहरं गुरुम् ॥ २२ ॥ गुणमय्या स्वशक्त्याऽस्य सर्गस्थित्यप्ययान्विभो ॥ धत्से यदा स्वदृग्भूमन्ब्रह्मविष्णुशिवाभिदाम् ॥ २३ ॥ त्वं ब्रह्म परमं गुह्यं सदसद्भावभावनः ॥ नानाशक्तिभि-

शरणमा पुग्न गए ॥१९॥ श्री पार्वती सहित कैलास पर्वतमा बसेका ऋषि-मुनिका माननीय र मोक्षप्रदानार्थ तपस्यामा तत्पर शिवजीलाई देखेर प्रजापतिले त्रिलोकको कल्याणार्थ उनको स्तुति र प्रणाम गरे ॥२०॥ प्रजापति भन्छन्–हे देवदेव ! हे महादेव ! हे भूतभावन ! त्यो त्रैलोक्यदाहक विषबाट हजुर हामी शरणागतहरूको रक्षा गर्नुहवस् ॥२१॥ एउटा हजुरनै अखिल जगत्का बन्धन तथा मोक्षका स्वामी हुनुहुन्छ । त्यसैले विचक्षण पुरुष हजुर शरणागत भयहारी जगद्गुरुको पूजा गर्दछौं॥२२॥हे विभो ! हजुरको ज्ञान स्वतःसम्पन्न छ । आफ्नो गुणमयी शक्तिद्वारा जब जगत्को उत्पत्ति, स्थिति र लय गर्न अँट्तछन् तब हजुर नै ब्रह्मा, विष्णु र शिव बन्नुहुन्छ ॥२३। हजुर सबै प्राणीहरूका उत्पादक परमगुह्य परब्रह्म हुनुहुन्छ ।

॰ दृष्टान्त ( यो बाटो नजाति रहेछ )–बौटा पसले राती चटाईमा गहीरो निद्रामा सुतिरहेको थियो । उसै बखत यौटा मूसा त्यसकोमाथि यताबाट उतातिर गयो । मूसा हिड्नाले पसले सासङ्ग भयो र कराएर बेसरी रुनलाग्यो । रोएको ध्वनि सुनेर घरका सबजना आलिदै दगुरे । सबैले रुने कारण सोधे । पसले भन्दछ–'मेरो छातीबाट यौटा मूसा यताबाट उतातिर गयो । अब म यो घरमा बस्न सक्तिन ।' सबैले भने–'मूसा गएर के भयो ! किन रोएका ?' पसलेले भन्यो–'खुन शरीरमा लाग्दछ, त्यसैले जान्दछु, अब के गर्न सक्दछन् ? है बन्धु हो ! मूसा गएर म रोएको होइन। रुन त यस निम्ति पर्‍यो कि यो बाटो जाति होइन । आज त मूसा नै गएको छ, भोलि सर्प गयो भने म कसरी बाँच्ने ?' नजाति कामलाई पहिल्यै रोकिदिनु पर्दछ, होइन भने त्यो सबैको निम्ति आफ्नो घर गरेर बस्तछ ।

हजुर नै जगदीश्वर परमात्मा हुनुहुन्छ र आफ्ना विभिन्न शक्तिहरूले भासमान हुन्छन् ॥ २४ ॥ हजुर वेदका उद्भवस्थान, जगत्‌का आदिकारण, महत्तत्त्व, विविध अहङ्कार इन्द्रिय प्राण पञ्चमहाभूत तथा शब्दादि गुणहरूका कारण हुनुहुन्छ । हजुर नै काल, सङ्कल्प, सत्य, ऋत एवं धर्म हुनुहुन्छ । वेदवादी मुनि त्रिगुणात्मिका मूल प्रकृति पनि हजुरकै अधीन मान्दछन् ॥२५॥ सर्ववेवमय अग्नि हजुरको मुख छ । पृथ्वी हजुरको चरण-कमल हुन् । हजुर सर्वदेवमय हुनुहुन्छ । काल हजुरको गति, दिशाहरू कान, वरुण जिब्रो, आकाश नाभि, वायुश्वास, सूर्य नेत्र, जल वीर्य र सबै उत्तमाधम जीवहरूका आश्रय नै हजुरको अहङ्कार छ । चन्द्रमा हजुरका मन र स्वर्ग मस्तक छ ॥२६-२७॥ हे प्रभो !, समुद्र हजुरको कुक्षि, पर्वत अस्थिसमूह, सबै औषधि र लताहरू रौं, गायत्री आदि छन्द, सातै धातुरूप र धर्म हजुरको हृदय छ ॥२८॥ हे ईश्वर ! जसबाट अडतीस मन्त्रहरूको समूह प्रकट भएको थियो ती तत्पुरुष, अघोर, सद्योजात वामदेव र ईशान, यी पाँच उपनिषद् हजुरका मुख हुन् । हे देव ! शिवनामक स्वयंप्रकाश परमार्थतत्त्व हजुरको उपरतावस्था हो॥२९॥दम्भ, लोभ आदि अधर्मका तरङ्ग हजुरका

राभातस्त्वमात्मा जगदीश्वरः ॥२४॥ त्वं शब्दयोनिर्जगदादिरात्मा प्राणेन्द्रियद्रव्यगुणस्वभावः ॥ कालः क्रतुः सत्यमृतं च धर्मस्त्वय्यक्षरं यत्त्रिवृदामनन्ति ॥ २५ ॥ अग्निर्मुखं तेऽखिलदेवतात्मा क्षितिं विदुर्लोकभवाङ्घ्रिपंकजम् ॥ कालं गतिं तेऽखिलदेवतात्मनो दिशश्च कर्णौ रसनं जलेशम् ॥ २६ ॥ नाभिर्नभस्ते श्वसनं नभस्वान्सूर्यश्च चक्षूंषि जलं स्म रेतः ॥ परावरात्माश्रयणं तवात्मा सोमो मनो द्यौर्भगवञ्छिरस्ते ॥२७॥ कुक्षिः समुद्रा गिरयोऽस्थिसंघा रोमाणि सर्वौषधिवीरुधस्ते ॥ छन्दांसि साक्षात्तव सप्त धातवस्त्रयीमयात्मन्हृदयं सर्वधर्मः ॥ २८ ॥ मुखानि पञ्चोपनिषदस्तवेश यैस्त्रिंशदष्टोत्तरमन्त्रवर्गः ॥ यत्तच्छिवाख्यं परमात्मतत्त्वं देव स्वयंज्योतिरवस्थितिस्ते ॥ २९ ॥ छाया त्वधर्मोर्मिषु यैर्विसर्गो नेत्रत्रयं सत्त्वरजस्तमांसि ॥ सांख्यात्मनः शास्त्रकृतस्तवेक्षा छंदोमयो देव ऋषिः पुराणः ॥३०॥ न ते गिरित्राखिललोकपालविरिञ्चवैकुण्ठसुरेन्द्रगम्यम् ॥ ज्योतिः परं यत्र रजस्तमश्च सत्त्वं न यद्ब्रह्म निरस्तभेदम् ॥ ३१ ॥ कामाध्वरत्रिपुरकालगराद्यनेकभूतद्रुहः क्षपयतः स्तुतये न तत्ते ॥ यस्त्वन्तकाल इदमात्मकृतं स्वनेत्रवह्निस्फुलिंगशिखया भसितं न वेद ॥३२॥ ये त्वात्मरामगुरुभिर्हृदि चिन्तिताङ्घ्रिद्वन्द्वं चरन्तमुमया तपसाऽभितप्तम् ॥ कत्थन्त उग्रपुरुषं निरतं श्मशाने ते नूनमूतिमविदंस्तव हातलज्जाः ॥३३॥ तत्तस्य ते सदसतोः परतः परस्य नाञ्जः स्वरूपगमने प्रभवन्ति भूम्नः ॥ ब्रह्मादयः किमुत संस्तवने

छाया हुन्, जसबाट विश्वको सृष्टि हुन्छ, ती सत्त्व, रज र तमोगुण हजुरका तीन नेत्र हुन् । हे देव ! गायत्री आदि छन्दयुक्त सनातन वेद हजुर सांख्यकर्ताको ईक्षण (विचार) हो ॥३०॥ जसमा सत्त्व, रज, तम यी तीनैगुण रहन्नन् र जो भेदहीन छन् हजुरको त्यो ब्रह्मरूप परम तेजलाई लोकपाल, ब्रह्मा, विष्णु र देवेन्द्र पनि जान्न सक्नैनन् ॥३१॥ हे नाथ ! हजुर कामदेव, यक्षयज्ञ, त्रिपुरासुर तथा कालकूटविष आदि अगणित भूतद्रोहीलाई नष्ट गरिसक्नु भएको छ, तैपनि यी सबै कर्म हजुरको स्तुति योग्य हुन सक्तैनन्, किनकि हजुर स्वरचित विश्वलाई प्रलयकालमा आफ्ना नेत्राग्निको ज्वालाले भस्म पारेर उत्तातिर हेर्नुहुन्छ ॥३२॥सबै आत्माराम, गुरुजन जसका चरणको ध्यान गर्दछन् र जो निरन्तर तपमा लीन रहन्छन्, यस्ता हजुरलाई मानिसहरू उमादेवीसित विहार गर्नमा आसक्त र श्मशानमा बस्नाले हिंस्र भन्दछन्, ती निर्लज्ज के हजुरका लीला जान्दछन्, वस्तुतः ती केही पनि जान्दैनन्॥३ ॥ हे प्रभो !

727

हजुरका सत्-असत् भन्दा पर रहने परात्पर स्वरूपलाई ब्रह्मादि देवता पनि जान्न सक्तैनन्, अनि अति अर्वाचीन हामीहरूले कसरी जान्ने र स्तुति गर्ने ? तैपनि हामीलो आफ्नो शक्ति पुगेजति हजुरको गुण-गान-गरेका छौं ॥३४॥ हे महेश्वर ! हामीलाई त हजुरको यो रूप नै सबभन्दा मनपर्दछ, किनकि हामी हजुरको सच्चा स्वरूप हेर्न सक्तैनौं । हे नाथ ! हजुर जस्तै अव्यक्तकर्मा प्रभुको आविर्भाव संसारको कल्याणार्थ नै हुन्छ ॥३५॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! देवताहरूमा आइलागेको महासङ्कट देखेर सर्वभूतरक्षक करुणाले साह्रै दुःखी हुनुभयो र आफ्नी प्रिया सतीसित भन्नुभयो ॥३६॥ शिवजी आज्ञागर्नुहुन्छ—हे देवि ! क्षीरसागरको मथनबाट उत्पन्न कालकूट विषले प्रजामा कति ठूलो सङ्कट उत्पन्न भएको छ ॥३७॥ आफ्नो प्राणरक्षाको निम्ति व्याकुल यी सबैलाई मैले निर्भय पार्नै पर्दछ, किनकि दीन जनको रक्षा गर्नु नै समर्थ पुरुषको कार्य हुन्छ ॥३८॥ हे भद्रे ! साधुजन आफ्नो क्षणभंगुर प्राण दिएर पनि अर्काको रक्षा गर्दछन् । भगवान्को मायाले मोहमा परेका र परस्पर शत्रु बनेका जीवहरूमा जो दया गर्दछन्, तीमाथि सर्वात्मा भगवान् प्रसन्न हुन्छन् र उनी प्रसन्न भएपछि

वयं तु तत्सर्गसर्गविषया अपि शक्तिमात्रम् ॥३४॥ एतत्परं प्रपश्यामो न परं ते महेश्वर ॥ मृडनाय हि लोकस्य व्यक्तिस्तेऽव्यक्तकर्मणः ॥३५॥ श्रीशुक उवाच ॥ तद्वीक्ष्य व्यसनं तासां कृपया भृशपीडितः ॥ सर्वभूतसुहृद्देव इदमाह सतीं प्रियाम् ॥३६॥ शिव उवाच ॥ अहो बत भवान्येतत्प्रजानां पश्य वैशसम् ॥ क्षीरोदमथनोद्भूतात्कालकूटादुपस्थितम् ॥३७॥ आसां प्राणपरीप्सूनां विधेयमभयं हि मे ॥ एतावान् हि प्रभोरर्थो यद्दीनपरिपालनम् ॥३८॥ प्राणैः स्वैः प्राणिनः पान्ति साधवः क्षणभंगुरैः ॥ बद्धवैरेषु भूतेषु मोहितेष्वात्ममायया ॥३९॥ पुंसः कृपयतो भद्रे सर्वात्मा प्रीयते हरिः ॥ प्रीते हरौ भगवति प्रीयेऽहं सचराचरः ॥ तस्मादिदं गरं भुंजे प्रजानां स्वस्तिरस्तु मे ॥४०॥ श्रीशुक उवाच ॥ एवमामन्त्र्य भगवान्भवानीं विश्वभावनः ॥ तद्विषं जग्धुमारेभे प्रभावज्ञाऽन्वमोदत ॥४१॥ ततः करतलीकृत्य व्यापि हालाहलं विषम् ॥ अभक्षयन्महादेवः कृपया भूतभावनः ॥४२॥ तस्यापि दर्शयामास स्ववीर्यं जलकल्मषः ॥ यच्चकार गले नीलं तच्च साधोर्विभूषणम् ॥ ४३ ॥ तप्यन्ते लोकतापेन साधवः प्रायशो जनाः ॥ परमाराधनं तद्धि पुरुषस्याखिलात्मनः ॥४४॥ निशम्य कर्म तच्छम्भोर्देवदेवस्य मीढुषः ॥ प्रजा दाक्षायणी ब्रह्मा वैकुण्ठश्च शशंसिरे ॥ ४५ ॥ प्रस्कन्नं पिबतः पाणेर्यत्किञ्चिज्जगृहुः स्म तत् ॥ वृश्चिकाहिविषौषध्यो दन्दशूकाश्च येऽपरे ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धेऽमृतमथने सप्तमोऽध्यायः ॥ ७ ॥

चराचर विश्वसहित म पनि प्रसन्न हुन्छु । अतः म यो विष पिउँछु, यसले मेरा प्रजाको कल्याण हुनेछ ॥३९-४०॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! भवानीसित यति भनेर श्रीमहादेव त्यो विष पिउन तयार भएर उनको प्रभावबाट परिचित भवानीले पनि सम्मति दिइन् ॥४१॥ त्यसै अनुसार सबै जीवमा दया गरेर भूतभावन शिवजीले सर्वत्र फैलिएको त्यस हलाहल विषलाई अंजुलीमा थापेर पिइदिए ॥४२॥ त्यो जलकल्मष गरलले शिवमाथि आफ्नो प्रभाव देखाइहाल्यो, जसले उनको घाँटी नीलो भयो, तर त्यो नीलोपन पनि साधु शिरोमणि भगवान् शङ्करको अलंकार बन्यो ॥४३॥ प्रायः सबै साधुजन संसारको दुःखले दुःखी हुन्छन्, किनकि अर्काको दुःखमा दुःखी रहनाले सर्वात्मा भगवान्को उत्कृष्ट आराधना हुन्छ ॥४४॥ देवदेव महादेवको त्यो पौरुष देखेर सारा प्रजा, दक्षकन्या सती, तथा विष्णु भगवान् उनको प्रशंसा गर्नलागे ॥ ४५ ॥ हे राजन् ! कालकूट विष पिउने बेलामा उनको अंजलीबाट

728

जुन एक-दुइ थोपा चुहो, त्यो सर्प, बिच्छी, विषालु औषधि र अन्य विषालु जीवले खाइदिए ।।४६।। इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः।।७।।

( समुद्रबाट अनेक रत्न र अमृत निस्कनु )–शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! वृषध्वज श्रीमहादेवले विष-पान गरिसकेपछि सबै देवता र असुरगण धेरै प्रसन्न भएर ठूलो वेगले समुद्र मथ्नलागे । केही समयपछि त्यसबाट कामधेनु गाई निस्किन् ॥ १ ॥ अग्निहोत्रको सामग्री उत्पन्न गर्न र ब्रह्मलोकको मार्गस्वरूप यज्ञादिमा उपयोगी हविसिद्ध गर्नको निम्ति त्यसलाई वेदवादी मुनिहरूले लिए ॥ २ ॥ त्यसपछि चन्द्रमा समान शुभ्रवर्ण उच्चैःश्रवा घोडा निस्क्यो । त्यो बलिले लिन खोजे र भगवान्‌को आदेशानुसार इन्द्रले बलिको मन फर्काए ॥ ३ ॥ अनि चन्द्रमा झैं शुभ तथा आफ्ना चार दाँतले भगवान् शिवका आश्रयस्वरूप कैलास पर्वतको कान्ति पनि हरण गर्ने ऐरावत नामको गजराज निस्क्यो ॥४॥ त्यसपछि त्यो महासागरबाट कौस्तुभ नामको पद्मराग मणि प्रकट भयो । त्यो आफ्नो वक्षस्थललाई विभूषित पार्नको निम्ति श्रीहरिले लिए ॥ ५ ॥ त्यसपछि स्वर्गलोकको अङ्कार कल्पवृक्ष

श्रीशुक उवाच ॥ पीत गरे वृषांकेण प्रीतास्तेऽमरदानवाः ॥ ममन्थुस्तरसा सिन्धुं हविर्धानी ततोऽभवत् ॥ १ ॥ तामग्निहोत्रमृषयो जगृहु-
र्ब्रह्मवादिनः ॥ यज्ञस्य देवयानस्य मेध्याय हविषे नृप ॥ २ ॥ तत उच्चैःश्रवा नाम हयोऽभूच्चन्द्रपाण्डुरः ॥ तस्मिन्बलिः स्पृहां चक्रे नेन्द्र ईश्वर-
शिक्षया ॥ ३ ॥ ततः ऐरावतो नाम वारणेन्द्रो विनिर्गतः ॥ दन्तैश्चतुर्भिः श्वेताद्रेर्हरन्भगवतो महिम् ॥ ४ ॥ कौस्तुभाख्यमभूद्रत्नं पद्मरागो महो-
दधेः ॥ तस्मिन्हरिः स्पृहां चक्रे वक्षोऽलंकरणे मणौ ॥ ५ ॥ ततोऽभवत्पारिजातः सुरलोकविभूषणः ॥ पूरयत्यर्थिनो योऽर्थैः शश्वद्भुवि यथा
भवान् ॥ ६ ॥ ततश्चाप्सरसो जाता निष्ककण्ठ्यः सुवाससः ॥ रमण्यः स्वर्गिणां वल्गुगतिलीलावलोकनैः ॥ ७ ॥ ततश्चाविरभूत्साक्षाच्छ्री रमा
भगवत्परा ॥ रञ्जयन्ती दिशः कान्त्या विद्युत्सौदामनी यथा ॥ ८ ॥ तस्यां चक्रुः स्पृहां सर्वे ससुरासुरमानवाः ॥ रूपौदार्यवयोवर्णमहिमाक्षिप्तचेतसः
॥ ९ ॥ तस्या आसनमानिन्ये महेन्द्रो महदद्भुतम् ॥ मतिमत्यः सरिच्छ्रेष्ठाहेमकुम्भैर्जलं शुचि ॥ १० ॥ आभिषेचनिका भूमिराहरत्सकलौषधीः ॥
गावः पञ्च पवित्राणि वसन्तो मधुमाधवौ ॥ ११ ॥ ऋषयः कल्पयाञ्चक्रुरभिषेकं यथाविधि ॥ जगुर्भद्राणि गन्धर्वा नट्यश्च ननृतुर्जगुः ॥ १२ ॥
मेघा मृदंगपणवमुरजानकगोमुखान् ॥ व्यनादयञ्छङ्खवेणुवीणास्तुमुलनिः स्वनाः ॥ १३ ॥ ततोऽभिषिषिचुर्देवीं श्रियं पद्मकरां सतीम् ॥ दिगिभाः

निस्क्यो ! हे राजन् ! संसारमा जस्तै हजुर याचकका सबै इच्छा पूर्ण गर्नुहुन्छ यस्तै सबै वस्तु दिएर कल्पवृक्ष पनि कामना पूर्णगर्दछ ॥६॥ अनि रत्नमालुगा र घाँटीमा पदक धारण गर्ने अनेक अप्सराहरू प्रकट भए । आफ्ना मनोहारिणी गति र विलासपूर्ण हेराइले ती स्वर्गका देवगणलाई पुलकित पार्दैथिए ॥७॥ फेरि 'सुदामा' पर्वतमा चम्कने बिजुली जस्तै आफ्ना अलौकिक कान्ति दसै दिशालाई रंगीन पार्दै भगवत्परायणा साक्षात् लक्ष्मी प्रकट भइन् ॥ ८ ॥ तिनको रूप, औदार्य, यौवन, वर्ण र महिमामा मुग्ध भएर देवता, असुर तथा मनुष्य आदि सबैले उनलाई प्राप्त गर्न खोजे ॥९॥ देवराज इन्द्रले उनलाई अद्भुत आसन दिए र मुख्य नदीहरूले प्रकट भएर सुवर्णकलशमा पवित्र जलदिए । १०॥ भूमिले अभिषेकको निम्ति उपयुक्त ओषधिहरू,गाईले दुग्धादि पञ्चगव्य र वसन्त ऋतुले चैत्र-वैशाखमा फल्ने फल-फूल अर्पे ॥ ११ ॥ अनि ऋषि-मुनिले उनको विधिवार अभिषेक गरे । त्यससमय प्रसन्नताले

गन्धर्व गाउन लागे र नर्तकी नाच्नलागे ॥१२॥ मेघगण मृदङ्ग, पणव, मुरज, आनक, गोमुख शङ्ख, बाँसुरी र वीणा आदि गम्भीर ध्वनि हुने बाजा बजाउन लागे ॥१३॥ विप्रगणहरूले स्वस्तिवाचन पूर्वक दिग्गजहरूले भरिएका कलशले परम साध्वी पद्महस्त लक्ष्मीदेवीलाई अभिषेक गरे ॥१४॥ समुद्रले रेशमी पीताम्बर, अरुणले आफ्नो सुगन्ध र मधुकरलाई मस्त पार्ने वैजयन्ती माला, प्रजापति विश्वकर्माले विविध आभूषण, सरस्वतीले हार, ब्रह्माले कमल र नागहरूले दुइ कुण्डल दिए ॥१५-१६॥ ऋषिमुनि द्वारा स्वस्तिवाचन भइसकेपछि हातमा भ्रमरले गुञ्जायमान कमलको माला लिई आफ्ना कुण्डल मण्डित लज्जायुक्त हाँसोले शोभायमान लक्ष्मीजी अगिसरिन् ॥ १७ ॥ उसका दुवै स्तन परस्पर टाँसिएका, समान र चन्दन-कुंकुमादिले अनुरंजित थिए। ती अत्यन्त कृशोदरी लक्ष्मीजी जहाँ-तहाँ नूपुरको मधुर झङ्कार गर्दै हिंडेर सुवर्णको लता झैं देखिइन् ॥ १८ ॥ ती त्यहाँ एकत्रित गन्धर्व, यक्ष, असुर, सिद्ध, चारण तथा देवता आदिबाट आफ्नो निम्ति कुनै यस्ता निर्दोष तथा निश्चल पतिरूपी आश्रय खोज्दै थिइन्, जुन सर्वगुणसम्पन्न हुन् । तर उनलाई कुनै वर

पूर्णकलशैः सूक्तवाक्यैर्द्विजेरितैः ॥ १४ ॥ समुद्रः पीतकौशेयवाससी समुपाहरत् ॥ वरुणः स्रजं वैजयन्तीं मधुना मत्तषट्पदाम् ॥ १५ ॥ भूषणानि विचित्राणि विश्वकर्मा प्रजापतिः ॥ हारं सरस्वती पद्ममजो नागाश्च कुण्डले ॥ १६ ॥ ततः कृतस्वस्त्ययनोत्पलस्रजं नदद्द्विरेफां परिगृह्य पाणिना ॥ चचाल वक्त्रं सुकपोलकुण्डलं सव्रीडहासं दधती सुशोभनम् ॥ १७ ॥ स्तनद्वयं चातिकृशोदरी समं निरन्तरं चन्दनकुंकुमोक्षितम् ॥ ततस्ततो नूपुरवल्गुसिञ्जितैर्विसर्पती हेमलतेव सा बभौ ॥१८॥ विलोकयन्ती निरवद्यमात्मनः पदं ध्रुवं चाव्यभिचारि सद्गुणम् ॥ गन्धर्वयक्षासुरसिद्धचारण-त्रैविष्टपेयादिषु नान्वविन्दत् ॥१९॥ नूनं ततो यस्य न मन्युनिर्जयो ज्ञानं क्वचित्तच्च न सङ्गवर्जितम् ॥ कश्चिन्महांस्तस्य न कामनिर्जयः स ईश्वरः किं परतो व्यपाश्रितः ॥ २० ॥ धर्मः क्वचित्तत्र न भूतसौहृदं त्यागः क्वचित्तत्र न मुक्तिकारणम् ॥ वीर्यं न पुंसोऽस्त्यजवेगनिष्कृतं नहि द्वितीयो गुणसङ्गवर्जितः ॥ २१ ॥ क्वचिच्चिरायुर्न हि शीलमंगलं क्वचित्तदप्यस्ति न वेद्यमायुषः ॥ यत्रोभयं कुत्र च सोऽप्यमंगलः सुमंगलः कश्च न कांक्षते हि माम् ॥ २२ ॥ एवं विमृश्याव्यभिचारिसद्गुणैर्वरं निजैकाश्रयताऽगुणाश्रयम् ॥ वव्रे वरं सर्वगुणैरपेक्षितं रमा मुकुन्दं निरपेक्षमीप्सितम् ॥ २३ ॥ तस्यांसदेश उशतीं नवकञ्जमालां माद्यन्मधुव्रतवरूथगिरोपघुष्टाम् ॥ तस्थौ निधाय निकटे तदुरः स्वधाम सव्री-

प्राप्त भइरहेको थिएन ॥१९॥ उनले देखिन् जुन दुर्वासा आदिमा तपस्या छ, तिनले रिसजित्न सकेका छैनन् । बृहस्पति आदिमा ज्ञान छ, भने उनमा निःसंगता छैन । ब्रह्मादि ठूला महत्त्वशाली छन् भने उनको कामलाई जित्न सकेका छैनन् र इन्द्रादि जुन अर्काको आश्रित छन्, तिनलाई कसरी ईश्वर भन्न सकिन्छ ! ॥२०॥ कतै अर्थात् परशुरामादिमा धर्म त छ तर प्राणीहरूप्रति सौहार्दभाव छैन । कतै अर्थात् राजा शिबि आदिमा त्याग छ, तर त्यो उनको मुक्तिको कारण हुन सक्तैन । कतै अर्थात् कार्तवीर्यादिमा बल छ, तर ती कालको वेगले मुक्त छैन । अन्य व्यक्ति विषयाशक्तिबाट रहित छन् तर समाधिनिष्ठ हुनाले पति बनाउनयोग्य छैनन्॥२१॥ मार्कण्डेय आदिमा दीर्घायु त छ तर स्त्रीहरूलाई प्रसन्न राख्ने शीलले रहित र अमङ्गलरूप देखिन्छन् । अँ, एक पुरुष विष्णुभगवान् मङ्गलमय छन्, किन्तु उनलाई मेरो चाह छैन ॥२२॥ यस्तो विचार गरेर लक्ष्मीले नित्य सद्गुणपूर्ण, प्राकृत गुणहरूदेखि

पर, अणिमादि सबै सिद्धिहरूले सम्पन्न र आफ्ना एक मात्र आश्रयस्वरूप श्रीविष्णु भगवान्लाई उनका निरपेक्ष रहेर पनि पतिरूपमा वरण गरिलिइन् ॥२३॥ उनले मत्त मधुकर-समूहको गुञ्जारले युक्त त्यो नयाँ कमलको माला उनका घाँटीमा हालिदिइन् र लज्जापूर्ण हास्ययुक्त विकसित नेत्र द्वारा आफ्नो निवासस्थानरूपी भगवान्को वक्षःस्थल-तिर हेर्दै उनको नजीकै गएर उभिइन् ॥२४॥ हे राजन् ! जगत्पिता भगवान्ले आफ्नो वक्षःस्थललाई नै ती सर्वैश्वर्यशालिनी तथा जगज्जननी श्रीलक्ष्मीको निवासस्थान बनाए । त्यहाँ बसेर महारानी लक्ष्मीजीले करुणामयी दृष्टिले हेरेर प्रजान, लोकपाल र तीनै लोकको अभिवृद्धि गरिन् ॥२५॥ अनि शङ्ख, तूर्य र मृदङ्ग आदि बाजा र स्त्रीहरू सहित नृत्य-गान गर्ने देवानुचर ( गन्धर्वगण ) को महानिनाद हुन लाग्यो ॥२६॥ ब्रह्मा, शिव र अङ्गिरा आदि प्रजापति पुष्प-वर्षा गर्दै गुणप्रतिपादक मन्त्रहरूद्वारा भगवान्को स्तुति गर्नलागे ॥२७॥ श्रीलक्ष्मीले हेर्नासाथ सबै देवता र समस्त प्रजा तथा प्रजापति शीलादि गुणहरूले युक्त भएर आनन्दित भए ॥२८॥ हे राजन् ! जब लक्ष्मीले दैत्यगण र दानवहरूलाई

उद्दासविकसन्नयनेन याता ॥२४॥ तस्याः श्रियस्त्रिजगतो जनको जनन्या वक्षोनिवासमकरोत्परमं विभूतेः ॥ श्रीः स्वाः प्रजाः सकरुणेन निरीक्षणेन यत्र स्थितैधयत साधिपतींस्त्रिलोकान् ॥२५॥ शङ्खतूर्यमृदङ्गानां वादित्राणां पृथुः स्वनः ॥ देवानुगानां सस्त्रीणां नृत्यतां गायतामभूत् ॥२६॥ ब्रह्म-रुद्राङ्गिरोमुख्याः सर्वे विश्वसृजो विभुम् ॥ ईडिरेऽवितथैर्मन्त्रैस्तल्लिङ्गैः पुष्पवर्षिणः ॥२७॥ श्रिया विलोकिता देवाः सप्रजापतयः प्रजाः ॥ शीलादि-गुणसम्पन्ना लेभिरे निर्वृतिं पराम् ॥ २८ ॥ निःसत्त्वा लोलुपा राजन्निरुद्योगा गतत्रपाः ॥ यदा चोपेक्षिता लक्ष्म्या बभूवुर्दैत्यदानवाः ॥ २९ ॥ अथासीद्वारुणी देवी कन्या कमललोचना ॥ असुरा जगृहुस्तां वै हरेरनुमतेन ते ॥ ३० ॥ अथोदधेर्मथ्यमानात्काश्यपैरमृतार्थिभिः ॥ उदतिष्ठन्म-हाराज पुरुषः परमाद्भुतः ॥३१॥ दीर्घपीवरदोर्दण्डः कम्बुग्रीवोऽरुणेक्षणः ॥ श्यामलस्तरुणः स्रग्वी सर्वाभरणभूषित ॥ ३२ ॥ पीतवासा महो-रस्कः सुमृष्टमणिकुण्डलः ॥ स्निग्धकुंचितकेशांतः सुभगः सिंहविक्रमः ॥ ३३ ॥ अमृतापूर्णकलशं बिभ्रद्वलयभूषितः ॥ स वै भगवतः साक्षाद्वि-ष्णोरंशांशसम्भवः ॥ ३४ ॥ धन्वन्तरिरिति ख्यात आयुर्वेददृगिज्यभाक् ॥ तमालोक्यासुराः सर्वे कलशं चामृताभृतम् ॥ ३५ ॥ लिप्सन्त सर्व-स्तूनि कलशं तरसाऽहरन् ॥ नीयमानेऽसुरैस्तस्मिन्कलशेऽमृतभाजने ॥ ३६ ॥ विषण्णमनसो देवा हरि शरणमाययुः ॥ इति तद्दैन्यमालोक्य भग-

अस्वीकार गरिदिइन् तब ती असमर्थ, लोलुप, निरुद्यम तथा निर्लज्ज भए ॥२९॥ त्यसपछि त्यस मथ्यमान क्षीर समुद्रबाट कन्यारूपिणी कमलनयनी वारुणी निस्किन्, उनलाई भगवान्-को आज्ञाले असुरहरूले लिए ॥३०॥ अनि हे राजन् ! कश्यप-पुत्र देवता र असुरहरूले समुद्र मथेपछि यौटा अति अद्भुद पुरुष निस्क्यो ॥३१॥ उसका भुजास्थूल र लामा-लामा थिए, उसको शङ्खसदृश सुन्दर घाँटी र नेत्र राता दिए । त्यो श्याम शरीर, तरुण, मालाधारी र सबै आभूषणले विभूषित थियो ॥३२॥ ऊ पीताम्बरधारी तथा चाक्लो छाती भएको थियो, कानमा अति स्वच्छ मणिमय कुण्डल पहिरेको थियो । अलक चिल्ला र घटारिएका थिए । ऊ देख्नमा राम्रो, सिंहसदृश पराक्रमी, कंकणादिले विभूषित थियो र अमृतपूर्ण कलश लिएको थियो । ती विष्णु अंशज प्रसिद्ध श्रीधन्वन्तरी थिए, जो आयुर्वेदका प्रवर्तक थिए र यज्ञमा भागपाउँदथे । उनलाई हातमा अमृतले भरिएको कलश लिएका देखे वर्ति लामी असुर-

731

हरूले तुरुन्त त्यो कलश उनका हातबाट खोसे । अब दैत्यहरूले अमृत-पात्र लिएपछि देवतागण खिन्न भएर श्रीहरिको शरणमा गए । तिनको दीन-दशा देखेर भक्तका कामना पूर्ण गर्ने भगवान्ले भन्नुभयो—हे देवता हो ! तिमीहरू खेद नगर, म आफ्नो मायाले तिमीहरूको काम मिलाइदिन्छु ॥३३-३७॥ अनि हे राजन् ! ती लोभी दैत्यहरूमा 'पहिले म पिउँछु—तँ होइन, तँ होइन' यस प्रकार परस्पर कलह हुनलाग्यो ॥८॥ तिनमा दुर्बल दैत्य कलश लिएर जाने प्रबल दैत्यलाई ईर्ष्यावश बारम्बार यो भनेर रोक्नलागे—देवताहरूले समुद्र मन्थनमा बराबर परिश्रम गरेका छन्, अतएव उनलाई पनि यज्ञभागकै समान यसको पनि भाग पाउनुपर्दछ, यही सनातनधर्म हो* ॥३९-४०॥ अनि उपायहरूका ज्ञाता विष्णु भगवान्ले अति

वा भृत्यकामकृत् ॥ मा खिद्यत मिथोऽर्थं वः साधयिष्ये स्वमायया ॥ ३७ ॥ मिथः कलिरभूत्तेषां तदर्थे तर्षचेतसाम् ॥ अहं पूर्वमहं पूर्वं न त्वं न त्वमिति प्रभो ॥ ३८ ॥ देवाः स्वं भागमर्हन्ति ते तुल्यायासहेतवः ॥ सत्रयाग इवैतस्मिन्नेष धर्मः सनातनः ॥ ३९ ॥ इति स्वान्प्रत्यषेधन्वै दैतेया जातमत्सरा ॥ दुर्बलाः प्रबलान्राजन्गृहीतकलशान्मुहुः ॥ ४० ॥ एतस्मिन्नंतरे विष्णुः सर्वोपायविदीश्वरः ॥ योषिद्रूपमनिर्देश्यं दधार परमाद्भुतम् ॥ ४१ ॥ प्रेक्षणीयोत्पलश्यामं सर्वावयवसुन्दरम् ॥ समानकर्णाभरणं सुकपोलोन्नसाननम् ॥ ४२ ॥ नवयौवननिर्वृत्तस्तनभारकृशोदरम् ॥ मुखामोदानुरक्तालिझङ्कारोद्विग्नलोचनम् ॥ ४३ ॥ बिभ्रत्स्वकेशभारेण मालामुत्फुल्लमल्लिकाम् ॥ सुग्रीवकण्ठाभरणं सुभुजाङ्गदभूषितम् ॥ ४४ ॥ विरजाम्बरसंवीतनितम्बद्वीपशोभया ॥ काञ्च्या प्रविलसद्वल्गुचलच्चरणनूपुरम् ॥ ४५ ॥ सव्रीडस्मितविक्षिप्तभ्रूविलासावलोकनैः ॥ दैत्ययूथपचेतःसु काम-

अद्भुत तथा अनिर्वचनीय स्त्रीरूप धारण गरे ॥४१॥ त्यो रूप अति दर्शनीय, नीलकमलसम श्याम, सर्वाङ्गसुन्दर सुकपोल एवं उन्नत नासिकाले युक्त तथा मनोहर मुखको थियो ॥४२॥ नवयौवनको उन्माद तथा बाटुला र ठूला-ठूला स्तनका भारले उसको उदरदेश कृश भएको थियो । मुखारविन्दको गन्धका अनुगामी भ्रमरको झङ्कारले उसका नेत्र चञ्चल भइरहेका थिए ॥४३॥ त्यो स्त्री आफ्ना केशपाशमा मल्लिका-कुसुमको माला बेरेकी थिई । त्यसको सुन्दर ग्रीवा र बाहुहरूमा अङ्गदादि भूषण विभूषित थिए ॥ ४४ ॥ त्यो (मोहिनी) निर्मल वस्त्रले वेष्टित र नितम्बमा विराजमान सुवर्णमयी करधनी सुशोभित थियो र उसका चञ्चल चरणमा रहेका नूपुर बजिरहेका थिए ॥४५॥ ती सुन्दरी अद्भुत रूप लज्जायुक्त हाँसो र चलायमान

---

* दृष्टान्त ( दुइ होइन, चारर भाग लगाओ—नवद्वीपमा प्रसिद्ध विद्वान् रामशिरोमणि र तिनका भाई विद्यारत्न सँगै बस्थे । ती बस्ता विद्वान् थिए त्यसै मिलनसार र बुद्धिमान पनि थिए । ती दुवै बूढा भए तिनले बर्षौं गरेर कमाएका थिए, तापनि घरको सम्पत्तिमा अंश बण्डा भएको थिएन । बैठाका तीन र कान्छाको केवल दोटा छोरो थियो । एक दिन रामशिरोमणिले भने—अब आफ्नो अंश बण्डा गरिदिनु पर्दछ, किनकि छोराहरू ठूला-ठूला भइसके ।' रघुमणिले भने-'दाई, तपाईंले यो के भन्नु भएको ? बरु मूर्खहरू छुट्टिन्छन् त्यसै गरी हामी पण्डित भएर पनि छुट्टिने ? समाजले हामीलाई के भन्नेछन् ?' रामशिरोमणिले भने-'हामी दुई छुट्टिने होइन, तर छोराहरूको भाग बाँडिदिए राम्रो हुनेछ । यस्तो गरिदिए भविष्यमा ती आफ्नो एकता स्थिर राख्नेछन् ।' रघुमणिले भन्यो—'तपाईंको जस्तो इच्छा ।' पछि रामशिरोमणिले सम्पत्तिको दुइ भाग लगाए । एक भागमा आफ्ना तीन पुत्र, र अर्को भाग भाईको दोटा छोरोलाई दिए । यो अंशबण्डा देखेर रघुमणिले भने—दाई ! तिमीले यो के गरेका ? हामीहरू छुट्टिएका भए भाग उचित हुन्थ्यो, तर छोराहरू छुट्टिएरहेका छन् । यसनिमित्त बराबर बराबर चार भाग गरेर चारै छोराहरूलाई दिएदेखि सबलाई खुसी लाग्नेथियो ।

भ्रूभङ्गले हेर्दै दैत्य-यूथपतिहरूको हृदयमा बारम्बार कामोद्दीपन हुन लाग्यो ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायामष्टमोऽध्यायः ॥८॥

(मोहिनी रूपधारी भगवान् द्वारा अमृत बाँड्नु)–शुकदेवजी भन्दछन्–हे राजन् ! अब ती दैत्य सौहार्द त्यागेर दस्यु-धर्ममा प्रवृत्त भई अमृतको निम्ति परस्पर खोसा-खोस गरिरहेका थिए, त्यसै बखत तिनले त्यहाँ आएकी सुन्दरी स्त्रीलाई देखे ॥१॥ उनलाई देख्नासाथ ती कामातुर दैत्यहरूले भने–'यसको कति राम्रो रूप छ ! यसको कस्तो कमनीय कान्ति छ । कति नयाँ अवस्था छ !' यति भन्दै तिनको नजीकै गएर सोधे–॥२॥ हे कमल-लोचनी ! तिमी को हौ ? कहाँबाट आइरहेकी छौ ? तिमी के गर्न खोजिरहेकी छौ ? हे वरोरु ! तिमी त हाम्रो चित्तलाई मानो मथिरहेकी छौ । लौ भन तिमी कसकी छोरी हौ ? ॥३॥ हामी बुझिरहेका छौं–आजसम्म देवता, असुर, सिद्ध, गन्धर्व, चारण र लोकपाल पनि तिमीलाई छुन सकेका छैनन् । अनि मनुष्यको के कुरा ॥४॥ हे सुभ्रू ! जस्तै विधाताले दया गरेर हामी देहधारीहरूका इन्द्रिय र मनलाई प्रसन्न पार्नको निम्ति तिमीलाई यहाँ पठाएका हुन् ॥५॥

मुद्दीपयन्मुहुः ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे भगवन्मायोपलम्भनं नामाष्टमोऽध्यायः ॥ ८ ॥

श्रीशुक उवाच ॥ तेऽन्योन्यतोऽसुराः पात्रं हरन्तस्त्यक्तसौहृदाः ॥ क्षिपन्तो दस्युधर्माण आयान्तीं ददृशुः स्त्रियम् ॥ १ ॥ अहो रूपमहो धाम अहो अस्या नवं वयः ॥ इति ते तामभिद्रुत्य पप्रच्छुर्जातहृच्छयाः ॥२॥ का त्वं कञ्जपलाशाक्षि कुतो वा किं चिकीर्षसि ॥ कस्यासि वद वामोरु मथ्नन्तीव मनांसि नः ॥३॥ न वयं त्वमरैर्दैत्यैः सिद्धगन्धर्वचारणैः ॥ नास्पृष्टपूर्वां जानीमो लोकेशैश्च कुतो नृभिः ॥ ४ ॥ नूनं त्वं विधिना सुभ्रूः प्रेषिताऽसि शरीरिणाम् ॥ सर्वेन्द्रियमनः प्रीतिं विधातुं सघृणेन किम् ॥ ५ ॥ सा त्वं नः स्पर्धमानानामेकवस्तुनि मानिनि ॥ ज्ञातीनां बद्धवैराणां शं विधत्स्व सुमध्यमे ॥६॥ वयं कश्यपदायादा भ्रातरः कृतपौरुषाः ॥ विभजस्व यथान्यायं नैव भेदो यथा भवेत् ॥ ७ ॥ इत्युपामन्त्रितो दैत्यैर्मायायोषिद्वपुर्हरिः ॥ प्रहस्य रुचिरापाङ्गैर्निरीक्षन्निदमब्रवीत् ॥८॥ श्रीभगवानुवाच ॥ कथं कश्यपदायादाः पुंश्चल्यां मयि सङ्गताः ॥ विश्वासं पण्डितो जातु कामिनीषु न याति हि ॥९॥ सालावृकाणां स्त्रीणां च स्वैरिणीनां सुरद्विषः ॥ सख्यान्याहुरनित्यानि नूत्नं नूत्नं विचिन्वताम् ॥१०॥ श्रीशुक उवाच ॥ इति ते क्ष्वेलितैस्तस्य आश्वस्तमनसोऽसुराः ॥ जहसुर्भावगम्भीरं ददुश्चामृतभाजनम् ॥११॥ ततो गृहीत्वाऽमृतभाजनं हरिर्बभाष ईषत्स्मितशोभया गिरा ॥

हे सुमध्यमे ! यौटा वस्तुको निम्ति वैरत्व बाँधेर परस्पर लड्न खोज्ने हामी सजातीयहरूमा तिमी शान्ति स्थापित गरिदेऊ ॥ ६ ॥ हामी कश्यपजीका छोरा र भाई-भाई हौं । हामीले समान परिश्रम गरेकका छौं । हामी सबैमा यो अमृत उचित रीतिले बाँडिदेउ, जसले हामीहरूमा कुनै झगडा नहोस् ॥७॥ ती असुरहरूले प्रार्थना गरेपछि आफ्नो मायाले स्त्रीरूपधारी श्रीहरि हाँसेर कुटिल-कटाक्षले हेर्दै भन्नलागे ॥८॥ श्रीभगवानले भने–हे कश्यपपुत्र हो ! तिमी म व्यभिचारिणीमा यति श्रद्धा किन गर्दछौ ? विज्ञजन नारीमा कहिल्यै विश्वास गर्दैनन् ॥९॥ हे दैत्य हो ! कुकुर र व्यभिचारिणी स्त्रीको पवित्रता अनित्य हुन्छ, किनकि ती दिनहुँ नयाँ-नयाँ प्रेमी खोज्दै रहन्छन् ॥१०॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! मोहिनी-भगवानको त्यो ठट्टाको कुराले दैत्यहरूको तीमाथि झन दृढ विश्वास भयो । ती गम्भीरभावले हाँसे र तिनले त्यो अमृत-कलश उनको हातमा दिए ॥११॥ कलश लिएर मुसु-मुसु हाँस्तै भगवानले

मीठो वाणीमा भन्नुभयो–'म राम्रो गरूँ वा नराम्रो, त्यो मिमीहरूलाई मान्य हुन्छ भने म यो अमृत बाँडिदिन्छु'॥१२॥उनको सत्य स्वरूपबाट अनभिज्ञ असुरहरूले 'लौ हुन्छ' भनेर त्यो स्वीकार गरे ॥१३॥ त्यसपछि उपवास गरेर दैत्यले अर्को दिन स्नान गरे, अग्निमा हविष्यान्नको आहुति दिए, गाई ब्राह्मणदिलाई यथायोग्य दान दिए र ब्राह्मणद्वारा स्वस्तिवाचन गराई आफाफ्नो रुचि अनुसार नयाँ लुगा लगाएर राम्ररी विभूषित भएर पूर्वतिर अग्रभाग पारी विछाइएका कुशहरूमा गएर बसे ॥१४॥१५॥ हे राजन् ! सुगन्धित धूपले सुरभित माला तथा दीपमालाले सुशोभित यौटा राम्रो भवनमा जब सबै देवता र दैत्यगण पूर्वाभिमुख भएर बसिसके, तब दिव्य दुकूलले सुशोभित, गज-शावक झैं नितम्बले युक्त र कलश जस्तै उन्नत स्तन तथा मदमत्त नयन हुने ती बाला हातमा अमृतको कलश लिई सुवर्णमय नूपुरको झङ्कार गर्दै त्यहाँ आइन् ॥१६-१७॥ तिनका कानमा सुवर्णका कुण्डल थिए । तिनका नाक गला र मुखमनोहर थियो र स्तनहरूको वस्त्र खस्केको थियो । लक्ष्मीकी सहचरी-स्वरूपिणी ती परदेवतालाई देखेर उनको मनोहर र तेर्सो हेराई, मन्द हाँसोले सबै देवता एवं असुर व्याकुल

यद्यभ्युपेतं क्व च साध्वसाधुवा कृतं मया वो विभजे सुधामिमाम् ॥ १२ ॥ इत्यभिव्याहृतं तस्या आकर्ण्यासुरपुङ्गवाः ॥ अप्रमाणविदस्तस्यास्तत्तथे-
त्यन्वमंसत ॥१३॥ अथोपोष्य कृतस्नाना हुत्वा च हविषाऽनलम् ॥ दत्त्वा गोविप्रभूतेभ्यः कृतस्वस्त्ययना द्विजैः ॥ १४ ॥ यथापजोषं वासांसि परि-
धायाहतानि ते ॥ कुशेषुप्राविशन्सर्वे प्रागग्रेष्वभिभूषिताः ॥ १५ ॥ प्राङ्मुखेषूपविष्टेषु सुरेषु दितिजेषु च ॥ धूपामोदितशालायां जुष्टायां माल्य-
दीपकैः ॥ १६ ॥ तस्यां नरेन्द्र करभोरुरुशद्दुकूलश्रोणीतटालसगतिर्मदविह्वलाक्षी ॥ सा कूजती कनकनूपुरशिञ्जितेन कुम्भस्तनी कलशपाणिर-
थाविवेश ॥ १७ ॥ तां श्रीसखीं कनककुण्डलचारुकर्णनासाकपोलवदनां परदेवताख्याम् ॥ संवीक्ष्य संमुमुहुरुत्स्मितवीक्षणेन देवासुरा विगलितस्त-
नपट्टिकां ताम् ॥१८॥ असुराणां सुधादानं सर्पाणामिव दुर्नयम् ॥ मत्वा जातिनृशंसानां न तान् व्यभजदच्युतः ॥ १९ ॥ कल्पयित्वा पृथक्पंक्ती-
रुभयेषां जगत्पतिः ॥ तांश्चोपवेशयामास स्वेषु स्वेषु च पंक्तिषु ॥ २० ॥ दैत्यान्गृहीतकलशो वञ्चयन्नुपसञ्चरैः ॥ दूरस्थान्पाययामास जरामृत्युहरां
सुधाम् ॥२१ ॥ ते पालयन्तः समयमसुराः स्वकृतं नृप ॥ तूष्णीमासन्कृतस्नेहाः स्त्रीविवादजुगुप्सया ॥ २२ ॥ तस्यां कृतातिप्रणयाः प्रणयापायका-
तराः ॥ बहुमानेन चाबद्धा नोचुः किञ्चन विप्रियम् ॥२३॥ देवलिङ्गप्रतिच्छन्नः स्वर्भानुर्देवसंसदि ॥ प्रविष्टः सोममपिबच्चन्द्रार्काभ्यां च सूचितः ॥२४॥

हुन गए ॥१८॥ मोहिनी रूपधारी भगवान्ले सर्पका समान स्वभावतः क्रूर दैत्यगणलाई अमृत पिलाउनु अनुचित ठानेर उनलाई नदिने नै निर्णय गरिन् ॥१९॥ पहिले तिनको दुइ पंक्ति बनाएर भिन्न-भिन्नै बसाले ॥२०॥ अनि कलश लिएर भगवान्ले दैत्यहरूलाई आफ्ना हाउ-भाउ र कटाक्षादिले छल्दै पर बसेका देवताहरूलाई त्यो मृत्यु-जरापहारी अमृत पिलाइदिए ॥२१॥ हे राजन् ! ती सबै असुरगण नारीप्रति झगडा गर्नु अनुचित हो र यिनले पनि हामीहरू प्रति प्रेम नै देखाइन्–यस्तो विचार गरेर पहिले दिएका वचनको पालन गर्दै शान्तभावले बसिरहे ॥२२॥ ती सुन्दरीमा उनको प्रेम प्रगाढ भइसकेको थियो । प्रणय-भङ्गको भय तथा आफ्नोप्रति प्रदर्शित सत्कारको बन्धनमा बाँधिएर कुनै अप्रिय वचन बोलेनन् ॥२३॥ त्यसैबीच राहु नामको दैत्यले देवताहरूको वेश बनाएर उनकै माझमा बसेर अमृत पिइहाल्यो । तत्काल चन्द्र-सूर्यले भगवान्लाई यो कुरा सुनाइदिए ॥२४॥ अनि प्रभुले अमृत पिइरहेकै मौकामा

भएको सुदर्शन चक्रले त्यसको शिर काटेर जिउबाट छुट्याइदिए । अमृतको संसर्ग नहुनाले त्यसको धड त प्राणहीन भएर ढल्यो ॥ २५ ॥ तर सिर अमर भयो । अनि ब्रह्माजीले उसलाई पनि राहु नामको यौटा 'ग्रह' बनाइदिए । पूर्वको वैरत्वले अझ पनि पर्वदिन अर्थात् पूर्णिमा र औंसीमा चन्द्रमा र सूर्यलाई आक्रमण गर्न गर्दछ ॥ २६ ॥ देवताहरूले अमृत पिइसकेपछि लोकभावन भगवानले समस्त दैत्यले देख्दा-देख्दै फेरि आफ्नो अधिको रूप धारण गर्नुभयो ॥ २७ ॥ हे राजन् ! देश, काल, हेतु, अर्थ, कर्म र बुद्धि समान भएर पनि देवता र दैत्यहरूको प्राप्त फलमा भेद रह्यो, किनकि भगवान्‌का चरण-कमलको सेवन गर्नाले देवगणले सजिलैसित अमृत पिए र दैत्य त्यसबाट वञ्चित भए ॥२८॥ मनुष्य जो आफ्नो प्राण, धन, कर्म, मन तथा वाणी आदि द्वारा शरीर र पुत्रादिको निमित्त विविध कर्म गर्दछ, त्यो भेदबुद्धिकृत हुनाले व्यर्थ हुन जान्छ र तिनै प्राणादिको यौगले जुन काम ईश्वरको निम्ति गरिन्छ, त्यो अभेदभाव युक्त हुनाले सफल हुन्छ । त्यो त वृक्षको जरामा पानी हालेझैं सबैलाई लाभदायक छ ॥२९॥ इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धे नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥९॥

चक्रेण क्षुरधाणो जहारः ।पवतः शिरः ॥ हरिस्तस्य कबन्धस्तु सुधयाप्लावितऽपिबत् ॥२५॥ शिरस्त्वमर तां नीतमजो ग्रहमचीक्लृपत् ॥ यस्तु पर्वणि चन्द्रार्कावभिधापति वैरधीः ॥२६॥ पीतप्रायेऽमृते देवैर्भगवाँल्लोकभावनः ॥ पश्यतामसुरेन्द्राणां स्व रूपं जगृहे हरिः ॥ २७ ॥ एवं सुरासुरगणाः समदेशकालहेत्वर्थकर्ममतयोऽपि फले विकल्पाः ॥ तत्रामृतं सुरगणाः फलमंजसापुर्यत्पादपंकजरजः श्रयणान्न दैत्याः ॥२८॥ यद्युज्यतेऽसुवसुकर्ममनो· वचोभिर्देहात्मजादिषु नृभिस्तदसत्पृथक्त्वात् ॥ तैरेव सद्भवति यत्क्रियतेऽपृथक्त्वसर्वस्य तद्भवति मूलनिषेचनं यत् ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धेऽमृतमथने नवमोऽध्यायः ॥ ९ ॥

श्रीशुक उवाच ॥ इति दानवदैतेया नाविन्दन्नमृतं नृप ॥ युक्ताः कर्मणि यत्ताश्च वासुदेवपराङ्मुखाः॥१॥ साधयित्वाऽमृतं राजन्पाययित्वा स्वकान् सुरान् ॥ पश्यतां सर्वभूतानां ययौ गरुडवाहनः ॥२॥ सपत्नानां परामृद्धिं दृष्ट्वा ते दितिनंदनाः ॥ अमृष्यमाणा उत्पेतुर्देवान्प्रत्युद्यतायुधाः ॥३॥ ततः सुरगणाः सर्वे सुधया पीतयैधिताः ॥ प्रतिसंयुयुधुः शस्त्रैर्नारायणपदाश्रयाः ॥४॥ तत्र देवासुरो नाम रणः परमदारुणः ॥ रोधस्युदन्वतो राजंस्तुमुलो रोमहर्षणः ॥५॥ तत्रान्योन्यं सपत्नास्ते संरब्धमनसो रणे ॥ समासाद्यासिभिर्बाणैर्निजघ्नुर्विविधायुधैः ॥ ६ ॥ शंखतूर्यमृदङ्गानां भेरीडमरुणां महान् ॥

( देवासुर संग्राम )–शुकदेवजी भन्दछन्–हे राजन् ! ठूलो परिश्रमले समुद्र-मन्थनरूपी महान् उद्योग गरेर पनि भगवान् वासुदेवदेखि विमुख दैत्य तथा दानवलाई अमृत प्राप्त भएन ॥१॥ यस प्रकार गरुडवाहन विष्णु भगवान् अमृत लिई, त्यो आफ्ना भक्त देवगणलाई पिलाई सबै प्राणीहरूले देख्ता-देख्तै त्यहाँबाट हिंडिदिए ॥ २ ॥ तब शत्रु ( देवताहरू ) को ऐश्वर्य देखेर सहन सकेनन् र विविध शस्त्रास्त्र लिएर देवगणमाथि झम्टे ॥ ३ ॥ उता अमृत पिएर सबल र भगवच्चरणाश्रित देवता पनि विविध आयुध लिएर दैत्यहरूसित युद्ध गर्नलागे ॥ ४ ॥ हे राजन् ! यस प्रकार क्षीरसागरको तटमा 'देवासुर' नामको ठूलो र भयङ्कर रोमाञ्चकारी एवं घनघोर युद्ध हुनलाग्यो ॥५॥ त्यस युद्धमा ती दुवै विपक्षी वीर रोषमा भरिएर परस्पर भिडे र यौटाले अर्कोमाथि खड्ग बाणादि अनेक आयुधले आघात-प्रतिघात गर्नलागे । गर्जने हात्ती, घोडा, रथ, पैदल सैनिक, शङ्ख, मृदङ्ग, भेरी र डमरू आदि

वाद्यहरूको अति घनघोर नाद हुनलाग्यो ॥ ६-७ ॥ अनि रथिसित रथि, पैदल सेनासित पैदल सेना, घोडसवारसित घोडाचढेका र गजारोहीहरूसित गजारोही लड्नलागे ॥ ८ ॥ हे राजन् ! तिनमा केही वीर ऊँटमा, केही हात्तीमा र केही गदहामा चढेर जुध्न थाले । केही गौरवर्ण मृगमा, केही भालुमा, केही व्याघ्रमा, केही सिंहमा, केही गिद्ध-कङ्क र बकुल्लामा, केही जल, स्थल एवं आकाशचारी विकराल शरीर हुने प्राणीहरूमा चढेर दुवै सेनाका माझमा पस्नपुगे ॥९-१२॥ हे परीक्षित । त्यस बखत विविध प्रकारका ध्वजा-पताका, शुभ्र एवं निर्मल छाता, रत्न दण्डयुक्त व्यजन, मयूर छत्र, चमर, वायुमा उड्ने पगरी कलँगी, कवच,आभूषण र सूर्यका किरण झैं टल्कने उज्ज्वल शस्त्रहरूले सम्पन्न दुवै सेनाहरू वीरश्रेणीरूपी जलचरहरूले युक्त दुइ महासागर झैं सुशोभित भए ॥१३-१५॥ हे राजन् ! रणभूमिमा दैत्यसेना-नायक विरोचननन्दन बलि मयदानव-निर्मित वैहायस विमानमा बसी—जो आरोहीलाई

हस्त्यश्वरथपत्तीनांनदतां निःस्वनोऽभवत् ॥७॥ रथिनो रथिभिस्तत्र पत्तिभिः सह पत्तयः ॥ हया हयैरिभाश्चेभैः समसज्जन्त संयुगे ॥८॥ उष्ट्रैः केचिदिभैः केचिदपरे युयुधुः खरैः ॥ केचिद्गौरमृगैर्ऋक्षैर्द्वीपिभिर्हरिभिर्भटाः॥९॥गृध्रैःकङ्कैर्बकैरन्ये श्येनभासैस्तिमिङ्गिलैः ॥ सरभैर्महिषैः खड्गैर्गोवृषैर्गवयारुणैः॥१०॥ शि[illegible]भिराखुभिःकेचित्कृकलासैःशशैर्नरैः ॥ बस्तैरेके कृष्णसारैर्हंसैरन्ये च सूकरैः ॥११॥ अन्ये जलस्थलखगैः सत्त्वैर्विकृतविग्रहैः ॥ सेनयोरुभयोराज-[illegible]विशुस्तेऽग्रतोऽग्रतः ॥१२॥ चित्रध्वजपटै राजन्नातपत्रैः सितामलैः ॥ महाधनैर्वज्रदण्डैर्व्यजनैर्बार्हचामरैः ॥१३॥ वातोद्धूतोत्तरोष्णीषैरर्चिभिर्वर्मभूषणैः ॥ स्फुरद्भिर्विशदैःशस्त्रैःसुतरां सूर्यरश्मिभिः ॥१४॥ देवदानववीराणां ध्वजिन्यौ पाण्डुनन्दन ॥ रेजतुर्वीरमालाभिर्यादसामिव सागरौ ॥१५॥वैरोचनो बलिः संख्ये सोऽसुराणां चमूपतिः ॥ यानं वैहायसं नाम कामगं मयनिर्मितम् ॥१६॥ सर्वसांग्रामिकोपेतं सर्वाश्चर्यमयं प्रभो ॥ अप्रतर्क्यमनिर्देश्यं दृश्यमानमदर्शनम् ॥१७॥ आस्थितस्तद्विमानाग्र्यं सर्वानीकाधिपैर्वृतः ॥ बालव्यजनछत्राग्र्यै रेजे चन्द्र इवोदये ॥१८॥ तस्यासन्सर्वतोयानैर्यूथानां पतयोऽसुराः ॥ नमुचिःशम्बरो बाणो विप्रचित्तिरयोमुखः ॥१९॥ द्विमूर्धा कालनाभोऽथ प्रहेतिर्हेतिरिल्वलः ॥ शकुनिर्भूतसंतापो वज्रदंष्ट्रो विरोचनः॥२०॥ हयग्रीवःशंकुशिराः कपिलो मेघदुन्दुभिः ॥ तारकश्चक्रदृक्शुम्भो निशुम्भोजम्भउत्कलः ॥२१॥ अरिष्टोऽरिष्टनेमिश्च मयश्च त्रिपुराधिपः ॥ अन्ये पौलोमकालेया निवातकवचादयः ॥ २२ ॥ अलब्धभागाः सोमस्य केवलं क्लेशभागिनः ॥ सर्व एते रणमुखे बहुशो निर्जितामराः ॥२३॥ सिंहनादान्वि-

इच्छानुसार जहाँ पनि लैजाने, युद्ध-सामग्रीले परिपूर्ण, सर्वाश्चर्यमय, कहिले देखिने र कहिले अदृश्य भइदिने हुनाले अप्रतर्क्य तथा अनिर्देश्य थियो । त्यस श्रेष्ठ विमानमा बसेर सबै सेनापतिहरूले घेरिएर बलि अत्युत्तम चमर र छाताले युक्त भई उदीयमान चन्द्रमा समान सुशोभित भयो ॥१६-१८॥ त्यसको सबैतिर आफ्ना-आफ्ना विमानहरूमा बसेका नमुचि, शम्बर, बाण, विप्रचित्ति, अयोमुख, द्विमूर्धा, कालनाभ, प्रहेति,हेति इल्वल, शकुनि, भूतसन्ताप, वज्रदंष्ट्र, विरोचन, हयग्रीव, शंकुशिरा, कपिल, मेघदुन्दुभि, तारक, चक्राक्ष, शुम्भ, निशुम्भ, जम्भ, उत्कल, अरिष्टनेमि, मय, त्रिपुराधिप, पौलोम, कालेय तथा निवातकवच आदि दैत्य-सेनापति थिए ॥१९-२२॥ यी सबै दैत्य अमृतको भाग नपाउनाले केवल क्लेशका भागी बनेका थिए र पहिले युद्धमा धेरै पल्ट देवताहरूलाई जितिसकेका थिए ॥२३॥ ती सबै गर्जन्दै चर्को ध्वनिले शङ्ख बजाउन लागे । आफ्ना शत्रुहरूलाई गर्वयुक्त देखेर देवराज इन्द्र

रिसाए । मस्तकबाट मद चुहुने ऐरावत दिग्गजमा चढेर ती यस्ता राम्रा देखिए-जस्तै बगिरहेको झरनामा दिवसपति सूर्य शोभा पाउँदछन् ।।२४-२५।। तिनका सबैतिर विविध वाहन ध्वजा तथा आयुधहरूले युक्त देवता र आफ्ना गणसमेत वायु, अग्नि तथा वरुण आदि लोकपाल हिंडे ।।२६।। ती सबै देवता र दैत्य एक अर्काको सामुन्ने गएर मर्मभेदी शस्त्रास्त्र-हरू बर्षाउँदै र युद्धमा अगाडि बढ्दै एक्ले अर्कोलाई ललकार्दै द्वन्द्व-युद्ध गर्नलागे ।।२७।। हे राजन् ! इन्द्र र बलि, तारकासुर र स्वामिकर्तिकेय, हति र वरुण,प्रहेति र मित्र, कालनाम र यमराज, यम र विश्वकर्मा, त्वष्टा र शम्बरासुर, सविता र विरोचन, अपराजित तथा नमुचि, वृषपर्वा र अश्विनीकुमार अनि बलिका सय छोरा, जसमा बाणासुर सबैभन्दा जेठो थियो र सूर्य परस्पर युद्ध गर्नलागे । राहुसित चन्द्रमा एवं पुलोमासित वायुदेव लड्न लागे । निशुम्भ र शुम्भसित वेगवती देवी भद्रकाली, जम्भसित वृषाकपि ( महादेव, ) महिषासुर-

मुञ्चन्तः शङ्खान्दध्मुर्महारवान् ॥ दृष्ट्वा सपत्नानुत्सिक्तान्बलभित्कुपितो भृशम् ॥२४॥ ऐरावतं दिक्करिणमारूढः शुशुभे स्वराट् ॥ यथा स्रवत्प्रस्रवण-मुदयाद्रिमहर्पतिः ॥ २५ ॥ तस्यासन्सर्वतो देवा नानावाहध्वजायुधाः ॥ लोकपालाः सह गणैर्वाय्वग्निवरुणादयः ॥ २६ ॥ तेऽन्योन्यमभिसंसृत्य क्षिपन्तो मर्मभिर्मिथः ॥ आह्वयन्तो विशन्तोऽग्रे युयुधुर्द्वन्द्वयोधिनः ॥२७॥ युयोध बलिरिन्द्रेण तारकेण गुहोऽस्युत ॥ वरुणो हेतिनाऽयुध्यन्मित्रो राजप्रहेतिना ॥२८॥ यमस्तु कालनाभेन विश्वकर्मा मयेन वै ॥ शम्बरो युयुधे त्वष्ट्रा सवित्रा तु विरोचनः ॥ २९ ॥ अपराजितेन नमुचिरश्विनौ वृषपर्वणा ॥ सूर्यो बलिसुतैर्देवो बाणज्येष्ठः शतेन च ॥३०॥ राहुणा च तथा सोमः पुलोम्ना युयुधेऽनिलः ॥ निशुम्भशुम्भयोर्देवी भद्रकाली तरस्विनी ॥३१॥ वृषाकपिस्तु जम्भेन महिषेण विभावसुः ॥ इल्वलः सह वातापिर्ब्रह्मपुत्रैररन्दिम ॥ ३२ ॥ कामदेवेन दुर्मर्ष उत्कलो मातृभिः सह ॥ बृहस्पति-श्चोशनसा नरकेण शनैश्चरः ॥३३॥ मरुतो निवातकवचैः कालेयैर्वसवोऽमराः ॥ विश्वेदेवास्तु पौलोमै रुद्राः क्रोधवशैः सह ॥३४॥ त एवमाजा-वसुराः सुरेन्द्रा द्वन्द्वेन संहत्य च युध्यमानाः ॥ अन्योन्यमासाद्य निजघ्नुरोजसा जिगीषवस्तीक्ष्णशरासितोमरैः ॥ ३५ ॥ भुशुंडिभिश्चक्रगदर्ष्टिपट्टिशैः शक्त्युल्मुकैः प्रासपरश्वधैरपि ॥ निस्त्रिंशभल्लैः परिघैः समुद्गरैः सभिन्दिपालैश्च शिरांसि चिच्छिदुः ॥३६॥ गजास्तुरङ्गाः सरथाः पदातयः सारोह-वाहा विविधा विखण्डिताः ॥ निकृत्तबाहूरुशिरोधरांघ्रयश्छिन्नध्वजेष्वासतनुत्रभूषणाः ॥ ३७ ॥ तेषां पदाघातरथाङ्गचूर्णितादायोधनादुल्बण उत्थि

सित अग्निदेव तथा हे शत्रुमर्दन ! ब्रह्माजीका छोराहरूसित इल्वल र वातापी जुध्न थाले ॥ २८-३२ ॥ कामदेवसित दुर्मर्ष, मातृगणसित उत्कल, शुक्राचार्यसित बृहस्पति, नरकासुरसित शनैश्चर, निवातकवचहरूसित रुद्रगण, कालेयहरूसित वसुगण, पौलोमादिसित विश्वेदेवगण र क्रोधवशसित रुद्रगण जुध्नलागे ।। ३३-३४ ॥ यसरी ती दैत्य देवगण रणभूमिमा एकत्र भएर द्वन्द्वयुद्ध गर्दै एक आर्कासित भिडेर जयको कामनाले ठूलो उत्साहपूर्वक तीक्ष्ण वाण, तरवार, एवं भालाहरू प्रहार गर्नलागे ॥ ३५ ॥ ती भुशुण्डी, चक्र, गदा, ऋष्टि, पट्टिश, शक्ति, उल्मुक, प्रास, परश्वध, निस्त्रिंश, भाला, मुद्गर, र भिन्दिपाल तथा परिघहरूले एक अर्काको मस्तक काट्न लागे ॥३६॥ आफ्ना आरोहीहरूसहित हात्ती घोडा, रथ आदि विविध वाहन र पैदल सिपाही मर्नलागे । केही सैनिकका पाखुरा, कसैका तिघ्रा, कसैका ग्रीवा र कसैका खुट्टा काटिए । कसैका ध्वजा, धनुष, कवच तथा आभूषणहरू

छिन्न-भिन्न भए ।।३७।। तिनका पादप्रहार र रथका पाँग्राको आघातले मर्दित रणभूमिमा प्रचण्ड धूलो उड्नलाग्यो । धूलोले सबैदिशा तथा सूर्यसहित आकाश ढाकिदियो । तर बग्दो रक्तको धाराले भूमि भिज्नाले धूलो फेरि भूमिमै बस्यो ।।३८।। जुन सैनिकको मुकुट, कुण्डल भैमा खसेथे, उसका नेत्र रिसले भरिएका र ओंठ दाँतले थिचिएका थिए, त्यस्ता अगणित मस्तक, आभूषण, र आयुध सहित ठूला-ठूला भुजाहरू र हात्तीका सूँढ झैं तिघ्राहरूले सम्पूर्ण रणभूमि ढाकिएको थियो ।। ३९ ।। अनेक कबन्ध ( शिर नभएको गीँड ) उठेर उभिए, जो युद्धभूमिमा काटिएर गिरेका आफ्नै शिरलाई आँखाले देखेर अन्य शस्त्रास्त्र लिई अरू बीरतिर दगुर्न लागे ।। ४० ।। अनि बलिले दस बाण हात्ती इन्द्रलाई तीन बाणले ऐरावतलाई, चार शरले ऐरावतका चार-चार-रक्षक माहुते तथा योद्धाले मुख्य माहुतेलाई लक्ष्य गरेर बाण छाडे ।।४१।। तर पराक्रमी इन्द्रले बाणहरू पुग्नको अगावै भल्लनामक उतिनै तीक्ष्ण बाण छाडेर हाँसी-हाँसी बीचमै काटिदिए ।।४२।। बलिले इन्द्रको उत्तम पराक्रम देखेर तथा त्यसलाई सहन नसक्नाले यौटा शक्ति उचाले, तर इन्द्रले उल्का समान बल्दो

तस्तदा ॥ रेणुर्दिशः खं द्युमणिं च छादयन्न्यवर्ततासृक्स्रुतिभिः परिप्लुतात् ॥३८॥ शिरोभिरुद्धूतकिरीटकुण्डलैः संरम्भदृग्भिः परिदष्टदच्छदैः ॥ महाभुजैः साभरणैः सहायुधैः सा प्रास्तृता भूः करभोरुभिर्बभौ ॥३९॥ कबन्धास्तत्र चोत्पेतुः पतितस्वशिरोऽक्षिभिः ॥ उद्यतायुधदोर्दण्डैराधावन्तो भटान्मृधे ॥४०॥ बलिर्महेन्द्रं दशभिस्त्रिभिरैरावतं शरैः ॥ चतुर्भिश्चतुरो वाहानेकेनारोहमार्च्छयत् ॥४१ ॥ स तानापततः शक्रस्तावद्भिः शीघ्रवि-क्रमः ॥ चिच्छेद निशितैर्भल्लैरसम्प्राप्तान्हसन्निव ॥४२॥ तस्य कर्मोत्तमं वीक्ष्य दुर्मर्षः शक्तिमाददे ॥ तां ज्वलन्तीं महोल्काभां हस्तस्थामच्छिनद्धरिः ॥४३॥ ततः शूलं ततः प्रासं ततस्तोमरमृष्टयः ॥ यद्यच्छस्त्रं समादद्यात्सर्वं तदच्छिनद्विभुः ॥ ४४ ॥ ससर्जाथासुरीं मायामन्तर्धानं गतोऽसुरः ॥ ततः प्रादुरभूच्छैलः सुरानीकोपरि प्रभो ॥ ४५ ॥ ततो निपेतुस्तरवो दह्यमाना दवाग्निना ॥ शिलाः सटङ्कशिखराश्चूर्णयन्त्यो द्विषद्बलम् ॥४६॥ महोरगाः समुत्पेतुर्दन्दशूकाः सवृश्चिकाः ॥ सिंहव्याघ्रवराहाश्च मर्दयन्तो महागजान् ॥ ४७ ॥ यातुधान्यश्च शतशः शूलहस्ता विवाससः ॥ छिन्धि भिन्धीति वादिन्यस्तथा रक्षोगणाः प्रभो ॥ ४८ ॥ ततो महाघना व्योम्नि गम्भीरपरुषस्वनाः ॥ अङ्गारान्मुमुचुर्वातैराहताः स्तनयित्नवः ॥ ४९ ॥ सृष्टो दैत्येन सुमहान्वह्निः श्वसनसारथिः ॥ सांवर्तक इवात्युग्रो विबुधध्वजिनीमधाक् ॥५०॥ ततः समुद्र उद्वेलः सर्वतः प्रत्यदृश्यत ॥ प्रचण्डवातै-

त्यो शक्ति उसको हातमै काटिदिए ।।४३।। अनि बलिले फेरि एकेक गरेर क्रमशः शूल, प्रास, तोमर र शक्ति आदि जति पनि शस्त्र तातक खोजे, ती सबैलाई इन्द्रले काटेर छिन्न, भिन्न पारिदिए ।।४४।। हे राजन् ! अनि त्यो असुर अन्तर्धान भएर आसुरी माया फैलाउन लाग्यो । तदनुसार देवसेनाका उपर एक पर्वत प्रकट भयो ।। ४५ ।। त्यसमाथिबाट दावाग्निले बल्दो वृक्ष, तीखो धार हुने शिखर एवं शिलाखण्ड ओइरिएर देवसेनालाई धूलो पार्नलागे ।।४६।। ठूला-ठूला सर्प, बिच्छी र अन्य विषालु जन्तु, सिंह, व्याघ्र तथा वराह आदि पशु निस्केर ठूला-ठूला गजराजलाई धूलो पार्नलागे ।।४७।। हे राजन् ! हातमा त्रिशूल लिएर 'काट-मार' कराउँदै सयवटौं नांगी राक्षसनी तथा राक्षसहरू प्रकट भए ।। ४८ ।। आकाशमा गम्भीर र कठोर निनाद गर्ने महामेघ र विजुलिहरू प्रकट भएर वायुले ढाकिई आगोका अङ्गारा बर्साउन लागे ।। ४९ ।। दैत्यराज बलिद्वारा उत्पन्न वायुरूपी सारथी

एक प्रलयकालीन अग्निसमान अतिप्रचण्ड एवं महान् अनल सारा देवसेनालाई भस्म पार्न लाग्यो ॥ ५० ॥ प्रबल प्रभञ्जनका झोंक्काले उफ्रने तरङ्ग र भ्रमरले भीषण समुद्र सबै तिरबाट मर्यादा उल्लंघन गर्दो देखियो ॥५१॥ यस प्रकार अलक्ष्य गतिले गर्दा भीषण एवं महामायावी दैत्यका अनेक माया रचेपछि सुर-सैनिक सार्है दुःखी भए ॥५२॥ हे राजन् ! जब इन्द्रादि देवगणलाई ती विचित्र मायाहरू नाश हुने उपाय देखापरेन र तिनले स्मरण गर्नासाथ विश्व भावन विष्णु भगवान् तत्काल प्रकट भए ॥ ५३ ॥ ती गरुडजीको काँधमा आफ्ना सुकोमल चरण राखी, पीताम्बर पहिरेर र आफ्ना आठै भुजामा आयुध धारण गरी, लक्ष्मी, कौस्तुभमणि, बहुमूल्य मुकुट र कुण्डलहरूले विभूषित कमलसमान नेत्रभएका श्रीहरि त्यहाँ देखिए ॥५४॥ देवसेनामा भगवान्ले प्रवेश गर्नासाथ उनको तेजले दैत्यका कूटकर्मले उत्पन्न सारा माया त्यसै गरी तत्काल विनष्ट भए, जसरी जागेपछि स्वप्न नष्ट भएर जान्छ । यस्तै हुनुपर्दछ, किनकि भगवान्‌का स्मरण नै प्राणीलाई सबै विपत्तिबाट मुक्त पार्दछ ॥५५॥ युद्धस्थलमा गरुडवाहन भगवान्‌लाई प्रकट भएका देखेर सिंहारोही कालनेमि दैत्यले

रुद्धूततरङ्गावर्तभीषणः ॥ ५१ ॥ एवं दैत्यैर्महामायैरलक्ष्यगतिभीषणः ॥ सृज्यमानासु मायासु विषेदुः सुरसैनिकाः ॥ ५२ ॥ न तत्प्रतिविधिं यत्र
विदुरिन्द्रादयो नृप ॥ ध्यातः प्रादुरभूत्तत्र भगवान्विश्वभावनः ॥ ५३ ॥ ततः सुपर्णांसकृतांघ्रिपल्लवः पिशङ्गवासा नवकञ्जलोचनः ॥ अदृश्यताष्टा-
युधबाहुरुल्लसच्छ्रीकौस्तुभानर्घ्यकिरीटकुण्डलः ॥ ५४ ॥ तस्मिन्प्रविष्टेऽसुरकूटकर्ममाया विनेशुर्महिना महीयसः ॥ स्वप्नो यथा हि प्रतिबोध आगते
हरिस्मृतिः सर्वविपद्विमोक्षणम् ॥ ५५ ॥ दृष्ट्वा मृधे गरुडवाहमिभारिवाह आविध्य शूलमहिनोदथ कालनेमिः ॥ तल्लीलया गरुडमूर्ध्नि पतद्गृ-
हीत्वा तेनाहनन्नृप सवाहमरिं त्र्यधीशः ॥ ५६ ॥ मालीसुमाल्यतिबलौ युधि पेततुर्यच्चक्रेण कृत्तशिरसावथ माल्यवांस्तम् ॥ आहत्य तिग्मगदयाऽ-
हनदण्डजेन्द्रं तावच्छिरोऽच्छिनदरेर्नदतोऽरिणाद्यः ॥ ५७ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे देवासुरसंग्रामे दशमोऽध्यायः ॥ १० ॥

श्रीशुक उवाच ॥ अथो सुराः प्रत्युपलब्धचेतसः परस्य पुंसः परयाऽनुकम्पया ॥ जघ्नुर्भृशं शक्रसमीरणादयस्तांस्तान्रणे यैरभिसंहताः पुरा॥१॥
वैरोचनया संरब्धो भगवान्पाकशासनः ॥ उदयच्छद्यदा वज्रं प्रजा हाहेति चुक्रुशुः ॥२॥ वज्रपाणिस्तमाहेदं तिरस्कृत्य पुरःस्थितम् ॥ मनस्विनं सुसम्पन्नं
विचरन्तं महामृधे ॥३॥ नटवन्मूढ मायाभिर्मा शान्नो जिगीषसि ॥ जित्वा बालान्निबद्धाक्षान्नटो हरति तद्धनम् ॥४॥ आरुरुक्षन्ति मायाभिरुत्सिसृ-

उनीमाथि त्रिशूल फ्याँके । हे राजन ! त्यसलाई गरुडको मस्तकमा आउन लागेको देखेर भगवान् श्रीहरिले लीलाले नै समाइलिए र त्यही त्रिशूलले वाहनसमेत कालनेमीलाई मारिदिनु भयो ॥५६॥ भगवान्‌को चक्रद्वारा शिर काटिनाले माली र सुमाली नामका दैत्य पनि युद्धस्थलमा धराशायी भए । अनि माल्यवान्‌ले प्रचण्ड गदाले श्रीहरि र गरुडमाथि प्रहार गर्‍यो, तर तत्काल श्रीहरिले आफ्नू चक्रले गर्जिरहेका शत्रुको पनि शिर काटेर खसालिदियो ॥ ५७ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥ १० ॥

( देवासुर संग्रामको अन्त्य )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! परमपुरुष श्रीहरिको अनुकम्पाले सचेतभएर इन्द्रवायु आदि देवता जस-जसका हातबाट समरमा आहत भएका थिए, ती-ती दैत्यमाथि निर्मम प्रहार गर्नलागे ॥१॥ जब भगवान इन्द्रले कुपित भएर बलिलाई मार्नको निम्ति आफ्नू वज्र उठाए तब त्यसबेला प्रजामा हाहाकार मच्चिन गयो ॥२॥ तब

वज्र-पाणि इन्द्र युद्धस्थलमा निर्भयभावले आफ्ना साम्नु उपस्थित मनस्वी तथा शस्त्रास्त्र-सम्पन्न बलिको निरादर गर्दै भन्नलागे– ॥ ३ ॥ 'ए मूढ ! जस्तै बालकको आँखा बाँधेर तथा उनलाई आफ्नू अधीन पारेर नट तिनको पैसा लगिदिन्छन्, त्यस्तै तँ आफ्नू तुच्छ मायाहरू द्वारा हामी मायापतिलाई जित्न खोजिरहेको छस् ?॥४॥ संसारका जो पुरुष *मायाको बलले स्वर्ग जान खोज्दछन् र जसलाई स्वर्ग पनि नाघेर मुक्तिपद पाउने इच्छा रहन्छ, ती मूढलाई म उसको पूर्वपदबाट पनि तल घुन्याइदिने गर्दछु ॥५॥ हे मन्दात्मन् ! तँ थरि-थरिका दुष्ट मायाहरू रच्ने गर्दछस् , अब आज आफ्ना शतपर्वा वज्रले म तेरो शिर काटिदिन्छु । आफ्ना सम्बन्धीहरू सहित तँ यसबाट जोगिने उपाय गर' ॥६॥ बलिले भने–हे सुरेन्द्र ! कालको प्रेरणाले संग्राममा जुन सबै जनाको कीर्ति, जय-पराजय तथा मृत्यु आदि प्राप्त हुँदै रहन्छन् ॥७॥ यसैले विज्ञजन संसारलाई कालको अधीन जानेर, हर्ष अथवा शोक गर्दैनन्

पन्ति ये दिवम् ॥ तान्दस्यून्विधुनोम्यज्ञान्पूर्वस्माच्च पदादधः ॥ ५ ॥ सोऽहं दुर्मायिनस्तेऽद्य वज्रेण शतपर्वणा ॥ शिरो हरिष्ये मन्दात्मन्घटस्व ज्ञातिभिः सह ॥ ६ ॥ बलिरुवाच ॥ संग्रामे वर्तमानानां कालचोदितकर्मणाम् ॥ कीर्तिर्जयोऽजयो मृत्युः सर्वेषां स्युरनुक्रमात् ॥ ७ ॥ तदिदं कालरशनं जनाः पश्यन्ति सूरयः ॥ न हृष्यन्ति न शोचन्ति तत्र यूयमपण्डिताः ॥ ८ ॥ न वयं मन्यमानानामात्मानं तत्र साधनम् ॥ गिरो वः साधुशोच्यानां गृह्णीमो मर्मताडनाः ॥ ९ ॥ श्रीशुक उवाच ॥ इत्याक्षिप्य विभुं वीरो नाराचैर्वीरमर्दनः ॥ आकर्णपूर्णैरहनदाक्षेपैराहतः पुनः ॥ १० ॥ एवं निराकृतो देवो वैरिणा तथ्यवादिना ॥ नामृष्यत्तदधिक्षेपं तोत्राहत इव द्विपः ॥ ११ ॥ प्राहरत्कुलिशं तस्मा अमोघं परमर्दनः ॥ सयानो न्यपतद्भूमौ छिन्नपक्ष इवाचलः ॥ १२ ॥ सखायं पतितं दृष्ट्वा जम्भो बलिसखः सुहृत् ॥ अभ्ययात्सौहृदं सख्युर्हतस्यापि समाचरन् ॥१३॥ स सिंहवाह आसाद्य गदामुद्यम्य रंहसा ॥ जत्रावताडयच्छक्रं गजं च सुमहाबलः ॥१४॥ गदाप्रहारव्यथितो भृशं विह्वलितो गजः ॥ जानुभ्यां धरणीं स्पृष्ट्वा कश्मलं परमं

तर तिमीहरू मूर्ख हौ ॥८॥ जय-पराजय आदिको विषयमा आफूलाई नै साधन मान्ने एवं साधुजन द्वारा शोचनीय तिमीहरूका यी मर्म-भेदी कुरामा हामी केही पनि ध्यान दिँदैनौं ॥९॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! यस प्रकार इन्द्रलाई निरादर गरेर वीरमदमर्दक राजा बलिले कानसम्म तानेको धनुष द्वारा बाण छाडेर आक्षेपहरूले विद्ध इन्द्रलाई बाणले पनि बेधिदिए ॥१०॥ सत्यवादी शत्रुद्वारा तिरस्कृत इन्द्रले उक्त । ती आक्षेपलाई अंकुशले आहत गजराज झैं सहन सकेनन् ॥ ११ ॥ अनि शत्रुमर्दक इन्द्रले बलिमा आफ्नो अमोघ वज्र प्रहार गरे, त्यसले बलि प्वाँख काटिएको पर्वत सदृश वाहन समेत धराशायी भयो ॥१२॥ दम्भ आफ्ना मित्रलाई भूमिमा ढलेको देखेर मृत सखाको स्नेह, ऋण तिर्न इन्द्रको साम्नु गएर ढग्यो ॥१३॥ सिंहमा चढेर आएका महाबली जम्भासुरले तुरुन्त आफ्नो गदाले इन्द्रको काँध र तिनको वाहन ऐरावतमाथि प्रहार गरिदिए ॥ १४ ॥ वीर जम्भासुरको गदाको

* उदाहरण ( पुरुषार्थ गर्ने व्यक्ति नै पुरुष हुन्छ )–चोटा जङ्गलमा कुनै महात्मा बस्तथे । भोजन गर्नका लागि दिनहुँ गाउँ जान्थे । बाटोमा बीटी वेश्याको घर पर्दथ्यो । त्यो वेश्या नित्य ती महात्मासित सोध्दथी–'तिमी पुरुष हौ कि स्त्री !' महात्मा उत्तर दिन्थे–'यसको उत्तर पेरि कुनै दिन दिउँला !' यसपछि धेरै दिन बितेर गए । त्यसै बीच महात्मा बिरामी परे । अनि वेश्याले आएर भनी–'महात्माजी ! मेरो प्रश्नको उत्तर दिनुहोस् !' महात्माले भने–'म पुरुष हुँ, किनकि यस लोकमा काम्य र शुद्ध आचरण गरेर म परमधाम गइरहेको छु ।' वेश्याले भनी–'पुरुष त तिमी पहिलेदेखि नै थियौ । अनि पहिले नै त्यो कुरा नभनेर आज किन भनिरहेका हौ ?' महात्माले भने–पुरुष जातमा जन्म लिएर नै कोही पुरुष हुँदैन । बरु पुरुषार्थका काम गरेर मनुष्यलाई पुरुषत्व प्राप्त हुन्छ । मलाई यस्तो लागिरहेको छ–मैले आफ्नो पुरुषार्थले पुरुष जातिलाई सार्थक पारेको छु !' यति भनेर महात्माले प्राण त्यागिदिए ।

760

प्रहारले व्यथित तथा व्याकुल ऐरावत पृथ्वीमा घुँडा टेकेर छटपटाउन लाग्यो ॥१५॥ अनि इन्द्र-सारथि मातलिले हजार अश्व जोतिएको रथ ल्याए र देवराज इन्द्र आहत हात्तीलाई छाडेर रथमा सवार भए ॥१६॥ त्यो देखेर दानववीर जम्भले मातलि सारथीको त्यस कार्यको सन्हनीनी गऱ्यो र मुसुक हाँस्तै त्रिशूलले त्यसमाथि प्रहार गऱ्यो ॥१७॥ मातलीले धैर्य धारण गरेर त्यो दुःसह कष्ट सहन गरे। अनि इन्द्रले अतिशय क्रोधित भएर आफ्नो अमेय वज्रले जम्भको मस्तक काटिदिए ॥ १८ ॥ जम्भ मरेपछि देवर्षि नारदको मुखबाट यो समाचार सुनेर ज्ञातिबन्धु नमुचि, बल तथा पाक तुरुन्त रणभूमिमा आएर डटे ॥१९॥ त्यहाँ आउनासाथ आफ्ना कटु-वाक्यले इन्द्रको मर्मस्थललाई पीडित पार्दै ती उनीमाथि यस प्रकार बाण वर्षा गर्नलागे–जस्तै मेघ पर्वतमा जलको धारा लगाइदिन्छन् ॥२०॥ बलले फुर्तिसाथ हात-चलाउँदै युद्धस्थलमा इन्द्रको रथका हजार अश्वलाई बाणहरूले घायल पारिदिए ॥२१॥ उता पाकले एकै साथ सय बाण धनुमा राख्दै र छोड्दै गरेर मातलि र अङ्ग प्रत्यङ्ग समेत रथलाईपृथक्-पृथक् पारिदियो। त्यसयुद्ध भूमिमा यो विचित्र कुराभयो॥४२॥नमुचिले

ययौ ॥ १५ ॥ ततो रथो मातलिना हरिभिर्दशशतैर्वृतः ॥ आनीतो द्विपमुत्सृज्य रथमारुरुहे भुवि ॥ १६ ॥ तस्य तत्पूजयन्कर्म यन्तुर्दानवसत्तमः ॥ शूलेन ज्वलता तं तु स्मयमानोऽहनन्मृधे ॥ १७ ॥ सेहे रुजं सुदुर्मर्षां सत्त्वमालम्ब्य मातलिः ॥ इन्द्रो जम्भस्य संक्रुद्धो वज्रेणापाहरच्छिरः ॥ १८ ॥ जम्भं श्रुत्वा हतं तस्य ज्ञातयो नारदादृषेः ॥ नमुचिश्च बलः पाकस्तत्रोपेतुस्त्वरान्विताः ॥१९॥ वचोभिः परुषैरिन्द्रमर्दयन्तोऽस्य मर्मसु ॥ शरैरवाकिरन्मेघा धाराभिरिव पर्वतम् ॥२०॥ हरीन्दश शतान्याजौ हर्यश्वस्य बलः शरैः ॥ तावद्भिरर्दयामास युगपल्लघुहस्तवान् ॥ २१ ॥ शताभ्यां मातलिं पाको रथं सावयवं पृथक् ॥ सकृत्सन्धानमोक्षेण तदद्भुतमभूद्रणे ॥२२॥ नमुचिः पंचदशभिः स्वर्णपुङ्खैर्महेषुभिः ॥ आहत्य व्यनदत्संख्ये सतोय इव तोयदः ॥ २३ ॥ सर्वतः शरकूटेन शक्रं सरथसारथिम् ॥ छादयामासुरसुराः प्रावृट्सूर्यमिवाम्बुदाः ॥ २४ ॥ अलक्षयन्तस्तमतीव विह्वला विचुक्रुशुर्देवगणाः सहानुगाः ॥ अनायकाः शत्रुबलेन निर्जिता वणिक्पथा भिन्ननवो यथार्णवे ॥ २५ ॥ ततस्तुराषाडिषुबद्धपञ्जराद्विनिर्गतः साश्वरथध्वजाग्रणीः ॥ बभौ दिशः खं पृथिवीं च रोचयन्स्वतेजसा सूर्य इव क्षपात्यये ॥ २६ ॥ निरीक्ष्य पृतनां देवः परैरभ्यर्दितां रणे ॥ उदयच्छद्रिपुं हन्तुं वज्रं वज्रधरो रुषा ॥ २७ ॥ स तेनैवाष्टधारेण शिरसी बलपाकयोः ॥ ज्ञातीनां पश्यतां राजञ्जहार जनयन्भयम् ॥ २८ ॥ नमुचिस्तद्वधं दृष्ट्वा शोकामर्ष-

पनि सुवर्णपङ्ख युक्त पन्ध्र बाणले इन्द्रलाई आहत पारेर युद्धस्थलमा सजल मेघ झैं गम्भीर गर्जन गऱ्यो ॥ २३ ॥ त्यसपछि जसरी मेघ वर्षाकालमा सूर्यलाई ढाक्दछ, त्यस्तै नै ती दानवले रथ र सारथी समेत इन्द्रलाई सर्वतिरबाट आफ्ना बाणसमूहद्वारा ढाकिदिया ॥२४॥ शत्रुसेनाद्वारा पराजितदेवता आफ्ना प्रभु देवराजलाई नदेखेर व्याकुल भए र नायक-विहीन भएर आफ्ना अनुचर सहित, ती बाणिकहरू झैं–जसको डुङ्गा समुद्रको माझमा टुटेको होस्–हाहाकार मच्याउन लागे ॥२५॥ तत्काल इन्द्रदेव अश्व, रथ, ध्वजा र सारथी सहित शत्रुद्वारा त्यस बाण निर्मित पिंजराबाट बाहिर निस्केर आफ्नो तेजले दिशा, आकाश तथा पृथ्वीलाई प्रकाशित पार्दै रात्रिको अन्त्यमा उदित सूर्यनारायण सदृश सुशोभित भए ॥२६॥ आफ्ना सेनालाई समराङ्गणमा शत्रुहरूद्वारा पीडित देखेर वज्रधर इन्द्रले अति क्रोधित भएर शत्रुहरूलाई मार्नको निम्ति वज्र उठाए ॥२७॥ हे राजन्! इन्द्रले त्यो अष्टधार वज्रद्वारा अन्य जाति-

बन्धुहरूले देख्ता-देख्तै दैत्य सेनामा भयका सचार गद बल र पाकका शिर काटादए ॥२८॥ हे राजन् ! बल र पाक मरेका देखेर नमुचिले शोक, अमर्ष र रोषमा भरिएर इन्द्रलाई मार्नको निम्ति ठूलो उद्योग गऱ्यो ॥२९॥ त्यही आवेशमा त्यो घण्ट र सुवर्णका आभूषणहरूले आभूषित एक लौह-त्रिशूल उठाएर इन्द्रलाई झम्ट्यो र-हेर, अब तँ मारिस् !' यति भन्दै हषाऱ्यो र सिंह समान गर्जन गर्दै इन्द्रमाथि त्यो त्रिशूल चलाइदियो ॥३०॥ हे राजन् ! ठूलो बेगले आफूतिर आउनलागेको त्रिशूल देखेर इन्द्रले अगणित वाण छाडेर आकाशमै त्यसका हजारौं टुक्रा पारिदिए र फेरि बर्ता रिसाएर त्यसको घाँटी काट्नको निम्ति गर्दन ताकेर वज्र प्रहार गरे ॥३१॥ तर इन्द्रद्वारा प्रयुक्त त्यो ओजस्वी वज्रले नमुचिको गर्धनको छालासम्म पनि काट्न सकेन । यो ठूलो आश्चर्यको कुरा थियो—जुन वज्रले महाबलवान् वृत्रासुरलाई पनि मारिदियो, त्यो नमुचिको गर्दनको छालासित पनि यति बर्ता तिरष्कृत भयो ॥३२॥ जब वज्रले शत्रुको कुनै हानि हुन सकेन तब इन्द्रलाई निकै भय भयो । ती विचार गर्नलागे—'हरे ! दैवसंयोगले यो कस्तो लोकविमोहक व्यतिक्रम भयो ?

रुषान्वितः ॥ जिघांसुरिन्द्रं नृपते चकार परमोद्यमम् ॥ २९ ॥ अश्मसारमयं शूलं घण्टावद्धेममभूषणम् ॥ प्रगृह्याभ्यद्रवत्क्रुद्धो हतोऽसीति वितर्जयन् ॥ प्राहिणोद्देवराजाय निनदन्मृगराडिव ॥३०॥ तदाऽपतद्गगनतले महाजवं विचिच्छिदे हरिरिषुभिः सहस्रधा ॥ तमाहनन्नृप कुलिशेन कन्धरे रुषान्वितस्त्रिदशपतिः शिरो हरन् ॥ ३१ ॥ न तस्य हि त्वचमपि वज्र ऊर्जितो बिभेद यः सुरपतिनौजसेरितः ॥ तदद्भुतं परमतिवीर्यवृत्रभित्तिरस्कृतो नमुचिशिरोधरत्वचा ॥३२॥ तस्मादिन्द्रोऽबिभेच्छत्रोर्वज्रः प्रतिहतो यतः ॥ किमिदं दैवयोगेन भूतं लोकविमोहनम् ॥३३॥ येन मे पूर्वमद्रीणां पक्षच्छेदः प्रजात्यये ॥ कृतो निविशतां भारैः पतत्त्रैः पततां भुवि ॥३४॥ तपःसारमयं त्वाष्ट्रं वृत्रो येन विपाटितः ॥ अन्ये चापि बलोपेताः सर्वास्त्रैरक्षतत्वचः ॥ ३५ ॥ सोऽयं प्रतिहतो वज्रो मया मुक्तोऽसुरेऽल्पके ॥ नाहं तदाददे दण्डं ब्रह्मतेजोऽप्यकारणम् ॥३६॥ इति शक्रं विषीदन्तमाह वागशरीरिणी ॥ नायं शुष्कैरथो नार्द्रैर्वधमर्हति दानवः ॥ ३७ ॥ मयाऽस्मै यद्वरो दत्तो मृत्युर्नैवार्द्रशुष्कयोः ॥ अतोऽन्यश्चिन्तनीयस्त उपायो मघवन्रिपोः ॥ ३८ ॥ तां दैवीं गिरमाकर्ण्य मघवा सुसमाहितः ॥ ध्यायन्फेनमथापश्यदुपायमुभयात्मकम् ॥ ३९ ॥ न शुष्केण न चार्द्रेणजहारनमुचेः शिरः ॥ तं तुष्टुवुर्मुनिगणा माल्यैश्चावाकिरन्विभुम् ॥ ४० ॥ गन्धर्वमुख्यौ जगतुर्विश्वावसुपरावसू ॥ देवदुन्दुभयो नेदुर्नर्तक्यो ननृतुर्मुदा ॥ ४१ ॥ अन्येऽप्येवं प्रति-

परापूर्वमा प्वाँखले उडेर जतातै जाने तथा भारवश पृथ्वीमा झर्ने पर्वतहरूद्वारा प्रजाको नाश भएको देखेर जसद्वारा मैले तिनको पखेटा काटें, जसको द्वारा त्वष्टाको बलवती तपस्याको फल वृत्रासुरलाई मारिदियो तथा अन्य विविध शस्त्रास्त्रले जसको छाला पनि खोस्याउन सकेन, यस्ता कैयौं महाबली वीरहरू माऱ्यो । मेरो यो वज्र यस तुच्छ दानवलाई केही गर्न सकेन । अतः ब्रह्मतेजोमय भएर पनि अब म यस देकामे अस्त्र धारण गर्दिन ॥३४-३६॥ जब इन्द्र यसरी विषाद गरिरहेका थिए, त्यसै बखत आकाशवाणी भयो–'हे इन्द्र ! यो दानव ( नमुचि ) कुनै चीसो वा सुखेको अस्त्रले मर्दैन, किनकि यसले वर पाएको छ–'कुनै चीसो वा सुकेको वस्तुले तेरो मृत्यु हुनेछैन ।' अतः यसलाई मार्न तिमी कुनै अन्य उपाय विचार गर' ॥३७॥३८॥ आकाशवाणी सुनेर देवराजले अति सावधान मनले विचार गर्दै चीसो तथा भिजेको यी दुवै गुणले हीन जलको फींजले त्यसलाई मार्ने निश्चय गरे

॥३९॥ अतः चीसो र सुखेको गुणले रहित पानीको फींजले इन्द्रले नमुचिको घाटी काटे। अनि सबै मुनिजन देवराज इन्द्रमाथि पुष्पवर्षा गर्दै स्तुति गर्नलागे ॥ ४० ॥ उता गन्धर्वश्रेष्ठ विश्वावसु र परावसु तिनको गुण गाउन लागे, देव-दुन्दुभी बज्न थाले र नर्तकीहरू आनन्दले नाच्नलागे। वायु, अग्नि र वरुणादि अन्यान्य देवताहरूले पनि आफ्ना-आफ्ना प्रतिपक्षीहरूको शस्त्रसमूहले, सिंहले मृगलाई मारे झैं गरी मारिदिए ॥४१-४२॥ हे राजन् ! अनि ब्रह्माजी द्वारा पठाइएका देवर्षि नारदले दानवहरू नष्ट भएका देखेर देवताहरूलाई अब युद्ध नगर भनी थामिदिए। नारदजीले भने–भगवान्का भुजाको बलले तिमीहरूले अमृत पिउन पायौ र लक्ष्मीले तिम्रो वैभव वृद्धि गरिदिइन्। अब तिमीहरू युद्धबाट उपरत भएर विश्राम गर ॥४३-४४॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! त्यसै अनुसार देवता क्रोधको वेग रोकेर मुनिका वचनको सम्मान गर्दै स्वर्गलोक फर्किए। त्यस बखत तिनका अनुचरहरू उनकै गुण गान गरिरहेका थिए ॥४५॥ त्यस भीषण युद्धबाट बाँचेका असुर नारदजीको अनुमतिले वज्राहत बलिलाई अस्ताचल लिएर गए ॥४६॥ त्यहाँ जसको अङ्ग-भङ्ग भएको थिएन र जसको

इन्द्रान्वाय्वग्निवरुणादयः ॥ सूदयामासुरस्त्रौघैर्मृगान्केसरिणो यथा ॥ ४२ ॥ ब्रह्मणा प्रेषितो देवान्देवर्षिर्नारदो नृप ॥ वारयामास विबुधान्दृष्ट्वा दानवसंक्षयम् ॥ ४३ ॥ नारद उवाच ॥ भवद्भिरमृतं प्राप्तं नारायणभुजाश्रयैः ॥ श्रिया समेधिताः सर्व उपारमत विग्रहात् ॥४४॥ श्रीशुक उवाच ॥ संयम्य मन्युसंरम्भं मानयन्तो मुनेर्वचः ॥ गीयमाना अनुचरैर्ययुः सर्वे त्रिविष्टपम् ॥४५॥ येऽवशिष्टा रणे तस्मान्नारदानुमतेन ते ॥ बलिं विपन्नमादाय अस्तंगिरिमुपागमन् ॥४६॥ तत्राविनष्टावयवान्विद्यमानशिरोधरान् ॥ उशना जीवयामास संजीविन्या स्वविद्यया ॥ ४७ ॥ बलिश्चोशनसा स्पृष्टः प्रत्यासन्नेन्द्रियस्मृतिः॥पराजितोऽपि नाखिद्यल्लोकतत्त्वविचक्षणः ॥४८॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कंधे देवासुरसंग्रामे एकादशोऽध्यायः ॥११॥

श्रीबादरायणिरुवाच ॥ वृषध्वजो निशम्येदं योषिद्रूपेण दानवान् ॥ मोहयित्वाऽसुरगणान्हरिः सोममपाययत् ॥१॥ वृषमारुह्य गिरिशः सर्वभूत–
गणैर्वृतः ॥ सह देव्या ययौ द्रष्टुं यत्रास्ते मधुसूदनः ॥ २ ॥ सभाजितो भगवता सादरं सोमया भवः ॥ सूपविष्ट उवाचेदं प्रतिपूज्य स्मयन्हरिम्
॥ ३ ॥ श्रीमहादेव उवाच ॥ देवदेव जगद्व्यापिञ्जगदीश जगन्मय ॥ सर्वेषामपि भावानां त्वमात्मा हेतुरीश्वरः ॥ ४ ॥ आद्यन्तावस्य यन्मध्यमि-

गर्दन विद्यमान थियो, ती सबै दैत्यलाई श्रीशुक्राचार्यले आफ्नो सञ्जीवनी विद्याले पुनः जीवित पारिदिए ॥ ४७ ॥ राजा बलि शुक्राचार्यको हातको स्पर्श पाउनासाथ इन्द्रिय तथा स्मरण-शक्तिले सम्पन्न भए। ती संसारका तत्त्व जान्ने हुनाले पराजित भए पनि क्लेश भएन ॥४८॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपालीभाषाटीकायामेकादशोऽध्यायः॥११॥

(भगवान्को मोहिनी रूप देखेर शंकरजी मोहित हुनु)–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! जब श्रीमहादेवले सुन्नुभयो–भगवान्ले स्त्रीरूपले दैत्यहरूलाई मोहमा पारेर देवताहरूलाई अमृत पिलाएका थिए, तब ती उनको त्यो अनूप रूप हेर्न साँढेमा चढेर आफ्ना सबै भूतगणले घेरिई, पार्वतीलाई पनि साथमा लिएर त्यस स्थानमा गए जहाँ मधुसूदन भगवान् विराजमान थिए ॥१-२॥ भगवान्ले देवी उमासमेत श्रीमहादेवको यथोचित आदर-सत्कार गरे। स्वस्थचित्तले विराजमान भइसकेपछि श्रीमहादेवजी विष्णु भगवानको प्रशंसा गर्दै मुसु-मुसु हाँसेर भन्न लाग्नु भयो ॥३॥ श्रीमहादेवजीले आज्ञा भयो—हे देवाधिदेव ! हे जगद्व्यापिन् ! हे जगन्मय ! हजुर सबै भावहरूका आत्मा एवं हेतु र ईश्वर हुनुहुन्छ ॥ ४ ॥ जसले यस

संसारकोको आदि, अन्त्य र मध्य हुनुहुन्छ, तर जुन अविनाशीको कुनै आदि, मध्य, अन्त्य छैन र जसमा न इदं अहम् ( भोक्ता ) र बाह्य ( भोग ) छ, त्यो सत्य र चेतनस्वरूप ब्रह्म हजुर नै हुनुहुन्छ ॥५॥ त्यसैले त निष्काम तथा कल्याणकामी मुनिजन इहलोक र परलोकको आसक्ति त्यागेर हजुरका पवित्र चरण-कमलको उपासना गर्दछन् ॥ ६ ॥ हजुर अमृतमय, त्रिगुण, विशोक, आनन्दमात्र, निर्विकार सर्वमय तथा सबभन्दा पृथक् पूर्ण ब्रह्म छन् । तैपनि हजुर विश्वका जन्म, स्थिति तथा अन्त्यका कारण हुनुहुन्छ । हजुर नै उसका आत्मा, ईश्वर र शासक हुनुहुन्छ । स्वयं निरपेक्ष रहेर पनि हजुरले जीवहरूको अपेक्षा अनुसार उनलाई शुभाशुभ फल प्रदान गर्नुभएको छ ॥७॥ हे नाथ ! एकमात्र हजुर नै द्वैतरूप कार्यवर्ग र अद्वैतरूप कारण हुनुहुन्छ । जस्तै–कुण्डलादि कार्यरूपमा परिणत र प्राकृत सुवर्ण वास्तवमा यौटै हुन्छ । अज्ञानले मानिसहरू हजुरमा विकल्प मानिलिन्छन्, किनकि उपाधिहीन परम-पुरुषमा गुणहरूका कारणले भेद देखिन्छ ॥८॥ हे प्रभो ! केही व्यक्ति ( वेदान्ती ) हजुरलाई ब्रह्म मान्दछन्, केही व्यक्ति (मीमांसक) हजुरलाई धर्म भनेर वर्णन गर्दछन् । केही व्यक्ति

दमन्यदहं बहिः ॥ यतोऽव्ययस्य नैतानि तत्सत्यं ब्रह्मविद्भवान् ॥ ५ ॥ तवैव चरणाम्भोजं श्रेयस्कामा निराशिषः ॥ विसृज्योभयतः सङ्गं मुनयः समुपासते ॥ ६ ॥ त्वं ब्रह्म पूर्णममृतं विगुणं विशोकमानंदमात्रमविकारमनन्यदन्यत् ॥ विश्वस्य हेतुरुदयस्थितिसंयमानामात्मेश्वरश्च तदपेक्षतयाऽनपेक्षः ॥ ७ ॥ एकस्त्वमेव सदसद्द्वयमद्वयं च स्वर्णं कृताकृतमिवेह न वस्तुभेदः ॥ अज्ञानतस्त्वयि जनैर्विहितो विकल्पो यस्माद्गुणव्यतिकरो निरुपाधिकस्य ॥ ८ ॥ त्वां ब्रह्म केचिदवयन्त्युत धर्ममेके एके परं सदसतो पुरुषं परेशम् ॥ अन्येऽवयंति नवशक्तियुतं परं त्वां केचिन्महापुरुषमव्ययमात्मतंत्रम् ॥ ९ ॥ नाहं परायुर्ऋषयो न मरीचिमुख्या जानंति यद्विरचितं खलु सत्त्वसर्गाः ॥ यन्मायया मुषितचेतस ईश दैत्यमर्त्यादयः किमुत शश्वदभद्रवृत्ताः ॥ १० ॥ स त्वं समीहितमदः स्थितिजन्मनाशं भूतेहितं च जगतो भवबंधमोक्षौ ॥ वायुर्यथा विशति खं च चराचराख्यं सर्वं तदात्मतयावगमोऽवरुन्त्से ॥ ११ ॥ अवतारा मया दृष्टा रममाणस्य ते गुणैः ॥ सोऽहं तद्द्रष्टुमिच्छामि यत्ते योषिद्वपुर्धृतम् ॥ १२ ॥ येन सम्मोहिता दैत्याः पायिताश्चामृतं सुराः ॥ तद्दिदृक्षव आयाताः परं कौतूहलं हि नः ॥ १३ ॥ श्रीशुक उवाच ॥ एवमभ्यर्थितो विष्णुर्भगवाञ्शूलपाणिना ॥

(सांख्यशास्त्री) प्रकृति र पुरुषभन्दा पनि पर परमेश्वर, केही व्यक्ति (पाञ्चरात्र-मतावलम्बी) नौ शक्तियुक्त परमपुरुष, केही व्यक्ति ( पातञ्जल योगलाई मान्ने ) हजुरलाई आत्मतन्त्र तथा अविनाशी ठान्दछन् ॥९॥ हे ईश ! सत्त्वगुणबाट उत्पन्न म, ब्रह्माजी र मरीचि आदि सबै मुनिजन हजुरले रचेको संसारलाई पनि जान्न सक्तैनन् । अनि उनै हजुरकै मायाले मोहित असदाचारी अर्थात् राजस-तामस प्रकृतिका दैत्य तथा मनुष्यादि बिचरा कसरी जान्न सक्छन् ? ॥ १० ॥ हे प्रभो ! सर्वात्मक र ज्ञानस्वरूप हुनाले जस्तै वायु आकाशमा व्याप्त रहन्छ त्यस्तै हजुर जगत्‌मा अनुप्रविष्ट भएर त्यसको चेष्टा स्थिति, जन्म, नाश, प्राणीहरूका कर्म, संसारका बन्धन र मोक्ष सबै कुरा जान्दछन् ॥११॥ हे नाथ ! गुणको भरमा क्रीडा गर्दै हजुरले जुन जुन अवतार लिनुभएको छ, मैले ती सबै देखेको छु । अतः हजुरले उस बखत जुन मोहिनी रूप धारण गर्नुभएको थियो, त्यो म हेर्न इच्छा राख्दछु ॥१२॥ जुन अनुपम रूपले दैत्यगणलाई मोहित पारेर देवताहरूलाई अमृतपान गराउनुभएको थियो, त्यो हेर्ने मेरो पनि इच्छा छ, त्यो रूप हेर्नन नै आएको हुँ ॥१३॥ शुकदेव भन्नुहुन्छ–हे राजन्! शूलपाणि

7414

शंकर भगवान्‌ले यस प्रकार प्रार्थना गरेपछि विष्णु भगवान्‌ले गम्भीरभावले हाँस्दै भन्नुभयो ।।१४।। श्रीभगवान् भन्नुहुन्छ–हे शङ्करजी ! जब अमृतको पात्र असुरका हातमा गयो तब देवगणको कार्य साधन र दैत्यगणलाई कुतूहलमा पार्नको लागि म स्त्री बनेको थिएँ ।।१५।। हे सुरसत्तम ! हजुर त्यसलाई हेर्न अब यति उत्सुक हुनुहुन्छ भने कामी पुरुषहरूलाई अत्यन्त आदरणीय र कामोद्दीपक मोहिनीरूप मह्जुलाई देखाउँछु ।।१६।। शुकदेव भन्नुहुन्छ–हे राजन् ! यति भनेर भगवान त्यहीं अन्तर्धान भए र पार्वती तथा शङ्कर भगवान चारैतिर आँखा डुलाएर हेर्नलागे ।।१७।। त्यही समयमा उनले रङ्ग-विरङ्गका फूलहरू र अरुणवर्ण नवपल्लवयुक्त वृक्षादिले शोभित उपवनमा डुलिरहेकी यौटी सुन्दरी स्त्री देखे–जो कन्दुक उफारिकन प्रसन्नता साथ खेलिरहेकी थिई र जसको देदीप्यमान दुकूलले समलंकृत नितम्ब प्रदेशमा कन्धनी झण्डिइरहेको थियो ।।१८।। कन्दुक समाउने र उफार्नाले हल्लने मालाका भारले उसको पातलो कम्मर पद-पदमा मानौं लच्कन्दै गइरहेको थियो । त्यो आफ्ना चञ्चल चरण-पल्लवलाई फ्याँक्दै हिड्दथी ।।१९।। सबै दिशाहरूमा उफ्रने कन्दुकलाई चपलताले त्यस विशाल एवं

प्रहस्य भावगम्भीरं गिरिशं प्रत्यभाषत ॥१४॥ श्रीभगवानुवाच ॥ कौतूहलाय दैत्यानां योषिद्वेषो मया धृतः ॥ पश्यता सुरकार्याणि गते पीयूषभाजने ॥१५॥ तत्तेऽहं दर्शयिष्यामि दिदृक्षोः सुरसत्तम ॥ कामिनां बहु मन्तव्यं सङ्कल्पप्रभवोदयम् ॥ १६ ॥ श्रीशुक उवाच ॥ इति ब्रुवाणो भगवाँस्तत्रै-वान्तरधीयत ॥ सर्वतश्चारयंश्चक्षुर्भव आस्ते सहोमया ॥१७॥ ततो ददर्शोपवने वरस्त्रियं विचित्रपुष्पारुणपल्लवद्रुमे ॥ विक्रीडतीं कन्दुकलीलया लस-द्दुकूलपर्यस्तनितम्बमेखलाम् ॥१८॥ आवर्तनोद्वर्तनकम्पितस्तनप्रकृष्टहारोरुभरैः पदे पदे ॥ प्रभज्यमानामिव मध्यतश्चलत्पदप्रवालं नयतीं ततस्ततः ॥ १९ ॥ दिक्षु भ्रमत्कन्दुकचापलैर्भृशं प्रोद्विग्नतारायतलोललोचनाम् ॥ स्वकर्णविभ्राजितकुण्डलोल्ल सत्कपोलनीलालकमण्डिताननाम् ॥ २० ॥ श्लथद्दुकूलं कबरीं च विच्युतां सन्नह्यतीं वामकरेण वल्गुना ॥ विनिघ्नतीमन्यकरेण कन्दुकं विमोहयन्तीं जगदात्ममायया ॥ २१ ॥ तां वीक्ष्य देव इति कन्दुकलीलयेषद्व्रीडास्फुटस्मितविसृष्टकटाक्षमुष्टः ॥ स्त्रीप्रेक्षणप्रतिसमीक्षणविह्वलात्मा नात्मानमन्तिक उमां स्वगणांश्च वेद ॥२२॥ तस्याः करा-ग्रात्स तु कन्दुको यदा गतो विदूरं तमनुव्रजत्स्त्रियाः ॥ वासः ससूत्रं लघुमारुतोऽहरद्भवस्य देवस्य किलानुपश्यतः ॥ २३ ॥ एवं तां रुचिरापाङ्गीं दर्शनीयां मनोरमाम् ॥ दृष्ट्वा तस्यां मनश्चक्रे विषज्जन्त्यां भवः किल ॥ २४ ॥ तयाऽपहृतविज्ञानस्तत्कृतस्मरविह्वलः ॥ भवान्या अपि पश्यन्त्या गतह्री·

चञ्चल नयन भएकी तरुणीका नेत्रका तारा उद्विग्न भइरहेथे र कानमा झुलिरहेका राम्रा कुण्डलले सुशोभित कपोलमा छरिएका नीलो अलकले उसको मुखमण्डल अझ राम्रो देखिइरहेथ्यो ।।२०।। त्यो सुन्दर लागेको सारी एवं शिथिल वेणीलाई आफ्ना कमनीय बायाँ करकमलले सम्हाल्दै जान्थ्यो र अर्को हातले कन्दुक उफारी–उफारी मायाले संसारलाई मोहित पारिरहेकी थिई ।।२१।। त्यो देखेर श्रीमहादेव मान्दुक-क्रीडाले सलज्ज र स्फुट हास्यपूर्ण कटाक्षमा मोहित हुन गए । त्यस कामिनीतिर हेर्ने र उसको द्वारा आफूलाई एकहोरो दृष्टिले हेरिनाले उनको चित्त चञ्चल भएर आयो र आफ्नो नगीचै बसेकी पार्वती एवं गणहरूको पनि कुनै ध्यान रहेन ।।२२।। ती रमणीको हातबाट जब त्यो कन्दुक अलि पर गयो तब श्रीशिवजीको नगीचै कन्दुकको पछि-पछि दगुर्ने कामिनीको कटिसूत्रसहित मसीनो सारी वायुले उडाएर अलग्ग पारिदियो ।।२३।। त्यो सुन्दर कटाक्षयुक्त मनोहारिणीलाई देखेर उसलाई आफूतिर

आकर्षित र आसक्त भएर श्रीमहादेवजीको मन त्यसैमा गएर अल्झियो। उसले शिवको विवेक हरिलियो र ती सुन्दरीको चेष्टाले कामातुर शिव पार्वतीलाई पनि छाडेर दगुरे॥२५॥ महा-
देवलाई आफूतिर आउनलागेका देखेर ती वस्त्रहीना कामिनी साह्रै लज्जित भइन् र हाँस्तै वृक्षको आडमा लुक्न गइन् ॥ २६ ॥ तर शङ्कर भगवान् इन्द्रिय हरिनाले यस प्रकार उसको
पछि–पछि दगुरे, जसरी ढोईको पछि–पछि कामदेवले वशीभूत हात्ती दगुर्छ॥२७॥ शिवले वेगले गएर त्यसको केशपाश समाए र उसको इच्छा नभए पनि उसलाई आफ्ना दुवै भुजामा
बेस्सरी अँठ्याए ॥२८॥ अनिजसरी हात्तीढोईकोआलिङ्गनगर्दछ, त्यसै गरी शङ्करसित आलिङ्गित बाला हात खुट्टा पछारेर आफूलाई मुक्त पार्नलागी, त्यसले उसका कपाल छरिए ॥ २९ ॥
त्यसै बीच हे तात ! आफूलाई शिवजीको बाहुपाशबाट मुक्त पारी ईश्वर-रचित त्यो स्थूल नितम्ब भएकी माया त्यहाँबाट भाग्दै हिंडी। आफ्नो शत्रु कामदेवसित पराजित शङ्कर
अब ती अद्भुतकर्मा श्रीहरि पछि-पछि हिंडे ॥ ३० ॥ ३१ ॥ मैथुनको इच्छुक ढोईको पछि-पछि दगुर्ने मदोन्मत्त हात्तीको सदृश ती कामिनीको पछि-पछि दगुर्दै जाँदा अमोघवीर्य भएका

स्तत्पदं ययौ ॥२५॥ सा तमायान्तमालोक्य विवस्त्रा व्रीडिता भृशम्॥ निलीयमाना वृक्षेषु हसन्ती नान्वतिष्ठत ॥२६॥ तामन्वगच्छद्भगवान्भवः प्रमुषि-
तेन्द्रियः ॥ कामस्य च वशं नीतः करेणुमिव यूथपः ॥२७॥ सोऽनुव्रज्यातिवेगेनगृहीत्वाऽनिच्छतीं स्त्रियम् ॥ केशबन्ध उपानीयबाहुभ्यां परिषस्वजे॥२८॥
सोपगूढा भगवता करिणा करिणी यथा ॥ इतस्ततः प्रसर्पन्ती विप्रकीर्णशिरोरुहा ॥२९॥ आत्मानं मोचयित्वाऽङ्ग सुरर्षभभुजान्तरात् ॥ प्राद्रवत्सा
पृथुश्रोणी माया देवविनिर्मिता ॥ ३० ॥ तस्यासौ पदवीं रुद्रो विष्णोरद्भुतकर्मणः ॥ प्रत्यपद्यत कामेन वैरिणेव विनिर्जितः ॥३१॥ तस्यानुधावतो
रेतश्चस्कन्दामोघरेतसः ॥ शुष्मिणो यूथपस्येव वासितामनुधावतः ॥३२॥ यत्र यत्रापतन्मह्यां रेतस्तस्य महात्मनः ॥ तानि रूप्यस्य हेम्नश्च क्षेत्राण्या-
सन्महीपते ॥३३॥ सरित्सरःसु शैलेषु वनेषूपवनेषु च ॥ यत्र क्व चासन्नृषयस्तत्र संनिहितो हरः ॥३४॥ स्कन्ने रेतसि सोऽपश्यदात्मानं देवमायया ॥
जडीकृतं नृपश्रेष्ठ संन्यवर्तत कश्मलात् ॥३५॥ अथावगतमाहात्म्य आत्मनो जगदात्मनः ॥ अपरिज्ञेयवीर्यस्य न मेने तदुहाद्भुतम् ॥३६॥ तमविक्लव-
मव्रीडमालक्ष्य मधुसूदनः ॥ उवाच परमप्रीतो बिभ्रत्स्वां पौरुषीं तनुम् ॥ ३७ ॥ श्रीभगवानुवाच ॥ दिष्ट्या त्वं विबुधश्रेष्ठ स्वां निष्ठामात्मना
स्थितः ॥ यन्मे स्त्रीरूपया स्वैरं मोहितोऽप्यङ्ग मायया ॥ ३८ ॥ को नु मेऽतितरेन्मायां विषक्तस्त्वदृते पुमान् ॥ तांस्तान्विसृजतीं भावान्दुस्तराम-

महादेवजीको वीर्य स्खलित भयो ॥३२॥ हे राजन् ! महात्मा रुद्र भगवान्को वीर्य पृथ्वीमा जहाँ-जहाँ चुह्यो त्यहीं-त्यहीं सुन र चाँदीका खानी हुनगए॥३३॥ नदी, सरोवर पर्वत, वन,
उपवन र जहाँ–जहाँ ऋषि मुनि बस्तथे, ती सबै स्थानहरूमा शङ्कर भगवान् ती मोहिनी भगवानलाई लखेट्तै उनको पछि-पछि दगुरीरहे। हे नृपसत्तम ! वीर्यपात भइ केपछि भगवा
शङ्करजीले आफूलाई भगवानकी मायाले मोहित ठानेर विषयासक्तिबाट निवृत्त भए ॥३४॥३५॥ त्यस घटनालाई अचिन्त्यशक्ति अगन्मय परमात्माको महिमा जानेपछि उनलाई कुनै
विस्मय भएन ॥३६॥ शिवजीलाई विषाद तथा लज्जाले रहित देखेर भगवान् मधुसूदन पुरुषरूपले प्रकट भएर प्रसन्न हुँदै भने– ॥ ३७ ॥ श्रीभगवानले आज्ञा भयो–हे देवश्रेष्ठ ! मेरी
स्त्रीरूपिणी मायाको कामनावश अतिशय मेरो हित भएर पनि अन्त्यमा हजुर आफ्नू निष्ठामा स्थित हुनुभयो–यही साह्रै ठूलो कुरा छ ॥३८॥ हजुर बाहेक अरू कुन यस्तो पुरुष छ, जुन

746

विचित्र हाउ-भाउयुक्त र अजितेन्द्रिय पुरुषहरूको निम्ति दुस्त्यज मेरी मायामा अल्झेर त्यसबाट पारी तर्नुभयो ॥ ३९ ॥ सृष्टिको कारण र कालस्वरूप म परमेश्वरको एक अंशयुक्त मेरी गुणमयी माया अब कहिल्यै पनि हजुरलाई जित्न सक्नेछैन ॥४०॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! श्रीवत्सलाञ्छन श्रीहरिद्वारा सत्कारपूर्वक महादेवजी उनीसित आज्ञा लिएर आफ्ना गणहरूका साथै आफ्नू धाममा पाल्नुभयो ॥४१॥ हे भारत ! सबै मुनिजनका सम्मुख शङ्कर आफ्नै अंशबाट उत्पन्न ती मायाको पार्वतीसित प्रसन्नतापूर्वक वर्णन गर्दै भन्न लाग्नुभयो– ॥४२॥ हे देवि ! ती परमपुरुष, परदेवता तथा अजन्मा श्रीहरिकी माया के कहिले तिमीले देखेकी छौ ? म यद्यपि भगवान्‌का कलाको ज्ञाताहरूमा श्रेष्ठ र स्वतन्त्र हुँ तैपनि म त्यसद्वारा मोहित भएँ, अनि अरु परतन्त्र जीवहरू मोहित हुनु त साधारण कुरा भयो ॥ ४३ ॥ एक हजार वर्षसम्म समाधिस्थ रहेर उपरत भएपछि जसको विषयमा तिमीले मसित सोधेकी थियौ, ती साक्षात् पुराण-पुरुष यिनै हुन् । यिनीसम्म न कालको गति छ न वेदको ॥ ४४ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे तात ! यसरी मैले तिमीलाई ती शार्ङ्गधन्वा विष्णुको माहात्म्य सुनाएँ,

कृतात्मभिः ॥ ३९ ॥ सेयं गुणमयी माया न त्वामभिभविष्यति ॥ मया समेता कालेन कालरूपेण भागशः ॥४०॥ श्रीशुक उवाच ॥ एवं भगवता राजञ्छ्रीवत्साङ्केन सत्कृतः ॥ आमन्त्र्य तं परिक्रम्य सगणः स्वालयं ययौ ॥४१॥ आत्मांशभूतां तां मायां भवानीं भगवान्भवः ॥ शंसतामृषिमुख्यानां प्रीत्याचष्टाथ भारत ॥४२॥ अपि व्यपश्यस्त्वमजस्य मायां परस्य पुंसः परदेवतायाः ॥ अहं कलानामृषभो विमुह्ये यस्या वशोऽन्ये किमुतास्वतन्त्राः ॥४३॥ य मामपृच्छस्त्वमुपेत्य योगात्समासहस्रान्त उपारतं वै ॥ स एष साक्षात्पुरुषः पुराणो न यत्र कालो विशते न वेदः ॥४४॥ श्रीशुक उवाच ॥ इति तेऽभिहितस्तात विक्रमः शार्ङ्गधन्वनः ॥ सिन्धोर्निर्मथने येन धृतः पृष्ठे महाचलः ॥४५॥ एतन्मुहुः कीर्तयतोऽनुशृण्वतो न रिष्यते जातु समुद्यमः क्वचित् ॥ यदुत्तमश्लोकगुणानुवर्णनं समस्तसंसारपरिश्रमापहम् ॥४६॥ असदविषयमङ्‌घ्रिं भावगम्यं प्रपन्नानमृतममरवर्यानाशयत्सिन्धुमथ्यम्॥कपटयुवतिवेषोमोहयन्यः सुरारींस्तमहमुपसृतानां कामपूरं नतोऽस्मि ॥४७॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धेशङ्करमोहनं नाम द्वादशोऽध्यायः॥१२॥

श्रीशुक उवाच ॥ मनुर्विवस्वतः पुत्रः श्राद्धदेव इति श्रुतः ॥ सप्तमो वर्तमानो यस्तदपत्यानि मे शृणु ॥ १ ॥ इक्ष्वाकुर्नभगश्चैव धृष्टः शर्यातिरेव च ॥ नरिष्यन्तोऽथ नाभागः सप्तमो दिष्ट उच्यते ॥ २ ॥ करूषश्च पृषध्रश्च दशमो वसुमान्स्मृतः ॥ मनोर्वैवस्वतस्यैते दश पुत्राः परन्तप

जसले समुद्र मन्थनको बेला मन्दराचललाई आफ्नो पिठिउँमा धारण गरेका थिए ॥४५॥ यो कथा बारम्बार श्रवण र कीर्तन गर्ने प्राणीको कहिल्यै कुनै उद्योग निष्फल जाँदैन । किनकि उत्तमश्लोक विष्णुको गुण-गान सारा संसारका श्रमलाई निवारण गरिदिन्छ ॥४६॥ आफ्नी मायाले मोहिनी युवती-रूपधारी जुन भगवान्‌ले देवद्रोही दानवहरूलाई मोहित पारेर असत् पुरुषलाई अप्राप्य तथा केवल भक्तिले नै प्राप्तव्य आफ्ना चरणको शरणमा आएका सुर समुदायलाई समुद्र-मन्थनजनित अमृत पान गराए, शरणागतका कामनाहरू पूर्ण पार्ने ती परमात्मालाई म प्रणाम गर्दछु ॥४७॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥

( भविष्यका सात मन्वन्तरहरूको वृत्तान्त )–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! विवस्वान् सूर्यका छोरा श्राद्धदेव वर्तमानका सातौं मनु भए । उनका सन्तानको विवरण सुन–॥१॥

हे परन्तप ! इक्ष्वाकु, नभग, धृष्ट, शर्याति, नरिष्यन्त, नाभाग,करुष, पृषध्र र वसुमान–यी वैवस्वतमनुका पुत्रहरू थिए ॥२॥३॥यस मन्वन्तरका आदित्य, वसु रुद्र विश्वेदेव, मरुद्गगण, कुमार तथा ऋभुगण देवता र पुरन्दर इन्द्र थिए ॥४॥ कश्यप,अत्रि, वसिष्ठ, विश्वामित्र, गौतम, जमदग्नि, भरद्वाज–यी सप्तर्षि थिए ॥५॥ यस मन्वन्तरमा पनि कश्यपद्वारा अदितिबाट भगवान्‌को अवतार भयो । त्यस वेला विष्णु भगवान् द्वादशादित्यका अनुज वामनरूपमा प्रकट भएथे ॥ ६ ॥ हे राजन् ! यसरी संक्षेपमा मैले सात मन्वन्तरको विवरण सुनाइदिएँ । अब भगवान् विष्णुको शक्तियुक्त भविष्यका सात मन्वन्तरहरूको विवरण भन्छु ॥७॥ हे राजेन्द्र ! विश्वकर्माका दुइ पुत्री थिए–संज्ञा र छाया । ती विवस्वानकी पत्नी थिए–जसको वर्णन पहिल्यै गरेर आएको छु ॥८॥ केही व्यक्ति वडवा नामकी तेस्री स्त्री पनि थिइन् भन्छन् । तीमध्ये–यम, यमी र श्राद्धदेव-तीन संज्ञाका सन्तान थिए । छायाका छोराको वर्णन सुन ॥९॥

॥३॥ आदित्या वसवो रुद्रा विश्वेदेवा मरुद्गणाः ॥ अश्विनावृभवो राजन्निन्द्रस्तेषां पुरन्दरः ॥४॥ कश्यपोऽत्रिर्वसिष्ठश्च विश्वामित्रोऽथ गौतमः ॥ जमदग्निर्भरद्वाज इति सप्तर्षयः स्मृताः ॥ ५ ॥ अत्रापि भगवज्जन्म कश्यपाददितेरभूत् ॥ आदित्यानामवरजो विष्णुर्वामनरूपधृक् ॥ ६ ॥ संक्षेपतो मयोक्तानि सप्त मन्वन्तराणि ते ॥ भविष्याण्यथ वक्ष्यामि विष्णोः शक्त्यान्वितानि च ॥ ७ ॥ विवस्वतश्च द्वे जाये विश्वकर्मसुते उभे ॥ संज्ञा छाया च राजेन्द्र ये प्रागभिहिते तव ॥ ८ ॥ तृतीयां वडवामेके तासां संज्ञासुतास्त्रयः ॥ यमो यमी श्राद्धदेवश्छायायाश्च सुताञ्छृणु ॥ ९ ॥ सावर्णिस्तपती कन्या भार्या सम्वरणस्य या ॥ शनैश्चरस्तृतीयोऽभूदश्विनौ वडवात्मजौ ॥ १० ॥ अष्टमेऽन्तर आयाते सावर्णिर्भविता मनुः ॥ निर्मोकविरजस्काद्याः सावर्णितनया नृप ॥ ११ ॥ तत्र देवाः सुतपसो विरजा अमृतप्रभाः ॥ तेषां विरोचनसुतो बलिरिन्द्रो भविष्यति ॥ १२ ॥ दत्त्वेमां याचमानाय विष्णवे यः पदत्रयम् ॥ राद्धमिन्द्रपदं हित्वा ततः सिद्धिमवाप्स्यति ॥ १३ ॥ योऽसौ भगवता बद्धः प्रीतेन सुतले पुनः ॥ निवेशितोऽधिके स्वर्गादधुनाऽऽस्ते स्वराडिव ॥१४॥ गालवो दीप्तिमान् रामो द्रोणपुत्रः कृपस्तथा ॥ ऋष्यशृङ्गः पिताऽस्माकं भगवान्बादरायणः ॥१५॥ इमे सप्तर्षयस्तत्र भविष्यन्ति स्वयोगतः ॥ इदानीमासते राजन्स्वे स्व आश्रममण्डले ॥ १६ ॥ देवगुह्यात्सरस्वत्यां सार्वभौम इति प्रभुः ॥ स्थानं पुरन्दराद्धृत्वा बलये दास्यतीश्वरः ॥ १७ ॥ नवमो दक्षसावर्णिर्मनुर्वरुणसम्भवः ॥ भूतकेतुर्दीप्तकेतुरित्याद्यास्तत्सुता नृप ॥ १८ ॥ पारा मरीचिग-

सवर्णि पुत्र र तपती नामको कन्या–जो राजा संवरणकी पत्नी थिइन्–तथा शनैश्चर यी तीन छायाका सन्तान हुन् र अश्विनीकुमार वडवाका छोरा हुन्॥१०॥ जब आठौं मन्वन्तर लाग्नेछ तब सावर्णिमनु हुनेछन् र विरजस्क आदि उनका छोरा हुनन् ॥११॥ त्यस वेला सुतपा, विरज र अमृतप्रभ देवगण हुनन् । जसले तीन पाउ पृथ्वी मागेर विष्णुलाई सारा तीनै लोक दिएका थिए । उनलाई भगवान्‌ले बाँधिलिए र फेरि प्रसन्न भएर इन्द्रलोकभन्दा पनि ठूलो सुतललोकमा स्थापित गरिदिए । जो इन्द्रको ऐश्वर्य भोगिरहेका छन्, ती विरोचन-पुत्र बलि इन्द्र हुनेछन् । ती भगवान्‌को कृपाले इन्द्रपद पनि त्यागेर मोक्षपद प्राप्त गर्नेछन् ॥ १२-१४ ॥ हे राजन् ! त्यस वेला गालव, दीप्तिमान्, परशुराम, अश्वत्थामा, कृपाचार्य, ऋष्यशृङ्ग र हाम्रा पिता भगवान् बादरायण–यी सप्तर्षि हुनेछन् । ती यस बखत आफआफ्ना आश्रममा योग-समाधिमा तल्लीन छन् ॥१५॥१६॥ त्यस मन्वन्तरमा महापुरुष भगवान् देवगुह्यको भार्या

सरस्वतीको सार्वबाट सार्वभौम अवतार लिए र पुरन्दरबाट इन्द्रपद खोसेर बलिलाई दिनेछन् ॥१७॥ हे राजन् ! वरुणका छोरा दक्षसावर्णि नवौं मनु हुनन् र तिनका भूतकेतु आदि पुत्र हुन् ॥१८॥ पार र मरीचिगर्भ आदि तत्कालीन देवता, इन्द्र र द्युतिमान् आदि सप्तर्षि हुनेछन् ॥१९॥ त्यस मन्वन्तरमा आयुष्मानकी पत्नी अम्बुधाराको गर्भबाट ऋषभ नामक भगवानका अंश अवतार लिनन्, जसले दिएको त्रैलोक्य अद्भुत इन्द्र भोग्नेछन् ॥२०॥ त्यसपछि उपश्लोकका छोरा अतिगुणवान ब्रह्मसावर्णि दसौं मनु हुनन् । तिनका भूरिषेण आदि अनेक छोरहरू र हविष्मान् आदि ऋषि हुनेछन् ॥२१॥ हविष्मान सुकृति, सत्य, जय तथा मूर्ति आदि सप्तर्षि, आदिदेवता र शम्भु इन्द्र हुनन् ॥२२॥ विश्वसृष्टाकहाँ विषूचिको गर्भबाट आफ्नो अंशले अवतीर्ण विष्वक्सेन इन्द्रको सहायता गर्नन् ॥२३॥ एघारौं धर्मसावर्णि मनु हुनन् । तिनका सत्य-धर्म आदि दस पुत्र हुनेछन् ॥२४॥ विहङ्गम कामगम एवं निर्वाणरुचि

र्भाद्या देवा इन्द्रोऽद्भुतः स्मृतः ॥ द्युतिमत्प्रमुखास्तत्र भविष्यन्त्यृषयस्ततः ॥१९॥ आयुष्मतोऽम्बुधारायामृषभो भगवत्कला ॥ भविता येन संराद्धां त्रिलोकीं भोक्ष्यतेऽद्भुतः ॥ २० ॥ दशमो ब्रह्मसावर्णिरुपश्लोकसुतो महान् ॥ तत्सुता भूरिषेणाद्या हविष्मत्प्रमुखा द्विजाः ॥२१॥ हविष्मान्सुकृतिः सत्यो जयो मूर्तिस्तदा द्विजाः ॥ सुवासनविरुद्धाद्या देवाः शम्भुः सुरेश्वरः ॥२२॥ विष्वक्सेनो विषूच्यां तु शम्भोः सख्यं करिष्यति ॥ जातःस्वांशेन भगवान्गृहे विश्वसृजो विभुः ॥२३॥ मनुर्वै धर्मसावर्णिरेकादशम आत्मवान् ॥ अनागतास्तत्सुताश्च सत्यधर्मादयो दश ॥२४॥ विहङ्गमाः कामगमा निर्वाणरुचयः सुराः ॥ इन्द्रश्च वैधृतस्तेषामृषयश्चारुणादयः ॥ २५ ॥ आर्यकस्य सुतस्तस्य धर्मसेतुरिति स्मृतः ॥ वैधृतायां हरेरंशस्त्रिलोकीं धारयिष्यति ॥२६॥ भविता रुद्रसावर्णी राजन्द्वादशमो मनुः ॥ देववानुपदेवश्चदेवश्रेष्ठादयः सुताः ॥२७॥ ऋतधामा च तत्रेन्द्रो देवाश्च हरितादयः॥ऋषयश्च तपोमूर्तिस्तपस्व्याग्नीध्रकातयः ॥२८॥ स्वधामाख्यो हरेरंशः साधयिष्यति तन्मनोः ॥ अन्तरं सत्यसहसः सूनृतायाः सुतो विभुः ॥२९॥ मनुस्त्रयोदशो भाव्यो देवसावर्णिरात्मवान् ॥ चित्रसेनविचित्राद्या देवसावर्णिदेहजाः ॥३०॥ देवाः सुकर्मसुत्रामसंज्ञा इन्द्रो दिवस्पतिः ॥ निर्मोकतत्त्वदर्शाद्या भविष्यन्त्यृषयस्तदा ॥३१॥ देवहोत्रस्य तनय उपहर्ता दिवस्पतेः ॥ योगेश्वरो हरेरंशो बृहत्यां सम्भविष्यति ॥३२॥ मनुर्वा इन्द्रसावर्णिश्चतुर्दशम एष्यति ॥ उरुगम्भीरबुद्ध्याद्या इन्द्रसावर्णिवीर्यजाः ॥३३॥ पवित्राश्चाक्षुषा देवाः शुचिरिन्द्रो भविष्यति ॥ अग्निबाहुः शुचिः शुद्धो मागधाद्या-

देवता तथा वैधृत इन्द्र र अरुण आदि ऋषि हुनन् ॥ २५ ॥ वैधृताको गर्भबाट उत्पन्न आर्यकका छोरा धर्मसेतु नामले प्रख्यात भगवान हरिका अंश सबै त्रिलोकको पालन गर्नेछन् ॥२६॥ हे राजन् ! रुद्रसावर्णि बाह्रौं मनु हुनन् । उनका देववान्, उपदेव तथा देवश्रेष्ठ आदि अनेक छोरा हुनेछन् ॥ २७ ॥ त्यस बेला ऋतधामा इन्द्र, हरित आदि देवता र तपोमूर्ति एवं तपस्वी आग्नीध्रकादि सप्तर्षि हुनेछन् ॥२८॥ सत्यसहकी भार्या सनृताका छोरा एवं भगवानका स्वधा नामक अंश त्यस मन्वन्तरको रक्षा गर्नेछन् ॥२८॥ आत्मबली देवसावर्णि तेह्रौं मनु हुनेछन् । चित्रसेन र विचित्र आदि तिनका अनेक छोरा हुनेछन् ॥ ३० ॥ अनि सुत्राम आदि देवता, दिवस्पति इन्द्र तथा निर्मोक तत्त्वदर्श आदि सप्तर्षि हुनेछन् ॥३१॥ त्यस बेला भगवानका अंश बृहतीको गर्भबाट देवहोत्रका छोरा भएर योगेश्वर नामले विख्यात हुनेछन् र उनैले दिवस्पतिलाई इन्द्रपद दिनेछन् ॥ ३२ ॥ इन्द्रसावर्णि चौधौं

मनु हुनेछन् र अरु-गम्भीर बुद्धि आदि उनका अनेक छोरा हुनन् । त्यस वेला पवित्र, चाक्षुषादि देवता शुचि, इन्द्र, अग्निबाहु, शुद्ध तथा मागध आदि ऋषि हुनन् ॥ ३३ ॥ ३४ ॥ हे राजन् ! अनि वितानाको गर्भबाट उत्पन्न सत्रायणका छोरा बृहद्भानु नामक भगवान् हरि कर्मकाण्डको विस्तार गर्नेछन् ॥३५॥ हे राजन् ! यस प्रकार त्रिकालव्यापी चौधै मन्वन्तरको वृत्तान्त मैले तिमीलाई सुनाएँ । इनैद्वारा मनुष्य सहस्रयुग परिमित कल्पको अनुमान गर्दछन् ॥३६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टस्कन्धे नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥१३॥

( उपरोक्त मनुहरुका कर्मको निर्देश )–राजा परीक्षितले भने—हे भगवन् ! विभिन्न मन्वन्तरहरूमा हजुरले बताएका मनु आदि जस द्वारा जुन-जुन कामना नियत गरिनेछन्, त्यो भन्नुहवस ॥१॥ श्रीशुकदेव भन्दछन्–हे पृथ्वीपते ! मनुपुत्र, मुनिगण, इन्द्र तथा देवता–यी सबै परमात्माद्वारा शासित छन् ॥२॥ हे राजन् ! भगवानका यज्ञपुरुष आदि विभिन्न रूपहरू रहिएका छन्, उनैको प्रेरणले मनु आदि संसार-यात्राको संचालन गर्दछन् ॥ ३ ॥ ती मन्वन्तरको मुनि चतुर्युगको अन्त्यमा कालको मुखमा परेकी श्रुतिको आफ्नो तपोबलले यथावत

स्तपस्विनः ॥३४॥ सत्रायणस्य तनयो बृहद्भानुस्तदा हरिः ॥ वितानायां महाराज क्रियातन्तून्वितायिता ॥३५॥ राजंश्चतुर्दशैतानि त्रिकालानुगतानि ते ॥ प्रोक्तान्येभिर्मितः कल्पो युगसाहस्रपर्ययः ॥३६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे मन्वन्तरानुवर्णनं नाम त्रयोदशोऽध्यायः ॥ १३ ॥

राजोवाच ॥ मन्वन्तरेषु भगवन् यथा मन्वादयस्त्विमे ॥ यस्मिन्कर्मणि ये येन नियुक्तास्तद्वदस्व मे ॥ १ ॥ ऋषिरुवाच ॥ मनवो मनुपुत्राश्च मुनयश्च महीपते ॥ इन्द्राः सुरगणश्चैव सर्वे पुरुषशासनाः ॥ २ ॥ यज्ञादयो याः कथिताः पौरुष्यस्तनवो नृप ॥ मन्वादयो जगद्यात्रां नयन्त्याभिः प्रचोदिताः ॥३॥ चतुर्युगान्ते कालेन ग्रस्ताञ्छ्रुतिगणान्यथा ॥ तपसा ऋषयोऽपश्यन् यतो धर्मः सनातनः ॥ ४ ॥ ततो धर्मं चतुष्पादं मनवो हरिणोदिताः ॥ युक्ताः सञ्चारयन्त्यद्धा स्वे स्वे काले महीं नृप ॥ ५ ॥ पालयन्ति प्रजापाला यावदन्तं विभागशः ॥ यज्ञभागभुजो ये च तत्र तत्रान्विताश्च तैः ॥६॥ इन्द्रो भगवता दत्तां त्रैलोक्यश्रियमूर्जिताम् ॥ भुञ्जानः पाति लोकांस्त्रीन्कामं लोके प्रवर्षति ॥ ७ ॥ ज्ञानं चानुयुगं ब्रूते हरिः सिद्धस्वरूपधृक् ॥ ऋषिरूपधरः कर्मयोगं योगेशरूपधृक् ॥ ८ ॥ सर्गं प्रजेशरूपेण दस्यून्हन्यात्स्वराड्वपुः ॥ कालरूपेण सर्वेषामभावाय पृथग्गुणः ॥ ९ ॥ स्तूयमानो जनैरेभिर्मायया नामरूपया ॥ विमोहितात्मभिर्नानादर्शनैर्न च दृश्यते ॥ १० ॥ एतत्कल्पविकल्पस्य प्रमाणं

साक्षात्कार गर्दछन्, यसैले सनातन-धर्मको रक्षा भइरहन्छ ॥४॥ हे राजन् ! भगवानको प्रेरणाले ती मनु सावधानीपूर्वक आफ्आफ्ना समयमा पृथ्वीमा चार चरणले युक्त आचरण गराउँछन् मनुका छोरा मन्वन्तरको अन्त्यसम्म पुत्र-पौत्रादिको क्रमले प्रजाको पालन गर्दछन् । पञ्चमहायज्ञादि कर्महरूमा जुन ऋषि, पितृ, भूत तथा मनुष्यादिका भोक्तारूपले सम्बन्ध रहन्छ, तिनीहरूसित देवता मन्वन्तर यज्ञको भाग पाउँदछन् ॥५-६॥ भगवानले दिएको त्रिभुवनको उत्कृष्ट लक्ष्मी भोग्दै इन्द्र तीनै लोकको रक्षा गर्दै संसारमा चाहिए जति जल वर्षा गराउँछन् ॥७॥ स्वयंश्रीहरि सनकादि सिद्धहरूको रूपमा अवतार लिएर प्रत्येक युगमा सबैलाई ज्ञानोपदेश दिन्छन् । उनै याज्ञवल्क्यादिरूपले कर्मकाण्डको प्रचार र दत्तात्रयादि योगेश्वरहरूको रूपमा योगमार्गको प्रवृत्ति गर्दछन् ॥८॥ उनै प्रजापतिरूपले सृष्टि गर्न, सम्राट् भएर चोर-बदमाशलाई मार्न र शीतोष्णादि गुणहरूको संचार गर्दै कालरूपले सबैको संहार गर्दछन् ॥९॥

750

ती भगवान् नामरूपात्मिका मायाले मोहित पुरुषद्वारा शास्त्रले निरूपित गरिएपछि पनि पसैले जान्नसक्तैनन् ॥१०॥ हे राजन् ! यसरी तिमीलाई महाकल्प र अवान्तरकल्पहरूको परिमाण सुनाएँ, जसमध्ये अवान्तर कल्पमा पुरातत्त्वका ज्ञाता चौध मन्वन्तर भन्दछन् ॥११॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां चतुर्दशोऽध्यायः॥१४॥

( दैत्यराज बलिको स्वर्ग-विजय )—महाराज परीक्षितले सोधे—हे भगवन् ! श्रीहरि समस्त जगत्का ईश्वर भएर पनि दीन बनेर बलिसित तीन पाउ पृथ्वी माग्न किन गए ? फेरि मनोरथ सिद्ध भइसकेपछि उनले बलिलाई किन बाँधे ? ॥१॥ मलाई यो रहस्य जान्ने ठूलो कुतूहल छ। ती पूर्णकाम श्रीयज्ञेश्वरले भिक्षा माग्नु र निरपराध राजा बलिलाई बाँध्नु, यी दुवै कुरा अद्भुत छन् ॥२॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! देवासुर-संग्राममा जब इन्द्रद्वारा श्री र प्राणविहीन गरिएका राजा बलिलाई भृगु तनय शुक्राचार्यले जीवन-दान दिए तब उनका शिष्य बलि शुक्राचार्यलाई आफ्नो सर्वस्व अर्पण गरेर उनकै सेवा गर्नलागे ॥३॥ यस प्रकार प्रसन्न महानुभाव भृगुवंशी ब्राह्मणहरूले इच्छुक राजा बलिलाई विधिवत् ऐन्द्र

परिकीर्तितम् ॥ यत्र मन्वन्तराण्याहुश्चतुर्दश पुराविदः ॥ ११ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे चतुर्दशोऽध्यायः ॥ १४ ॥

राजोवाच ॥ बलेः पदत्रयं भूमेः कस्माद्धरिरयाचत ॥ भूतेश्वरः कृपणवल्लब्धार्थोऽपि बबन्ध तम् ॥ १ ॥ एतद्वेदितुमिच्छामो महत्कौतूहलं हि नः ॥ तत्रेश्वरस्य पूर्णस्य बन्धनं चाप्यनागसः ॥२॥ श्रीशुक उवाच ॥ पराजितश्रीरसुभिश्च हापितो हीन्द्रेण राजन्भृगुभिः स जीवितः ॥ सर्वात्मना तानभजद्भृगून्बलिः शिष्यो महात्माऽर्थनिवेदनेन ॥३॥ तं ब्राह्मणा भृगवः प्रीयमाणा अयाजयन्विश्वजिता त्रिणाकम् ॥ जिगीषमाणं विधिनाऽभिषिच्य महाभिषेकेण महानुभावाः ॥४॥ ततो रथः काञ्चनपट्टनद्धो हयाश्च हर्यश्वतुरङ्गवर्णाः ॥ ध्वजश्च सिंहेन विराजमानो हुताशनादास हविर्भिरिष्टात् ॥५॥ धनुश्च दिव्यं पुरटोपनद्धं तूणावरिक्तौ कवचं च दिव्यम् ॥ पितामहस्तस्य ददौ च मालामम्लानपुष्पां जलजं च शुक्रः ॥ ६ ॥ एवं स विप्रार्जितयोधनार्थस्तैः कल्पितस्वस्त्ययनोऽथ विप्रान् ॥ प्रदक्षिणीकृत्य कृतप्रणामः प्रह्लादमामन्त्र्य नमश्चकार ॥७॥ अथारुह्य रथं दिव्यं भृगुदत्तं महारथः ॥ सुस्रग्धरोऽथ संनद्धधन्वी खड्गी धृतेषुधिः ॥८॥ हेमाङ्गदलसद्बाहुः स्फुरन्मकरकुण्डलः ॥ रराज रथमारूढो धिष्ण्यस्थ इव हव्यवाट् ॥९॥ तुल्यैश्वर्यबलश्रीभिः स्वयूथैर्दैत्ययूथपैः ॥ पिबद्भिरिव खं दृग्भिर्दहद्भिः परिधीनिव ॥१०॥ वृतो विकर्षन्महतीमासुरीं ध्वजिनीं विभुः ॥ ययाविन्द्रपुरीं स्वृद्धां कम्प-

महाभिषेकले अभिषिक्त गरेर उनैद्वारा विश्वजित् यज्ञ गराए ॥४॥ हे राजन् ! हविले पूजित अग्निद्वारा सुवर्णको पाताले मोरिएको रथ, इन्द्रका घोडा झैं हरियो वर्णका घोडा, सिंहको चिह्नले चिह्नित ध्वजा, सुवर्णजडित दिव्य धनुष, बाणले भरिएका दुइ ठोक्रा र दिव्यकवच प्रकट भए। बलिका पितामह प्रह्लादले कुसुमित पुष्पहरूको माला र शुक्राचार्यले शङ्खप्रदान गरे॥५॥६॥ ती ब्राह्मणहरूद्वारा युद्ध-सामग्री पाएर तथा उनले स्वस्तिवाचन गरेपछि महारथी बलिले प्रदक्षिणा गरेर उनलाई र आफ्ना पितामह प्रह्लादलाई नमस्कार गरे। अनि उनको अनुमति लिएर भृगुवंशी ब्राह्मणहरूले दिएको दिव्य रथमा चढेर, राम्रो माला पहिरी, धनुष, कवच, खड्ग, ठोक्रो धारण गरेर भुजामा सुनका बाजूवन्द र कानमा झुल्ने मकराकृति कुण्डलले सुशोभित एवं रथमा आरूढ बलि अग्निकुण्डमा बल्दो अग्नि समान सुशोभित भए ॥७-९॥ अनि ती मानो आकाशलाई पिएर आफ्ना नेत्रले दसै दिशाहरूलाई भस्म पारिदेका

लिए। त्यस्ता ऐश्वर्यशाली, बल तथा विभूतियुक्त दैत्ययूथपति गणहरूसित ती ठूलो असुरसेना साथमा लिएर पृथ्वी तथा आकाशमण्डललाई कम्पित पार्दै परमसमृद्धिसम्पन्न इन्द्रपुरीमा गए ॥१०,११॥ जुन इन्द्रपुरी निरन्तर मत्त पक्षीहरूका जोडा तथा गर्जने मत्तहाती, भ्रमरले शोभायुक्त नन्दनादि उपवनहरूले सुशोभित छ ॥१२॥ जुन पल्लव, फल-फूलको भारले न्यूरेका शाखाहरूले युक्त कल्पवृक्षले सम्पन्न छ। जहाँ हंस, सारस, चक्रवाक, कारण्डव आदि पक्षीहरूले पूर्ण सरोवर छन् र जहाँ सुरसेविता देवाङ्गनाहरू विहार गर्दछन् जो खाल्डोरूपी आकाशगङ्गा तथा अट्टालिका सहित अतिशय उन्नत अग्निवर्णका छर्दनालीले घेरिएको छ। जो विश्वकर्माले रचेको छ, सुवर्ण-पत्रले मोरेको झ्याल र द्वारहरू एवं स्फटिकका टाकुरा सुशोभित छ र जसमा अनेकौं मूल सडक बनेका छन् ॥१३-१५॥ जुन सभाभवन, चौबाटो र गल्लीहरूले पूर्ण तथा दसकरोड विमानहरूले युक्त छ र जसमा मणिमय चोक तथा रत्न एवं विद्रुमका वेदीहरू बनेका छन् ॥१६॥ जहाँ नित्य नवयौवन तथा अमिट सौन्दर्ययुक्त षोडश-वर्षीया रमणीहरू स्वच्छ वस्त्र र अलङ्कारले विभूषित भएर ज्वालाहरूले देदीप्यमान अग्निझैं

यन्निव रोदसी ॥११॥ रम्यामुपवनोद्यानैः श्रीमद्भिर्नन्दनादिभिः ॥ कूजद्विहङ्गमिथुनैर्गायन्मत्तमधुव्रतैः ॥१२॥ प्रवालफलपुष्पोरुभारशाखामरद्रुमैः ॥ हंससारसचक्राह्वकारण्डवकुलाकुलाः ॥ नलिन्यो यत्र क्रीडन्ति प्रमदाः सुरसेविताः ॥१३॥ आकाशगङ्गया देव्या वृतां परिखभूतया ॥ प्राकारेणाग्निवर्णेन साट्टालेनोन्नतेन च ॥१४॥ रुक्मपट्टकपाटैश्च द्वारैःस्फटिकगोपुरैः ॥ जुष्टां विभक्तप्रपथां विश्वकर्मविनिर्मिताम् ॥१५॥ सभाचत्वररथ्याढ्यां विमानैर्न्यर्बुदैर्युताम् ॥ शृङ्गाटकैर्मणिमयैर्वज्रविद्रुमवेदिभिः ॥१६॥ यत्र नित्यवयोरूपाः श्यामा विरजवाससः ॥ भ्राजंते रूपवन्नार्यो ह्यर्चिर्भिरिव वह्नयः ॥१७॥ सुरस्त्रीकेशविभ्रष्टनवसौगंधिकस्रजाम् ॥ यत्रामोदमुपादाय मार्ग आवाति मारुतः ॥ १८ ॥ हेमजालाक्षनिर्गच्छद्धूमेनागुरुगंधिना ॥ पांडुरेण प्रतिच्छन्नमार्गे यान्ति सुरप्रियाः ॥ १९ ॥ मुक्तावितानैर्मणिहेमकेतुभिर्नानापताकावलभीभिरावृताम् ॥ शिखण्डिपारावतभृङ्गनादितां वैमानिकस्त्रीकलगीतमङ्गलाम् ॥ २० ॥ मृदङ्गशङ्खानकदुन्दुभिस्वनैः सतालवीणामुरजर्ष्टिवेणुभिः ॥ नृत्यैः सवाद्यैरुपदेवगीतकैर्मनोरमां स्वप्रभया जितप्रभाम् ॥ २१ ॥ यां न व्रजन्त्यधर्मिष्ठाः खला भूतद्रुहः शठाः ॥ मानिनः कामिनो लुब्धा एभिर्हीना व्रजन्ति यत् ॥२२॥ तां देवधानीं सवरूथिनीपतिर्बहिः समन्तादुरुधे पृतन्यया ॥ आचार्यदत्तं जलजं महास्वनं दध्मौ प्रयुञ्जन्भयमिन्द्रयोषिताम् ॥२३॥ मघवांस्तमभिप्रेत्य बलेः परममुद्यमम् ॥ सर्वदेवगणोपेतो गुरु-

शोभित हुन्छन्। जहाँ वायु देवाङ्गनाहरूका केश पाशबाट झरेको नवीन सौगन्धिक पुष्पमयी मालाको मनोहर सुगन्ध लिएर बाटोलाई सुरभित पार्दै रहन्छ ॥१७॥१८॥ जहाँ सुवर्णमय आँखीझ्यालबाट निस्केका पाण्डुर वर्ण धूपको धूवाँले सुवासित मार्गमा नववधूहरू डुलिरहन्छन्। यसरी जो मुक्तादाममण्डित वितान, मणि तथा सुवर्णजडित ध्वजा र विविध पताकाहरू तथा बार्दलीले युक्त मयुर, कपोत एवं भ्रमरगणले शब्दायमान तथा देवाङ्गनाहरूको मधुर गायनले मङ्गलमयी बनिरहन्छ। मृदङ्ग, शङ्ख, आनक तथा दुन्दुभिहरूको घोषले तालयुक्त, वीणा, मुरज, ऋष्टि तथा बाँसुरी र गन्धर्वहरूको नृत्य, वाद्य र गानले जो मनोहर भइरहन्थ्यो। जसले आफ्नो अलौकिक प्रभाको अभिप्रायलाई पनि पराजित पारिदिएको छ। जसमा अधर्मी, दुष्ट, जीवद्रोही, ठग, मानी, कामी, लोभी, पुरुष जान पाउँदैनन्, जहाँ केवल निर्दोष व्यक्तिनै जान्छन् ॥१९-२२॥ बलिले त्यस देवनगरीलाई विशाल सेनाले सबैतिरबाट घेरिलिए

र इन्द्रकी महिलाहरूलाई भयभीत पार्दै शुक्राचार्यजीले दिएको घनघोर शब्द भएको शङ्ख बजाए ॥ २३ ॥ इन्द्रले बलिको त्यो ठूलो युद्धोद्योग देखेर देवता सहित आएर गुरु बृहस्पतिसित भने– ॥२४॥ 'हे भगवन् ! हाम्रो पूर्व शत्रुको यो ठूलो उद्योग हो । म यसलाई सर्वथा असह्य ठान्दछु । यो कसको तेजले यति बढिरहेको छ ?॥२५॥ यसलाई कुनै उपायले कसैले रोकन सक्तैन ? यो त प्रलयाग्नि जस्तै सारा संसारलाईनै पिउँदै, दसै दिशाहरूलाई चाट्तै र नेत्रले सबै दिशाहरूलाई डढाउँदै यतैतिर बढ्दै आइरहेको छ ॥२६॥ हे गुरो ! मेरो शत्रुको यस दुर्धर्षताको कारण के हो ? यसलाई यस्तो इन्द्रिय, मन, शारीरिक बल र तेज कसरी प्राप्त भयो–यो यस्तो असह्य उद्यम गर्नलाई तयार छ' ॥२७॥ गुरु बृहस्पतिले भने– हे इन्द्र ! मलाई यसको उन्नतिको कारण थाहा छ । वेदवादी भृगुपुत्रहरूले आफ्नू शिष्यका लागि ठूलो तेज सम्पन्न गरेको छ ॥२८॥ परमेश्वर श्रीहरि बाहेक तिमी अथवा तिमी जस्तै अरु कोही यसको समक्ष त्यसै गरी टिकन सक्तैन, जस्तै कालको सामुन्ने साधारण जीव टिकन पाउन्नन् ॥२९॥ अतः अब तिमी स्वर्ग छाडेर कुनै अर्कै ठाउँमा लुकेर बस र शत्रुको अधः

मेतदुवाच ह ॥ २४ ॥ भगवन्नुद्यमो भूयान्बलेर्नः पूर्ववैरिणः ॥ अविषह्यमिमं मन्ये केनासीत्तेजसोर्जितः ॥ २५ ॥ नैनं कश्चित्कुतो वापि प्रतिव्योढुमधीश्वरः ॥ पिबन्निव मुखेनेदं लिहन्निव दिशो दश ॥ दहन्निव दिशो दृग्भिः संवर्ताग्निरिवोत्थितः ॥२६॥ ब्रूहि कारणमेतस्य दुर्धर्षत्वस्य मद्रिपोः ॥ ओजः सहो बलं तेजो यत एतत्समुद्यमः ॥२७॥ गुरुरुवाच ॥ जानामि मघवञ्छत्रोरुन्नतेरस्य कारणम् ॥ शिष्यायोपभृतं तेजो भृगुभिर्ब्रह्मवादिभिः ॥२८॥ भवद्विधो भवान्वापि वर्जयित्वेश्वरं हरिम् ॥ नास्य शक्तः पुरः स्थातुं कृतान्तस्य यथा जनाः ॥ २९ ॥ तस्मान्निलयमुत्सृज्य यूयं सर्वे त्रिविष्टपम् ॥ यात कालं प्रतीक्षन्तो यतः शत्रोर्विपर्ययः ॥ ३० ॥ एष विप्रबलोदर्कः सम्प्रत्यूर्जितविक्रमः ॥ तेषामेवापमानेन सानुबन्धो विनंक्ष्यति ॥३१॥ एवं सुमन्त्रितार्थास्ते गुरुणाऽर्थानुदर्शिना ॥ हित्वा त्रिविष्टपं जग्मुर्गीर्वाणाः कामरूपिणः ॥ ३२ ॥ देवेष्वथ निलीनेषु बलिर्वैरोचनः पुरीम् ॥ देवधानीमधिष्ठाय वशं निन्ये जगत्त्रयम् ॥ ३३ ॥ तं विश्वजयिनं शिष्यं भृगवः शिष्यवत्सलाः ॥ शतेन हयमेधानामनुव्रतमयाजयन् ॥ ३४ ॥ ततस्तदनुभावेन भुवनत्रयविश्रुताम् ॥ कीर्तिं दिक्षु वितन्वानः स रेज उडुराडिव ॥ ३५ ॥ बुभुजे च श्रियं स्वृद्धां द्विजदेवोपलम्भिताम् ॥ कृतकृत्यमिवात्मानं मन्यमानो महामनाः ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पञ्चदशोऽध्यायः ॥ १५ ॥

पतनको मौकाको प्रतीक्षा गर ॥३०॥ यस बखत यो दैत्यपति ब्रह्मतेजले समृद्ध र परम पराक्रमी भएको छ । कहिले त्यो समय आउने छ, जब यो तिनै ब्राह्मणहरूको अपमान गरेर सकुटुम्ब नष्ट भएर जानेछ ॥ ३१ ॥ स्वार्थको यथार्थ स्वरूप बुझ्ने गुरुको सम्मतिले देवता स्वेच्छानुसार रूप धारण गरेर स्वर्गधाम छाडी यता-उता लुक्न गए ॥३२॥ देवताहरू लुकेपछि विरोचन-पुत्र बलिले देवपुरीमा अधिकार गरे र तीनै लोकलाई आफ्नो अधीन पारेर शासन गर्न लागे ॥३३॥ अनि शिष्यवत्सल भृगुपुत्रहरूले आफ्ना अनुगत शिष्य एवं विश्वविजयी बलिको हातले सय अश्वमेध यज्ञ गराउन प्रारम्भ गरे ॥३४॥ अश्वमेध यज्ञका प्रभावले बलि आफ्नो त्रिलोक विश्रुत कीर्ति दसै दिशाहरूमा फिंजाउँदै नक्षत्रराज चन्द्रमा जस्तै शोभित भए ॥३५॥ आफूलाई कृतकृत्य मान्दै बलि ब्राह्मण र देवताद्वारा प्राप्त त्यो राजलक्ष्मी भोग्नलागे ॥३६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां पञ्चदशोऽध्यायः ॥१५॥

(महर्षि कश्यपद्वारा अदितिलाई पयोव्रतको उपदेश)–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! आफ्ना छोराहरू भागेर लुक्ने र दैत्यहरू द्वारा स्वर्गलोक लिएपछि देवताहरूकी माता अदिति अनाथ जस्तै विलाप गर्न लागिन् ॥१॥ एक दिन भगवान् कश्यप चिरकालीन समाधिबाट उठेर उत्सव र आनन्दविहीन अदितिको आश्रममा गए ॥२॥ हे कुरुनन्दन ! त्यहाँ अदिति द्वारा विधिवत् सम्मानित र पूजित भएर आसनमा बसी उनले दीनवदना प्रिया अदितिसित भने–॥३॥ हे भद्रे ! लोकमा ब्राह्मणहरूको, धर्म अथवा मृत्युको अधीन पुरुषहरूको कुनै

श्रीशुक उवाच ॥ एवं पुत्रेषु नष्टेषु देवमाताऽदितिस्तदा ॥ हृते त्रिविष्टपे दैत्यैः पर्यतप्यदनाथवत् ॥१॥ एकदा कश्यपस्तस्या आश्रमं भगवानगात् ॥ निरुत्सवं निरानन्दं समाधेर्विरतश्चिरात् ॥२॥ स पत्नीं दीनवदनां कृतासनपरिग्रहः ॥ सभाजितो यथान्यायमिदमाह कुरूद्वह ॥३॥ अप्यभद्रं न विप्राणां भद्रे लोकेऽधुनागतम् ॥ न धर्मस्य न लोकस्य मृत्योश्छन्दानुवर्तिनः ॥४॥ अपि वाऽकुशलं किञ्चिद्गृहेषु गृहमेधिनि ॥ धर्मस्यार्थस्य कामस्य यत्र योगो ह्ययोगिनाम् ॥५॥ अपि वाऽतिथयोऽभ्येत्य कुटुम्बासक्तया त्वया ॥ गृहादपूजिता याताः प्रत्युत्थानेन वा क्वचित् ॥६॥ गृहेषु येष्वतिथयो नार्चिताः सलिलैरपि ॥ यदि निर्यान्ति ते नूनं फेरुराजगृहोपमाः ॥७॥ अप्यग्नयस्तु वेलायां न हुता हविषा सति ॥ त्वयोद्विग्नधिया भद्रे प्रोषिते मयि

अमङ्गल अनिष्ट त भएको छैन ॥ ४ ॥ हे गृहस्वामिनी ! जसले योगसाधनहीन व्यक्तिलाई पनि स्वधर्म पालनले योगको फल प्राप्त हुन्छ, त्यस गृहस्थीमा धर्म, अर्थ तथा काम हानि त भएको छैन ? ॥५॥ तिम्रो *गृहस्थीको कार्यमा व्यग्र रहनाले घरमा आएका अतिथि प्रत्युत्थानादि सत्कार नपाएर नै फर्केर गएका त छैनन् ? ॥६॥ जहाँ केवल जलले नै अतिथिको सत्कार हुँदैन र ती निराश फर्केर जान्छन, ती घर स्यालको समान हुन्छन् ॥७॥ हे भद्रे ! म बाहिर गएपछि उद्विग्न रहनाले होमाग्निहरूमा हविको आहुति दिन छाडेकी त छैनौ ?

---

* प्रश्न (गृहस्थाश्रम श्रेष्ठ हो वा संन्यासाश्रम )—यौटा राजाले कुनै महात्मासित सोधे—'संन्यास आश्रम श्रेष्ठ हो कि गृहस्थाश्रम ?' महात्माले भने—'मैले उत्तर दिन भन्दा अगावै पूर्वदिशामा जाउ। त्यहाँ तिमी स्वयं उत्तर पाउने छौ।' राजा जान्नका इच्छुक छँदैथिए। त्यसै निमित्त पूर्वदिशातिर हिंडे। आँधी-आँधी अँध्यारी भयो। बेसरी पानी पर्‍यो। यसैनिमित्त राजा यौटा वृक्षमनि आराम गर्न बसे। जाडोले राजा साह्रै कामिरहेका थिए। त्यस वृक्षमाथि यौटा परेवाका दम्पति र त्यसका बच्चा बस्तथे। दम्पतिले विचार गरे–'हाम्रो आँगनमा आएर यो अतिथि दुःख पाइरहेको छ। यसको निम्ति कुनै उपाय गर्नुपर्दछ।' यस्तो विचार गरेर परेवा उड्यो र आफ्नो चुच्चोमा समातेर कतैबाट बल्दो यौटा काठ ल्यायो र त्यसमाथि आफ्नो मुँड खसालिदियो। त्यसले आगो दन्कियो। त्यो ताप्नाले राजाको जाडो हरायो। तिनलाई खानको निम्ति कपोत-दम्पती आफ्ना बच्चा समेत त्यही आगोमा हाम्फालेर भुटिए। भोको राजाले तिनैलाई खाएर आफ्नो भोक मेटे। त्यही वृक्षमा यौटा अर्को पक्षी बस्तथ्यो। त्यसले समाचार ल्यायो पश्चिमदेशको राजा आफ्नी कन्याको स्वयंवर गरिरहेका छन्। राजाकी ती कन्या यस्तो रूपवती अरु कुनै पनि यस पृथ्वीभरिमा छैनन्। त्यस राजालाई तिनै कन्यासित विवाह गर्ने इच्छा भयो। अतः पश्चिमतिर हिंड्यो। स्वयंवरमा धेरै देशका राजाहरू आएका थिए। कन्याका पिताको यो प्रतिज्ञा थियो–जो तातो तेलको कराहीमा स्नान गर्दछ त्यही मेरी कन्याको पाणिग्रहण गर्न पाउँछ। तातो तेलमा नुहाउने साहस अरु कुनै राजाको भएन। त्यसै बखत राजालाई जुन महात्मा बाटमा भेटिएका थिए, उनै आए र कराहीको तातो तेलमा स्नान गरेर ठिङ्ग उभिए। कन्या जयमाला लिएर सामुन्ने आइन्। महात्माले कन्यासित भने—तिमी अब मेरी भयौ। अब म आज्ञा दिन्छु—जयमाला यी राजालाई लगाइदेउ।' कन्याले आज्ञा पालन गरिन्। राजा साह्रै निकै प्रसन्न भए र यी महात्मासित पहिलेको प्रश्नको उत्तर मागे। महात्माले भने–'अझ पनि तिमीले बुझेनौ ? जुन गृहस्थ ती परेवा दम्पति झैं द्वारमा आएका अतिथिको सत्कार गर्दछ त्यो गृहस्थमा श्रेष्ठ मानिन्छ। जो संन्यासी कुनै पनि वस्तुमा आसक्तिनराखेर अर्काको कल्याण गर्दछ त्यही संन्यासीहरूमा श्रेष्ठ मानिन्छ।' यति सुनेपछि।' राजाका प्रश्नको समाधान भयो।

॥८॥ जसको पूजा गर्नाले गृहस्थ पुरुष अभिलषित भोग दिने लोकहरूमा पुग्दछन्, ती ब्राह्मण र अग्नि सर्वदेवमय भगवान्‌का मुख हुन् ॥ ९ ॥ हे मनस्विनी ! तिम्रा सबै छोराहरू त राम्ररी बसेका छन् ? तिम्रो लक्षण देखेर म तिमीलाई अलि अस्वस्थ जस्ती देखिरहेको छु ॥१०॥ अदितिले भनिन्–हे ब्रह्मन् ! ब्राह्मण, धर्म तथा लोक सबै सकुशल छन् , हे गृहमेधिन् ! गृहस्थको घर धर्म, अर्थ, कामरूपी त्रिवर्गको मुख्य क्षेत्र हो ॥११॥ हे ब्रह्मन् ! हजुरको स्मरण गर्दै रहनाले मद्वारा अग्नि, अतिथि, भृत्यवर्ग तथा भोजनादि इच्छुक भिक्षुकहरूको कहिल्यै पनि अपमान हुन पाएको छैन ॥१२॥ हे भगवन् ! जब हजुर जस्ता प्रजापति मलाई धर्मको उपदेश दिंदै रहनु भएपछि मेरो कसरी र कुन् अभिलाषा अपूर्ण रहन सक्छ ?॥१३॥

कर्हिचित् ॥८॥ यत्पूजया कामदुघान्याति लोकान्गृहान्वितः ॥ ब्राह्मणोऽग्निश्च वै विष्णोः सर्वदेवात्मनो मुखम् ॥ ९ ॥ अपि सर्वे कुशलिनस्तव पुत्रा मनस्विनि ॥ लक्षयेऽस्वस्थमात्मानं भवत्या लक्षणैरहम् ॥ १० ॥ अदितिरुवाच ॥ भद्रं द्विजगवां ब्रह्मन्धर्मस्यास्यजनस्य च ॥ त्रिवर्गस्य परं क्षेत्रं गृह-मेधिन्गृहा इमे ॥११॥ अग्नयोऽतिथयो भृत्या भिक्षवो ये च लिप्सवः ॥ सर्वं भगवतो ब्रह्मन्ननुध्यानान्नरिष्यति ॥१२॥ को नु मे भगवन्कामो न संपद्येत मानसः ॥ यस्या भवान्प्रजाध्यक्ष एवं धर्मान्प्रभाषते ॥१३॥ तथैव मारीच मनः शरीरजाः प्रजा इमाः सत्त्वरजस्तमोजुषः ॥ समो भवांस्तास्वसुरा-दिषु प्रभो तथापि भक्तं भजते महेश्वरः ॥१४॥ तस्मादीश भजन्त्या मे श्रेयश्चिन्तय सुव्रत ॥ हृतश्रियो हृतस्थानान्सपत्नैः पाहि नः प्रभो ॥१५॥ परै-र्विवासिता साऽहं मग्ना व्यसनसागरे ॥ ऐश्वर्यं श्रीर्यशः स्थानं हृतानि प्रबलैर्मम ॥१६ ॥ यथा तानि पुनः साधो प्रपद्येरन्ममात्मजाः ॥ तथा विधेहि

हे मरीचि-सुवन ! सत्व रज तथा तमोगुणले युक्त समस्त प्रजा हजुरकै मन र शरीरबाट उत्पन्न भएका हुन् । यद्यपि असुरादि सबै प्रजाप्रति हजुर समान हुनुहुन्छ तैपनि स्वयं महेश्वरजी पनि त भक्तका इच्छा पूर्ण गर्दछन् ।.१४.। अतः हजुर आफ्नी सेविका म दासीका हितको अलिकति त विचार गर्नुहवस् । हे प्रभो ! *शत्रुहरूद्वारा श्रीहीन र पदच्युत देवतालाई हजुर रक्षा गर्नुहवस् ।।१५।। हे नाथ ! प्रबल दैत्यहरूले मेरो ऐश्वर्य, धन, यश र स्थान खोसिलिए । ती दैत्यद्वारा निर्वासित भएर म शोकसागरमा डुबुल्की खाँदैछु ॥१६॥ हे साधो ! हजुर

* दृष्टान्त ( बुद्धिमान वैरी ) योटा शहरमा दुइवटा क्षत्रिय परिवार बस्तथे । दुवै परिवारका प्रधान पुरुषहरूमा घोर शत्रुता थियो । केही दिन बितेपछि ती दुवैमा योटा क्षत्रियको छोरो लन्केरो भयो । विवाहको कुरा चल्यो छिनियो । अब सबैभन्दा कठिन यो समस्या सामुन्ने आयो—छोरोको विवाह गर्नको जाने ! किनकि बाबु डराउँथ्यो—कतै बाहिर निस्कनासाथ जुझ्नु पर्ने स्थिति आउन सक्दछ । गुप्तचरले त्यो समचार उसको शत्रु क्षत्रियलाई सुनाइसकेको थियो । यो सुन्नासाथ त्यो वीर क्षत्रियको सच्चा उदारता उब्लेर आयो । त्यसले उसै बखत केटाको बाबुलाई भन्न पठायो–'मेरो शत्रुता तिमीसित छ, तिम्रो छोरोसित होइन । त्यो त बरु तिम्रो छोरो, त्यस्तै मेरो पनि । मैले सुने–'तिमी मेरो डरले बाहिर निस्केर जन्ती ल्याउन पनि डर र शङ्का मानिरहेका छौ । नभए आफ्नो छोराको विवाह मेरै द्वारबाट हुनदेउ । म शपथपूर्वक भन्दछु—तिम्रो छोरोको विवाह यस प्रकार गर्नेछु कि त्यो मेरो आफ्नै छोरो होस् ।' छोरोको बाबुले पनि अरु उपाय नदेखेर शत्रुको कुरा स्वीकार गर्‍यो । यस उदार शत्रुले पनि बेसरी धन खर्च गरेर धूम-धामसित जन्ती लग्यो र मन पुऱ्याएर विवाह गर्‍यो । अब बधू बिदा गराई जन्ती सकुशल फर्केर घर आइपुग्यो र त्यो शत्रु क्षत्रिय फर्केर केटोको पिताको घर पुग्यो तब केटाको बाबु पनि निश्चेष्ट रहन सकेन । ऊ घरबाट निस्केर आयो र शत्रुलाई अंकमाल गरेर भन्नलाग्यो–हे भाई ! लट्ठीको युद्धमा त सधैं म तिम्रो बराबरीमा थिएँ, तर यो उदारताको युद्धमा तिम्रो विजय र मेरो पराजय भयो । म तिम्रो यो साहस र वीरताको सामुन्ने आफ्नु शिर निहुराउँछु ।' केटाका पिताको कुरा सुनेर उसको शत्रुका आँखा सजल भए । त्यसै दिनदेखि ती दुवै क्षत्रियको शत्रुता घनिष्ठ मित्रताको रूपमा परिणत भयो ।

755

आफ्नो बुद्धिले विचार गरेर कुनै यस्तो उपाय गर्नुहवस्, मेरा छोरा फेरि आफ्नो ऐश्वर्य पाउन् ॥१७॥ हे राजन् ! देवमाता अदितिले त्यसरी प्रार्थना गरेपछि कश्यपजी केही विस्मित भए र उनले भने–'अहो ! भगवान्‌को माया कति प्रबल छन्–जसले सारा जगत् स्नेह-बन्धनमा बाँधिई रहन्छ ॥ १८ ॥ कहाँ भौतिक र अनात्मा यो शरीर र कहाँ प्रकृति भन्दा पनि पर रहने आत्मा ! यी पति-पुत्रादि पनि को र कसका हुन् ? यिनका स्नेह-बन्धनको कारण पनि मोह नै हो ॥१९॥ अतः तिमि अब प्राणीहरूका अन्तःकरणमा बसेका जगद्गुरु भगवान् जनार्दनको आराधना गर ॥ २० ॥ ती दीनवत्सल भगवान् तिम्रा सबै कामनाहरू पूर्ण गरिदिन्छन् । भगवान्‌को भक्ति अमोघ छ । अन्य कुनै देवताको भक्ति अमोघ हुन सक्तैन–यो मेरो विचार हो' ॥२१॥ अदितिले भनिन्–हे ब्रह्मन् ! म ती जगत्पतिको कस्तो उपासना गरूँ, जसले ती सत्यसङ्कल्प प्रभु मेरा कामनाहरू पूर्ण पारिदिउन् ॥२२॥ हे द्विजश्रेष्ठ ! हजुर मलाई उपासनाको यस्तो विधि बताउनोस्–जसले पुत्रहरूसहित कष्टमा परेकी म अबलामाथि भगवान् शीघ्र प्रसन्न होउन् ॥२३॥ कश्यपजीले भने–हे देवि ! एकपल्ट

कल्याणं धिया कल्याणसत्तम ॥१७॥ श्रीशुक उवाच ॥ एवमभ्यर्थितोऽदित्या कस्तामोह स्मयन्निव ॥ अहो मायाबलं विष्णोः स्नेहबद्धमिदं जगत् ॥१८॥ क देहो भौतिकोऽनात्मा क चात्मा प्रकृतेः परः ॥ कस्य के पतिपुत्राद्या मोह एव हि कारणम् ॥ १९ ॥ उपतिष्ठस्व पुरुषं भगवन्तं जनार्दनम् ॥ सर्वभूतगुहावासं वासुदेवं जगद्गुरुम् ॥२०॥ स विधास्यति ते कामान्हरिर्दीनानुकम्पनः ॥ अमोघा भगवद्भक्तिर्नेतरेति मतिर्मम ॥ २१ ॥ अदितिरुवाच ॥ केनाहं विधिना ब्रह्मन्नुपस्थास्ये जगत्पतिम् ॥ यथा मे सत्यसङ्कल्पो विदध्यात्स मनोरथम् ॥ २२ ॥ आदिश त्वं द्विजश्रेष्ठ विधिं तदुपधावनम् ॥ आशु तुष्यति मे देवः सीदन्त्याः सह पुत्रकैः ॥ २३ ॥ कश्यप उवाच ॥ एतन्मे भगवान्पृष्टः प्रजाकामस्य पद्मजः ॥ यदाह ते प्रवक्ष्यामि व्रतं केशवतोषणम् ॥२४॥ फाल्गुनस्यामले पक्षे द्वादशाहं पयोव्रतः ॥ अर्चयेदरविन्दाक्षं भक्त्या परमयाऽन्वितः ॥ २५ ॥ सिनीवाल्यां मृदं लिप्य स्नायात्क्रोडविदीर्णया ॥ यदि लभ्येत वै स्रोतस्येतं मन्त्रमुदीरयेत् ॥ २६ ॥ त्वं देव्यादिवराहेण रसायाः स्थानमिच्छता ॥ उद्धृताऽसि नमस्तुभ्यं पाप्मानं मे प्रणाशय ॥२७॥ निर्वर्तितात्मनियमो देवमर्चेत्समाहितः ॥ अर्चायां स्थण्डिले सूर्ये जले वह्नौ गुरावपि ॥ २८ ॥ नमस्तुभ्यं भगवते पुरुषाय महीयसे ॥ सर्वभूतनिवासाय वासुदेवाय साक्षिणे ॥२९॥ नमोऽव्यक्ताय सूक्ष्माय प्रधान पुरुषाय च ॥ चतुर्विंशद्गुणज्ञाय गुणसंख्या-

मैले सन्तानको इच्छा गरेर उपासनाको विषयमा श्रीब्रह्माजीसित सोधेँ र उनले भगवान्‌लाई शीघ्र प्रसन्न पार्ने जुन व्रत बताएका थिए, त्यही म तिमीलाई भन्दछु ॥२४॥ फाल्गुन शुक्ल पक्षमा बाह्र दिनसम्म केवल दूध पिएर रहोस् र अत्यन्त भक्तिपूर्वक कमल-नयन विष्णुको पूजा गरोस् ॥२५॥ औंसीको दिन शूकरले खनेको माटो यदि पाइन्छभने त्यो ल्याएर यो मन्त्र पढोस्–'हे देवि ! प्राणीहरूको स्थान मिलोस् यस इच्छाले आदिवाराह भगवानले तिमीलाई रसातलबाट ल्याएका थिए, तिमीलाई नमस्कार छ । तिमी मेरो पाप नष्ट गरिदेउ ।' त्यो माटो शरीरमा दलेर नदीमा स्नान गरोस् ॥२६-२७॥ अनि सबै नित्य-नैमित्तिक कर्महरू पूर्ण पारेर समाहित चित्तले मूर्ति, वेदी, सूर्य, जल, अग्नि तथा गुरुमा भावना गरेर भनोस्– ॥२८॥'हजुर समस्त प्राणीका निवासस्थान, सर्वान्तर्यामी हुनुहुन्छ । हजुरलाई प्रणाम छ॥२९॥हे अव्यक्त, सूक्ष्म, प्रधान पुरुष, चौबीस तत्वका ज्ञाता र सांख्यशास्त्रका प्रवर्तक हुनुहुन्छ

हजुरलाई नमस्कार छ ॥३०॥ जसका दुइ सिर, तीन चरण, चार शृङ्ग, सात हात छन्, यस्ता यज्ञमूर्ति स्वरूप हजुरलाई त्रयीविद्यामय प्रभुलाई नमस्कार छ ॥३१॥ अखिल शक्तिधर अखिल विद्याहरूका प्रभु र सबै प्राणीहरूका स्वामी हजुर रुद्ररूपधारी शिवलाई प्रणाम छ ॥३२॥ जो प्राणस्वरूप, जगन्मय, योग, ऐश्वर्यमूर्ति र योगका हेतु छन्, ती हिरण्यगर्भरूपधारी हजुरलाई नमस्कार छ ॥३३॥ सबैका साक्षी आदिदेव नारायण तथा हरिरूप भगवान् नरलाई बारम्बार नमस्कार छ ॥३४॥ मरकतमणिमय श्याम शरीर, पीताम्बरधारी र श्रीसम्पन्न श्रीकेशव भगवान्‌लाई नमस्कार छ ॥३५॥ हे वरेण्य ! हे वरदानीहरूमा श्रेष्ठ ! हजुर सबै वर दिनुहुन्छ, यसैले धीर पुरुष आफ्नो कल्याणार्थ हजुरका पदपराग शिरमा चढाउँछौं ॥३६॥ जसका चरण-कमलको सुगन्धका इच्छुक देवता र लक्ष्मीजी सेवामा लागिरहन्छिन्, ती भगवान् मउपर प्रसन्न होउन्' ॥३७॥ हे अदिति ! यी मन्त्रले आवाहन गरेर भगवान् हृषीकेशको

नहेतवे ॥३०॥ नमो द्विशीर्ष्णे त्रिपदे चतुःशृङ्गाय तन्तवे ॥ सप्तहस्ताय यज्ञाय त्रयीविद्यात्मने नमः ॥ ३१ ॥ नमः शिवाय रुद्राय नमः शक्तिधराय च ॥ सर्वविद्याधिपतये भूतानां पतये नमः ॥३२॥ नमो हिरण्यगर्भाय प्राणाय जगदात्मने ॥ योगैश्वर्यशरीराय नमस्ते योगहेतवे ॥ ३३ ॥ नमस्त आदिदेवाय साक्षिभूताय ते नमः ॥ नारायणाय ऋषये नराय हरये नमः ॥ ३४ ॥ नमो मकरतश्यामवपुषेऽधिगतश्रिये ॥ केशवाय नमस्तुभ्यं नमस्ते पीतवाससे ॥३५॥ त्वं सर्ववरदः पुंसां वरेण्य वरदर्षभ ॥ अतस्ते श्रेयसे धीराः पादरेणुमुपासते ॥३६॥ अन्ववर्तन्त यं देवाः श्रीश्च तत्पादपद्मयोः ॥ स्पृहयन्त इवामोदं भगवान्मे प्रसीदताम् ॥ ३७ ॥ एतैर्मन्त्रैर्हृषीकेशमावाहनपुरस्कृतम् ॥ अर्चयेच्छ्रद्धया युक्तः पाद्योपस्पर्शनादिभिः ॥३८॥ अर्चित्वा गन्धमाल्याद्यैः पयसा स्नपयेद्विभुम् ॥ वस्त्रोपवीताभरणपाद्योपस्पर्शनैस्ततः ॥ गन्धधूपादिभिश्चार्चेद्द्वादशाक्षरविद्यया ॥ ३९ ॥ शृतं पयसि नैवेद्यं शाल्यन्नं विभवे सति ॥ ससर्पिः सगुडं दत्त्वा जुहुयान्मूलविद्यया ॥४०॥ निवेदितं तद्भक्ताय दद्याद्भुञ्जीत वा स्वयम् । दत्त्वाऽऽचमनमर्चित्वा ताम्बूलं च निवेदयेत् ॥ ४१ ॥ जपेदष्टोत्तरशतं स्तुवीत स्तुतिभिः प्रभुम् ॥ कृत्वा प्रदक्षिणं भूमौ प्रणमेद्दण्डवन्मुदा ॥४२॥ कृत्वा शिरसि तच्छेषान् देवमुद्वासयेत्ततः ॥ द्व्यवरान्भोजयेद्विप्रान्पायसेन यथोचितम् ॥ ४३ ॥ भुञ्जीत तैरनुज्ञातः शेषं सेष्टैः सभाजितैः ॥ ब्रह्मचार्यथ तद्रात्र्यां श्वोभूते प्रथमेऽहनि ॥ ४४ ॥ स्नातः शुचिर्यथोक्तेन विधिना सुसमाहितः ॥ पयसा स्नापयित्वाऽर्चेद्यावद्व्रतसमापनम् ॥ ४५ ॥ पयोभक्षो व्रतमिदं चरेद्विष्णवर्चनादृतः ॥

पाद्य-आचमनादि उपचारहरू द्वारा श्रद्धापूर्वक पूजा गरून् ॥३८॥ गन्ध-पुष्पमाला आदिले पूजा गरेर प्रभुलाई दूधले स्नान गरायो र वस्त्र, जनै, आभूषण, आचमन, गन्ध, र धूपदीपादि सामग्रीहरूले द्वादशाक्षर मन्त्रोच्चारणपूर्वक पूजा गरोस् ॥३९॥ धन छ भने दूधमा पकाएको वा घिउ-शक्कर मिसेको चामल नैवेद्य दिई द्वादशाक्षरमन्त्रले हवनगरोस् ॥४०॥ भगवान्‌लाई निवेदित अन्न भक्तजनमा देओस् वा स्वयं खाओस् । प्रभुलाई आचमन गराई पान अर्पणगरोस् ॥४१॥ मूलमन्त्र ( ॐ नमोभगवते वासुदेवाय ) एक सय आठ जप गरेर स्तुति मन्त्रहरूले भगवान्‌को स्तुति गरोस् र परिक्रमा गरेर प्रसन्न मनले साष्टाङ्ग प्रणाम गरोस् ॥४२॥अनि निर्माल्य शिरमा लगाएर विसर्जन गरोस् र सकेदेखि दुइ जनाभन्दा बढी ब्राह्मणलाई पायसको भोजन गराओस् ॥४३॥ अनि दक्षिणा आदिले सत्कृत ब्राह्मणहरूभित आज्ञा लिएरबन्धुजनसहित भोजन गरोस् । रातभरि ब्रह्मचर्यले रहेर (प्रतिपदा) कोदिन प्रातःकाल स्नानादिले पवित्र

भएर समाहित चित्तले भगवान्‌लाई विधिवत् स्नान गराएर व्रत समाप्ति सम्म नित्य यसै गरी पूजा गर्दै रहोस् ॥४४॥४५॥ विष्णु पूजाको श्रद्धा हुने पुरुष केवल दुग्धाहार गर्दै यो व्रत गरोस् । प्रतिदिन द्वादशाक्षर मन्त्रले हवन गरेर ब्राह्मण-भोजन गराओस् ॥४६॥ बाह्र दिनसम्म केवल दुग्धपान गरेर प्रतिदिन हवन, पूजा तथा ब्राह्मण-भोजन गराउँदै भगवान्‌को उपासना गरोस् ॥४७॥ अतो प्रतिपदादेखि शुक्ल त्रयोदशीसम्म ब्रह्मचर्यले रही, भूमिमा शयन गरी, त्रिकाल ( प्रातः सायं मध्याह्न ) स्नान गरोस् ॥४८॥ मिथ्या अनुचित भाषण साना-ठूला सबै भोगहरू त्यागिदेओस् । सबै प्राणीहरूको प्रति अहिंसा-भाव राखेर भगवान् वासुदेवको उपासनामा संलग्न रहोस् ॥४९॥ त्रयोदशीको पूजा विधिका विशेषज्ञ ब्राह्मणद्वारा विष्णुको शास्त्र विधिले पञ्चामृतले स्नान गराओस् ॥५०॥ धनको कृपणता त्यागेर धूम-धामले श्रीविष्णु भगवान्‌को पूजा गरोस् । त्यसपछि विष्णु भगवान्‌लाई दूधले बनेको चरु अर्पण गरेर त्यसैले एकाग्रचित्तद्वारा पुरुषोत्तम भगवान्‌को पूजा गरेर भगवान्‌लाई तुष्टिदायक गुणयुक्त नैवेद्य अर्पण गरोस् ॥५१॥५२॥ अनि ज्ञानसम्पन्न आचार्य र ऋत्विक्‌लाई वस्त्र,

पूर्ववज्जुहुयादग्निं ब्राह्मणांश्चापि भोजयेत् ॥ ४६ ॥ एवं त्वहरहः कुर्याद्द्वादशाहं पयोव्रतः ॥ हरेराराधनं होममर्हणं द्विजतर्पणम् ॥४७॥ प्रतिपदिन-मारभ्य यावच्छुक्लत्रयोदशी ॥ ब्रह्मचर्यमधः स्वप्नं स्नानं त्रिषवणं चरेत् ॥ ४८ ॥ वर्जयेदसदालापं भोगानुच्चावचांस्तथा ॥ अहिंस्रः सर्वभूतानां वासुदेव-परायणः ॥ ४९ ॥ त्रयोदश्यामथो विष्णोः स्नपनं पञ्चकैर्विभोः ॥ कारयेच्छास्त्रदृष्टेन विधिना विधिकोविदैः ॥५०॥ पूजां च महतीं कुर्याद्वित्तशाठ्यवि-वर्जितः ॥ चरुं निरूप्य पयसि शिपिविष्टाय विष्णवे ॥ ५१ ॥ शृतेन तेन पुरुषं यजेत सुसमाहितः ॥ नैवेद्यं चातिगुणवद्दद्यात्पुरुषतुष्टिदम् ॥५२॥ आचार्यं ज्ञानसम्पन्नं वस्त्राभरणधेनुभिः ॥ तोषयेदृत्विजश्चैव तद्विद्ध्याराधनं हरेः ॥ ५३ ॥ भोजयेत्तान्गुणवता सदन्नेन शुचिस्मिते ॥ अन्यांश्च ब्राह्म-णाञ्छक्त्या ये च तत्र समागताः ॥५४॥ दक्षिणां गुरवे दद्यादृत्विग्भ्यश्च यथार्हतः ॥ अन्नाद्येनाश्वपाकांश्च प्रीणयेत्समुपागतान् ॥५५॥ भुक्तवत्सु च सर्वेषु दीनान्धकृपणेषु च ॥ विष्णोस्तत्प्रीणनं विद्वान्भुञ्जीत सह बन्धुभिः ॥ ५६ ॥ नृत्यवादित्रगीतैश्च स्तुतिभिः स्वस्तिवाचकैः ॥ कारयेत्तत्कथा-भिश्च पूजां भगवतोऽन्वहम् ॥ ५७ ॥ एतत्पयोव्रतं नाम पुरुषाराधनं परम् ॥ पितामहेनाभिहितं मया ते समुदाहृतम् ॥ ५८ ॥ त्वं चानेन महाभागे सम्यक्चीर्णेन केशवम् ॥ आत्मना शुद्धभावेन नियतात्मा भजाव्ययम् ॥ ५९ ॥ अयं वै सर्वयज्ञाख्यः सर्वव्रतमिति स्मृतम् ॥ तपः सारमिदं भद्रे दानं

आभूषण र गाई आदि दिएर प्रसन्न पारोस् । हे अदिति ! यसलाई पनि उनै भगवान्‌को आराधना जानोस् ॥५३॥ व्रतको बेला जो अनिमन्त्रित ब्राह्मण त्यहाँ आए, तिनलाई पनि यथाशक्ति गुणयुक्त अन्न देओस् ॥५४॥ गुरु र ऋत्विजहरूलाई समुचित दक्षिणा दिएर त्यहाँ आएका चाण्डालसम्मका प्राणीहरूलाई अन्नादि दिएर प्रसन्न पारोस् ॥५५॥ दीन, अन्धा एवं कृपण पुरुषले भोजन गरे भने तिनको सत्कारलाई विष्णुभगवान्‌को प्रसन्नताको कारण मानोस् र अवशिष्ट अन्न आफ्ना बन्धुजनमा बाँडेर स्वयं भोजन गरोस् ॥५६॥ यसरी प्रतिपदादेखि त्रयोदशीसम्म नित्य वाद्य, गान, स्तुति, स्वस्तिवाचन र भगवत्कथाद्वारा भगवान्‌को पूजन गराओस् ॥५७॥ हे देवि ! पितामह ब्रह्माले मलाई विष्णु भगवान्‌को यो श्रेष्ठपूजन विधान ( पयोव्रत ) बताउनु भएको थियो, त्यो मैले तिमीलाई सुनाएँ ॥५८॥ हे महाभागे ! तिमी जितेन्द्रिय तथा शुद्धभावको मनले यस व्रतको पालन गर्दै ती अविनाशी केशव भगवान्‌को

उपासना गर ॥ ५९ ॥ हे भद्रे ! यो व्रत भगवान्‌लाई प्रसन्न पार्दछ । यसैले यो 'सर्वयज्ञ' र 'सर्वव्रत' पनि कहिन्छ । यो व्रत तपस्याहरूको सार तथा सर्वश्रेष्ठ दान हो ॥ ६० ॥ हे देवि ! जे गर्नाले भगवान् प्रसन्न हुन्छन्, उही उत्तम नियत धर्म र उत्तम धर्म र त्यो नै तप, दान, व्रत तथा यज्ञ हो ॥६१॥ अतएव हे भद्रे ! संयत-चित्तले श्रद्धापूर्वक यस व्रतको पालन गर । यसले शीघ्र प्रसन्न भएर भगवान् तिम्रो कामना पूर्ण गर्नेछन् ॥६२॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकां षोडशोऽध्यायः ॥१६॥

( अदितिको पयोव्रतले प्रसन्न भएर भगवान् प्रकट हुनु र अदितिलाई वरदिनु ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! आफ्ना पतिदेव कश्यपसित यो उपदेश पाएर अदितिले धेरै सावधानीपूर्वक बाह्र दिनमा पूर्ण हुने त्यस व्रतको अनुष्ठान गरिन् ॥ १ ॥ त्यसै अनुसार उनले आफ्नो एकनिष्ठ बुद्धिले परमेश्वरको स्मरण गर्दै बुद्धिलाई सारथी तुल्याएर मनरूपी लगामले इन्द्रियरूपी दुष्ट घोडाहरूलाई आफ्नो अधीन पारिन् ॥२॥ आफ्नो एकाग्र बुद्धिद्वारा मनलाई सर्वात्मा हरिमा लगाएर ती पयोव्रतको अनुष्ठान गर्नलागिन् ॥३॥हेतात ! व्रतको

नेश्वरतर्पणम् ॥६०॥ त एव नियमाः साक्षात्त एव च यमोत्तमाः ॥ तपो दानं व्रतं यज्ञो येन तुष्यत्यधोक्षजः ॥६१॥ तस्मादेतद्व्रतं भद्रे प्रयता श्रद्धया चर ॥ भगवान्परितुष्टस्ते वरानाशु विधास्यति ॥ ६२ ॥ इति श्रीमद्भागवते महापुराणे अष्टमस्कन्धेऽदितिपयोव्रतं नाम षोडशोऽध्यायः ॥१६॥

श्रीशुक उवाच ॥ इत्युक्ता सादिती राजन्स्वभर्त्रा कश्यपेन वै ॥ अन्वतिष्ठद्व्रतमिदं द्वादशाहमतन्द्रिता ॥ १ ॥ चिन्तयन्त्येकया बुद्ध्या महापुरुषमीश्वरम् ॥ प्रगृह्येन्द्रियदुष्टाश्वान्मनसा बुद्धिसारथिः ॥ २ ॥ मनश्चैकाग्रया बुद्ध्या भगवत्यखिलात्मनि ॥ वासुदेवे समाधाय चचार ह पयोव्रतम् ॥ ३ ॥ तस्याः प्रादुरभूत्तात भगवानादिपूरुषः ॥ पीतवासाश्चतुर्बाहुः शङ्खचक्रगदाधरः ॥ ४ ॥ तं नेत्रगोचरं वीक्ष्य सहसोत्थाय सादरम् ॥ ननाम भुवि कायेन दण्डवत्प्रीतिविह्वला ॥ ५ ॥ सोत्थाय बद्धाञ्जलिरीडितुं स्थिता नोत्सेह आनन्दजलाकुलेक्षणा ॥ बभूव तूष्णीं पुलकाकुलाकृतिस्तद्दर्शनात्युत्सवगात्रवेपथुः ॥ ६ ॥ प्रीत्या शनैर्गद्गदया गिरा हरिं तुष्टाव सा देव्यदितिः कुरूद्वह ॥ उद्वीक्षती सा पिबतीव चक्षुषा रमापतिं यज्ञपतिं जगत्पतिम् ॥ ७ ॥ अदितिरुवाच ॥ यज्ञेश यज्ञपुरुषाच्युत तीर्थपाद तीर्थश्रवः श्रवणमङ्गलनामधेय ॥ आपन्नलोकवृजिनोपशमोदयाद्य शं नः कृधीश भगवन्नसि दीननाथः ॥ ८ ॥ विश्वाय विश्वभवनस्थितिसंयमाय स्वैरं गृहीतपुरुशक्तिगुणाय भूम्ने ॥ स्वस्थाय शश्वदुप-

प्रभावले पीताम्बर-सुशोभित चतुर्भुज मूर्ति शङ्ख-चक्र-गदाधारी भगवान आदिपुरुष उनको साम्नुन्ने प्रकट भए ॥ ४ ॥ नारायणलाई आफ्ना आँखाको सम्मुख देखेर अदिति सहसा ठिङ्ग उभिइन् र प्रेमविह्वल भई उनले पृथ्वीमा लट्ठी समान लम्पसार परेर भगवान्‌लाई प्रणाम गरिन् ॥ ५ ॥ अनि उनि उभिएर अंजलि जोरी भगवान्‌को स्तुति गर्न तत्पर भइन, तर स्तुति गर्न सकिनन्, किनकि तिनका आँखा आनन्दाश्रुले रसाएर आए, शरीर रोमाञ्चित भयो, भगवद्दर्शनको उल्लासवश शरीरमा कम्प आयो र ती मौन रहिन् ॥६॥ हे कुरुनन्दन ! जगन्नाथ यज्ञेश्वर भगवान् रमापतिलाई आँखाले नै निलुँला झैं उत्कण्ठाले हेर्दै अदिति प्रीतिपूर्वक मन्द-मन्द स्वरले भगवान्‌को यस प्रकार स्तुति गर्नलागिन्–॥७॥अदितिले भनिन्–हे यज्ञेश्वर ! यज्ञपुरुष ! हे अच्युत ! हे तीर्थपाद ! हे पवित्रकीर्ते ! हे श्रवण मात्रले मङ्गलकारी भएका ! हे शरणागत जनका सङ्कट टार्नको निम्ति प्रकट हुने आदिपुरुष ! हजुर दीजनका

नाथ हुनुहुन्छ । हे भगवन् ! हे ईश ! हजुर मेरो कल्याण गर्नुहवस् ॥८॥ जो सम्पूर्ण विश्वको उत्पत्ति, स्थिति र लयका कारण, स्वेच्छानुसार विविध शक्ति र गुणहरूलाई स्वीकार्ने, भूमा, आफ्नै स्वरूपमा स्थित एवं निरन्तर वर्धमान पूर्णबोधले आत्मान्धकारलाई टार्ने हुनुहुन्छ, त्यस्ता हजुर विश्वरूपधारी भगवान् श्रीहरिलाई नमस्कार छ ॥९॥ हे अनन्त ! हजुर प्रसन्न भइसकेपछि मनुष्यलाई पनि ब्रह्माजी जस्तो लामो आयु, इच्छित शरीर अतुलित ऐश्वर्य, स्वर्ग, पृथ्वी, पाताल, सबै योगसिद्धिहरू धर्म, अर्थ तथा कामरूपी त्रिवर्ग एवं मोक्षका साधनरूप ज्ञान–यी सबै प्राप्त हुन सक्छन् अनि शत्रुहरूमा विजय पाउने आदि कामनाहरूको के गन्ती छ ? ॥१०॥ शुकदेव भन्नहुन्छ–हे भारत ! अदितिको स्तुति सुनेर सबै प्राणीका अन्तरात्मा कमलःनयन विष्णु भगवानले भन्नु भयो ॥११॥ श्रीभगवान भन्नुहुन्छ–हे देवमातः शत्रुहरूद्वारा हतश्री तथा पदच्युत आफ्ना छोराको विषयमा जो चिरकालीन अभिलाषा छ, त्यो म जान्दछु ॥१२॥ तिमी दुर्मद र श्रेष्ठ दानवगणलाई युद्धमा जितेर विजयलक्ष्मी सम्पन्न आफ्ना छोरहरूसित सुखले बस्न खोज्दैछौ ॥१३॥ तिमी इन्द्र आदि

बृंहितपूर्णबोधव्यापादितात्मतमसे हरये नमस्ते ॥ ९ ॥ आयुः परं वपुरभीष्टमतुल्यलक्ष्मीर्द्यौर्भूरसाः सकलयोगगुणास्त्रिवर्गः ॥ ज्ञानं च केवलमनन्त भवन्ति तुष्टात्त्वत्तो नृणां किमु सपत्नजयातिराशीः ॥ १० ॥ श्रीशुक उवाच ॥ अदित्यैवं स्तुतो राजन्भगवान्पुष्करेक्षणः ॥ क्षेत्रज्ञः सर्वभूतानामिति होवाच भारत ॥११॥ श्रीभगवानुवाच ॥ देवमातर्भवत्या मे विज्ञातं चिरकांक्षितम् ॥ यत्सपत्नैर्हृतश्रीणां च्यावितानां स्वधामतः ॥१२॥ तान्विनिर्जित्य समरे दुर्मदानसुरर्षभान् ॥ प्रतिलब्धजयश्रीभिः पुत्रैरिच्छस्युपासितुम् ॥ १३ ॥ इन्द्रज्येष्ठैः स्वतनयैर्हतानां युधि विद्विषाम् ॥ स्त्रियो रुदन्तीरासाद्य द्रष्टुमिच्छसि दुःखिता ॥ १४ ॥ आत्मजान्सुसमृद्धांस्त्वं प्रत्याहृतयशःश्रियः ॥ नाकपृष्ठमधिष्ठाय क्रीडतो द्रष्टुमिच्छसि ॥ १५ ॥ प्रायोऽधुना तेऽसुरयूथनाथा अपारणीया इति देवि मे मतिः ॥ यत्तेऽनुकूलेश्वरविप्रगुप्ता न विक्रमस्तत्र सुखं ददाति ॥ १६ ॥ अथाप्युपायो मम देवि चिन्त्यः संतोषितस्य व्रतचर्यया ते ॥ ममार्चनं नार्हति गन्तुमन्यथा श्रद्धानुरूपं फलहेतुकत्वात् ॥ १७ ॥ त्वयाऽर्चितश्चाहमपत्यगुप्तये पयोव्रतेनानुगुणं समेधितः ॥ स्वांशेन पुत्रत्वमुपेत्यते सुतान्गोप्ताऽस्मि मारीच तपस्यधिष्ठितः ॥ १८ ॥ उपधाव पतिं भद्रे प्रजापतिमकल्मषम् ॥ मां च भावयती पत्यावेवंरूपमवस्थितम् ॥ १९ ॥ नैतत्परस्मा आख्येयं पृष्टयाऽपि कथंचन ॥ सर्वं सम्पद्यते देवि देवगुह्यं सुसंवृतम् ॥ २० ॥ श्रीशुक उवाच ॥ एतावदुक्त्वा भग-

आफ्ना छोराद्वारा मरेका शत्रुका स्त्रीहरूलाई आफ्नो नजीकै आएर रोइरहेका देख्ने इच्छुक छौ ॥१४॥ तिमीलाई आफ्नो गुमाएको यश र वैभव फेरि प्राप्त गरेर श्रीसम्पन्न छोराहरूलाई फेरि स्वर्गमा अधिकार गरेर क्रीडा गर्नलागेका हेर्ने अभिलाषा गर्दछयौ ॥१५॥ हे देवि ! मेरो त विचार छ–यी सबै असुर युथपतिहरू अहिले प्रायः अजेय नै छन् किनकि यस बखत ती आफ्नो अनुकूल र समर्थ ब्राह्मण शुक्राचार्यद्वारा सुरक्षित छन् । अहिले तिनको प्रति गरिएको कुनै पनि उद्योग सफल हुन सक्तैन तथापि हे देवि ! म तिम्रो व्रतले धेरै प्रसन्न छु । मैले कुनै अर्को उपाय विचार्नु पर्नेछ, किनकि मेरो पूजन व्यर्थ जान सक्तैन, त्यो श्रद्धानुसार फल दिन्छ ॥१७॥ तिमीले पनि छोराहरूको रक्षाका लागि उचित रीतिले पयोव्रतद्वारा मेरो आराधना गरेकी छौ । अतः म आफ्नो एक अंशले पुत्ररूपमा मरीचिनन्दन कश्यपको तपस्यारूपी वीर्यमा स्थित भएर तिम्रा छोराहरूको रक्षा गर्नेछु ॥१८॥ हे भद्रे ! पुण्यात्मा पति

कश्यपजीमा मलाई यहाँ रूपले विराजमान देखेर तिमी उनको सतत सेवा गर ॥१९॥ हे देवि ! यस विषयमा कसैले सोधे पनि तिमी कहीं नभन्नु, किनकि देवताहरूका सबै काम गुप्त रहेर नै सिद्ध हुन्छन् ॥२०॥ श्रीशुकदेव भन्नुहुन्छ—यति भनेर भगवान् अन्तर्धान हुनुभयो । अदिति मेरो गर्भमा साक्षात् श्रीहरिको जन्म हुनेछ, भन्ने जानेर मनमनै कृतकृत्य जस्ती भएर ठूलो भक्तिले पतिको सेवा गर्नलागिन् । यता ती अमोघ दृष्टि श्रीकश्यपले पनि समाधियोगद्वारा आफ्नो शरीरमा श्रीहरिको अंश प्रविष्ट भएको देखे । हे राजन् ! जस्तै वायुको घर्षणले आगो निस्कन्छ, त्यस्तै नै उनले समाहित चित्तले अदितिको गर्भमा आफ्नो चिरकालीन तपस्या द्वारा सुरक्षित वीर्य स्थापित गरिदिए ॥२१ २३॥ अदितिको गर्भमा सनातन पुरुषलाई स्थित जानेर ब्रह्माजी आए र उनका गुप्त नामहरूले स्तुति गर्नलागे ॥२४॥ श्रीब्रह्माजी भन्दछन्—हे परम कीर्तिमान् भगवान् ! हजुरको जयहोस ! हजुरलाई हाम्रो

वांस्तत्रैवान्तरधीयत ॥ अदितिर्दुर्लभं लब्ध्वा हरेर्जन्मात्मनि प्रभोः ॥२१॥ उपाधावत्पतिं भक्त्या परया कृतकृत्यवत् ॥ स वै समाधियोगेन कश्यपस्तदबुध्यत ॥ २२ ॥ प्रविष्टमात्मनि हरेरंशं ह्यवितथेक्षणः ॥ सोऽदित्यां वीर्यमाधत्त तपसा चिरसम्भृतम् ॥ समाहितमना राजन्दार्वण्यग्निं यथाऽनिलः ॥ २३ ॥ अदितेर्धिष्ठितं गर्भं भगवन्तं सनातनम् ॥ हिरण्यगर्भो विज्ञाय समीडे गुह्यनामभिः ॥२४॥ ब्रह्मोवाच ॥ जयोरुगाय भगवन्नुरुक्रम नमोऽस्तु ते ॥ नमो ब्रह्मण्यदेवाय त्रिगुणाय नमो नमः ॥२५॥ नमस्ते पृश्निगर्भाय वेदगर्भाय वेधसे ॥ त्रिनाभाय त्रिपृष्ठाय शिपिविष्टाय विष्णवे ॥ २६ ॥ त्वमादिरन्तो भुवनस्य मध्यमनन्तशक्तिं पुरुषं यमाहुः ॥ कालो भवानाक्षिपतीश विश्वं स्रोतो यथाऽन्तः पतितं गभीरम् ॥ २७ ॥ त्वं वै प्रजानां स्थिरजङ्गमानां प्रजापतीनामसि सम्भविष्णुः ॥ दिवौकसां देव दिवश्च्युतानां परायणं नौरिव मज्जतोऽप्सु ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनप्रादुर्भावे सप्तदशोऽध्यायः ॥ १७ ॥

नमस्कार छ । हे ब्रह्मण्यदेव ! हे त्रिगुणनियन्ता ! हजुरलाई धेरै नमस्कार छ ॥२५॥ जो पृश्निका पुत्र, वेदमा निहित तथा सबैका एकमात्र विधाता हुनुहुन्छ । जसको नाभिस्थानमा त्रिलोक स्थित छ, त्रिलोकको पृष्ठभाग वैकुण्ठ जसको निवासस्थान छ र जो सबै जीवको अन्तःकरणमा स्थित रहन्छन्, ती विष्णु भगवान्लाई नमस्कार छ ॥२६॥ केवल हजुर नै त्रिभुवनका आदि, अन्त्य र मध्य हुनुहुन्छ । यसैले शास्त्रमा हजुरलाई अनन्त-शक्ति सम्पन्न पुरुष कहिएको छ । हे ईश ! जलको प्रवाहले तृणादि बगाएर लैजान्छ, त्यस्तै हजुर कालरूपले जगत्लाई तानेर लैजानु हुन्छ ॥२७॥ हजुर नै चराचर प्रजा तथा प्रजापतिहरूका जनक हुनुहुन्छ र डुब्न लागेकालाई डुङ्गा समान हुनुहुन्छ । हजुरनै स्वर्गच्युत देवताहरूका आधार हुनुहुन्छ* ॥२८॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां सप्तदशोऽध्यायः ॥१७॥

* अर्पन्छु धन, दार, पुत्र, घरको सम्पत्ति प्यारो धन । जे इच्छा मनमा छ लै गर प्रभो ! रोकेर मेरो मन ॥
रक्षामा असमर्थ छन् यि घरका सम्पत्ति दारा सुत । दस्ता प्राण बिहीन यो तन भन्ते गर्दैनँ तिमी नै हित ॥
छैनन् क्यै तिमिदेखि भिन्न मनमा कल्याण गर्ने धन । यो संसार-समुद्र तर्न सहजै देऊ प्रभो ! दर्शन ॥

(वामन भगवान्‌को जन्म र उनी बलिको यज्ञशालामा जानु)—श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! ब्रह्माद्वारा आफ्ना कर्म र पराक्रमको स्तुति गरिएपछि ती शङ्ख, चक्र, गदा र पद्म तथा पीताम्बर धारी, जन्म-मृत्युदेखि रहित कमल-नयन र चतुर्भुजमूर्ति भगवान् देवमाता अदितिको गर्भबाट प्रकट भए ॥१॥ ती पुरुषोत्तम भगवान्‌को श्याम शरीर थियो। उनको मुखकमलको तेज मकराकृत कुण्डलका कान्तिले उल्लसित भइरहेथ्यो। उनको वक्षःस्थल श्रीवत्सचिह्नले सुशोभित थियो। अन्य अङ्गमा कङ्कण, केयूर, किरीट, कन्धनी र नूपुरादि सुशोभित थिए ॥२॥ ती श्रीहरि भ्रमर-समूहका गुञ्जारयुक्त वनमालाले विभूषित थिए र उनले घाँटीमा आफ्नू कान्तिले प्रजापति कश्यपका घरको अन्धकार नष्ट पार्ने कौस्तुभ मणि धारण गरिराखेका थिए ॥३॥ भगवान्‌को जन्म भएपछि सबै दिशाहरू र जलाशय निर्मल भए अनि प्रजावर्गलाई अपार हर्ष भयो। ऋतुहरू आफाफ्ना गुणले युक्त हुनगए र स्वर्गलोक, अन्तरिक्ष, पृथ्वी, देवता, गाईं, विप्र तथा पर्वत यी सबै वर्ता हर्षित भए ॥४॥ हे राजन् ! जब चन्द्रमा श्रवण नक्षत्रमा गए, तब श्रावणको द्वादशी र अभिजित् मुहूर्तमा वामन भगवान्‌ले

श्रीशुक उवाच ॥ इत्थं विरिञ्चस्तुतकर्मवीर्यः प्रादुर्बभूवामृतभूरदित्याम् ॥ चतुर्भुजः शङ्खगदाब्जचक्रः पिशङ्गवासा नलिनायतेक्षणः ॥ १ ॥
श्यामावदातो झषराजकुण्डलत्विषोल्लसच्छ्रीवदनाम्बुजः पुमान् ॥ श्रीवत्सवक्षा वलयाङ्गदोल्लसत्किरीटकाञ्चीगुणचारुनूपुरः ॥ २ ॥ मधुव्रतव्रातविघुष्टया
स्वया विराजिताः श्रीवनमालया हरिः ॥ प्रजापतेर्वेश्मतमः स्वरोचिषा विनाशयन्कण्ठनिविष्टकौस्तुभः ॥ ३ ॥ दिशः प्रसेदुः सलिलाशयास्तदा प्रजाः
प्रहृष्टा ऋतवो गुणान्विताः ॥ द्यौरन्तरिक्षं क्षितिरग्निजिह्वा गावो द्विजाः सञ्जहृषुर्नगाश्च ॥ ४ ॥ श्रोणाश्रवणद्वादश्यां मुहूर्तेऽभिजिति प्रभुः ॥
सर्वे नक्षत्रताराद्याश्चक्रुस्तज्जन्म दक्षिणम् ॥ ५ ॥ द्वादश्यां सविता तिष्ठन्मध्यंदिनगतो नृप ॥ विजया नाम सा प्रोक्ता यस्यां जन्म विदुर्हरेः ॥ ६ ॥
शङ्खदुन्दुभयो नेदुर्मृदङ्गपणवानकाः ॥ चित्रवादित्रतूर्याणां निर्घोषस्तुमुलोऽभवत् ॥ ७ ॥ प्रीताश्चाप्सरसोऽनृत्यगन्धर्वप्रवरा जगुः ॥ तुष्टुवुर्मुनयो
देवा मनवः पितरोऽग्नयः ॥ ८ ॥ सिद्धविद्याधरगणाः सकिम्पुरुषकिन्नराः ॥ चारणा यक्षरक्षांसि सुपर्णा भुजगोत्तमाः ॥ ९ ॥ गायन्तोऽतिप्रशंसन्तो
नृत्यन्तो विबुधानुगाः ॥ आदित्या आश्रमपदं कुसुमैः समवाकिरन् ॥१०॥ दृष्ट्वाऽदितिस्तं निजगर्भसम्भवं परं पुमांसं मुदमाप विस्मिता ॥ गृहीतदेहं
निजयोगमायया प्रजापतिश्चाह जयेति विस्मितः ॥ ११ ॥ यत्तद्वपुर्भाति विभूषणायुधैरव्यक्तचिद्व्यक्तमधारयद्धरिः ॥ बभूव तेनैव स वामनो वटुः संप-

अवतार लिए। त्यस वेला सबै नक्षत्र तथा ताराहरूले प्रभुका जन्मको मङ्गलमय सूचित गरे ॥५॥ हे राजन् ! जुन द्वादशीमा भगवान्‌को जन्म भयो, त्यो 'विजया द्वादशी' नामले विख्यात भयो। त्यस समय सूर्य मध्याह्नमा थिए ॥६॥ भगवान्‌ले अवतार लिनासाथ शङ्ख, दुन्दुभि, मृदङ्ग, पणव र आनक (ढ्यांग्रो) आदि बज्नलागे, थरि-थरिका बाजा, तूर्यादिका घनघोर निनाद हुनलाग्यो ॥७॥ अप्सराहरू प्रसन्न भएर नाच्नलागे र श्रेष्ठ गन्धर्वगणले गान आरम्भ गरे। मुनि, देव, पितर अग्निदेव स्तुति गर्नलागे ॥८॥ सिद्ध, विद्याधर, किम्पुरुष, किन्नर, चारण, यक्ष, राक्षस, पक्षी, मुख्य-मुख्य नाग र देवगणका अनुचर नाच्दै-गाउँदै, प्रशंसा गर्दै देवमाता अदितिको आश्रममा पुष्पवर्षा गर्नलागे ॥९॥१०॥ अदिति आफ्नो गर्भबाट जायमान ती परम पुरुषलाई देखेर अतिशय छक्क परिन। प्रजापति कश्यपले पनि भगवान्‌ले आफ्नो योगमायाद्वारा शरीर धारण गरेको देखेर ठूलो विस्मयमा

य-जयकार गरे ॥११॥ हे राजन् ! ती अव्यक्त तथा चित्-स्वरूप श्रीहरिको रूप योगमाया निर्मित आभूषण तथा आयुधादिले शोभायुक्त एवं व्यक्त थियो त्यसैले ती नट सदृश सबैका साम् वामन ( बाउन्ने ) भए। ती वामन वटुलाई देखेर सबै महर्षिहरूले कश्यप प्रजापतिलाई अघिलाएर उनको जातकर्म आदि संस्कार सानन्द सम्पन्न गराए। जब उनको उपनयन-संस्कार भइरहेको थियो, तब सविता देवताले उनलाई गायत्री मन्त्रको उपदेश दिए। बृहस्पतिले जनै लगाइदिए र स्वयं कश्यपजीले मेखला अर्पण गरे। पृथ्वीले कृष्ण-मृगचर्म, वनका अधिपति चन्द्रदेवले दण्ड, माताले कौपीन र ओढ्ने वस्त्र, स्वर्गले छत्र दिए॥१२-१५॥ हे महाराज ! ब्रह्माजीले ती अव्ययात्मालाई कमण्डलु, सप्तर्षिले कुश र सरस्वती देवीले अक्षमाला लगाइदिइन्। त्यसपछि यक्षपति कुबेरले भिक्षा-पात्र अर्पण गरे र सतीशिरोमणि साक्षात् अम्बिकादेवीले उनलाई भिक्षा दिइन्। यसरी सबैमित सम्मानित भएर ती श्रेष्ठ वटुवामन ब्रह्मर्षि सेवित सभामा सबैमन्दा बढी शोभित भए ॥१६-१८॥ ती द्विजश्रेष्ठले उपनयन संस्कारको निम्ति स्थापित एवं प्रज्वलित अग्निको परिसमूहन, परिस्तरण पूजन गरेर

श्यतोर्दिव्यगतिर्यथा नटः ॥१२॥ तं वटुं वामनं दृष्ट्वा मोदमाना महर्षयः ॥ कर्माणि कारयामासुः पुरस्कृत्य प्रजापतिम् ॥ १३ ॥ तस्योपनीयमानस्य
सावित्रीं सविताऽब्रवीत् ॥ बृहस्पतिर्ब्रह्मसूत्रं मेखलां कश्यपोऽददात् ॥१४॥ ददौ कृष्णाजिनं भूमिर्दण्डं सोमो वनस्पतिः ॥ कौपीनाच्छादनं माता
द्यौश्छत्रं जगतः पतेः ॥१५॥ कमण्डलुं वेतगर्भः कुशान्सप्तर्षयो ददुः ॥ अक्षमालां महाराज सरस्वत्यव्ययात्मनः ॥१६॥ तस्मा इत्युपनीताय यक्षराट्
पात्रिकामदात् ॥ भिक्षां भगवती साक्षादुमाऽदादम्बिका सती ॥ १७ ॥ स ब्रह्मवर्चसेनैवं सभां सम्भावितो वटुः ॥ ब्रह्मर्षिगणसंजुष्टामत्यरोचत मारिषः
॥१८॥समिद्धमाहितं वह्निं कृत्वापरिसमूहनम् ॥ परिस्तीर्य समभ्यर्च्य समिद्भिरजुहोद्द्विजः ॥१९॥ श्रुत्वाऽश्वमेधैर्यजमानमूर्जितं बलिं भृगूणामुपकल्पि-
तैस्ततः ॥ जगाम तत्राखिलसारसम्भृतो भारेण गां सन्नमयन्पदे पदे ॥२०॥ तं नर्मदायास्तट उत्तरे बलेर्य ऋत्विजस्ते भृगुकच्छसंज्ञके ॥ प्रवर्तयन्तो भृगवः
क्रतूत्तमं व्यचक्षतारादुदितं यथा रविम् ॥२१॥त ऋत्विजो यजमानः सदस्या हतत्विषो वामवतेजसा नृप ॥ सूर्यः किलायात्युत वा विभावसुः सनत्कुमा
रोऽथ दिदृक्षया क्रतोः ॥२२॥ इत्थं सशिष्येषु भृगुष्वनेकधा वितर्क्यमाणो भगवान्स वामनः ॥ छत्रं सदण्डं सजलंकमण्डलुं विवेश विभ्रद्धयमेधवाटम्
॥२३॥ मौञ्ज्या मेखलया वीतमुपवीताजिनोत्तरम् ॥ जटिलं वामनं विप्रं मायामाणवकं हरिम् ॥२४॥ प्रविष्टं वीक्ष्य भृगवः सशिष्यास्ते सहाग्निभिः ॥

समिधाहरूको आहुति दिए ॥ १९ ॥ हे राजन् । बलिलाई भृगुवंशी विप्रहरूद्वारा रचित अश्वमेध यज्ञद्वारा भगवानको यजन गरेको सुनी सर्वशक्ति सम्पन्न भएर पनि आफ्नु भारले सम्पूर्ण पृथ्वीलाई पाउ-पाउमा न्युराउँदै वामन भगवान् यज्ञशालातिर नगीचै पुगेर नर्मदा नदीको उत्तरतटमा भृगुकक्ष क्षेत्रमा अश्वमेध यज्ञको अनुष्ठान गर्ने बलिका भृगुगोत्रीय ऋत्विज-हरूले सूर्यसदृश वामन भगवान्लाई देखे ॥२०-२१॥ हे राजन् ! वामनजीको तेजले निस्तेज भएर ती ऋत्विज यजमान तथा सदस्य विचार गर्नलागे–'के यी साक्षात् सूर्य, अग्नि वा सनत्कुमार नै यज्ञ हेर्न यहाँ आइरहेका छन् ?' शिष्यहरू समेत भृगुवंशीले विविध तर्कना गर्दागर्दै वामन छत्र, दण्ड, जलपूर्ण कमाण्डलु लिएर अश्वमेध यज्ञको मण्डपमा पुगे॥२२-२३॥ मूजको मेखला, यज्ञोपवीत तथा कृष्ण-मृगचर्म धारण गरेका माया वटु तथा जटाधारी ब्राह्मणको रूपमा श्रीहरि त्यहाँ आएका देखेर उनको तेजले प्रभावित भई भृगुपुत्रहरूले शिष्यहरू र

अग्निको साथैं उठेर तिनको स्वागत गरे। वामन भगवान्‌को त्यस रूपको अनुरूप अवयवयुक्त अति मनोहर तथा दर्शनीय आकृति देखेर यजमान ( बलि ) ले प्रसन्नताले उनलाई आसन दिए। अनि स्वागतोक्ति द्वारा भगवान्‌को अभिनन्दन गरेर राजा बलिले चरण पखाली तो निःसङ्ग तथा मनोरम प्रभुको पूजा गरे। ती धर्मज्ञ दैत्यराजले जीवका पापनाशक त्यो मङ्गलमय चरणोदक शिरमा चढाई देवाधिदेव चन्द्रशेखर शङ्कर भगवान्‌ले भक्तिपूर्वक शिरमा धारण गरेका थिए ॥२४-२८॥ बलि भन्दछन्-हे ब्राह्मन ! हामी हजुरको स्वागत गर्दछौं र हजुरलाई नमस्कार छ। म हजुरको के सेवा गर्नसक्छु ? हे आर्य ! म त हजुरलाई ब्रह्मर्षिहरूका मूर्तिमान तप मान्दछु। आज यहाँ हजुर आउनाले मेरा पितृ तृप्त भए, हाम्रो सम्पूर्ण वंश पवित्र भयो र यज्ञ पनि पूर्ण हुनगयो। हे विप्रवटो ! हजुरको पाद-प्रक्षालनले निष्पाप भएर आज मैले विधिवत् अग्निमा होम गरिलिएँ। अहो ! हजुरको चरणोदक श्री स-साना पाउले भूमि पवित्र भइन् ॥२९-३१॥ हे ब्राह्मण-कुमार ! म हजुरलाई याचक ठानिरहेको छु। हे वटो ! गाई, सुवर्ण, सामग्री समेत घर, पवित्र अन्न, जल, विप्रकन्या सम्पत्ति,

प्रत्यगृह्णन्समुत्थाय संक्षिप्तास्तस्य तेजसा ॥ २५ ॥ यजमानः प्रमुदितो दर्शनीयं मनोरमम् ॥ रूपानुरूपावयवं तस्मा आसनमाहरत् ॥२६॥ स्वागतेनाभिनन्द्याथ पादौ भगवतो बलिः ॥ अवनिज्यार्चयामास मुक्तसङ्गं मनोरमम् ॥२७॥ तत्पादशौचं जनकल्मषापहं स धर्मविन्मूर्ध्न्यदधात्सुमङ्गलम् ॥ यद्देवदेवो गिरिशश्चन्द्रमौलिर्दधार मूर्ध्ना परया च भक्त्या ॥ २८ ॥ बलिरुवाच ॥ स्वागतं ते नमस्तुभ्यं ब्रह्मन्किं करवाम ते ॥ ब्रह्मर्षीणां तपः साक्षान्मन्ये त्वार्यवपुर्धरम् ॥२९॥ अद्य नः पितरस्तृप्ता अद्य नः पावितं कुलम् ॥ अद्य स्विष्टः क्रतुरयं यद्भवानागतो गृहान् ॥ ३० ॥ अद्याग्नयो मे सुहुता यथाविधि द्विजात्मज त्वच्चरणावनेजनैः ॥ हतांहसो वार्भिरियं च भूरहो तथा पुनीता तनुभिः पदैस्तव ॥ ३१ ॥ यद्यद्वटो वांछसि तत्प्रतीच्छ मे त्वामर्थिनं विप्रसुतानुतर्कये ॥ गां काञ्चनं गुणवद्धाम मृष्टं तथान्नपेयमुत वा विप्रकन्याम् ॥ ग्रामान्समृद्धांस्तुरगान्गजान्वा रथांस्तथार्हत्तम सम्प्रतीच्छ ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनप्रादुर्भावे बलिवामनसम्वादेऽष्टादशोऽध्यायः ॥ १८ ॥

श्रीशुक उवाच ॥ इति वैरोचनेर्वाक्यं धर्मयुक्तंससूनृतम् ॥ निशम्य भगवान्प्रीतः प्रतिनन्द्येदमब्रवीत् ॥ १॥ श्रीभगवानुवाच ॥ वचस्तवैतज्जनदेव सूनृतं कुलोचितं धर्मयुतं यशस्करम् ॥ यस्य प्रमाणं भृगवः सांपराये पितामहः कुलवृद्धः प्रशान्तः ॥२॥ न ह्येतस्मिन्कुले कश्चिन्निःसत्त्वः कृपणः पुमान् ॥

ग्राम, हात्ती, घोडा तथा रथ आदि जुन वस्तुको इच्छा छ, त्यो माग्नुहवस् ॥३२॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायामष्टादशोऽध्यायः ॥ १८ ॥

( वामन भगवानले तीन पाउ पृथिवी माग्नु )–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजा बलिको धर्मयुक्त र मधुर वचन सुनेर भगवान् प्रसन्न मनले उनको प्रशंसा गर्दै बोल्नुभयो ॥१॥ श्रीभगवान् आज्ञा हुन्छ–हे नरदेव ! तिम्रो कीर्तिकारी धर्मसङ्गत र मधुर वचन तिम्रो कुलको अनुरूप नै छन्। जुन कुलमा पारलौकिक धर्ममा भृगुपुत्र शुक्राचार्य र तिम्रा कुलवृद्ध परम शान्त पितामह प्रह्लादजी प्रमाण भइसकेका छन् ॥२॥ यस कुलमा यस्तो निःसत्व तथा कृपण कुनै पुरुष भएको छैन, जसले कुनै ब्राह्मणको याचना अस्वीकार गरेको होस् वा एकपल्ट वचनलाई केही दिने प्रतिज्ञा गरेर 'दिन्न' भनेको होस्। आकाशमा झल्कने भएका चन्द्रमा सदृश शुभ्र यस कुलमा प्रह्लादजी आफ्ना निर्मल यशले देदीप्यमान भइ-

7-66

सकेका छन् । तिम्रो कुलमा यस्ता धैर्यहीन राजा कहिल्यै भएनन्, जो तीर्थ वा युद्धभूमिमा याचकले मागेपछि दान दिन पछि सरेका हुन् ॥३॥४॥ तिम्रो कुलमा हिरण्याक्षजस्तै वीर भइसके, जसलाई दिग्विजयको निम्ति गदा लिएर एक्लै सारा भूमण्डल डुल्दै रहँदा पनि कुनै वीर शत्रु भेट्न सकेनथे ॥५॥ जुन वीरलाई पृथ्वीको उद्धार गर्ने बेलामा सामुन्ने आएपछि वराहरूपधारी विष्णु भगवान्ले पनि निकै कष्टले जितेका थिए र उनको अतुलित पराक्रमको स्मरण गरेर जितेर पनि आफूलाई विजयी मानेनन् ॥६॥ दाजुका वधको समचार पाएर जब हिरण्यकशिपु रिसाई दाजूको हत्यारा श्रीहरितिर लम्के, तब हातमा त्रिशूल लिएर काल समान आफूतिर आउन लागेको देखेर समयका ज्ञाता र मायावीहरूमा श्रीविष्णु भगवान्ले विचार गरे–॥७॥८॥ 'जस्तै मृत्यु प्राणी मात्रलाई लखेट्दछ, त्यस्तै नै यो बाह्यदर्शी दैत्य म जहाँ-जहाँ जानेछु, त्यहीं-त्यहीं मलाई लखेट्तै रहने छ । अनि म यसको हृदयमै किन प्रविष्ट नहोऊँ' ॥९॥ हे दैत्यपते ! यस्तो विचार गरेर ती विष्णु भगवान् जसको हृदय उद्विग्न भइरहेको थियो, आफूतिर दगुर्दै आइलागेको परमशत्रु हिरण्य-

प्रत्याख्याता प्रतिश्रुत्य यो वाऽदाता द्विजातये ॥३॥ न सन्ति तीर्थे युधि चार्थिनाऽर्थिताः पराङ्मुखा ये त्वमनस्विनो नृपाः ॥ युष्मत्कुले यद्यशसाऽमलेन प्रह्लाद उद्भाति यथोडुपः खे ॥४॥ यतो जातो हिरण्याक्षश्चरन्नेक इमां महीम् ॥ प्रतिवीरं दिग्विजये नाविन्दत गदायुधः ॥५॥ यं विनिर्जित्य कृच्छ्रेण विष्णुः क्ष्मोद्धार आगतम् ॥ नात्मानं जयिनं मेने तद्वीर्यं भूर्यनुस्मरन् ॥६॥ निशम्य तद्वधं भ्राता हिरण्यकशिपुः पुरा ॥ हन्तुं भ्रातृहणं क्रुद्धो जगाम निलयं हरेः ॥७॥ तमायान्तं समालोक्य शूलपाणिं कृतान्तवत् ॥ चिन्तयामास कालज्ञो विष्णुर्मायाविनां वरः ॥८॥ यतो यतोऽहं तत्रासौ मृत्युःप्राणभृतामिव ॥ अतोऽहमस्य हृदयं प्रवेक्ष्यामि पराग्दृशः ॥९॥ एवं स निश्चित्य रिपोःशरीरमाधावतो निर्विविशेऽसुरेन्द्र ॥ श्वासानिलान्तर्हितसूक्ष्मदेहस्तत्प्राणरन्ध्रेण विविग्नचेताः ॥ १० ॥ स तन्निकेतं परिमृश्य शून्यमपश्यमानः कुपितो ननाद ॥ क्ष्मां द्यां दिशः खं विवरान्समुद्रान्विष्णुं विचिन्वन्न ददर्श वीरः ॥११॥ अपश्यन्निति होवाच मयाऽन्विष्टमिदं जगत् ॥ भ्रातृहा मे गतो नूनं यतो नावर्ततेपुमान् ॥१२॥वैरानुबन्ध एतावानामृत्योरिह देहिनाम्॥ अज्ञानप्रभवो मन्युरहंमानोपबृंहितः ॥ १३ ॥ पिता प्रह्लादपुत्रस्ते तद्विद्वान्द्विजवत्सलः ॥ स्वमायुर्द्विजलिङ्गेभ्यो देवेभ्योऽदात्स याचितः ॥ १४ ॥ भवानाचरितान्धर्मानास्थितो गृहमेधिभिः ॥ ब्राह्मणैः पूर्वजैः शूरैरन्यैश्चोद्दामकीर्तिभिः॥१५॥ तस्मात्त्वत्तो महीमीषद्वृणेऽहं वरदर्षभात् ॥ पदानि त्रीणि

कशिपुको शरीर तथा श्वास वायुमा लीन हुनसक्ने योग्य सूक्ष्मशरीर धारण गरेर प्रविष्ट भए ॥१०॥ अनि त्यो शून्य स्थानमा सर्वतिर खोज्दा पनि शत्रुलाई नभेटेर त्यो क्रोधपूर्वक गर्जनलाग्यो । त्यस वीर हिरण्यकशिपुले पृथ्वी, स्वर्ग, दिशा, आकाश, पाताल र समुद्रमा सर्वतिर खोज्दा पनि विष्णु भगवान्लाई भेटेन ॥११॥उनलाई नदेखेर करायो–'मैले सम्पूर्ण संसार खोजिसकें, तर त्यो भेटिएन । जहाँ गएको प्राणी फेरि फर्केर आउन्न, मेरो दाजूको वधिक अवश्य त्यहीं गयो होला भन्ने अनुमान गर्‍यो ॥१२॥ अस्तु, देहधारीहरूको वैरभाव त्यस बेलासम्म रहन्छ, जबसम्म शत्रु मर्दैन । क्रोध अज्ञानले हुन्छ र त्यसको वृद्धि अहङ्कारले हुन्छ ॥१३॥ तिम्रा पिता तथा प्रह्लादका छोरा विरोचन पनि प्रबल ब्राह्मण-भक्त थिए । उनले आफ्नो-बूढाहरू ब्राह्मण वेषधारी देवताहरूलाई उनले मागेपछि आफ्नू आयु पनि दिएका थिए ॥१४॥ तिमी पनि शुक्राचार्य आदि गृहस्थ ब्राह्मण प्रह्लाद आदि आफ्ना पूर्वज र

अन्य कीर्तिसम्पन्न शूर-वीरहरूद्वारा आचरित धर्ममा नै स्थित छन् ॥१५॥ अतः हे दैत्येन्द्र ! दानीहरूमा उत्तम तिमीसित म केवल यति पृथ्वी माग्दछु जो मेरा खुट्टाले नाप्दा तीन पाउमात्र होस् ॥१६॥ हे राजन् ! तिमी ठूला उदार तथा सारा जगतका अधिपति छौ । म योभन्दा बढी केही माग्दिन, किनकि आफूलाई चाहिने जति मात्र दान लिने विद्वान्‌लाई कुनै पाप लाग्दैन ॥१७॥ बलि भन्दछन्–हे ब्राह्मणवर ! तिम्रा कुरा त बूढा-पाकाका झैं छ, तर तिमी अहिले अबूझ बालक छौ, तिम्रो बुद्धि पनि बालक झैं छ, किनकि तिमी आफ्नू स्वार्थ पनि जान्दैनौ ॥१८॥ तीनै लोकको एकमात्र अधिपति एवं सबै द्वीपलाई दान दिनमा समर्थ मलाई स्तुतिद्वारा प्रसन्न पारेर पनि तिमी केवल तीन पाउ पृथ्वी मागिरहेका छौ–यसले तिमी बुद्धिहीन झैं देखिन्छौ ॥१९॥ हे वटो ! एकपल्ट मनेर माग्न आएको कुनै पुरुषले पनि अन्यत्र माग्ने आवश्यकता रहन्न । अतः तिमी मसित इच्छानुसार जीविका चलाउने योग्य जति इच्छा छ, उती भूमि माग ॥२० । भगवान्‌ले भन्नुभयो–हे राजन् ! तीनैलोकमा जति प्रिय विषय छन्, सबै मिलेर पनि अजितेन्द्रिय पुरुषका मनोरथ पूर्ण पार्न सक्नैनन्

दैत्येन्द्र सम्मितानि पदा मम ॥१६॥ नान्यत्ते कामये राजन्वदान्याज्जगदीश्वरात् ॥ नैनः प्राप्नोति वै विद्वान्यावदर्थं प्रतिग्रहः ॥१७॥बलिरुवाच ॥ अहो ब्राह्मणदायाद वाचस्ते वृद्धसंमताः ॥ त्वं बालो बालिशमतिः स्वार्थं प्रत्यबुधो यथा॥१८॥ मां वाचोभिः समाराध्य लोकानामेकमीश्वरम् ॥ पदत्रयं वृणीते योऽबुद्धिमान्द्वीपदायकम् ॥ १९ ॥ न पुमान्मामुपव्रज्य भूयो याचितुमर्हति ॥ तस्माद्वृत्तिकरीं भूमिं वटो कामं प्रतीच्छ मे ॥२०॥ श्रीभगवानुवाच ॥ यावन्तो विषयाः प्रेष्ठास्त्रिलोक्यामजितेन्द्रियम् ॥ न शक्नुवन्ति ते सर्वे प्रतिपूरयितुं नृप ॥ २१ ॥ त्रिभिः क्रमैरसन्तुष्टो द्वीपेनापि न पूर्यते ॥ नववर्षसमेतेन सप्तद्वीपवरेच्छया ॥२२॥ सप्तद्वीपाधिपतयो नृपा वैन्यगयादयः ॥ अर्थैः कामैर्गताः नान्तं तृष्णाया इति नः श्रुतम् ॥ २३ ॥ यदृच्छयोपपन्नेन सन्तुष्टो वर्तते सुखम् ॥ नासन्तुष्टस्त्रिभिर्लोकैरजितात्मोपसादितैः ॥ २४ ॥ पुंसोऽयं संसृतेर्हेतुरसन्तोषोऽर्थकामयोः ॥ यदृच्छयोपपन्नेन सन्तोषो मुक्तये स्मृतः ॥२५॥ यदृच्छालाभतुष्टस्य तेजो विप्रस्य वर्धते ॥ तत्प्रशाम्यत्यसन्तोषादम्भसेवाशुशुक्षणिः ॥२६॥ तस्मात्त्रीणि पदान्येव वृणे त्वद्वरदर्षभात् ॥ एतावतैव सिद्धोऽहं वित्तं यावत्प्रयोजनम् ॥२७॥ श्रीशुक उवाच ॥ इत्युक्तः स हसन्नाह वाञ्छातः प्रतिगृह्यताम् ॥ वामनाय महीं दातुं जग्राह जलभा-

॥२१॥ जो प्राणी तीन पाउ पृथ्वीले सन्तुष्ट हुन सक्तैन, त्यो यदि सातै द्वीपको इच्छा गरोस् त एक द्वीपले पनि सन्तुष्ट हुँदैन ॥२२॥ मैले सुनेको छु–जरा, पृथु तथा गय आदि राजा सप्तद्वीप पति भएर पनि धन तथा भोगको संग्रहले तृष्णा नदीलाई तर्न सकेका थिएनन् ॥२३॥ प्रारब्धवश प्राप्त धनले सन्तुष्ट पुरुष सधैं सुखी रहन्छ तर असन्तुष्ट एवं अजितेन्द्रिय पुरुष तीनैलोक पाएर पनि सुखी हुन सक्तैन ॥२४॥ अर्थ र कामले सन्तुष्ट नहुनु नै पुरुषको जन्म मरणरूपी संसारको कारण हुन्छ र स्वयं प्राप्त पदार्थहरूले सन्तुष्ट रहनु नै मोक्षको कारण मानिन्छ ॥२५॥ आफैं आइलागेको पदार्थले सन्तुष्ट विप्रको तेज बढ्दछ र असन्तोषले त्यो तेज त्यसै गरी शान्त भएर जान्छ, जस्तै जलले अग्नि शान्त हुन्छ ॥२६॥ तिमी जस्ता दानशिरोमणिसित म केवल तीन पाउ भूमि माग्दछु । त्यति भूमिले नै मेरो काम चल्दछ । आफूलाई चाहिने जति मात्र अर्थ संग्रह गर्नु नै राम्रो हुन्छ ॥२७ । श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान्‌ले यति भनेपछि राजा बलिले हाँस्तै भने–'हुन्छ, तिम्रो जे इच्छा छ, त्यही लेऊ ।' यति भनेर उनले वामन भगवान्‌लाई पृथ्वी-

दान दिनको निम्ति जलपात्र उचाले ॥२८॥ ज्ञानीहरूमा श्रेष्ठ शुक्राचार्य नारायणको इच्छाले आफ्नू ज्ञानदृष्टिले देखेर पृथ्वीदान दिन उद्यत शिष्य दैत्यराज बलिसित भन्दछन् ॥२९॥ शुक्राचार्यले भने–हे विरोचन-नन्दन ! यी कश्यपका वीर्य र अदितिको गर्भबाट उत्पन्न अव्यक्त विष्णु देवताको कार्य साधन गर्न आएका हुन् ॥३०॥ तिमीले भावी अनर्थलाई नबुझेर इनलाई पृथ्वीदिन अङ्गीकार गरिलियौ, त्यो म उचित ठानिरहेको छैन । यस्तो गर्नाले दैत्यहरूप्रति ठूलो अन्याय हुनेछ ॥३०॥ यी माया-वामनरूपधारी विष्णु तिम्रो स्थान, ऐश्वर्य, लक्ष्मी, तेज र विश्वविदित यश खोसेर इन्द्रलाई दिन्छन् । दान पाउनासाथ यी आफ्नो विश्वरूपले तीन पाउमै सम्पूर्ण त्रिलोक नापिलिने छन् । मूढ ! यी विष्णुलाई आफ्नो सर्वस्व दिएर तिमी आफ्नू निर्वाह कसरी गर्नेछौ ? यी विश्वव्यापक भगवान् आफ्नो एक पाउले पृथिवी, अर्कोले स्वर्ग र विशाल शरीरले आकाश नापिलिन्छन् अनि तेस्रो पाउको के गति होला ? ॥३२-३४॥ प्रतिज्ञा गरेर दिएको वस्तु नदिंदा नरकगामी हुनेछौ, किनकि तिमी प्रतिज्ञापूर्ण गर्न कहिल्यै समर्थ हुनसक्तैनौ॥३५॥ जे गर्नाले आफ्नो जीविका पनि समाप्त होस्

जनम् ॥ २८ ॥ विष्णवे क्ष्मां प्रदास्यन्तमुशना असुरेश्वरम् ॥ जानंश्चिकीर्षितं विष्णोः शिष्यं प्राह विदांवरः ॥२९॥ शुक उवाच ॥ एष वैरोचने साक्षाद्भगवान्विष्णुरव्ययः ॥ कश्यपाददितेर्जातो देवानां कार्यसाधकः ॥ ३० ॥ प्रतिश्रुतं त्वयैतस्मै यदनर्थमजानता न साधु मन्ये दैत्यानां महा–नुपगतोऽनतः ॥३१॥ एष ते स्थानमैश्वर्यं श्रियं तेजो यशः श्रुतम् ॥ दास्यत्याच्छिद्य शक्राय मायामाणवको हरिः ॥३२॥ त्रिविक्रमैरिमाँल्लोकान्वि–श्वकायः क्रमिष्यति ॥ सर्वस्वं विष्णवे दत्त्वा मूढ वर्तिष्यसे कथम् ॥ ३३ ॥ क्रमतो गां पदैकेन द्वितीयेन दिवं विभोः ॥ खं च कायेन महता तार्ती–यस्य कुतो गतिः ॥ ३४ ॥ निष्ठं ते नरके मन्ये ह्यप्रदातुः प्रतिश्रुतम् ॥ प्रतिश्रुतस्य योऽनीशः प्रतिपादयितुं भवान् ॥ ३५ ॥ न तद्दानं प्रशंसन्ति येन वृत्तिर्विपद्यते ॥ दानं यज्ञस्तपःकर्म लोके वृत्तिमतो यतः ॥ ३६ ॥ धर्माय यशसेऽर्थाय कामाय स्वजनाय च ॥ पञ्चधाविभजन्वित्तमिहामुत्र च मोदते ॥ ३७ ॥ अत्रापि बह्वृचैर्गीतं शृणु मेऽसुरसत्तम ॥ सत्यमोमिति यत्प्रोक्तं यन्नेत्याहानृतं हि तत् ॥ ३८ ॥ सत्तं पुष्पफलं विद्यादात्मवृक्षस्य गीयते ॥ वृक्षेऽजीवति तन्न स्यादनृतं मूलमात्मनः ॥ ३९ ॥ तद्यथा वृक्ष उन्मूलः शुष्यत्युद्वर्ततेऽचिरात् ॥ एवं नष्टानृतः सद्य आत्मा शुष्येन्न संशयः ॥ ४० ॥ पराग्रिक्तमपूर्णं वा अक्षरं यत्तदोमिति ॥ यत्किञ्चिदोमिति ब्रूयात्तेन रिच्येत वै पुमान् ॥ भिक्षवे सर्वमोंकुर्वन्नालं कामेन चात्मने ॥ ४१ ॥

यस्तो दान यो जान्नेहरू प्रशंसा गर्दैनन्, किनकि आजिविका सम्पन्न पुरुष दान, यज्ञ र तप गर्न सक्तछन् ॥३६॥ जो मनुष्य आफ्नो धनको पाँच भाग गरेर धर्म, यश, अर्थवृद्धि, भोग र स्वजनको काममा खर्च गर्दछ, त्यो यसलोक-परलोक दुवै ठाउँमा सुख पाउँछ ॥३७॥ यदि तिमी असत्यसित डराउँछौ भने हे असुरश्रेष्ठ ! यस सत्य-मिथ्याको विषयमा ऋग्वेदका श्रुतिहरूले भनेका छन्–लोकमा जुन कुरा ॐ भनेर स्वीकार गरिन्छ, त्यो सत्य र जुन 'न' यस्तो भनिन्छ, त्यही असत्य हुन्छ ॥३८॥ त्यही श्रुतिमा भनिएको छ–सत्यलाई देहरूपी वृक्षको फूल र फल ठानोस् । वृक्ष नै नरहेपछि पत्र-फूल पनि रहन पाउदैन । देहको मूल असत्य नै हो । जस्तै–जरो काटिएपछि वृक्ष शीघ्र सुकेर ढल्दछ, त्यसै गरी जसको असत्य नष्ट भइसकेको हुन्छ, त्यो शरीर निःसन्देह शीघ्र सुकेर जान्छ ॥३९॥४०॥ ॐ यो अक्षर त धनलाई टाढा लैजान्छ । अतएव यो अक्षर अपूर्ण र दातालाई धनहीन

767

धारिदिन्छ। जो भिक्षुकलाई आफ्नो सर्वस्व दिन स्वीकार गर्दछ, त्यो आफ्नो भोगहरू सुरक्षित राख्नमा समर्थ हुन सक्तैन ॥४१॥ यसको विपरीत 'नाइँ' यो जुन मिथ्या वचन छ, त्यो आफूलाई पूर्ण गर्दछ, किन्तु जुन सबदा 'नाइँ' नै भन्ने गर्दछ, त्यो दुष्कीर्तिमा त हुन्छ र श्वास फेरेर पनि मुर्दा झैं रहन्छ ॥४२॥ हे राजन्! स्त्रीसित परिहासका वेलामा, विवाहमा, आजीविकाको रक्षाका निम्ति, प्राण-सङ्कट उपस्थित भएपछि, गाई र ब्राह्मणका कल्याणार्थ तथा कसैका हिंसामा असत्य भाषण गर्नु निन्दनीय हुँदैन ॥४३॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पं० गौरीशङ्कर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां एकोनविंशोऽध्यायः ॥१९॥

(बलिले वामन भगवान्लाई तीन पाउ पृथ्वी दिनु र वामन भगवान्को विश्वरूप धारण)—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! कुलगुरु शुक्राचार्यको वचन सुनेर गृहस्थ राजा बलिले एकदिन मौन रहेर शान्त भावले भने ॥१॥ राजा बलि भन्दछन्—हे भगवन्! हजुरको कथन-जस्तो अर्थ, काम, यश एवं आजीविकामा कुनै बाधा नपर्ने काम गर्नुउचित छ तर म

अथैतत्पूर्णमभ्यात्मं यच्च नेत्यनृतं वचः ॥ सर्वंनेत्यनृतं ब्रूयात्स दुष्कीर्तिः श्वसन्मृतः ॥ ४२ ॥ स्त्रीषु नर्मविवाहे च वृत्यर्थे प्राणसङ्कटे ॥ गोब्राह्मणार्थे हिंसायां नानृतं स्याज्जुगुप्सितम् ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनप्रादुर्भावे एकोनविंशोऽध्यायः ॥ १९ ॥

श्रीशुक उवाच ॥ बलिरेवं गृहपतिः कुलाचार्येण भाषितः ॥ तूष्णीं भूत्वा क्षणं राजन्नुवाचावहितो गुरुम् ॥ १ ॥ बलिरुवाच ॥ सत्यं भगवता प्रोक्तं धर्मोऽयं गृहमेधिनाम् ॥ अर्थं कामं यशो वृत्तिं यो न बाधते कर्हिचित् ॥ २॥ न चाहं वित्तलोभेन प्रत्याचक्षे कथं द्विजम् ॥ प्रतिश्रुत्यददामीति प्राह्लादिः कितवो यथा ॥३॥ न ह्यसत्यात्परोऽधर्म इति होवाचभूरियम् ॥ सर्वं सोढुमलं मन्ये ऋतेऽलीकपरंनरम्॥४॥नाहंबिभेमि निरयान्नाधन्यादसुखार्णवात् ॥ स्थानच्यवनान्मृत्योर्यथा विप्रप्रलम्भनात् ॥ ५ ॥ यद्यद्धास्यति लोकेऽस्मिन्संपरेतं धनादिकम् ॥ तस्य त्यागे निमित्तं किं विप्रस्तुष्येन्न तेन चेत् ॥ ६ ॥ श्रेयः कुर्वन्ति भूतानां साधवो दुस्त्यजासुभिः ॥ दध्यङ्शिबिप्रभृतयः को विकल्पो धरादिषु ॥७॥ यैरियंबुभुजे ब्रह्मन्दैत्येन्द्रैरनिवर्तिभिः॥ तेषां कालोऽग्रसल्लोकान्न यशोऽधिगतं भुवि ॥ ८ ॥ सुलभा युधि विप्रर्षे ह्यनिवृत्तास्तनुत्यजः ॥ न तथा तीर्थ आयाते श्रद्धया ये धनत्यजः ॥९ ॥

प्रह्लादनन्दन विरोचनको पुत्र हुँ। अतः ब्राह्मणलाई एकपल्ट 'दिन्छु' भनेर धूर्त, कृपण झैं लोभले 'दिन्न' कसरी भनूँ? पृथ्वीले पनि भनेकी छन्—'असत्यभन्दा ठूलो पाप केही छैन। झूटो पुरुषबाहेक अरु सबैलाई धारण गर्न समर्थ छु।' म पनि ब्राह्मणको वञ्चना गर्नाले जति डराउँछु, त्यति नरकका दुःखको समुद्रझैं दरिद्रताले, पदच्युति र मृत्युबाट पनि डराउन्न। जुन धनादि मरेपछि यस जीवलाई एक दिन अवश्य छाड्छन्, जीवितावस्थामै त्यागिदिनमा के हानि छ? यदि मेरो दानले ब्राह्मण सन्तुष्ट भएनन् भने के लाभ? ॥२।६॥ हे ब्रह्मन्! दधीचि र शिवि आदि साधुजनले आफ्नो दुस्त्यज प्राणसम्म दिएर प्राणीहरूको कल्याण गरेका थिए भने पृथ्वी दिनको विषयमा के विचार गर्न? आफ्नो वचनबाट कहिल्यै पछि न हट्ने जुन दैत्यराजाहरूले यस भूमिलाई भोगेथे, तिनका लोकलाई कालले ग्रसिसक्यो र उनलाई पृथ्वीमा यश पनि मिलेन ॥७।८॥ हे ब्रह्मर्षे! युद्धमा पीठ नदेखाई प्राण त्यागिदिने वीर धेरै छन्, तर गाढा उपस्थित भएपछि श्रद्धापूर्वक धन दिने पुरुष दुर्लभ छन् ॥९॥ हे गुरो! जब धैर्यशाली र दयालु पुरुषले प्रार्थना याचकको इच्छा पूर्ण गर्नाले प्राप्त दुर्गति पनि

७६९

कल्याणरूपिणी हुन्छिन्, तब हजुर ईं ब्रह्मवेत्ताको कामना पूर्तिले प्राप्त दरिद्रताको विषयमा त भन्ने कुरै खैन ! अतः म यी वटुलाई यिनको अभीष्ट वस्तु अवश्य दिन्छु ॥१०॥ हे मुने ! वेदविधिका ज्ञाता हजुरहरू यज्ञादिले जसको यजन गर्नुहुन्छ, यी ब्राह्मण वटु उनै वरदायक विष्णु भगवान् हुन् वा कोही अरु नै होस्, म इनले माने जति पृथ्वी अवश्य दिन्छु ॥११॥ मेरो सर्वस्व लिएर म निरपराधलाई यी अधर्मपूर्वक बाँध्छन् भने पनि म इनको वध गर्ने छैन॰ किनकि शत्रु हुनाको नाताले यिनले अवश्य ब्राह्मण-वेश बनाएका छन् ॥१२॥ यदि वास्तवमा यो पवित्रकीर्ति विष्णु भगवान् हुन् भने आफ्नु सुयश कदापि छाड्ने छैनन् । यी या त मलाई युद्धमा मारेर पृथ्वी हरण गर्नन् वा मेरो हातबाट मरेर युद्धस्थलमा सुत्नन्॥१३॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! विधाताको प्रेरणाले गुरु शुक्राचार्य आफूमाथि अश्रद्धालु र आफ्नो आज्ञाको उल्लंघन गर्ने भएका सत्यपरायण र मनस्वी शिष्यलाई श्राप दिँदै भने––

मनस्विनः कारुणिकस्य शोभनं यदर्थिकामोपनयेन दुर्गतिः ॥ कुतः पुनर्ब्रह्मविदां भवादृशां ततो वटोरस्य ददामि वाञ्छितम् ॥ १० ॥ यजन्ति यज्ञक्रतुभिर्यमादृता भवन्त आम्नायविधानकोविदाः ॥ स एव विष्णुर्वरदोऽस्तु वा परो दास्याम्यमुष्मै क्षितिमीप्सितां मुने ॥ ११ ॥ यद्यप्यसावधर्मेण मां बध्नीयादनागसम् ॥ तथाप्येनं न हिंसिष्ये भीतं ब्रह्मतनुं रिपुम् ॥ १२ ॥ एष वा उत्तमश्लोको न जिहासति तद्यशः ॥ हत्वा मैनां हरेद्युद्धे शयीत निहतो मया ॥१३॥ श्रीशुक उवाच ॥ एवमश्रद्धितं शिष्यमनादेशकरं गुरुः ॥ शशाप दैवप्रहितः सत्यसन्धं मनस्विनम् ॥ १४ ॥ दृढं पण्डितमान्यज्ञः स्तब्धोऽस्यस्मदुपेक्षया ॥ मच्छासनातिगो यस्त्वमचिराद्भ्रश्यसे श्रियः ॥१५॥ एवं शप्तः स्वगुरुणा सत्यान्न चलितो महान् ॥ वामनाय ददावेनामर्चित्वोदकपूर्वकम् ॥१६॥ विन्ध्यावलिस्तदागत्य पत्नी जालकमालिनी ॥ आनिन्ये कलशं हैममवनेजन्यपां भृतम् ॥ १७ ॥

॥१४॥ 'अरे ! तँ अज्ञानी एवं मूढ छस् र आफूलाई ठूलो पण्डित ठान्दछस् । तैंले उपेक्षाभावले मेरो अपमान गर्दै मेरो आज्ञा उल्लङ्घन गरिस् । अतः तँ शीघ्र ऐश्वर्यबाट भ्रष्ट भएर जा ।' यस प्रकार गुरुले श्राप दिंदा पनि महात्मा बलि सत्यबाट विचलित भएनन् । उनले बारम्बार वामनको पूजा गरेर हातमा जल लिई उनलाई तीन पाउ पृथ्वी दान दिए ॥१५॥१६॥ मोतिहरूका आभूषण र मालाहरूले विभूषित राजपत्नी विन्ध्यावली त्यहाँ आइन् र उनले वामनको पाउ धुनका निम्ति जलपूर्ण सुवर्णको कलश राजाको हातमा दिइन्– ॥१७॥ अनि

॰ दृष्टान्त–( क्षमा वीरका गहना हुन् )– एक दिन पैगम्बर मुहम्मद जङ्गलमा थोटा रूखमुनि सुतिरहेका थिए । त्यसै बखत थोटा विधर्मी दाउर तिनलाई एक्लै देखेर मार्न आयो । उसले तरवार खैँचेर गर्जेर भन्यो––'ए मुहम्मद ! उठ, सजग हो र भन्–यस बखत तँलाई कसले बचाउन सक्छ ?' हजरतले ठिङ्ग उभिएर भने–'बचाउने उही अल्लाह छ ।' यति भन्नासाथ उर्फेर त्यसको गर्दन समाएर तरवार खोसे ? भने–'ए नापाक ! अब मन तँलाई कसले बचाउला ?' दाउर पैगम्बरको साहस र वीरता देखेर डरायो र भन्नलाग्यो––'धिक्कार ! यस बखत मेरो रक्षा गर्ने कोही छैन ।' त्यसको दीनता पूर्ण वाणी सुनेर पैगम्बरले तरवार उसैको सामुन्ने फ्याँकिदिएर भने––'नादान ! आफ्नो तरवार उचाल र दया गर्न मसित सिक । आइज, तँलाई म राम्रो बाटो बताउँछु ।' यस प्रकार क्षमा र प्रेमपूर्ण वचन सुनेर दाउर लज्जित भयो । तत्काल त्यो उनैको शिष्य बनेर रहियो ।

‡ यस ठाउँमा अनेक कथाकार यस्तो उत्प्रेक्षा गर्दछन्––जब राजा बलिले भूमिको सङ्कल्प गर्न र वामन भगवान्को पाउ पखाल्नको निम्ति जलको झारी उचाले तब शुक्राचार्य वायुरूप धारण गरेर झारी को टुटीमा यस निम्ति पसेका थिएकि त्यसबाट पानी नै ननिस्कोस् । वामन भगवान्ले यो कुरा थाहा पाएर थोटा कुश लिएर झारीको टुटीमा घोचिदिए । त्यो कुशले शुक्राचार्यको थोटा आँखा फोरिदियो र उनी त्यहाँबाट भागे । त्यसैले उनी कानो भएका हुन् । तर यस कथाको श्रीमद्भागवतले पुष्टि गर्दैन अर्थात् मूलमा छैन । सम्भव छ––माननीय कथाकारले कुनै अन्य पुराणबाट यो कथा ग्रहण गरेका हुन् ।

7-69

प्रसन्नतापूर्वक यजमान बलिले वामन भगवान्का पाउ धोए र त्यो त्रिलोक पावन चरणोदक शिरमा राखे ॥१८॥ उता आकाशमा विराजमान गन्धर्व, विद्याधर र चारण राजा बलिको त्यो विहित कर्म र सरलताको वर्णन गर्दै अति आनन्दित भएर बलिमाथि पुष्पवर्षा गर्नलागे ॥ १९ ॥ बारम्बार हजारौं दुन्दुभी बज्नलागे र गन्धर्व, किम्पुरुष तथा किन्नरगण— 'अहो ! यी मनस्वी दैत्यले जानी-जानी आफ्नो शत्रुलाई सारा त्रैलोक्य दान दिए । यिनले यो ठूलो दुष्कर कार्य गरिदिए ।' यति भनेर उनका गुण-गान गर्नलागे ॥२०॥ उता सबैको सम्मुख भगवान् अनन्तको त्रिगुणात्मक वामनस्वरूप विचित्र ढङ्गले बढ्न लाग्यो र पृथिवी, आकाश, दिशा, स्वर्ग, पाताल, समुद्र, पक्षी, मनुष्य, देवता, ऋषि–यी सबै त्यसैमा विलाए ॥२१॥ ती विभूति-सम्पन्न भगवान्को गुणमय शरीरमा ऋत्विक्, आचार्य र सदस्यगणसमेत राजा बलिले भूत, इन्द्रिय, विषय, अन्तःकरण र जीवका साथै सारा त्रिगुणमयजगत् स्थित

यजमानः स्वयं तस्य श्रीमत्पादयुगं मुदा ॥ अवनिज्यावहन्मूर्ध्नि तदपो विश्वपावनीः ॥ १८ ॥ तदाऽसुरेन्द्रं दिवि देवतागणा गन्धर्वविद्याधरसि-
द्धचारणाः ॥ तत्कर्म सर्वेऽपि गृणन्त आर्जवं प्रसूनवर्षैर्ववृषुर्मुदान्विताः ॥१९॥ नेदुर्मुहुर्दुन्दुभयः सहस्रशो गन्धर्वकिंपूरुषकिन्नरा जगुः ॥ मनस्वि-
नाऽनेन कृतं सुदुष्करं विद्वानदाद्यद्रिपवे जगत्त्रयम् ॥२०॥ तद्वामनं रूपमवर्द्धताद्भुतं हरेरनन्तस्य गुणत्रयात्मकम् ॥ भूः खं दिशो द्यौर्विवराः पयो-
धयस्तिर्यङ्नृदेवा ऋषयो यदासत ॥ २१ ॥ काये बलिस्तस्य महाविभूतेः सहर्त्विगाचार्यसदस्य एतत् ॥ ददर्श विश्वं त्रिगुणं गुणात्मके भूतेन्द्रिया-
र्थाशयजीवयुक्तम् ॥२२॥ रसामचष्टांघ्रितलेऽथ पादयोर्महीं महीध्रान्पुरुषस्य जङ्घयोः ॥ पतत्त्रिणो जानुनि विश्वमूर्तेरुर्वोर्गणं मारुतमिन्द्रसेनः ॥ २३ ॥
सन्ध्यां विभोर्वाससि गुह्य ऐक्षत् प्रजापतीञ्जघने आत्ममुख्यान् ॥ नाभ्यां नभः कुक्षिषु सप्तसिन्धूनुरुक्रमस्योरसि चर्क्षमालाम् ॥ २४ ॥ हृद्यङ्ग धर्मं
स्तनयोर्मुरारेर्ऋतं च सत्यं च मनस्यथेन्दुम् ॥ श्रियं च वक्षस्यरविन्दहस्तां कण्ठे च सामानि समस्तरेफान् ॥ २५ ॥ इन्द्रप्रधानानमरान्भुजेषु
तत्कर्णयोः ककुभो द्यौश्च मूर्ध्नि ॥ केशेषु मेघाञ्छ्वसनं नासिकायामक्ष्णोश्च सूर्यं वदने च वह्निम् ॥ २६ ॥ वाण्यां च छन्दांसि रसे जलेशं भ्रुवो-
र्निषेधं च विधिं च पक्ष्मसु ॥ अहश्च रात्रिं च परस्य पुंसो मन्युं ललाटेऽधर एव लोभम् ॥ २७ ॥ स्पर्शे च कामं नृप रेतसाम्भः पृष्ठे त्वधर्मं क्रमणेषु
यज्ञम् ॥ छायासु मृत्युं हसिते च मायां तनूरुहेष्वोषधिजातयश्च ॥ २८ ॥ नदीश्च नाडीषु शिला नखेषु बुद्धावजं देवगणानृषींश्च ॥ प्राणेषु गात्रे

देखे ॥२२॥ ती विश्वरूप भगवान्का चरणतलमा रसातल, चरणमा पृथ्वी, पिँडुलामा पर्वत, घुँडामा पक्षिवृन्द, उरुमा मरुद्गण, वस्त्रमा सन्ध्या, गुह्यप्रदेशमा प्रजापतिगण, जघन भागमा आफूसमेत सबै असुर, नाभिमा आकाश, कुक्षिमा सातैसमुद्र, उरःस्थलमा नक्षत्रमाला, हृदयमा धर्म, स्तनमा ऋत सत्य, मनमा चन्द्र, वक्षःस्थलमा पद्म, हातमा लक्ष्मी, घाँटीमा साम श्रुति एवं सम्पूर्ण शब्द, भुजाहरूमा इन्द्रादि देवता, कानमा दिशाहरू, मस्तकमा स्वर्ग, रौंमा मेघमाला, नाकमा वायु, नेत्रमा सूर्य, मुखमा अग्नि, वाणीमा वेद, जिब्रोमा वरुण, भृकुटीमा विधि र निषेध, परेलामा दिन र रात, ललाटमा क्रोध, ओठमा लोभ, स्पर्शमा काम, वीर्यमा जल, पृष्ठभागमा अधर्म, पदन्यास (हिँड्नेडुल्ने) मा यज्ञ, छायामा मृत्यु, हाँसोमा माया, रोम-समूहमा सबै औषधिहरू, नाडीहरूमा नदीजादि, नङमा शिलाहरू, बुद्धिमा ब्रह्मादि देवता र ऋषि-मुनिहरूलाई देखे । यस प्रकार वीर बलिले भगवान्को प्राण र शरीरमा समस्त

स्थावर-जंगम प्राणीहरूलाई स्थित देखे ॥२३-२९॥ हे तात ! ती सर्वात्मा भगवान्मा सम्पूर्ण भुवन देखेर सबै दैत्य आत्तिए । त्यसै बखत भगवान्को नगीचै असह्य तेजोमय सुदर्शनचक्र
गर्जने बादल समान भयङ्कर टङ्कार गर्ने शार्ङ्ग धनुष, मेघसमान गम्भीर घोषयुक्त पाञ्चजन्य शङ्ख, अतिशय वेगवती कौमोदकी गदा, ढालसमेत विद्याधर नामक खड्ग, अक्षय बाण भरिएका
दुइ ठोक्रा र लोकपाल समेत नन्द-सुनन्द आदि प्रमुख पार्षद आएर उपस्थित भए । हे राजन् ! ती भगवान् देदीप्यमान मुकुट, अंगद, मकराकृति कुण्डल, श्रीवत्स, कौस्तुभ मणि, मेखला
पीताम्बर तथा मायाहरूले गुञ्जायमान वनमालाले विभूषित भएर अत्यन्त सुशोभित भए । तत्काल उनले आफ्नो एक पाउले सारा पृथिवी नापिलिए र शरीरले आकाश तथा भुजा-
हरूले सबै दिशाहरू ढाकिदिए ॥ ३० ॥ ३३ ॥ जब उनले दोस्रो पाउले स्वर्गलाई पनि ढाकिलिए, तब तेस्रो चरणका लागि कुनै स्थान शेष रहेन, किनकि भगवान् उरुक्रमको दोस्रो
पाउ नै माथि-माथि गइरहेको महर्लोक, जनलोकभन्दा पनि माथि सत्यलोकमा पुगेको थियो ॥३४॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषा-टीकायां विंशोऽध्यायः॥२०॥

स्थिरजङ्गमानि सर्वाणि भूतानि ददर्श वीरः ॥२६॥ सर्वात्मनीदं भुवनं निरीक्ष्य सर्वेऽसुराः कश्मलापुरङ्ग ॥ सुदर्शनं चक्रमसह्यतेजो धनुश्च शार्ङ्गस्तन-
यित्नुघोषम् ॥३०॥ पर्जन्यघोषो जलजः पाञ्चजन्यः कौमोदकी विष्णुगदा तरस्विनी ॥ विद्याधरोऽसिः शतचन्द्रयुक्तस्तूणोत्तमावक्षयसायकौ च ॥३१॥
सुनन्दमुख्याउपतस्थुरीशं पार्षदमुख्याः सहलोकपालाः ॥ स्फुरत्किरीटाङ्गदमीनकुण्डलश्रीवत्सरत्नोत्तममेखलाम्बरैः ॥३२॥ मधुव्रतस्रग्वनमालया वृतो
रराज राजन्भगवानुरुक्रमः ॥ क्षितिं पदैकेन बलेर्विचक्रमे नभःशरीरेण दिशश्च बाहुभिः ॥३३॥ पदं द्वितीयं क्रमतस्त्रिविष्टपं न वै तृतीयाय तदीयमण्व-
पि ॥ उरुक्रमस्याङ्घ्रिरुपर्युपर्यथो महर्जनाभ्यां तपसः परं गतः॥३४॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कंधे विश्वरूपदर्शने विंशतितमोऽध्यायः॥२०॥
श्रीशुक उवाच ॥ सत्यं समीक्ष्याब्जभवो नखेन्दुभिर्हतस्वधामद्युतिरावृतोऽभ्यगात् ॥ मरीचिमिश्रा ऋषयो बृहद्व्रताः सनन्दनाद्या नरदेव
योगिनः ॥ १ ॥ वेदोपवेदा नियमान्विता यमास्तर्केतिहासाङ्गपुराणसंहिताः ॥ ये चापरे योगसमीरदीपितज्ञानाग्निना रन्धितकर्मकल्मषाः ॥ २ ॥
ववन्दिरे यत्स्मरणानुभावतः स्वायम्भुवं धाम गता अकर्मकम् ॥ अथाङ्घ्रये प्रोन्नमिताय विष्णोरुपाहरत्पद्मभवोऽर्हणोदकम् ॥ समर्च्य भक्त्या-
भ्यगृणाच्छुचिश्रवा यन्नाभिपंकेरुहसंभवः स्वयम् ॥ ३ ॥ धातुः कमण्डलुजलं तदुरुक्रमस्य पादावनेजनपवित्रतया नरेन्द्र ॥ स्वर्धुन्यभून्नभसि सा

( तीन पाउ पृथ्वी दान पूर्ण नहुनाले भगवान् द्वारा बलिलाई बाँध्नु )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! सत्यलोकमा प्राप्त भगवान्का चरण-कमल देखेर तिनका नख-चन्द्रका
दीप्तिले जसका तेजको आभा मन्द भइरहेको थियो र जो स्वयं त्यसको कान्तिले ढाकिए झैं थिए, ती ब्रह्मा, मरीचि आदि ऋषि, सनकादि नैष्ठिक ब्रह्मचारी एवं योगीगण, वेद, उपवेद,
नियमहरू समेत यम, तर्क, इतिहास, वेदाङ्ग, पुराण, संहिता तथा योगरूपी पवनले प्रज्वलित ज्ञानाग्निमा जसका कर्मरूपी मल डढिसकेका थिए, ती सबै योगी भगवान्को नगीचै आएर
जसको स्मरण-जनित प्रभावले उनले कर्मकलापद्वारा अप्राप्य ब्रह्मलोक पाएका थिए, ती भगवच्चरणमा प्रणाम गरे ॥१॥२॥ अनि पवित्रकीर्ति ब्रह्माले—जसको नाभि-कमलबाट ती स्वयं
उत्पन्न भएका थिए—ती विष्णु भगवान्को माथितिर उठेका चरणको पूजा गरेर अतिशय भक्तिभावले स्तुति गरे ॥३॥ हे राजेन्द्र ! भगवान् उरुक्रमका पाउ-प्रक्षालनले परम पवित्र

त्यो ब्रह्माजीको कमण्डलुको जल नै श्रीगङ्गाजीको रूपमा परिणत भयो । ती गङ्गा मानौं भगवान्‌को पवित्र कीर्ति थिइन् र अब पृथ्वीमा झरेर तीनै लोकलाई पवित्र पार्दै रहन्छिन् ॥४॥ जब भगवान्‌ले आफ्नो बिस्तार घटाउनु भयो, तब अनुचरसहित ब्रह्मादि लोकपालहरूले वामन भगवान्‌लाई सादर दर्शन-भेट अर्पण गरे ॥ ५ ॥ जल, उपहार, माला, दिव्यगन्ध-युक्त अनुलेपन सुगन्धित धूप, दीप, माला, लावा, अक्षता, फल, यवाङ्कुर, भगवान्‌का महिमामय स्तोत्र, जयघोष, नृत्य-वाद्य-गान, शङ्ख र दुन्दुभीका शब्दले ती पूजा गर्नलागे ॥६॥७॥ मन झैं द्रुतगामी ऋक्षराज जाम्ववान् तत्काल ठूलो उत्साहले भेरी उजाउँदै सर्वत्र विजय-घोषणा गरेर आए ॥८॥ यस प्रकार तीन पाउ पृथिवीको याचनाको निहुँ पारेर यज्ञकर्ममा दीक्षित आफ्ना प्रभु ो सम्पूर्ण पृथिवी हरण भएको देखेर दैत्यगण साह्रै क्रोधित भएर परस्पर कुरा गर्नलागे– ॥९॥ 'यो ब्राह्मण होइन, यो मायावीहरूको अग्रणी विष्णु नै हो र ब्राह्मण बेषमा देवताहरूको कार्य सिद्ध पार्न आएको हो ॥१०॥ हेर न, बटुरूप धारण गरेर याचना गर्दै यस शत्रुले हाम्रा स्वामीको–जसले यज्ञानुष्ठानमा दीक्षित भएर दण्ड-नीति त्यागिदिएका

पतती निमार्ष्टि लोकत्रयं भगवतो विशदेव कीर्तिः ॥४॥ ब्रह्मादयो लोकनाथाः स्वनाथाय समादृताः ॥ सानुगा बलिमाजह्रुः संक्षिप्तात्मविभूतये ॥५॥ तोयैः समर्हणैः स्रग्भिर्दिव्यगन्धानुलेपनैः ॥ धूपैर्दीपैः सुरभिभिर्लाजाक्षतफलाङ्कुरैः ॥६॥ स्तवनैर्जयशब्दैश्च तद्वीर्यमहिमाङ्कितैः ॥ नृत्यवादित्रगीतैश्च शङ्खदुन्दुभिनिःस्वनैः ॥ ७ ॥ जाम्ववानृक्षराजस्तु भेरीशब्दैर्मनोजवः ॥ विजयं दिक्षु सर्वासु महोत्सवमघोषयत् ॥ ८ ॥ महीं सर्वां हृतां दृष्ट्वा त्रिप-दव्याजयाञ्चया ॥ ऊचुः स्वभर्तुरसुरा दीक्षितस्यात्यमर्षिताः ॥ ९ ॥ न वा अयं ब्रह्मबन्धुर्विष्णुर्मायाविनां वरः ॥ द्विजरूपप्रतिच्छन्नो देवकार्यं चिकी-र्षति ॥ १० ॥ अनेन याचमानेन शत्रुणा वटुरूपिणा ॥ सर्वस्वं नो हृतं भर्तुर्न्यस्तदण्डस्य बर्हिषि ॥ ११ ॥ सत्यव्रतस्य सततं दीक्षितस्य विशेषतः ॥ नानृतं भाषितुं शक्यं ब्रह्मण्यस्य दयावतः ॥ १२ ॥ तस्मादस्य वधो धर्मो भर्तुः शुश्रूषणं च नः ॥ इत्यायुधानि जगृहुर्बलेरनुचरासुराः ॥ १३ ॥ ते सर्वे वामनं हन्तुं शूलपट्टिशपाणयः ॥ अनिच्छतो बले राजन्प्राद्रवञ्जातमन्यवः ॥ १४ ॥ तानभिद्रवतो दृष्ट्वा दितिजानीकपान्नृप ॥ प्रहस्यानुचरा विष्णोः प्रत्यषेधन्नुदायुधाः ॥१५॥ नन्दः सुनन्दोऽथ जयो विजयः प्रबलो बलः ॥ कुमुदः कुमुदाक्षश्च विष्वक्सेनः पतत्त्रिराट् ॥ १६ ॥ जयन्तः श्रुतदेवश्च पुष्पदन्तोऽथ सात्वतः ॥ सर्वे नागायुतप्राणश्चमूं ते जघ्नुरासुरीम् ॥ १७ ॥ हन्यमानान्स्वकान्दृष्ट्वा पुरुषानुचरैर्बलिः ॥ वारयामास संर-

थिए–सर्वस्व खोसिलिएको छ ॥११॥ हाम्रा स्वामी सत्यव्रती, ब्राह्मण-भक्त तथा अत्यन्त दयालु छन् । यसै निम्ति र विशेष गरेर दीक्षित हुनाले गर्दा ती झूठो त बोल्नै सक्तैन-थिए ॥१२॥ यस्तो स्थितिमा यस बटुलाई मारिदिनु नै धर्म हो र यस्तो गर्नाले हाम्रा स्वामीको उचित सेवा पनि हुन्छ ।' यस्तो सल्लाह गरेर बलिका अनुयायीहरूले विविध अस्त्र-शस्त्र खैंचिए ॥१३॥ हे राजन् ! ती सबै अति क्रोधित भएर राजा बलिको इच्छा नभए पनि शूल तथा पट्टिश आदि लिएर वामन भगवान्‌लाई मार्नको निम्ति झम्टे ॥१४॥ हे नृप ! दैत्य-सेनानायकहरूलाई शस्त्र खैंचेर आफूतिर आउन लागेका देखेर हाँस्तै विष्णु भगवान्‌का पार्षदहरूले आफ्ना शस्त्रास्त्रले तिनलाई रोकिदिए ॥१५॥ नन्द, सुनन्द, जय, विजय, प्रबल, बल, कुमुद, कुमुदाक्ष, विष्वक्सेन, गरुड, जयन्त, श्रुतदेव, पुष्पदन्त र सात्वत–यी दस-दस हजार हात्तीका बलले सम्पन्न पार्षदहरूले सारा असुर-सेना ध्वस्त पारिदिए ॥१६॥१७॥ पार्षदहरू-

द्वारा आफ्ना रिझाएका अनुचरहरू मारिएका देखेर राजा बलिले शुक्राचार्यको श्राप स्मरण गरेर तिनलाई युद्धबाट रोकिदिए ॥१८॥ बलिले भने—'हे राहो ! हे नेमे ! मेरो कुरा सुन— अब युद्ध बन्द गर र पछि हट । अहिले यो समय कार्यसाधनको छैन ॥१९॥ हे दैत्यगण ! सबै प्राणीहरूलाई सुख-दुःखादिको प्राप्ति गराउनमा समर्थ काललाई कुनै पुरुष आफ्नो पुरुषार्थ द्वारा विजयी हुन सक्तैन ॥२०॥ कुनै बेला जो हाम्रो उन्नति र देवताहरूको अवनतिका हेतु थिए, उनै भगवान काल अब हामीसित विपरीत भएका छन् ॥२१॥ बल, बुद्धि, दुर्ग, मन्त्र, औषधि तथा सामादि उपाय—यीमध्ये कुनैपनि साधनले मनुष्य काललाई पराजित पार्न सक्तैन ॥२२॥ जब विधाता अनुकूल थिए, तब तिमीहरूले भगवान्का यी पार्षदलाई धेरैपल्ट जित्यौ किन्तु आज तिनै हामीलाई जितेर यसरी गर्जिरहेका छन् । यदि कहिल्यै भाग्य अनुकूल भएछ भने हामी इनलाई फेरि जित्ने छौं । जसबाट हामीलाई सफलता प्राप्त हुनुछ, त्यो

ध्वान्काव्यशापमनुस्मरम् ॥ १८ ॥ हे विप्रचित्ते हे राहो हे नेमे श्रूयतां वचः ॥ मा युध्यत निवर्तध्वं न नः कालोऽयमर्थकृत् ॥१९॥ यः प्रभुः सर्वभूतानां सुखदुःखोपपत्तये ॥ तं नातिवर्तितुं दैत्याः पौरुषैरीश्वरः पुमान् ॥२०॥ यो नो भवाय प्रागासीदभवाय दिवौकसाम् ॥ स एव भगवानद्य वर्तते तद्विपर्ययम् ॥ २१ ॥ बलेन सचिवैर्बुद्ध्या दुर्गैर्मन्त्रौषधादिभिः ॥ सामादिभिरुपायैश्च कालं नात्येति वै जनः ॥२२॥ भवद्भिर्निर्जिता ह्येते बहुशोऽनुचरा हरेः ॥ दैवेनर्द्धैस्त एवाद्य युधि जित्वा नदन्ति नः ॥२३॥ एतान् वयं विजेष्यामो यदि दैवं प्रसीदति ॥ तस्मात्कालं प्रतीक्षध्वं यो नोऽर्थत्वाय कल्पते ॥२४॥ श्रीशुक उवाच ॥ पत्युर्निगदितं श्रुत्वा दैत्यदानवयूथपाः ॥ रसां निर्विविशू राजन्विष्णुपार्षदताडिताः ॥ २५ ॥ अथ तार्क्ष्यसुतो ज्ञात्वा विराट् प्रभुचिकीर्षितम् ॥ बबन्ध वारुणैः पाशैर्बलिं सौत्येऽहनि क्रतौ ॥ २६ ॥ हाहाकारो महानासीद्रोदस्योः सर्वतो दिशम् ॥ गृह्यमाणेऽसुरपतौ विष्णुना प्रभविष्णुना ॥ २७ ॥ तं बद्धं वारुणैः पाशैर्भगवानाह वामनः ॥ नष्टश्रियं स्थितप्रज्ञमुदारयशसं नृप ॥ २८ ॥ पदानि त्रीणि दत्तानि भूमेर्मह्यं त्वयाऽसुर ॥ द्वाभ्यां क्रान्ता मही सर्वा तृतीयमुपकल्पय ॥ २९ ॥ यावत्तपत्यसौ गोभिर्यावदिन्दुः सहोडुभिः ॥ यावद्वर्षति

*कालको प्रतीक्षा गर ॥२३-२४॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! स्वामीका वचन सुनेर विष्णु भगवान्का पार्षदद्वारा प्रताडित ती दैत्य र दानवयूथपति रसातल लोकमा गए ॥२५॥ अनि तार्क्ष्यनन्दन गरुडजीले विराट् भगवान्को अभिप्राय बुझेर यज्ञ समाप्त हुने दिन राजा बलिलाई वरुणदेवको पाशले बेसरी टन्काइदिए ॥२६॥ समर्थ भगवान् विष्णुद्वारा दैत्यराज बलिलाई बाँधिसकेपछि पृथिवी तथा आकाशमा चारैतिर हाहाकार मच्चियो ॥२७॥ हे राजन् ! यस प्रकार श्रीहीन भएर वरुण पाशले आबद्ध उदारकीर्ति एवं स्थितप्रज्ञ राजा बलिसित श्रीवामन भगवान् भन्नुहुन्छ—॥ २८ ॥ हे असुरराज ! तिमीले मलाई तीन पाउ पृथ्वी दिन्छु भनेका थियौ, त्यसमा दुइ पाउले सबै पृथिवी ढाकियो। अब तेस्रो पाउ पूर्ण पार ॥२९॥

---

* छन् एकै धरिका त भिन्नु कसरी, आफ्ना बिरा जन । आफ्नै दोष विचार्नु, छैन अरूको क्यै दोष हे सज्जन !
राख्ने छन् जबसम्म दृष्टि प्रभुले, हो भक्त आफ्नो मनी । त्यस्लाई सुख शान्ति मिल्दछ सदा, बल्नेछ ज्ञानी धनी ॥
मर्दैनन् जबसम्म ध्यान हरिले, खाना, दुलाका भर । जाने पर्दछ उच्च नीच नमनी, प्रत्येक नारी नर ॥
छैन्दै बिर्सनु हुन्न नाम प्रभुको, राख्नू सदा हिम्मत ! राख्नन् जुन रितले प्रसन्न मनले बस्तु चिताई हित ॥

जहाँसम्म सूर्य आफ्नो किरणले ताप पुऱ्याउँछन्, ग्रह समेत चन्द्रमा टलक्क रहन्छन् र मेघ पानी पार्दै रहन्छन् त्यहाँसम्मको पृथ्वी एकमात्र तिम्रा अधिकारमा थिइन् ॥३०॥ अत्र देख्दा-देख्दै मैले आफ्नो एक पाउले सारा भूलोक, शरीरले आकाश र दशै दिशा तथा दोस्रो पाउले स्वर्गलोक ढाकिलिएँ ॥३१॥ अतः अब प्रतिज्ञा गरेको कुरा पूर्ण गर्न नसकेको अपराधमा तिमीले नरकगामी हुनुपर्दछ । यस विषयमा आफ्ना गुरुको अनुमतिअनुसार यिमी नरकमा जाकिन्छौ । जो प्रतिज्ञा गरेको वस्तु दिनमा याचकलाई धोका दिन्छ, त्यसका सबै मनोरथ व्यर्थ हुन्छन् र स्वर्ग त परै जाओस् उल्टो त्यसले नरकगामी हुनुपर्दछ ॥३२-३३॥ आफूलाई ठूलो धनी मान्ने तिमीले 'दिन्छु' भनेर मलाई धोका दियौ । अतः केही वर्षसम्म झूटो बोलेको फलस्वरूप तिमी नरक भोग ॥३४॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायामेकविंशोऽध्यायः ॥२१॥

( वामन भगवान् प्रसन्न भएर बलिलाई सुतललोक पठाउनु )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! वामन भगवानद्वारा तिरस्कृत भएर सत्यबाट डगाएपछि बलिले अलिकति पनि

पर्जन्यस्तावती भूरियं तव ॥ ३० ॥ पदैकेन मया क्रान्तो भूर्लोकः खं दिशस्तनोः ॥ स्वर्लोकस्तु द्वितीयेन पश्यतस्ते स्वमात्मना ॥ ३१ ॥ प्रतिश्रुतमदातुस्ते निरये वास इष्यते ॥ विश त्वं निरयं तस्माद्गुरुणा चानुमोदितः ॥ ३२ ॥ वृथा मनोरथस्तस्य दूरे स्वर्गः पतत्यधः ॥ प्रतिश्रुतस्य दानेन योऽर्थिनं विप्रलम्भते ॥ ३३ ॥ विप्रलब्धो ददामीति त्वयाऽहं चाढ्यमानिना ॥ तद्व्यलीकफलं भुंक्ष्व निरयं कतिचित्समाः ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनप्रादुर्भावे बलिनिग्रहो नामैकविंशोऽध्यायः ॥२१॥

श्रीशुक उवाच ॥ एवं विप्रकृतो राजन्बलिर्भगवताऽसुरः ॥ भिद्यमानोऽप्यभिन्नात्माप्रत्याहाविक्लवं वचः॥१॥ बलिरुवाच ॥ यद्युत्तमश्लोक भवान्ममेरितं वचो व्यलीकं सुरवर्य मन्यते ॥ करोम्यृतं तन्न भवेत्प्रलम्भनंपदं तृतीयं कुरु शीर्ष्णि मे निजम्॥२॥ बिभेमिनाहं निरयात्पदच्युतो न पाशबन्धाद्व्यसनादुरत्ययात् ॥नैवार्थकृच्छ्राद्भवतो विनिग्रहादसाधुवादाद्भृशमुद्विजेयथा॥३॥पुंसां श्लाघ्यतमं मन्ये दण्डमर्हत्तमार्पितम् ॥ यं न माता पिता भ्राता सुहृदश्चादिशन्ति हि ॥४॥ त्वं नूनमसुराणां नः पारोक्ष्यः परमो गुरुः ॥ यो नोऽनेकमदान्धानां विभ्रंशं चक्षुरादिशत् ॥५॥ यस्मिन्वैरानुबन्धेन रूढेन विबुधेतराः॥बहवो लेभिरे सिद्धिं यामुहैकान्तयोगिनः ॥ ६ ॥ तेनाहं निगृहीतोऽस्मि भवता भूरिकर्मणा ॥ बद्धश्च वारुणैःपाशैर्नातिव्रीडे न विव्यथे ॥७॥ पितामहो मे भव-

विचलित नभइकन धैर्यपूर्वक भने– ॥१॥ राजा बलि भन्दछन्–हे पवित्रकीर्ति सुरश्रेष्ठ ! यदि हजुर मेरो वाक्य झूठो मान्नुहुन्छ भने म त्यसलाई सत्य पार्दछु । हजुरलाई धोका दिन्न । आउनुस्, हजुर आफ्नो तेस्रो पाउ मेरो माथमा राखेर नापिलिनुस् ॥२॥ हे भगवन् ! म अपकीर्तिले जति डराउँछु त्यति नरक, पदच्युति, पाश-बन्धन, दुस्तर कष्ट, अर्थकष्ट एवं हजुरले दिएका दण्डले पनि डराउन्न । मनुष्यका पूज्यतम पुरुषद्वारा प्रदत्त दण्डलाई अत्यन्त वाञ्छनीय मान्दछु, किनकि माता, पिता, भाइ तथा सुहृद् आदि मोहवश त्यस्ता दण्ड दिन समर्थ हुन सक्तैनन् । हजुर परोक्षरूपले हामी असुरहरूका गुरु हुनुहुन्छ, किनकि अनेक प्रकारका मदले अन्धा हामीलाई हजुर ऐश्वर्य-नाशरूपी नेत्र दिइरहनु भएकोछ ॥३-५॥ हजुरसित शत्रुता गरेर अनेक दैत्यगणले त्यो परमसिद्धि पाएका छन्, जुन केवल योगीले पाउन सक्तछन्, अरु होइन ॥६॥ उहाँले मलाई समाउनु भएको छ र म वरुण-पाशले बाँधिएको छु । यसनिम्ति

मलाई न लाज छ न कुनै व्यथा नै छ ॥७॥ हे प्रभो ! जसको कीर्ति विश्वविख्यात छ, ती मेरा पितामह प्रह्लाद हजुरका आफ्ना जनमा श्रेष्ठ मानिएका थिए। ती केवल हजुरकै अधीन थिए। यसै निम्ति उनलाई हजुरका विरोधी पिता हिरण्यकशिपुद्वारा अनेक यातना दिइयो ॥८॥ तर मेरा ती अगाधबोध तथा साधुश्रेष्ठ पितामहले यो विचारेर–'जो आयु पूर्ण भएपछि एक दिन त्याग्नै पर्दछ, त्यस देहले जो केवल परधन हरण नै मुख्य मान्दछन्, ती स्वजननायक, चोरहरूसित, जन्म-मरणरूपी संसार-चक्रमा हेतुस्वरूप भार्यासित र गृह आदिले मरणधर्मा पुरुषलाई के लाभ होला? यिनमा केवल आयु नै नष्ट हुन्छ।' जन-संघर्षले भयभीत भई आफ्नै पक्षलाई नष्ट पार्ने हजुरका निर्भय एवं निश्चल पादपद्मको मैले सहारा लिएको थिएँ ॥९॥१०॥ अनि ओसित पुरुष उन्मत्त भएर मृत्युको नगीच उभिई आफ्नो जीवनलाई अनिश्चित मान्दैन, त्यस वैभवबाट हठात् वञ्चित पारेर विधाताले मलाई पनि आफ्नो शत्रुरूपीपरमेश्वरको नगीच पुऱ्याइदिएको छ ॥११॥ श्रीशुकदेव भन्नुहुन्छ–हे कुरुश्रेष्ठ ! जब राजा बलि यसरी भनिरहेका थिए, उसै बेला चन्द्रमा समान भगवान्‌का प्रिय भक्त प्रह्लाद पनि

दीयसम्मतः प्रह्लाद आविष्कृतसाधुवादः ॥ भवद्विपक्षेण विचित्रवैशसं संप्रापितस्त्वत्परमः स्वपित्रा ॥८॥ किमात्मनानेन जहाति योऽन्ततः किं रिक्थहारैः स्वजनाख्यदस्युभिः ॥ किं जायया संसृतिहेतुभूतया मर्त्यस्य गेहैः किमिहायुषो व्ययः ॥९॥ इत्थं स निश्चित्य पितामहो महानगाधबोधो भवतः पादपद्मम् ॥ ध्रुवं प्रपेदे ह्यकुतोभयं जनाद्भीतः स्वपक्षक्षपणस्य सत्तमः ॥१०॥ अथाहमप्यात्मरिपोस्तवांतिकं दैवेन नीतः प्रसभं त्याजितश्रीः ॥ इदं कृतांतांतिकवर्ति जीवितं तथाऽध्रुवं स्तब्धमतिर्न बुध्यते ॥११॥ श्रीशुक उवाच ॥ तस्येत्थं भाषमाणस्य प्रह्लादो भगवत्प्रियः ॥ आजगाम कुरुश्रेष्ठ राकापतिरिवोत्थितः ॥१२॥ तमिन्द्रसेनः स्वपितामहं श्रिया विराजमानं नलिनायतेक्षणम् ॥ पांशुं पिशङ्गाम्बरमञ्जनत्विषं प्रलम्बबाहुं सुभगं समैक्षत ॥१३॥ तस्मै बलिर्वारुणपाशयन्त्रितः समर्हणं नोपजहार पूर्ववत् ॥ ननाम मूर्ध्नाऽश्रुविलोललोचनः सव्रीडनीचीनमुखो बभूव ह ॥१४॥ स तत्र हासीनमुदीक्ष्य सत्पतिं सुनंदनंदाद्यनुगैरुपासितम् ॥ उपेत्य भूमौ शिरसा महामना ननाम मूर्ध्ना पुलकाश्रुविक्लवः ॥१५॥ प्रह्लाद उवाच ॥ त्वयैव दत्तं पदमैन्द्रमूर्जितं हृतं तदेवाद्य तथैव शोभनम् ॥ मन्ये महानस्य कृतो ह्यनुग्रहो विभ्रंशितो यच्छ्रिय आत्ममोहनात् ॥१६॥ यया हि विद्वानपि मुह्यते यतस्तत्को विचष्टे गतिमात्मनो यथा ॥ तस्मै नमस्ते जगदीश्वराय वै नारायणायाखिललोकसाक्षिणे ॥ १७ ॥ श्रीशुक उवाच ॥ तस्यानुशृण्वतो राजन्प्रह्लादस्य कृता-

त्यहाँ आइपुगे ॥१२॥ तब दैत्यराज बलिले श्रीसम्पन्न, कमल झैं विशाल नयन हुने, उन्नतकाय, पीताम्बरधारी, श्याम कान्तियुक्त, विशालबाहु एवं अतिमनोहर पितामहलाई आफ्नो सामुन्ने देखे॥१३॥तर वरुण-पाशले बाँधिएका हुनाले बलिले उनको पूर्ववत् पूजा गर्न सकेनन्। उनले अश्रुपूर्ण नेत्रले उनलाई मस्तक न्युराएर प्रणाम गरे र सार्है लाज मानी मुख तल न्युराए ॥१४॥ पुलकावली एवं नेत्रमा जल भरिनाले विह्वल महामना प्रह्लादले नन्द-सुनन्दादि पार्षदहरूले सेवित साधुजनका अधिपति श्रीहरिलाई त्यहाँ विराजमान देखी तथा उनको नगीच गएर पृथ्वीमा शिर राखेर प्रणाम गरे ॥१५॥ प्रह्लादले भने–हे प्रभो ! हजुरले नै बलिलाई अति समृद्धिशाली इन्द्रपद दिनुभयो र हजुरले नै आज त्यो खोस्नु भयो। हजुरले यो सार्है राम्रो गर्नुभयो, जो यसलाई आत्मावो निम्ति मोहस्वरूपा राज्यलक्ष्मीबाट भ्रष्ट पारिदिनु भयो, यो धेरै ठूलो अनुग्रह भयो ॥१६॥ जसले ठूला-ठूला विद्वान् पनि मोहित

775

हुन्छन् । ती लक्ष्मी रहेसम्म यस्तो को छ, जो स्व-स्वरूपलाई राम्ररी जान्न सकोस् ? अतः लक्ष्मीलाई हरण गर्ने हजुर अखिल लोकका साक्षी जगदीश्वर नारायणलाई प्रणाम छ ॥१७॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! हात जोरेर उभिएका प्रह्लादको समक्ष भगवान् ब्रह्मा श्रीमधुसूदनसित केही भन्न उद्यत भए ॥१८॥ पतिमै आफ्ना पतिलाई बाँधिएका देखेर बलिकी साध्वी पत्नी विन्ध्यावली डरले व्याकुल भइ तल मुख पारी अतिशय विनीतभावले हात जोरेर वामन भगवान्‌सित बोलिन्–॥१९॥ उनी भन्दछिन्–हेईश ! हजुरले क्रीडाका लागि जग रचना गर्नुभएको छ ! कुबुद्धि व्यक्ति आफ्नो प्रभुत्व मान्दछन् । हजुरले नै तिनमा कर्तृत्वको आरोप गर्नुभएको छ ! तो निर्लज्जहजुरलाई के अर्पण गर्नन् ॥ २० ॥ ब्रह्मा भन्दछन् हे भूतभावन ! हे भूतेश्वर ! हे देवाधिदेव ! हे विश्वरूप ! अब हजुर यसलाई छाडिदिनोस्, यसको सर्वस्व खोसिइसक्यो । अब यो दण्डको भागी रहेन ॥२१॥ यसले आफ्नो मनमा मैलो नल्याएर सम्पूर्ण पृथ्वी, पुण्यकर्मद्वारा उपार्जित लोक र शरीरसम्म हजुरलाई दियो ॥ २२ ॥ हे नाथ ! जसका पवित्र चरणकमलमा कपटहीन भावले जलको अर्घ्य र दूब तथा

ञ्जलेः ॥ हिरण्यगर्भो भगवानुवाच मधुसूदनम् ॥१८॥ बद्धं वीक्ष्य पतिं साध्वीं तपत्नीं भयविह्वला ॥ प्राञ्जलिः प्रणतोपेन्द्रं बभाषेऽवाङ्मुखी नृप ॥१९॥ विंध्यावलिरुवाच ॥ क्रीडार्थमात्मन इदं त्रिजगत्कृतं ते स्वाम्यं तु तत्र कुधियोऽपर ईश कुर्युः ॥ कर्तुः प्रभोस्तव किमस्यत आवहन्ति त्यक्तह्रियस्त्व· दवरोपितकर्तृवादाः ॥२०॥ ब्रह्मोवाच ॥ भूतभावन भूतेश देवदेव जगन्मय ॥ मुञ्चैनं हृतसर्वस्वं नायमर्हति निग्रहम् ॥२१॥ कृतस्ना तेऽनेन दत्ता भूर्लोकाः कर्मार्जिताश्च ये ॥ निवेदितं च सर्वस्वमात्माविक्लवया धिया ॥२२॥ यत्पादयोरशठधीः सलिलं प्रदाय दूर्वाङ्कुरैरपि विधाय सतीं सपर्याम् ॥ अप्युत्तमां गतिमसौ भजते त्रिलोकीं दाश्वानविक्लवमनाः कथमार्तिमृच्छेत् ॥ २३ ॥ श्रीभगवानुवाच ॥ ब्रह्मन् यमनुगृह्णामि तद्विशो विधुनोम्यहम् ॥ यन्मदः पुरुषः स्तब्धो लोकं मां चावमन्यते ॥२४॥ यदा कदाचिज्जीवात्मा संसरन्निजकर्मभिः ॥ नानायोनिष्वनीशोऽयं पौरुषीं गतिमाव्रजेत् ॥२५॥ जन्मकर्मवयोरूपविद्यैश्वर्यधनादिभिः ॥ यद्यस्य न भवेत्स्तम्भस्तत्रायं मदनुग्रहः ॥ २६ ॥ मानस्तम्भनिमित्तानां जन्मादीनां समन्ततः ॥ सर्वश्रेयः· प्रतीपानां हन्त मुह्येन्न मत्परः ॥ २७ ॥ एष दानवदैत्यानामग्रणीः कीर्तिवर्धनः ॥ अजैषीदजयां मायां सीदन्नपि न मुह्यति ॥ २८ ॥ क्षीणरिक्थ· श्च्युतः स्थानात्क्षिप्तो बद्धश्च शत्रुभिः ॥ ज्ञातिभिश्च परित्यक्तो यातनामनुयापितः ॥ २९ ॥ गुरुणा भर्त्सितः शप्तो जहौ सत्यं न सुव्रतः ॥ छलैरुक्तो

अंकुरहरूले नै पूजा गरेर उत्तम गति पाउँछ भने उनै हजुरलाई अभिन्न चित्तले सम्पूर्ण त्रिलोक अर्पिने बलि कष्ट कसरी पाउला ? ॥ २३ ॥ प्रभुले भन्नुभयो–हे ब्रह्मन् ! म जसमाथि कृपा गर्दछु, त्यसको सम्पूर्ण धन खोसिलिन्छु, किनकि धनको मदले उन्मत्त भएर प्राणी मेरा पुण्यलोकहरूको निरादर गर्न लाग्दछ ॥२४॥ कर्मले विवश जीवात्मा विविध योनिहरूमा चक्र झैं घुम्दै कहिले काहीं मनुष्य देह पाउँछ ॥२५॥ मानव तनमा यदि जन्म, कर्म, अवस्था, रूप विद्या, ऐश्वर्य र धनादिको गर्व छैन भने त्यसलाई मेरो अनुग्रह नै ठान ॥२६॥ जो पुरुष मेरो शरणमा आउँछ, त्यसलाई सबै श्रेयको विरोधी मानेर उद्धतताको हेतु स्वरूप जात-मातको अभिमानले कुनै प्रकार पनि मोहित पार्दैनन् ॥२७॥ हे राजन् ! दैत्य र दानव-हरूमा मुख्य र आफ्नो कीर्ति बढाउने राजा बलिले जित्न नसकिने मायालाई जितिलिए । यसै कारणले यति कष्ट पाउँदा पनि यो मोहमा प्राप्त भएनन् ॥२८॥ यो धनहीन भएर

आफ्नो स्थानबाट भ्रष्ट भयो, शत्रुहरूद्वारा तिरस्कृत गरियो, बन्धनमा बाँधियो र ज्ञात-समाजद्वारा त्यागिदिइयो। यस प्रकार यसलाई विविध प्रकारका यातनाहरू दिइए। यसलाई गुरुद्वारा डर देखाउन लगाइयो र श्राप पनि दिइयो। तैपनि दृढ सङ्कल्प हुनाले गर्दा यसले आफ्नो सत्य वचनलाई त्यागेन यद्यपि मैले योसित छलपूर्वक कुरा गरें, तैपनि यस सत्यभाषीले आफ्नो धर्म छाडेन ॥२९-३०॥ अतः मैले यसलाई यो उत्तम स्थान प्रदान गरेको हुँ, जो देवताहरूलाई पनि दुष्प्राप्य छ। पछि गएर सावर्णि मन्वन्तरमा यो मेरो आश्रयमा रहने इन्द्र बन्नेछ ॥३१॥ त्यतिसम्म यो विश्वकर्माले बनाएको त्यो सुतललोकमा बसोस्। जहाँ बस्नेलाई मेरो कुनै प्रकारको आधि-व्यधि, क्लान्ति, तन्द्रा, पराभव तथा विघ्नले कष्ट दिन्नन् ॥३२॥ हे महाराज इन्द्रसेन ! तिम्रो मङ्गल होस्, तिमी आफ्ना सबै जाति-बन्धुहरू सहित देवताहरूको पनि अभीष्ट सुतललोकमा जाऊ ॥३३॥ त्यहाँ बसेपछि लोकपालगण पनि तिम्रो पराभव गर्न सक्तैनन्–अनि अरुको त कुरै छैन। जुन दैत्य तिम्रो आज्ञा उल्लङ्घन गर्नन्, तिनलाई मेरो चक्रले नष्ट गरिदिनेछ ॥३४॥ हे वीर ! त्यहाँ सबै

मया धर्मो नायं त्यजति सत्यवाक्॥३०॥ एष मे प्रापितः स्थानं दुष्प्रापममरैरपि ॥ सावर्णेरन्तरस्यायं भवितेन्द्रो मदाश्रयः ॥३१॥ तावत्सुतलमध्यास्तां
विश्वकर्मविनिर्मितम्॥यत्राधयो व्याधयश्चक्लमस्तन्द्रापराभवः॥ नोपसर्गानिवसतां सम्भवन्ति ममेक्षया॥३२॥ इन्द्रसेन महाराज याहि भो भद्रमस्तु ते ॥
सुतलं स्वर्गिभिः प्रार्थ्यं ज्ञातिभिः परिवारितः ॥३३॥ न त्वामभिभविष्यन्ति लोकेशाः किमुतापरे ॥ त्वच्छासनातिगान्दैत्यांश्चक्रं मे सूदयिष्यति॥३४॥
रक्षिष्ये सर्वतोऽहं त्वां सानुगं सपरिच्छदम् ॥ सदा सन्निहितं वीर तत्र मां द्रक्ष्यते भवान् ॥३५॥ तत्रदानवदैत्यानां सङ्गात्ते भाव आसुरः॥ दृष्ट्वा मदनुभावं
वै सद्यः कुण्ठो विनङ्क्ष्यति ॥३६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनप्रादुर्भावे बलिवामनसंवादो नाम द्वाविंशोऽध्यायः ॥२२॥
श्रीशुक उवाच ॥ इत्युक्तवन्तं पुरुषं पुरातनं महानुभावोऽखिलसाधुसम्मतः ॥ बद्धाञ्जलिर्बाष्पकलाकुलेक्षणो भक्त्युद्गलो गद्गदया गिराऽब्रवीत्
॥ १ ॥ बलिरुवाच ॥ अहो प्रणामाय कृतः समुद्यमः प्रपन्नभक्तार्थविधौ समाहितः यल्लोकपालैस्त्वदनुग्रहोऽमरैरलब्धपूर्वोऽपसदेऽसुरेऽर्पितः
॥ २ ॥ श्रीशुक उवाच ॥ इत्युक्त्वा हरिमानम्य ब्रह्माणं सम्भवं ततः ॥ विवेश सुतलं प्रीतो बलिर्मुक्तः महासुरैः ॥ ३ ॥ एवमिन्द्राय भगवान्प्र-

अनुचरगण र भोग-सामग्रीहरू सहित निवास गर्दा म सबै प्रकारले रक्षा गर्नेछु र तिमी मलाई सर्वदा आफ्नो नजीकै विद्यमान देख्नेछौ ॥३५॥ त्यहाँ दैत्य र दानवहरूको सहवासले प्राप्त तिम्रो सारा आसुरभाव मेरो प्रभावले कुण्ठित भएर तत्काल नष्ट हुनेछ ॥३६॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पं० गौरीशंकर'चमिष्ट'कृत नेपाली भाषाटीकायां द्वाविंशोऽध्याय॥२२॥

(राजा बलि सुतललोकमा जानु र वामन भगवान्ले उपेन्द्र पद पाउनु)–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान्ले यसरी आज्ञा भएपछि अश्रुजलको भेलले टलपल-टलपल नेत्र हुने र साधु-सम्मानित महानुभाव राजा बलिले हात जोरेर भावावेशवश घाँटी रुद्ध भए पनि गद्गद वाणीमा भने–॥१॥ राजा बलि भन्दछन्–अहो ! हजुरलाई दण्डवत् प्रणाम गर्नको निम्ति गरिएको उद्योग पनि आज शरणागत भक्तलाई प्राप्त हुने फल दिनमा समर्थ हुनगयो। हजुरको जुन कृपा लोकपाल देवताहरूलाई पनि कहिल्यै प्राप्त भएको थिएन, त्यो आज हजुरले म असुराधमलाई चविसयो ॥ २ ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! त्यसपछि महाराज बलि वरुण-पाशबाट मुक्त भएर महादेव तथा ब्रह्माजी समेत भगवान् श्रीहरिलाई प्रणाम

गरेर अन्य असुरगण साथमा लिएर प्रसन्नतापूर्वक सुतललोक जाँदा भए ॥३॥ यस प्रकार ती भगवान्‌ले बलिसित स्वर्गलोक खोसेर इन्द्रलाई दिए र अदितिको कामना पूर्ण पारेर स्वयं उपेन्द्ररूपमा संसारको शासन गर्न लागे ॥४॥ त्यसपछि आफ्नो वंशधर पौत्र बलिलाई भगवान्‌को कृपा प्राप्त गरेर वरुण-पाशबाट मुक्त देखेर श्रीप्रह्लादले भक्तिले विनम्र भई यस प्रकार भने–॥५॥ प्रह्लादजी भन्दछन्–हे प्रभो ! जसको सबै चराचर जीव वन्दना गर्दछन्, ती ब्रह्मादिक देवता पनि जसका चरणलाई नमस्कार गर्ने गर्दछन् । उनै हजुर हामी असुरहरूका दुर्गपाल बन्नुभयो । हजुरको यस्तो कृपा त ब्रह्माजी, लक्ष्मी र महादेवजीलाई पनि प्राप्त हुनसकेको थिएन । अनि अरूको विषयमा त कुरै छैन ॥६॥ हे शरणदाता प्रभो ! जसका चरण-कमलका मकरन्दको सेवन गरेर । नै ब्रह्मादि देवताहरूलाई सृष्टि-रचना आदिका विभूतिहरू उपलब्ध भएका थिए, उनै हजुरका दयादृष्टिका पात्र हामी कुमार्गी एवं दुष्ट योनिमा उत्पन्न किन बनाइदियो ? ॥७॥ अहो ! हजुरको लीला पनि बडो विचित्र हुन्छ, जसले आफ्नी अपरिमित योगमायाको लीलाले नै सारा जगत् रचेको छ । ती सर्वज्ञ, सर्वात्मा तथा समदर्शी

त्यानीय त्रिविष्टपम् ॥ पूरयित्वाऽदितेः काममशासत्सकलं जगत् ॥ ४ ॥ लब्धप्रसादं निर्मुक्तं पौत्रं वंशधरं बलिम् ॥ निशाम्य भक्तिप्रवणः प्रह्लाद इदमब्रवीत् ॥ ५ ॥ प्रह्लाद उवाच ॥ नेमं विरिञ्चो लभते प्रसादं न श्रीर्न सर्वः किमुतापरे ते ॥ यन्नोऽसुराणामसि दुर्गपालो विश्वाभिवन्द्यैरपि वन्दिताङ्घ्रिः ॥ ६ ॥ यत्पादपद्ममकरन्दनिषेवणेन ब्रह्मादयः शरणदाश्नुवते विभूतीः ॥ कस्माद्वयं कुसृतयः खलयोनयस्ते दाक्षिण्यदृष्टिपदवीं भवतः प्रणीताः ॥ ७ ॥ चित्रं तवेहितमहोऽमितयोगमायालीलाविसृष्टभुवनस्य विशारदस्य ॥ सर्वात्मनः समदृशो विषमः स्वभावो भक्तप्रियो यदसि कल्पतरुस्वभावः ॥ श्रीभगवानुवाच ॥ वत्स प्रह्लाद भद्रं ते प्रयाहि सुतलालयम् ॥ मोदमानः स्वपौत्रेण ज्ञातीनां सुखमावह ॥ ८ ॥ नित्यं द्रष्टासि मां तत्र गदापाणिमवस्थितम् ॥ मद्दर्शनमहाह्लादध्वस्तकर्मनिबन्धनः ॥ १० ॥ श्रीशुक उवाच ॥ आज्ञां भगवतो राजन्प्रह्लादो बलिना सह ॥ बाढमित्यमलप्रज्ञो मूर्ध्न्याधाय कृताञ्जलिः ॥ ११ ॥ परिक्रम्यादिपुरुषं सर्वासुरचमूपतिः ॥ प्रणतस्तदनुज्ञातः प्रविवेश महाबिलम् ॥ १२ ॥ अथाहोशनसं राजन्हरिर्नारायणोऽन्तिके ॥ आसीनमृत्विजां मध्ये सदसि ब्रह्मवादिनाम् ॥ १३ ॥ ब्रह्मन्संतनु शिष्यस्य कर्मच्छिद्रं वितन्वतः ॥ यत्तत्कर्मसु वैषम्यं ब्रह्मदृष्टं समं भवेत् ॥ १४ ॥ श्रीशुक उवाच ॥ कुतस्तत्कर्मवैषम्यं यस्य कर्मेश्वरो भवान् ॥ यज्ञेशो यज्ञपुरुषः सर्वभावेन पूजितः ॥१५॥

हजुरको यो भक्तवत्सलता किं विषम ज्ञात भइरहेको छ, तर हजुर त कल्पवृक्ष जस्तै हुनुहुन्छ ॥८॥ श्रीभगवान् आज्ञा हुन्छ–हे वत्स प्रह्लाद ! तिम्रो कल्याण होस् । तिमी पनि सुतललोक जाऊ र पौत्रासित सानन्द बस्तै आफ्ना जाति बन्धुलाई आनन्दित पार ॥९॥ त्यहाँ तिमी मलाई गदा लिएर सधैं उपस्थित पाउने छौ र मेरो दर्शन जनित परमानन्दले तिम्रो सबै कर्मबन्धन काटिने छन् ॥१०॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान्‌ले यति भनेपछि राजा बलिसहित दैत्य-सेनानायक एवं निर्मल-बुद्धिसम्पन्न श्रीप्रह्लादले हात जोरेर 'हुन्छ' मात्र भने । भगवान्‌को आज्ञा विनम्रभावले उनले शिरोधार्य गरे र आदि पुरुष भगवान्‌को परिक्रमा गरेर तथा उनको आज्ञा पाएर सुतललोक गए ॥११-१२ ॥ हे राजन् ! त्यसपछि नारायण आफ्नै नजीक वेदवादी-ऋत्विजहरूको समूह माझ बसेका श्रीशुक्राचार्यसित भन्नुभयो ॥१३॥ हे ब्रह्मन् ! कर्मानुष्ठान गर्ने वेलामा हजुरका शिष्यको यज्ञमा

यदि कुनै त्रुटि रहनगएको छ भने त्यसलाई हजुर पूर्ण गरिदिनोस् । कर्मको 'विषमता' त ब्राह्मणको दृष्टि पर्नासाथ 'सम' भइजाने गर्दछ ॥१४॥ शुक्राचार्य भन्दछन्–हे प्रभो ! जुन दलिले आफ्नो सर्वस्व अर्पण गरेर कर्म तथा यज्ञादिका अधीश्वर हजुर यज्ञपुरुषको यजन गरिसकेको छ । त्यसको कर्ममा कुनै विषमता कसरी हुन सक्तछ ? ॥ १५ ॥ हे प्रभो ! हजुरको नाम-कीर्तन न मन्त्र, तन्त्र, देश, काल, पात्र तथा वस्तुले गर्दा हुने सबै त्रुटिहरूलाई पूर्ण पारिदिने गर्दछ ॥१६॥ हे भूमन् ! तैपनि हजुर आज्ञा गर्नुहुन्छ भने म हजुरको आज्ञा पालन अवश्य गर्नेछु । संसारी मनुष्यहरूको सबैभन्दा ठूलो श्रेय यसैमा छ–*शुद्धप्रेमले हजुरको आज्ञा पालन गरियोस् ॥१७॥ हे राजन् ! यस प्रकार वामन भगवान्ले बलिसित पृथिवी मागेर

मन्त्रतस्तन्त्रतश्छिद्रं देशकालार्हवस्तुः ॥ सर्वं करोति निश्छिद्रं नामसंकीर्तनं तव ॥ १६ ॥ तथापि वदतो भूमन्करिष्याम्यनुशासनम् ॥ एतच्छ्रेयः परं पुंसां यत्तवाज्ञानुपालनम् ॥१७॥ श्रीशुक उवाच ॥ अभिनन्द्य हरेराज्ञामुशना भगवानिति ॥ यज्ञच्छिद्रं समाधत्त बलेर्विप्रर्षिभिः सह ॥१८॥ एवं बलेर्महीं राजन्भिक्षित्वा वामनो हरिः ॥ ददौ भ्रात्रे महेन्द्राय त्रिदिवं यत्परैर्हृतम् ॥ १९ ॥ प्रजापतिपतिर्ब्रह्मा देवर्षिपितृभूमिपैः ॥ दक्षभृग्वङ्गिरोमुख्यैः कुमारेण भवेन च ॥ २० ॥ कश्यपस्यादितेः प्रीत्यै सर्वभूतभवाय च ॥ लोकपालानामकरोद्वामनं पतिम् ॥ २१ ॥ वेदानां सर्वदेवानां धर्मस्य यशसः श्रियः ॥ मङ्गलानां व्रतानां च कल्पं स्वर्गापवर्गयोः ॥२२॥ उपेन्द्रं कल्पयाञ्चक्रे पतिं सर्वविभूतये ॥ तदा सर्वाणि भूतानि भृशं मुमुदिरे नृप ॥२३॥ ततस्त्विन्द्रः पुरस्कृत्य देवयानेन वामनम् ॥ लोकपालैर्दिवं निन्ये ब्रह्मणा चानुमोदितः ॥२४॥ प्राप्य त्रिभुवनं चेन्द्रउपेन्द्रभुजपालितः ॥

आफ्ना भाई इन्द्रदेवलाई त्यो स्वर्गलोक सुम्पीदिए, जुन पहिले उनीहरूसित बलपूर्वक खोसिलिएका थिए ॥१९॥ अनि महादेव, सनत्कुमार, दक्ष, भृगु तथा अंगिरा आदि मुनि देवता ऋषि, पितृ एवं राजाहरूसमेत सबै प्रजापतिका स्वामी ब्रह्माजीले प्रजापति कश्यप तथा अदितिको प्रसन्नता र सबै प्राणीको पालनका निम्ति वामन भगवानलाई सबै लोक र लोकपालहरूका अधिपति बनाइए । २०-२१॥ हे राजन् ! वेद, सबै देवता, धर्म, यश,लक्ष्मी,मङ्गल,व्रत, स्वर्ग एवं अपवर्ग यी सबैको रक्षा गर्नमा समर्थ श्रीवामनलाई उनीहरूले सबैको उत्कर्षका लागि उपेन्द्र बनाइदिए । यसले सबै प्राणीहरूलाई ठूलो आनन्द प्राप्त भयो ॥२२-२३॥ त्यसपछि ब्रह्माजीको आज्ञा पाएर सबै लोकपाल समेत देवराज इन्द्र वामन भगवान्लाई विमान माथि चढाएर र आफ्नो अघि लगाएर देवलोक लगे ॥२४॥ यस प्रकार ती उपेन्द्र भगवानको बाहु बलले सुरक्षित देवराज इन्द्र तीनैलोकको आधिपत्य पाएपछि परम ऐश्वर्यले

---

* दृष्टान्त ( पवित्र र शुद्ध प्रेमको परीक्षा )—श्रीरामकृष्ण परमहंस एक दिन विवेकानन्द आदि शिष्यहरूका साथै बसेका थिए । उही बखत यौटा दुर्बल किसान धूलो भरिएको जुत्ता र मैला लुगा लगाएको, आयो र भन्यो—'हे रामकृष्ण ! तिमी राम्ररी त छौ ?' यति भनेर ऊ तिनको उच्च आसनमा गएर बस्यो र तिनको पिठिउँ सुसार्न लाग्यो । अनि फेरि भन्यो–'हे मित्र ! एक चिलम तमाखु भरेर ल्याउ न ।' रामकृष्ण तुरुन्त उठे र तमाखु भर्न हिंडे । शिष्यहरू दगुर्दै गएर चिलिम लिए तमाखु भरेर किसानलाई दिए । त्यो किसान रामकृष्णको गाउँमा बस्ने बाल-सखा थियो । तमाखु खाएर एक छिनपछि त्यो गयो । जाने बेलामा उसले भन्यो—तिमी त जस्ताको तस्तै छौ । मैले सुनेको थिएँ–तिमी धेरै बिग्रिसकेका छौ । लौ त, म जान्छु, राम ! राम !' यति भनेर किसान गयो यस प्रकार परमहंस रामकृष्णले त्यो किसान प्रति पनि पवित्र र शुद्ध प्रेमको प्रदर्शन गरे

सम्पन्नभएकोले निर्भय भएर अतिशय आनन्दित भए ॥२५॥ हे राजन् ! ब्रह्मा, शिव, सनत्कुमार एवं भृगु आदि मुनि, सबै पितृ, समस्त भूत, सिद्ध र अन्य विमानारोही देवता विष्णु भगवान्‌का अति अद्भुत तथा महान् गुण-गान गर्दै आफआफ्ना स्थानमा गए । ती सबैले अदितिको प्रशंसा गरे ॥२६-२७॥ हे कुलनन्दन ! यस प्रकार श्रोताहरूका सबै पाप नष्ट पार्ने भएको यो उरुक्रम भगवान्‌को सारा चरित्र मैले तिमीलाई सुनाएँ ॥ २८ ॥ जो मनुष्य ती परम पराक्रमी भगवान्‌को महिमाबाट पार पाउने विचार गर्दछ, त्यो कदाचित् पृथ्वीका परमाणुहरूलाई पनि गन्न सक्नेछ । जुन महाप्रभुको विषयमा मन्त्रद्रष्टा ऋषि वसिष्ठजीले भनेका थिए–वर्तमान र भविष्यमा उत्पन्न हुने के कुनै पनि यस्तो पुरुष होला, जो हजुरका महिमाको पार पाउन सकोस् ?' ॥२९॥ जो प्राणी ती अद्भुतकर्मा देवदेव भगवान्‌को यस अवतार चरितलाई सुन्दछ, त्यो परमगति पाउँदछ ॥३०॥ देवयज्ञ, पितृयज्ञ र मनुष्यज्ञ आदि गर्ने बेलामा यस चरित्रको कीर्तन गरे ती कर्म सहज सम्पन्न हुन्छन् । यो कुरा थाहा छ ॥३१॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे नेपाली भाषाटीकायां त्रयोविंशोऽध्यायः ॥२३॥

श्रिया परमया जुष्टो मुमुदे गतसाध्वसः ॥२५॥ ब्रह्मा शर्वः कुमारश्च भृग्वाद्या मुनयो नृप ॥ पितरः सर्वभूतानि सिद्धा वैमानिकाश्च ये॥२६॥सुमहत्कर्म तद्विष्णोर्गायन्तः परमाद्भुतम् ॥ धिष्ण्यानि स्वानि ते जग्मुरदितिं च शशंसिरे ॥२७॥ सर्वमेतन्मयाख्यातं भवतःकुलनन्दन ॥ उरुक्रमस्य चरितं श्रोतॄणामघमोचनम् ॥२८॥ पारं महिम्न उरुविक्रमतो गृणानो यः पार्थिवानि विममे स रजांसि मर्त्यः ॥ किं जायमान उतजात उपैति मर्त्य इत्याह मन्त्रदृगृषिः पुरुषस्य यस्य ॥२९॥ य इदं देवदेवस्य हरेरद्भुतकर्मणः ॥ अवतारानुचरितं शृण्वन्याति परां गतिम् ॥३०॥ क्रियमाणे कर्मणीदं दैवे पित्र्येऽथ मानुषे ॥ यत्र यत्रानुकीर्त्येत तत्तेषां सुकृतं विदुः ॥३१॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे वामनावतारचरिते त्रयोविंशतितमोऽध्यायः ॥२३॥

राजोवाच ॥ भगवञ्छ्रोतुमिच्छामि हरेरद्भुतकर्मणः ॥ अवतारकथामाद्यां मायामत्स्यविडम्बनम् ॥ १ ॥ यदर्थमदधाद्रूपं मात्स्यं लोकजुगुप्सितम् ॥ तमःप्रकृति दुर्मर्षं कर्मग्रस्त इवेश्वरः ॥ २ ॥ एतन्नो भगवन्सर्वं यथावद्वक्तुमर्हसि ॥ मश्लोकचरितं सर्वलोकसुखावहम् ॥ ३ ॥ सूत उवाच ॥ इत्युक्तो विष्णुरातेन भगवान्बादरायणिः ॥ उवाच चरितं विष्णोर्मत्स्यरूपेण यत्कृतम् ॥ ४ ॥ नोच्चावचत्वं गोविप्रसुरसाधूनां छन्दसामपि चेश्वरः ॥ रक्षामिच्छंस्तनूर्धत्ते धर्मस्यार्थस्य चैव हि ॥ ५ ॥ उच्चावचेषु भूतेषु चरन्वायुरिवेश्वरः ॥ नोच्चावचत्वं भजते निर्गुणत्वाद्धि

( भगवानको मत्स्यावतार )–राजा परीक्षित् भन्दछन्–हे भगवन् ! म ती अद्भुतकर्मा श्रीहरिको प्रथम अवतार-कथा सुन्ने इच्छा गर्दछु जसमा उनले आफ्नो मायाले मत्स्य (माछा) रूप धारण गरेका थिए ॥१॥ हे स्वामिन् ! सर्वसमर्थ भएर पनि उनले कर्म बन्धनमा बाँधिएका जीवहरूको समान जसका निम्ति ती अत्यन्त तमोगुणी, लोकमा निन्दनीय तथा दुःसह मत्स्य-शरीर धारण गरेका थिए, सबैलाई सुख दिने त्यो चरित्र मलाई सुनाउनुहवस् ॥२-३॥ सूतजी भन्दछन्–राजा परीक्षितले यसरी सोधेपछि शुकदेवजी भगवानको त्यो चरित्र भन्नलागे, जुन प्रभुले मत्स्यरूपले गरान्न गरेका थिए ॥४॥ शुकदेवजी भन्दछन्–हे राजन् ! यद्यपि भगवान सर्वेश्वर हुन्, तैपनि गाई, ब्राह्मण, देवता, साधु-सन्त, वेद, धर्म एवं अर्थको रक्षार्थ बेला-बेलामा ती शरीरी बन्दछन् ॥ ५ ॥ती निर्गुण छन्, वायु सदृश उच्चावच सबै प्राणीहरूमा नियन्तारूपले रहेर पनि ती गुणहरूद्वारा सबामात्रले भेदित्न

॥६॥ हे राजन् ! गत कल्पान्तरमा जब ब्रह्म नामक नैमित्तिक प्रलय भएको थियो, तब भूआदि सबै लोक समुद्रमा डुबेका थिए ॥७॥ कालक्रमले ब्रह्माजी निदाएपछि उनको मुखबाट निस्केका वेदलाई हयग्रीव दैत्यले हरेर लग्यो ॥८॥ दानवराज हयग्रीवको यो चेष्टा देखेर सर्वेश्वर भगवान् श्रीहरिले मत्स्यरूप धारण गरे ॥९॥ हे राजन् ! त्यसै बखत महान् राजर्षि सत्यव्रत एकमात्र भगवत्परायण भएर केवल पानी मात्र पिएर तपस्या गरिरहेका थिए ॥१०॥ त्यस महाकल्पमा भगवान् सूर्यका पुत्र श्राद्धदेव नामले विख्यात थिए र उनको श्रीहरिले मनुपदमा नियुक्त गरिराखेका थिए ॥११॥ एक बखत सत्यव्रत कृतमाला नदीमा तर्पण गरिरहेका थिए, उसै बखत तिनको अंजलिमा यौटा सानू माछा आयो ॥१२॥ हे भारत ! सत्यव्रत अथवा श्राद्धदेव अंजलिमा आएको माछालाई जलमा छाड्नलागे ॥१३॥ त्यो माछाले परम दयालु राजा सित निकै करुणाले भन्यो–'हे राजन् ! हे दीनवत्सल ! जातिहिंसक

यो गुणैः ॥ ६ ॥ आसीदतीतकल्पान्ते ब्राह्मो नैमित्तिको लयः ॥ समुद्रोपप्लुतास्तत्र लोका भूरादयो नृप ॥ ७ ॥ कालेनागतनिद्रस्य धातुः शिशयिषोर्बली ॥ मुखतो निःसृतान्वेदान्हयग्रीवोऽन्तिकेऽहरत् ॥ ८ ॥ ज्ञात्वा तद्दानवेन्द्रस्य हयग्रीवस्य चेष्टितम् ॥ दधार शफरीरूपं भगवान्हरिरीश्वरः ॥९॥ तत्र राजऋषिः कश्चिन्नाम्ना सत्यव्रतो महान् ॥ नारायणपरोऽतप्यत्तपः स सलिलाशनः ॥१०॥ योऽसावस्मिन्महाकल्पे तनयः स विवस्वतः ॥ श्राद्धदेव इति ख्यातो मनुत्वे हरिणाऽर्पितः ॥११॥ एकदा कृतमालायां कुर्वतो जलतर्पणम् ॥ तस्याञ्जल्युदके काचिच्छफर्येकाऽभ्यपद्यत॥१२॥ सत्यव्रतोऽञ्जलिगतां सह तोयेन भारत ॥ उत्ससर्ज नदीतोये शफरीं द्रविडेश्वरः ॥ १३ ॥ तमाह सातिकरुणं महाकारुणिकं नृपम् ॥ यादोभ्यो ज्ञातिघातिभ्यो दीनां मां दीनवत्सल ॥ कथं विसृजसे राजन्भीतामस्मिन्सरिज्जले ॥१४॥ तमात्मनोऽनुग्रहार्थं प्रीत्या मत्स्यवपुर्धरम् ॥ अजानन्रक्षणार्थाय शफर्याः स मनो दधे ॥ १५ ॥ तस्या दीनतरं वाक्यमाश्रुत्य स महीपतिः ॥ कलशाप्सु निधायैनां दयालुर्निन्य आश्रमम् ॥ १६ ॥ सा तु तत्रैकरात्रेण वर्धमाना कमण्डलौ ॥ अलब्ध्वाऽऽत्मावकाशं सा इदमाह महीपतिम् ॥१७॥ नाहं कमण्डलावस्मिन्कृच्छ्रं वस्तुमिहोत्सहे ॥ कल्पयौकः सुविपुलं यत्राहं निवसे सुखम् ॥ १८ ॥ स एनां तत आदाय न्यधादौदञ्चनोदके ॥ तत्र क्षिप्ता मुहूर्तेन हस्तत्रयमवर्धत ॥ १९ ॥ न म एतदलं राजन्सुखं वस्तुमुदञ्चनम् ॥ पृथु देहि पदं मह्यं यत्त्वाहं शरणं गता ॥२०॥ तत आदाय सा राज्ञा क्षिप्ता राजन्सरोवरे ॥ तदावृत्यात्मना सोऽयं महामीनोऽन्ववर्धत

जल-जन्तुहरूसित डराएर आएकी म दीनलाई हजुर फेरि यस जलमा किन फाल्दै हुनुहुन्छ ?' ॥१४॥ अनि राजा सत्यव्रतले अनुग्रह गर्नको लागि मत्स्यरूपधारी भगवान्लाई नचिनेर माछाको रक्षा गर्ने निश्चय गरे ॥१५॥ माछाको अत्यन्त दीन वचन स्मरण गरेर दयालु राजाले कमण्डलुको जलमा राखेर आश्रममा ल्याए ॥१६॥ त्यो माछा रातभरिमै पतिबढ्दा कमण्डलुमा आफ्नो योग्य स्थान नपाएर राजासित भन्यो–॥१७॥ 'अब म कष्ट सहेर पनि यो कमण्डलुमा बस्न नसक्ने भएँ । मेरोनिम्ति हजुर कुनै विस्तृत स्थान ठीक पारिदिनुस्, जहाँ म सुखले बस्न सकूँ ॥१८॥ अनि राजाले त्यसलाई कमण्डलुबाट झिकेर गाग्रोको जलमा राखिदिए, तर त्यहाँ पनि त्यो एक मुहूर्तमै तीन हात अरु बढ्यो र राजासित भन्यो– ॥१९॥ हे राजन् ! यो गाग्रो पनि मैले सुखसित बस्नेलायक स्थान रहेन । म हजुरको शरणमा छु । मेरो निम्ति कुनै अरु ठूलो स्थान रोज्नुहवस ॥२०॥ हे राजन् ! अनि राजा

सत्यव्रतले त्यसलाई गाग्रोबाट झिकेर यौटा तलाउमा हालिदिए, तर त्यो महामत्स्य आफ्नो शरीरले त्यो सरोवरलाई पनि ढाक्यो र बोल्यो–॥२१॥ 'हे राजन् ! म जलचरको निम्ति यो सरोवर पनि सुखले बस्ने लायक रहेन, अतः मलाई कुनै ठूलो सरोवरमा राखिदिनोस्' ॥२२॥ अनि राजा सत्यव्रतले उसलाई एकेक गरेर ठूला-ठूला सरोवरमा राखे र ऊ बराबर बढ्दै गयो । अन्तमा उसलाई लगेर समुद्रमा हाल्न लागे ॥२३॥ अनि माछाले भन्यो—'हे वीर ! यहाँ मलाई बलवान् मकरादि प्रबल जीवले खान्छन् । कृपा गरेर मलाई समुद्रमा नफाल्नु हवस्' ॥२४॥ त्यो मधुरभाषी माछाको कुराले मोहित भएर राजाले भने–'यो विचित्र मत्स्यरूपले मलाई मोहमा पारिदिने तिमी को हौ ? ॥२५॥ अहो ! एक दिनमै हजुरले आफ्नो सय योजन विस्तारले ढाकिलियो । यस्तो बली जलजीव त मैले आजसम्म देखे सुनेको पनि थिएन ॥२६॥ अतः अवश्य हजुर अविनाशी नारायण हुनुहुन्छ । हजुरले जगतका जीवमा कृपा गर्नको लागि नै मत्स्यरूप धारण गरेको हो ॥२७॥ जगत्को उत्पत्ति, स्थिति तथा विनाश गर्नमा समर्थ हे पुरुषश्रेष्ठ ! हजुरलाई प्रणाम छ । हे विभो! हामीजस्ता

॥२१॥ नैतन्मे स्वस्तये राजन्नुदकं सलिलौकसः ॥ निधेहि रक्षायोगेन ह्रदे मामविनाशिनि ॥२२॥ इत्युक्तः सोऽनयन्मत्स्यं तत्रतत्राविनाशिनि ॥
जलाशये संमितं तं समुद्रे प्राक्षिपज्झषम् ॥ २३ ॥ क्षिप्यमाणस्तमाहेदमिह मां मकरादयः ॥ अदन्त्यतिबला वीर मां नेहोत्स्रष्टुमर्हसि ॥ २४ ॥ एवं
विमोहितस्तेन वदता वल्गु भारतीम् ॥ तमाह को भवानस्मान्मत्स्यरूपेण मोहयन् ॥ २५ ॥ नैवंवीर्यो जलचरो दृष्टोऽस्माभिः श्रुतोऽपि च ॥ यो
भवान्योजनशतमह्नाऽभिव्यानशे सरः ॥२६॥ नूनं त्वं भगवान्साक्षाद्धरिर्नारायणोऽव्ययः ॥ अनुग्रहाय भूतानां धत्से रूपं जलौकसाम् ॥२७॥नमस्ते
पुरुषश्रेष्ठ स्थित्युत्पत्त्यप्ययेश्वरः ॥ भक्तानां नः प्रपन्नानां मुख्यो ह्यात्मगतिर्विभो ॥ २८ ॥ सर्वे लीलावतारास्ते भूतानां भूतिहेतवः ॥ ज्ञातुमिच्छाम्यदो
रूपं यदर्थं भवता धृतम् ॥२९॥ न तेऽरविन्दाक्ष पदोपसर्पणं मृषा भवेत्सर्वसुहृत्प्रियात्मनः ॥ यथेतरेषां पृथगात्मनां सतामदीदृशो यद्वपुरद्भुतं हि नः
॥ ३० ॥ श्रीशुक उवाच ॥ इति ब्रुवाणं नृपतिं जगत्पतिं सत्यव्रतं मत्स्यवपुर्युगक्षये ॥ विहर्तुकामः प्रलयार्णवेऽब्रवीच्चिकीर्षुरेकान्तजनप्रियः प्रियम्
॥ ३१ ॥ श्रीभगवानुवाच ॥ सप्तमेऽद्यतनादूर्ध्वमहन्येतदरिन्दम ॥ निमङ्क्ष्यत्यप्ययाम्भोधौ त्रैलोक्यं भूर्भुवादिकम् ॥ ३२ ॥ त्रिलोक्यां लीयमानायां
संवर्ताम्भसि वै तदा ॥ उपस्थास्यति नौः काचिद्विशाला त्वां मयेरिता ॥ ३३ ॥ त्वं तावदोषधीः सर्वा बीजान्युच्चावचानि च ॥ सप्तर्षिभिः परि-

भक्तका हजुर नै आत्मा तथा गति हुनुहुन्छ ॥२८॥ त्यसो त हजुरका सबै लीलावतार प्राणीहरूको अभ्युदयकै निम्ति हुन्छ, तापनि जसको निम्ति हजुरले यो मत्स्यरूप धारण गरेको हो, त्यो जान्न म उत्सुक छु ॥२९॥ हे कमलनयन ! देहादि अनात्मामै आत्मतत्त्वका अभिमानी पुरुषका आश्रय जसरी व्यर्थ हुन्छन्, त्यस्तै सर्वसुहृद्, प्रिय आत्मस्वरूप हजुरका चरणकमलको शरण पर्नु व्यर्थ हुँदैन । हजुरले मलाई जुन रूप देखाउनु भयो, त्यो साह्रै अद्भुत छ ॥३०॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! भक्तका हितकारी जगत्पति मत्स्य-भगवानले भक्तका कल्याणार्थ कल्पको अन्त्यमा प्रलयकालीन समुद्रमा विहार गर्ने भने ॥३१॥ मत्स्य-भगवान् भन्दछन्–हे शत्रुदमन ! आजको सातौं दिन भूः भुवः आदि तीनैलोक समुद्रमा डुब्नेछन् । जब तीनैलोक प्रलय जलमा डुब्नलाग्छ तब मेरो प्रेरणाले तिम्रो नजीक यौटा ठूलो डुङ्गा उपस्थित हुनेछ ॥३२॥३३॥ अनि तिमी सबै प्राणीद्वारा सम्मानित भएर सप्तर्षिहरूका साथ सबै

782

औषधिहरू र साना ठूला जीवहरूका साथै त्यस विशाल डुङ्गामा चढेर सूर्यादिको प्रकाश नभए पनि सप्तर्षिहरूको तेजले नै आलोकित हुँदै निश्चिन्तभावले त्यस जलमा डुल्नेछौ। जब डुङ्गा प्रचण्ड वायुको वेगले हल्लन लाग्नेछ, अनि म तिमीनेर आउनेछ। त्यस बखत तिमी डुङ्गालाई वासुकी नागद्वारा मेरो सीङमा बाँधिदिनु ॥३८-३६॥ हे राजन्! जबसम्म ब्रह्माजीको रात्रि रहन्छ, तबसम्म म त्यो डुङ्गा र सप्तर्षिसहित तिमीलाई तान्दै प्रलयकालको समुद्रमा डुल्नेछु। अनि तिमीले प्रश्न गरेपछि मेरो अनुग्रहपूर्ण उपदेशले तिमी आफ्ना हृदयमा अपरोक्षरूपले अनुभूत परब्रह्मको रूपमा कहिने मेरो महिमा जान्नेछौ। राजा सत्यव्रतलाई यस्तो आदेशदिए भगवान् अन्तर्धान हुनुभयो र उनले जे भनेको थियो, राजा सत्यव्रत त्यस समयको प्रतीक्षा गर्नलागे ॥३७-३९॥ ती पूर्वलाई अग्रभाग पारेर बिछाएका कुशमा पूर्वोत्तर मुख भएर बसे, अनि ती मत्स्यरूपधारी श्रीहरिका चरणको ध्यानमा लीन भए ॥४०॥ अकस्मात् वर्षिरहेका महामेघहरूबाट बढेको समुद्र मार्यादा नाघेर चारैतिरबाट पृथिवीलाई डुबाइरहेको देखियो ॥४१॥ अनि तिनले भगवानका आज्ञाको स्मरण गर्नासाथ, त्यहा

वृतः सर्वसत्त्वोपबृंहितः ॥३४॥ आरुह्य बृहतीं नावं विचरिष्यस्यविक्लवः ॥ एकार्णवे निरालोके ऋषीणामेव वर्चसा ॥ ३५ ॥ दोधूयमानां तां नावं समीरेण बलीयसा ॥ उपस्थितस्य मे शृङ्गे निबध्नीहि महाहिना ॥३६॥ अहं त्वामृषिभिः साकं सह नावमुदन्वति ॥ विकर्षन्विचरिष्यामि यावद्ब्राह्मी निशा प्रभो ॥३७॥ मदीयं महिमानं च परं ब्रह्मेति शब्दितम् ॥ वेत्स्यस्यनुगृहीतं मे संप्रश्नैर्विवृतं हृदि ॥३८॥ इत्थमादिश्य राजानं हरिरन्तरधीयत ॥ सोऽन्ववैक्षत तं कालं यं हृषीकेश आदिशत् ॥ ३९ ॥ आस्तीर्य दर्भान्प्राक्कूलान्राजर्षिः प्रागुदङ्मुखः ॥ निषसाद हरेः पादौ चिन्तयन्मत्स्यरूपिणः ॥४०॥ ततः समुद्र उद्वेलः सर्वतः प्लावयन्महीम् ॥ वर्धमानो महामेघैर्वर्षद्भिः समदृश्यत ॥४१॥ ध्यायन्भगवदादेशं ददृशे नावमागताम् ॥ तामारुरोह विप्रेन्द्रैरादायौषधिवीरुधः ॥४२॥ तमूचुर्मुनयः प्रीता राजन्ध्यायस्व केशवम् ॥ स वै नः सङ्कटादस्मादविता शं विधास्यति ॥ ४३ ॥ सोऽनुध्यातस्ततो राज्ञा प्रादुरासीन्महार्णवे ॥ एकशृङ्गधरो मत्स्यो हैमो नियुतयोजनः ॥ ४४ ॥ निबध्य नावं तच्छृङ्गे यथोक्तो हरिणा पुरा ॥ वरत्रेणाहिना तुष्टस्तुष्टाव मधुसूदनम् ॥ ४५ ॥ राजोवाच ॥ अनाद्यविद्योपहतात्मसंविदस्तन्मूलसंसारपरिश्रमातुराः ॥ यदृच्छयेहोपसृता यमाप्नुयुर्विमुक्तिदो नः परमो गुरुर्भवान् ॥४६ ॥ जनोऽबुधोऽयं निजकर्मबन्धनः सुखेच्छया कर्म समीहतेऽसुखम् ॥ यत्सेवया तां विधुनोत्यसन्मतिं ग्रन्थिं स भिन्द्याद्धृदयं

यौटा ठूलो र विशाल डुङ्गा आएर उपस्थित भयो। त्यसमा ती सबै औषधि र बीजहरू लिएर सप्तर्षिहरूसित चढे ॥४२॥ तब राजाप्रति प्रसन्न मुनिहरूले भने–'हे राजन्! श्रीकेशव भगवानूको ध्यान गर। उनै हामीलाई महासङ्कट बाट झिकेर हाम्रो कल्याण गर्नन्' ॥४३॥ तदनुसार राजाले ध्यान गर्नासाथ महासमुद्रमा लाख योजन विस्तृत एक शृङ्गको सुवर्णमय महामत्स्य देखियो ॥४४॥ भगवानूको पूर्व आदेशानुसार राजाले वासुकीनागरूपी डोरीले त्यो डुङ्गा उसको सीङमा बाँधिदिए र प्रसन्नमनले मधुसूदन भगवानूको स्तुति गर्नलागे ॥४५॥ राजा भन्छन्–अविद्याले जसको आत्मज्ञान ढाकिएको छ, यस्ता अविद्यामूलक संसार-श्रमले आतुर पुरुष जसको अनुग्रहले हजुरको शरणमा पुगेर हजुरलाई पाउँछन्, तिनै हजुर हाम्रा मुक्तिदाता र परमगुरु छन् ॥४६॥ जसले अज्ञानी पुरुष कर्मबन्धनमा बल्झेर सुखको आशाले दुःखमय कर्ममा गाढिन्छ, त्यस असद्बुद्धिलाई, जसको सेवाको प्रभावले त्याग्न सक्छ, हाम्रा

परमगुरु हजुर मेरो हृदय-ग्रन्थि फुकाइदिनुस् ॥४७॥ जसरी आगो सुन-चाँदीको मल सफा गरिदिन्छ, त्यस्तै जसको सेवा गरेर अन्तःकरण अज्ञानरूपी मल त्यागेर शुद्धस्वरूपमा स्थित हुन्छ, ती गुरुजनका पनि परमगुरु हजुर अविनाशी ईश्वर हाम्रा गुरु बन्नोस ॥४८॥ हे प्रभो ! देवता, गुरु तथा अन्य सबै जना मिलेर पनि जसका अनुग्रहको दस हजारौं अंशको समान पनि वसैमाथि स्वयं कृपा गर्न सक्तैनन्, त्यस्ता हजुरको म शरणमा छु ॥४९॥ जस्तै कुनै अन्धोलाई नाइके तुल्याउनु, त्यस्तै अज्ञानी पुरुषले विवेकहीन पुरुषलाई गुरु तुल्याउनु व्यर्थ हुन जान्छ। हजुर सूर्य जस्तै स्वयं प्रकाशित तथा सबै इन्द्रियका साक्षी छन् । यसैनिम्ति आत्मतत्त्वको जिज्ञासु मैले हजुरलाई आफ्नो गुरु तुल्याएँ ॥५०॥ अज्ञानी पुरुष त अन्य अज्ञानी जनलाई अर्थ, कामादि विषयको असद्बुद्धिको नै उपदेश दिनेछ । जसले ती दुस्तर अन्धकारमा गाडिउन्, तर हजुर त अक्षय र अमोघ ज्ञानको उपदेश दिनुहुन्छ जसले मनुष्य सहजै आत्मस्वरूप प्राप्त गर्दछ ॥ ५१॥ हजुर संसारका सुहृद्, प्रिय, ईश्वर, आत्मा, गुरु, ज्ञान र इच्छित फल हुनुहुन्छ, तर यो मोहान्ध तथा विषयासक्त संसार आफ्नो हृदयमा विराज

स नो गुरुः ॥४७॥ यत्सेवयाग्नेरिव रुद्ररोदनं पुमान्विजह्यान्मलमात्मनस्तमः ॥ भजेत वर्णं निजमेष सोऽव्ययो भूयात्स ईशः परमो गुरोर्गुरुः ॥४८॥ न यत्प्रसादायुतभागलेशमन्ये च देवागुरवो जनाः स्वयम् ॥ कर्तुं समेताःप्रभवन्ति पुंसस्तमीश्वरं त्वां शरणं प्रपद्ये ॥ ४९ ॥ अचक्षुरन्धस्य यथाग्रणीः कृतस्तथा जनस्याविदुषोऽबुधो गुरुः ॥ त्वमर्कदृक् सर्वदृशां समीक्षणो वृतो गुरुर्नः स्वगतिं बुभुत्सताम् ॥ ५० ॥ जनो जनस्यादिशतेऽसतीं मतिं यया प्रपद्येत दुरत्ययं तमः ॥ त्वं त्वव्ययं ज्ञानममोघमञ्जसा प्रपद्यते येन जनो निजं पदम् ॥ ५१ ॥ त्वं सर्वलोकस्य सुहृत्प्रियेश्वरो ह्यात्मा गुरुर्ज्ञान-मभीष्टसिद्धिः ॥ तथापि लोको न भवन्तमन्धधीर्जानाति सन्तं हृदि बद्धकामः ॥ ५२ ॥ तं त्वामहं देववरं वरेण्यं प्रपद्य ईशं प्रतिबोधनाय ॥ छिन्ध्य-र्थदीपैर्भगवन्वचोभिर्ग्रन्थीन्हृदय्यान्विवृणु स्वमोकः ॥५३॥ श्रीशुक उवाच ॥ इत्युक्तवन्तं नृपतिं भगवानादिपूरुषः ॥ मत्स्यरूपी महाम्भोधौ विहरंस्तत्त्व-मब्रवीत् ॥५४॥ पुराणसंहितां दिव्यां सांख्ययोगक्रियावतीम् ॥ सत्यव्रतस्य राजर्षेरात्मगुह्यमशेषतः ॥ ५५ ॥ अश्रौषीदृषिभिः साकमात्मतत्त्वमसंश-यम् ॥ नाव्यासीनो भगवता प्रोक्तं ब्रह्म सनातनम् ॥५६॥ अतीतप्रलयापाय उत्थिताय स वेधसे ॥ हत्वाऽसुरं हयग्रीवं वेदान्प्रत्याहरद्धरिः ॥५७॥ स तु सत्यव्रतो राजा ज्ञानविज्ञानसंयुतः ॥ विष्णोः प्रसादात्कल्पेऽस्मिन्नासीद्वैवस्वतो मनुः ॥ ५८ ॥ सत्यव्रतस्य राजर्षेर्मायामत्स्यस्य शार्ङ्गिणः ॥

मान हजुर परमेश्वरलाई देख्दैन ॥५२॥ अब त म तत्त्वज्ञान विषयक उपदेश पाउने इच्छाले हजुर देवश्रेष्ठ तथा परम पूजनीय परमेश्वरका शरणमा आएको छु । हे भगवन् ! हजुर आफ्नो परमार्थ-प्रकाशक वचनहरूले मेरो संशय-ग्रन्थि छिनालेर आफ्नो स्वरूप प्रकाशित गर्नुहवस् ॥५३॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! मत्स्यस्वरूपले प्रलयकालीन महासागरमा डुल्दै रहने भगवान् आदिपुरुषले प्रार्थी राजा सत्यव्रतलाई आत्मतत्त्वको उपदेश दिए ॥५४॥मत्स्य-भगवानूले जसमा सांख्य, योग तथा कर्मको उल्लेख छ, त्यो आत्मरहस्ययुक्त मत्स्य-पुराण संहिताको पूर्णरूपेण वर्णन गरेर र ऋषिहरूका साथै डुङ्गामा विराजमान राजा सत्यव्रतले भगवान्ले भनेका सनातन ब्रह्मतत्त्व सन्दिग्धभावले सुने ॥ ५॥५६॥ जब प्रलयको अन्त्य भयो र ब्रह्माजी सुतेर उठे तब मत्स्य-भगवानूले हयग्रीव दैत्यलाई मारेर त्योसित चारै वेद खोसेर ब्रह्मालाई दिए ॥ ५७ ॥ ज्ञान विज्ञान सम्पन्न राजा सत्यव्रत नै श्रीविष्णु

भगवान्‌को कृपाले यस कल्पमा वैवस्वत मनु भए ॥५८॥ हे राजन ! राजर्षि सत्यव्रत तथा मत्स्यरूपधारी श्रीविष्णु भगवान्‌को संवाद स्वरूप यस महान् आख्यान्‌ लाई सुनेर मनुष्य सबै पापबाट मुक्त हुन्छन् ॥५९॥ जो पुरुष भगवान श्रीहरिको मत्स्यावतारको नित्य कीर्तन गर्दछ, त्यसका सबै मनोरथ सिद्ध हुन्छन्, त्यो पुरुष परमगति पाउँदछ ॥६०॥

संवादं महदाख्यानं श्रुत्वा मुच्येत किल्बिषात् ॥५९॥ अवतारो हरेर्योऽयं कीर्तयेदन्वहंनरः॥ सङ्कल्पास्तस्यसिद्ध्यन्ति सयाति परमांगतिम्॥६०॥ प्रलयपयसि धातुः सुप्तशक्तेर्मुखेभ्यः श्रुतिगणमपनीतं प्रत्युपादत्त हत्वा ॥ दितिजमकथयद्यो ब्रह्म सत्यव्रतानां तमहमखिलहेतुं जिह्ममीनं नतोऽस्मि ॥६१॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायामष्टमस्कन्धे मत्स्यावतारचरितानुवर्णनं नाम चतुर्विंशोऽध्याय ॥ २४ ॥

जसले प्रलयकालको जलमा सुतेका ब्रह्माजीको मुखबाट उपहृत वेदहरू हयग्रीव व दैत्यलाई मारेर पुनः प्राप्त गरेर ऋषिहरू* समेत राजा सत्यव्रतलाई ब्रह्मज्ञानको उपदेश दिए, ती निखिल जगका कारण मत्स्यस्वरूपी श्रीहरिलाई म प्रणाम गर्दछु ॥६१॥ इति श्रीमद्भागवते महापुराणेऽष्टमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ'कृत नेपालीभाषाटीकायां चतुर्विंशोऽध्यायः॥२४॥

॥ समाप्तोऽयमष्टमः स्कन्धः ॥

—०—

॥ श्रीकृष्णार्पणमस्तु ॥

---

* सत्सङ्गवार्ता—१. ऋषि जगत्‌का ठूला उपकारक हुन्छन् । ती मन्त्रद्रष्टा र मन्त्रहरूका प्रचारक हुन । वैदिक, तान्त्रिक, आदि जति मन्त्र छन्, तिनको साधना कसरी गर्नुपर्दछ यो जगत्‌ले जानेका छन् । इनै ऋषिहरूको कृपाले नै ऋषिहरूको ऋण जगत् कहिल्यै तिर्न सक्दैन । समस्त साधनका प्रवर्तक र समस्त साधनहरूले शक्ति दिने पनि ऋषि नै हुन् । २. भक्तिको यो विषमता छ—दीन हीन तुल्याइराख्छ, उसलाई निरभिमानी तुल्याउँछ । भक्तमा कहिल्यै योगी-ज्ञानी झैं सिद्धावस्थाको अभिमान आउन्न । भक्त यदि केही गर्दछ भने केवल विचार गर्दछ—'यो त सान्है थोरै भयो ।' त्यो त निरन्तर यही विचार्दछ—भक्ति कहीं हुँदैन । ३—लीलामयको लीला पदपदमा अत्यन्त विस्मयकारी एवं मधुर हुन्छ । ४. भगवानलाई जुन भोग लगाइन्छ, त्यो उसलो प्राप्त हुन्छ, जसै मनै खाइरहेको छु । भगवान्‌का मीठिमहरूलाई पूजा गरोस् र मनोस्—भगवान् ग वासनाका भोक्ता छन् र उनलाई नताछेर बोक्रा समेत फलादि भोग लगाइदोस् यस्तो उपेक्षा भाव हुने पुरुषले लगाएको भोग भगवान् खाँदैनन् । जति सत्परता ले हामी आफ्नो अत्यन्त आदरणीय प्रेमीको निम्ति खाने वस्तु तयार पार्दछौं, त्यो भन्दा पनि बढी प्रेमले भोग लगायौं भने त्यो भगवान् अवश्य खान्छन् । ५. भक्तको वाणी सत्य पार्नको निम्ति भगवान् सदैव तत्पर रहन्छन् । यदि भक्तको वचन सत्य पार्नमा उनले आफ्नो वचनको परित्याग गर्न परे त्यो पनि सहर्ष स्वीकार गर्दछन् । जुन बेला भक्तको वचनांशत भगवानको विरोध पर्न जान्छ, बहाँ भक्तको वाक्य रहन्छ, भगवान्‌को रहन्न । यस्तो भक्त को छ ! जहाँ हो उसको वचनको रक्षाका लागि भगवान आफ्नो वचन छाडिदेउन् । ६. भगवान् अर्काको वचन तोडिदिन्छन्, तर प्रेमी भक्तलाई दिएको प्रेम-बन्धन तोड्न सक्तैनन् । ७. जीवनका सफलता के हो ! हाम्रो हृदयमा सद्‌गुण आउन्, हाम्रो मुख भगवानतिर फर्कियोस्, हाम्रो जीवनमा दैवीगुण आओस् र त्यो भगवद्भजनको मूर्तिमान् स्वरूप बनोस् । ८—जुन सांसारिक उन्नति भगवान्‌को प्रीतिमा बाधक होस्, त्यो उन्नति, होइन अवनति हो ।

738

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते अष्टमः स्कन्धः समाप्तः ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते नवमः स्कन्धः प्रारभ्यते।

श्रीहरिः ( वैवस्वत मनुका पुत्र महाराज सुद्युम्नको वृत्तान्त ) यति कथा सुनेर राजा परीक्षितले भने—हे भगवन् ! मैले हजुर द्वारा वर्णित सबै मन्वन्तर र तिनमा भएका अनन्तवीर्य श्रीहरिका पराक्रमको वृत्तान्त सुनें ॥१॥ हजुरकै मुखबाट मैले यो पनि सुनें–जुन राजर्षि सत्यव्रत नामका द्रविडेश्वर थिए र तिनले विगत कल्पको अन्त्यमा भगवानका सेवाको प्रभावले ज्ञान प्राप्त गरेका थिए, उनै सूर्यनारायणका पुत्र वैवस्वत मनु भए । हजुरले इक्ष्वाकु आदि राजाहरूलाई उनकै पुत्र भन्नुभयो, हे ब्रह्मन् ! हे महाभाग ! अब हजुर मलाई तिनको वंश तथा तिनमा उत्पन्न राजाहरूको चरित्र सुनाउनोस्, किनकि हामी यस्ता कथाहरू सुन्नका निम्ति सधैं उत्सुक रहन्छौं ॥२-४॥ ती मनुवंशमा जुन राजाहरू पहिले भइसके,

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ मन्वन्तराणि सर्वाणि त्वयोक्तानि श्रुतानि मे ॥ वीर्याण्यनंतवीर्यस्य हरेस्तत्र कृतानि च ॥ १ ॥
योऽसौ सत्यव्रतो नाम राजर्षिर्द्रविडेश्वरः ॥ ज्ञानं योऽतीतकल्पान्ते लेभे पुरुषसेवया ॥ २ ॥ स वै विवस्वतः पुत्रो मनुरासीदिति श्रुतम् ॥ त्वत्त·
स्तस्य सुताश्चोक्ता इक्ष्वाकुप्रमुखा नृपाः ॥ ३ ॥ तेषां वंशं पृथग्ब्रह्मन्वंश्यानुचरितानि च ॥ कीर्तयस्व महाभाग नित्यं शुश्रूषतां हि नः ॥ ४ ॥
ये भूता ये भविष्याश्च भवन्त्यद्यतनाश्च ये ॥ तेषां नः पुण्यकीर्तीनां सर्वेषां वद विक्रमान् ॥ ५ ॥ सूत उवाच ॥ एवं परीक्षिता राज्ञा सदसि ब्रह्म·
वादिनाम् ॥ पृष्टः प्रोवाच भगवाञ्छुकः परमधर्मवित् ॥ ६ ॥ श्रीशुक उवाच ॥ श्रूयतां मानवो वंशः प्राचुर्येण परंतप ॥ न शक्यते विस्तरतो
वक्तुं वर्षशतैरपि ॥ ७ ॥ परावरेषां भूतानामात्मा यः पुरुषः परः ॥ स एवासीदिदं विश्वं कल्पान्तेऽन्यन्न किञ्चन ॥ ८ ॥ तस्य नाभेः समभवत्पद्म·
कोशो हिरण्मयः ॥ तस्मिञ्जज्ञे महाराज स्वयंभूश्चतुराननः ॥ ९ ॥ मरीचिर्मनसस्तस्य जज्ञे तस्यापि कश्यपः ॥ दाक्षायण्यां ततोऽदित्यां विवस्वान·

जो भविष्यमा हुनेछन् र जो यस समय वर्तमान छन्, ती सबै पवित्रकीर्तिशाली भूपालहरूको वृत्तान्त हजुर मलाई सुनाउनोस् ॥५। सूतजी भन्दछन्–'हे महामुने ! ती ब्रह्मवादी मुनीश्वरहरूका सभामा राजा परीक्षितले यस प्रकार सोधेपछि धर्मात्मा भगवान् शुकदेवजी मुसुक्क हाँसेर भन्नलागे ॥ ६ ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे परन्तप ! तिमी संक्षिप्तरूपमा मनुवंशको वर्णन सुन । त्यसको विस्तारपूर्वक वर्णन त सयकडौं वर्षमा पनि हुन सक्तैन ॥७॥ परमात्मा संसारका सारा-ठूला सबै प्राणीहरूका आत्मा हुन् । प्रलयकालमा सारा जगत् तद्रूप थियो* त्यस बेला उनी बाहेक अरु केही पनि विद्यमान थिएन ॥८॥ हे राजन् ! कालान्तरमा उनको नाभिबाट स्वर्णको कमलकोश उत्पन्न भयो र त्यसबाट ब्रह्माजी जन्मे ॥९॥ तिनको मरीचि र

* दृष्टान्त ( प्रभु कस्ता छन् ? )—यौटा मानिस नास्तिक थियो । त्यसको ईश्वरप्रति अलिकति पनि निष्ठा थिएन । ईश्वरका अस्तित्वका उक्तिहरू त्यसको हृदयमा गड्दैनथ्यो। एक दिन त्यो कतै बाहिर गइरहेको थियो । बाटोमा सीधा सादा र स्वच्छ हृदयको ग्रामीण भेटियो । नास्तिकले सोध्यो— हे भाई ! कता जान लागेका ?' ग्रामीणले उत्तर दियो—'मन्दिरमा ।' नास्तिकले सोध्यो—'त्यहाँ गएर के गर्दछौ ?' उसले उत्तर दियो–'ईश्वरको प्रार्थना गर्दछु ।' नास्तिकले सोध्यो—असल हो तर तिम्रो ईश्वर सानो छ कि ठूलो छ, यो कुरा भन त ?' ग्रामीणले उत्तर दियो—'महाशय ! त्यो दुवै छ । सानो पनि, ठूलो पनि ।' नास्तिकले भन्यो—'यस्तो कसरी हुन सक्छ ? सानो-ठूलो दुवै कसरी होला ?' ग्रामीणले भन्यो—'प्रभु यति ठूलो छ कि स्वर्गभन्दा पनि बढीस र सबै ब्रह्माण्ड त्यसैमा अटाइरहेछ । सानो पनि त्यो यति सानो छ कि मेरो र तिम्रो सानो हृदयमा पनि त्यो बसेको छ ।' ग्रामीणको त्यस्तो उत्तर सुनेर नास्तिक चूपलाग्यो । त्यसै दिनदेखि उसले ईश्वरको अस्तित्व स्वीकार गरेर प्रबल आस्तिक बन्न गयो ।

७३४

मरीचिका छोरा कश्यप भए । कश्यपकी पत्नी दक्षकुमारी अदितिको गर्भबाट विवस्वान् नामको छोरो उत्पन्न भयो ॥१०॥ हे भारत ! विवस्वान्‌की पत्नी संज्ञाको गर्भबाट श्राद्धदेव मनु भए । ती महामनस्वी महाराज श्राद्धदेवले आफ्नो पत्नी श्रद्धाबाट इक्ष्वाकु, नृग, शर्याति, दिष्ट, धृष्ट, करूष, नरिष्यन्त, नभग तथा कवि यी दश छोराहरू उत्पन्न गरे ॥११॥ ॥१२॥ जब कि वैवस्वत मनु निःसन्तान थिए, अनि वसिष्ठजीले छोरो हुनको निम्ति उनीद्वारा मित्रा-वरुण यज्ञ गराए ॥१३॥ अनि केवल दूध मात्र आहार गरेर रहने भएकी मनुकी पत्नी श्रद्धा होताको नजीकै गई प्रणाम गरेर यौटी कन्या मागिन् ॥ १४ ॥ त्यसपछि अध्वर्युको प्रेरणाले ब्राह्मण होताले मनु-पत्नीको कथन ध्यानमा राखेर एकाग्र चित्तले वषट्कारको उच्चारण गरेर हवि छाडे ॥१५॥ ती होताको यो विपरीत कर्मले त्यो सन्तान इला नामकी कन्या भई जन्मिइन् । तिनलाई देखेर मनुले चित्तमा केही विशेष प्रसन्न नभई आफ्ना गुरु वसिष्ठसित भने–॥१६॥ 'हे भगवन् ! हजुर जस्तो वेदवादीको कर्म यस प्रकार विकार विपरीत किन भयो ? अहो ! यो सार्‍है दुःखको कुरा हो ! कुनै पनि वैदिक

भवत्सुतः ॥ १० ॥ ततो मनुः श्राद्धदेवः संज्ञायामास भारत ॥ श्रद्धायां जनयामास दश पुत्रान्स आत्मवान् ॥ ११ ॥ इक्ष्वाकुनृगशर्यातीन्दिष्टधृष्टकरूषकान् ॥ नरिष्यन्तं पृषध्रं च नभगं च कविं विभुः ॥१२॥ अप्रजस्य मनोः पूर्वं वसिष्ठो भगवान्किल ॥ मित्रावरुणयोरिष्टिं प्रजार्थमकरोत्प्रभुः ॥१३॥ तत्र श्रद्धा मनोः पत्नी होतारं समयाचत ॥ दुहित्रर्थमुपागत्य प्रणिपत्य पयोव्रता ॥ १४ ॥ प्रेरितोऽध्वर्युणा होता ध्यायंस्तत्सुसमाहितः ॥ हविषि व्यचरत्तेन वषट्कारं गृणन्द्विजः ॥१५॥ होतुस्तद्व्यभिचारेण कन्येला नाम साऽभवत् ॥ तां विलोक्य मनुःप्राह नातिहृष्टमना गुरुम् ॥१६॥ भगवन्किमिदं जातं कर्म वो ब्रह्मवादिनाम् ॥ विपर्ययमहो कष्टं मैवं स्याद्ब्रह्मविक्रिया ॥१७॥ यूयं मंत्रविदो युक्तास्तपसा दग्धकिल्बिषाः॥कुतः सङ्कल्पवैषम्यमनृतं विबुधेष्विव ॥१८॥ तन्निशम्य वचस्तस्य भगवान् प्रपितामहः होतुर्व्यतिक्रमं ज्ञात्वा बभाषे रविनंदनम् ॥१९॥ एतत्संकल्पवैषम्यं होतुस्ते व्यभिचारतः ॥ तथापि साधयिष्ये ते सुप्रजास्त्वं स्वतेजसा ॥ २० ॥ एवं व्यवसितो राजन्भगवान्स महायशः ॥ अस्तौषीदादिपुरुषमिलायाः पुंस्त्वकाम्या ॥२१॥ तस्मै कामवरं तुष्टो भगवान्हरिरीश्वरः ॥ ददाविलाऽभवत्तेन सुद्युम्नः पुरुषर्षभः ॥२२॥ स एकदा महाराज विचरन् मृगयां वने ॥ वृतः कतिपयामात्यैरश्वमारुह्य सैंधवम् ॥२३॥ प्रगृह्य रुचिरं चापं शरांश्च परमाद्भुतान् ॥ दंशितोऽनुमृगं वीरो जगाम दिशमुत्तराम् ॥२४॥ सुकुमारो

कामको फल यस्तो विपरीत त नहुनु पर्ने हो ॥१७॥ हजुरहरू मन्त्र-शास्त्रवेत्ता र जितेन्द्रिय हुनुहुन्छ । हजुर आफ्नो तपको प्रभावले आफ्ना सबै पाप भस्म पारिसक्नु भएको छ । अनि देवताहरूमा असत्य प्राप्ति जस्तै हजुरको सङ्कल्पको यो विपरीत फल किन भयो ?' ॥१८॥ तिनका यस्ता कुरा सुनेर हाम्रा प्रपितामह भगवान् वसिष्ठले होताको व्यतिक्रम थाहा पाए र ती सूर्यपुत्र मनुसित भन्नलागे—॥१९॥ 'हे राजन् ! होताको विपरीत आचरणले नै सङ्कल्पको विपरीत फल भएको हो तथापि आफ्नो तेजोबलले म एक श्रेष्ठ पुत्र बनाउँला ॥ २० ॥ हे राजन् ! यस्तो निश्चय गरेर महायशस्वी भगवान् वसिष्ठले इलालाई पुरुषत्व प्राप्त गराउनको लागि आदि आदिपुरुष श्री नारायणको स्तुति गरे ॥ २१ ॥ अनि भगवान् श्रीहरिले प्रसन्न भएर उनलाई अभिलषित वर दिए । यसले इला पुरुषश्रेष्ठ सुद्युम्नको रूपमा परिणत भइन् ॥ २२ ॥ हे महाराज ! एक समय–राजा सुद्युम्न कवच लगाई तथा हातमा राम्रो धनुष

एवं अति अद्भुत बाण लिएर योद्धा सिन्धुदेशीय घोडामा चढी आफ्ना केही मन्त्रीगण साथमा लिई शिकार खेल्नको निम्ति वनमा गए । त्यहाँ ती वीर योद्धा मृगलाई लखेट्दै उत्तर दिशातिर लागिए ॥२३॥२४॥ जाँदा-जाँदा ती सुमेरुपर्वतको फेदीको यौटा वनमा पसे, जहाँ पार्वतीजीसित भगवान शङ्कर विहार गर्दै थिए ॥२५॥ हे राजन् ! त्यस वनमा पस्नासाथ शत्रुदमन सुद्युम्नले आफूलाई स्त्री तथा घोडालाई घोडीको रूपमा परिवर्तित देखे ॥ २६ ॥ त्यसैगरी उनका सबै साथीहरूले पनि आफ्नाफ्ना स्वरूप स्त्री रूपमा पाए । यसले ती योद्धा अर्कोतिर हेर्दै साह्रै खिन्न भए ॥२७॥ राजा परीक्षितले सोधे—हे भगवन् ! त्यस प्रदेशमा त्यस्तो गुण किन थियो र त्यो गुण कसले उत्पन्न गरेको थियो ? कृपा गरेर हजुर मेरो यस प्रश्नको उत्तर दिनुहवस् । मलाई यो जान्ने निकै उत्कण्ठा छ ॥२८॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! कुनै बेला आफ्नो तेजले दशै दिशाको अन्धकार नाश गरिदिने केही व्रतशील ऋषिगण श्रीशङ्करजीको दर्शन गर्नका निम्ति त्यस वनमा ॥२९॥ तिनलाई देखेर वस्त्रहीना अम्बिकादेवीलाई साह्रै लाज लाग्यो र तुरुन्त पतिदेवको काखबाट उठेर छिटो-छिटो वस्त्र

वनं मेरोरधस्तात्प्रविवेश ह ॥ यत्रास्ते भगवाञ्छर्वो रममाणः सहोमया ॥ २५ ॥ तस्मिन्प्रविष्ट एवासौ सुद्युम्नः परवीरहा ॥ अपश्यत्स्त्रियमात्मानमश्वं
च वडवां नृप ॥ २६ ॥ तथा तदनुगाः सर्वे आत्मलिङ्गविपर्ययम् ॥ दृष्ट्वा विमनसोऽभूवन्वीक्षमाणाः परस्परम् ॥ २७ ॥ राजोवाच ॥ कथमेवंगुणो
देशः केन वा भगवन्कृतः ॥ प्रश्नमेनं समाचक्ष्व परं कौतूहलं हि नः ॥ २८ ॥ श्रीशुक उवाच ॥ एकदा गिरिशं द्रष्टुमृषयस्तत्र सुव्रताः ॥ दिशो
वितिमिराभासाः कुर्वन्तः समुपागमन् ॥ २९ ॥ तान्विलोक्याम्बिका देवी विवासा व्रीडिता भृशम् ॥ भर्तुरङ्कात्समुत्थाय नीवीमाश्वथ पर्यधात्
॥ ३० ॥ ऋषयोऽपि तयोर्वीक्ष्य प्रसङ्गं रममाणयोः ॥ निवृत्ताः प्रययुस्तस्मान्नरनारायणाश्रमम् ॥ ३१ ॥ तदेदं भगवानाह प्रियायाः प्रियकाम्यया ॥
स्थानं यः प्रविशेदेतत्स वै योषिद्भवेदिति ॥ ३२ ॥ तत ऊर्ध्वं वनं तद्वै पुरुषा वर्जयन्ति हि ॥ सा चानुचरसंयुक्ता विचचार वनाद्वनम् ॥ ३३ ॥
अथ तामाश्रमाभ्याशे चरन्तीं प्रमदोत्तमाम् ॥ स्त्रीभिः परिवृतां वीक्ष्य चकमे भगवान्बुधः ॥ ३४ ॥ साऽपि तं चकमे सुभ्रूः सोमराजसुतं पतिम् ॥
स तस्यां जनयामास पुरूरवसमात्मजम् ॥ ३५ ॥ एवं स्त्रीत्वमनुप्राप्तः सुद्युम्नो मानवो नृपः ॥ सस्मार स्वकुलाचार्यं वसिष्ठमिति शुश्रुम ॥ ३६ ॥
स तस्य तां दशां दृष्ट्वा कृपया भृशपीडितः ॥ सुद्युम्नस्याशयन्पुंस्त्वमुपाधावत शङ्करम् ॥३७॥ तुष्टस्तस्मै स भगवानृषये प्रियमावहन् ॥ स्वां च वाच-

लगाइन् ॥३०॥ ती सबै ऋषि पनि शिव-पार्वतीलाई रमण गर्नलागेका देखेर त्यहाँबाट फर्केर नर-नारायणको आश्रममा जाँदा भए ॥ ३१ ॥ अनि शङ्कर भगवान्ले आफ्नी प्रियतमाको चित्त प्रसन्न गर्ने इच्छाले भने–'आजदेखि जो पुरुष यस वनमा प्रवेश गर्ला, त्यो स्त्री हुनेछ' ॥३२॥ हे राजन् ! त्यसै दिनदेखि सबै पुरुषले त्यस वनलाई छाडिदिएका थिए । अब त्यो स्त्री ( सुद्युम्न ) अनुचर सँगै वन-वनमा डुल्न लागिन् ॥३३॥ ती अति सुन्दरीलाई अन्य स्त्रीहरूका सँगै आफ्नो आश्रम नजीकै नै डुलिरहेकी देखेर भगवान् बुध तिनीमाथि मोहित भए ॥३४॥ तब ती सुभ्रू नारीले पनि ती चन्द्रतनयलाई आफ्नो पति तुल्याइन् । केही समयपछि, बुधले उनीबाट पुरुरवा नामका एक पुत्र उत्पन्न गरे ॥३५॥ मैले सुनेको छु– यस प्रकार स्त्रीत्वमा प्राप्त मनुपुत्र राजा सुद्युम्नले आफ्ना कुलगुरु वसिष्ठको स्मरण गरे ॥ ३६ ॥ तत्काल त्यहाँ पुगेर तथा सुद्युम्नको दशा देखेर दयालु वसिष्ठजी साह्रै दुःखी भई

उनलाई फेरि पुरुषत्व प्राप्त गराउनका लागि भगवान् *शङ्करको उपासना गर्नलागे ॥३७॥ हे राजन् ! वसिष्ठको उपासनाले प्रसन्न भएर श्रीशिवजीले तिनको उपकार गर्न र आफ्नो वचन सत्य पार्नका निम्ति भने–'यो सुद्युम्न एक महीना स्त्री र एक महीनासम्म तिम्रो गोत्रज पुरुष रहने छ । यस प्रकार आफ्नो व्यवस्थाको अनुसार यो भूमण्डलको यथेच्छ पालन गरोस् ।' गुरु वसिष्ठजीको कृपाले यस प्रकारको व्यवस्थाले पुरुषत्व प्राप्त गरेर ती पृथ्वीमा शासन गर्नलागे । तर तिनले यसरी स्त्री-पुरुष भइरहनु प्रजालाई मनपर्दैनथ्यो ॥३८-४०॥ हे राजन् ! सुद्युम्नका उत्कल, गय तथा विमल नामका तीन छोरा भए, जुन ठूला धर्मात्मा र दक्षिणापथका राजा थिए ॥४१॥ कालान्तरमा वृद्धावस्था प्राप्त

मृतां कुर्वन्निदमाह विशांपते ॥ ३८ ॥ मासं पुमान्स भविता मासं स्त्री तव गोत्रजः ॥ इत्थं व्यवस्थया कामं सुद्युम्नोऽवतु मेदिनीम् ॥३९॥ आचा-
र्यानुग्रहात्कामं लब्ध्वा पुंस्त्वं व्यवस्थया ॥ पालयामास जगतीं नाभ्यनन्दन्स्म तं प्रजाः ॥ ४० ॥ तस्योत्कलो गयो राजन्विमलश्च सुतास्त्रयः ॥
दक्षिणापथराजानो बभूवुर्धर्मवत्सलाः ॥ ४१ ॥ ततः परिणते काले प्रतिष्ठानपतिः प्रभुः ॥ पुरूरवस उत्सृज्य गां पुत्राय गतो वनम् ॥ ४२ ॥
इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे इलोपाख्याने प्रथमोऽध्यायः ॥ १ ॥

श्रीशुक उवाच ॥ एवं गतेऽथ सुद्युम्ने मनुर्वैवस्वतः सुते ॥ पुत्रकामस्तपस्तेपे यमुनायां शतं समाः ॥१॥ ततोऽयजन्मनुर्देवमपत्यार्थं हरिं प्रभुम् ॥

भएपछि ती प्रतिष्ठानपुरका स्वामी राजा सुद्युम्न आफ्नो छोरो पुरूरवालाई राज्य दिई वन गए ॥४२॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपालीभाषाटीकायां प्रथमोऽध्यायः ॥१॥

( मनुपुत्र पृषध्र, कवि, करूष, नरिष्यन्त र दिष्टका वंशको वर्णन )—श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! आफ्ना पुत्र सुद्युम्न वनगएपछि महाराज वैवस्वतमनुले पुत्र पाउनेकामनाले यमुनाजीको तटमा सय वर्षसम्म कठोर तपस्या गरे ॥१॥ त्यसपछि मनुले सन्तानको निमित्त यज्ञ द्वारा देवाधिदेव भगवान् श्रीहरिको उपासना गरे । त्यस्तो गरेपछि उनका आफ्नो

---

* दृष्टान्त ( उपासक हुनाले किसानले सुनको थाल पायो )—काशी विश्वनाथको मन्दिरमा एक पटक शिवरात्रिको दिन ठूलो सुनको थाल माथिबाट खसियो । त्यसमा लेखिएको थियो–'शङ्कर भगवान्‌मा जसको अच्छा प्रेम होला, उसैलाई यो थाल मिल्नेछ ।' काशीराजले ढ्याली पिटाएर धेरै मानिसहरू जम्मा पारे र सच्चा प्रेमालाई सबैको सामुन्ने आउन भने । सर्वप्रथम ठूला शास्त्रीजी सामुन्ने आए ! तिनले भने – 'म नित्य रुद्राभिषेक गर्दछु र शिवजीको दर्शन नगरी केही पनि खान्न । अतः थाल मेरो हातमा दिनुस् ।' थाल शास्त्रीजीको हातमा पर्नासाथ पीतलको भयो । अतः शास्त्रीजी लज्जित भए । त्यसपछि काशीराज स्वयं अघिसरे र भन्न लागे—'मैले विश्वनाथजीमा सुनको कलश सच्चा प्रेमले चढाएको थिएँ र आज शिवरात्रिको दिन दर्शन गर्न सच्चा प्रेमले आएको छु ।' राजाको हातमा पर्नासाथ थाल तामाको भयो । यसले ती पनि लज्जित भए । त्यसपछि ठूला ठूला सेठ आए र भने– विश्वनाथको जलधारी मैले नै बनाउन लगाएको हुँ । भूमिमा रुपियाँ मैले नै चढाएको हुँ र हजारौं कोश परबाट प्रेमवश म यहाँ आएको छु, यसनिम्ति थालको वास्तविक अधिकारी मनै हुँ ।' उसलाई दिंदा पनि थालको पहिले कै गति भयो । त्यसै बेला एक किसान–जो धेरै दिनदेखि श्रीविश्वनाथको दर्शनेच्छु थियो, तर पैसा नहुनाले र प्रायः खेतीको कामना लागिरहनाले काशी आउन पाएको थिएन । तर आज त्यो निकै कष्टले केही पैसा शिवजीमा चढाउन र खानका लागि सातु पोको पारेर काशी आइरहेको थियो । बाटोमा एक स्थानमा भोक प्यासले व्याकुल ठूलो मनुष्य परिरहेको थियो । त्यतातिर कसैको पनि दृष्टि गएन, किनकि धेरै जनालाई त सुनको थाल लिनु थियो । अनि त्यो दरिद्रनारायणलाई को सोध्ने ? त्यस किसानले त्यो गरीबलाई सातु खान दियो र पानी पिलायो, अनि नजीकै धर्मशालामा पुऱ्याइदियो । त्यसपछि किसान काशी विश्वनाथको मन्दिरमा गयो । विश्वनाथको पूजा गरेर जब त्यो बाहिर निस्कन लाग्यो, तब कसैले ठट्टा गरेर हाँस्तै भन्यो—'महादेवजीको यो सच्चा भक्त आयो ! यसनिम्ति थाल यसैलाई दिइदेओ ।' त्यसको स्पर्श भन्नासाथ थाल पुजारीको हातबाट चिप्लिएर त्यस किसानको हातमा पुगेर सुवर्णके रूपमा चम्कन लाग्यो । शास्त्री, राजा र पुजारीहरूको आश्चर्यको ठेगान रहेन र सबै जना किसानलाई धन्यवाद दिन लागे ।

सदृश वीर इक्ष्वाकु आदि दस पुत्र उत्पन्न भए ॥२॥ गुरु वसिष्ठले मनुका छोरा पृषध्रलाई गाईहरूको रक्षामा नियुक्त गरिदिएका थिए। यसै निम्ति रात्रिको बेला त्यो सावधानपूर्वक योगासनमा बसेर गाईहरूको रक्षा गर्ने गर्दथ्यो ॥३॥ एक दिन जब कि रातमा पानी पर्दै थियो, ती गाईहरूको बथानमा यौटा व्याघ्र आएर पस्यो व्याघ्रसित भयभीत भएर सुतेका गाईहरू धर्मराउँदै उठे र गोठमा यता-उता दगुर्न लागे ॥४॥ अवसर पाएर त्यस बलवान् व्याघ्रले यौटी गाई समात्यो। त्यो विपत्तिमा गाई अत्यन्त भयभीत भएर कराउन लागी। त्यसले कराएको सुनेर पृषध्र गाईको नजीकै पुग्यो ॥५॥ र तुरुन्त तलवार झिकेर तारासम्म नदेखिने अन्धकारपूर्ण रातमा उसले थाहै नपाइकन व्याघ्र ठानेर तुरुन्त त्यस कपिला गाईको सिर काटिदियो ॥६॥ त्यही तरवारको टुप्पाले कान फाटिएको हुनाले व्याघ्र पनि सान्है भयभीत भएर बाटोभरि रगत चुहाउँदै भागेर गयो ॥ ७ ॥ अतएव शत्रुसूदन पृषध्रले ठान्यो—व्याघ्र मऱ्यो। रात बितेपछि आफ्नै हातले मारिएकी गाईलाई देखेर पृषध्र सान्है दुःखी भयो ॥ ८ ॥ त्यसपछि यसरी अनिच्छापूर्वक अपराध गर्ने पृषध्रलाई कुलगुरु

इक्ष्वाकुपूर्वजान्पुत्राँल्लेभे स्वसदृशान्दश ॥ २ ॥ पृषध्रस्तु मनोः पुत्रो गोपालो गुरुणाकृतः ॥ पालयामास गां यत्तो रात्र्यां वीरासनव्रतः ॥३॥ एकदा प्राविशद्गोष्ठे शार्दूलो निशि वर्षति ॥ शयाना गाव उत्थाय भीतास्ता बभ्रमुर्व्रजे ॥४॥ एकां जग्राह बलवान्सा चुक्रोश भयातुरा ॥ तस्यास्तत्क्रन्दितं श्रुत्वा पृषध्रोऽभिससार ह ॥५॥ खड्गमादाय तरसा प्रलीनोडुगणैर्निशि ॥ अजानन्नहनद्बभ्रोः शिर शार्दूलशङ्कया ॥६॥ व्याघ्रोऽपि वृक्णश्रवणो निस्त्रिंशाग्राहतस्ततः ॥ निश्चक्राम भृशं भीतो रक्तं पथि समुत्सृजन् ॥ ६ ॥ मन्यमानो हतं व्याघ्रं पृषध्रः परवीरहा ॥ अद्राक्षीत्स्वहतां बभ्रुं व्युष्टायां निशि दुःखितः ॥८॥ तं शशाप कुलाचार्यःकृतागसमकामतः ॥ न क्षत्रबन्धुः शूद्रस्त्वं कर्मणा भविताऽमुना ॥९॥ एवं शप्तस्तु गुरुणा प्रत्यगृह्णात्कृताञ्जलिः ॥ अधारयद्व्रतं वीरं ऊर्ध्वरेता मुनिप्रियम् ॥१०॥ वासुदेवे भगवति सर्वात्मनि परेऽमले ॥ एकान्तित्वं गतो भक्त्या सर्वभूतसुहृत्समः ॥११॥ विमुक्तसङ्गः शान्तात्मा संयताक्षोऽपरिग्रहः ॥ यदृच्छयोपपन्नेन कल्पयन्वृत्तिमात्मनः ॥ १२ ॥ आत्मन्यात्मानमाधाय ज्ञानतृप्तः समाहितः ॥ विचचार महीमेतां जडान्धबधिराकृतिः ॥ १३ ॥ एवंवृत्तो वनं गत्वा दृष्ट्वा दावाग्निमुत्थितम् ॥ तेनोपयुक्तकरणो ब्रह्म प्राप परं मुनिः ॥ १४ ॥ कविः कनीयान्विषयेषु निःस्पृहो विसृज्य राज्यं सह बन्धुभिर्वनम् ॥ निवेश्य चित्ते पुरुषं स्वरोचिषं विवेश कैशोरवयाः परं गतः ॥ १५ ॥ करूषान्मानवादासन्कारूषाः

वसिष्ठजीले श्राप दिंदै भने—'ए! यस दुष्कर्मले त तँ अधम श्रेणीको पनि क्षत्रिय रहिनस्, बरु तँ शूद्र भइस् जा' ॥ ९ ॥ यस प्रकार गुरुले श्राप दिएपछि वीरवर पृषध्रले हात जोरेर श्राप अङ्गीकार गरी मुनिहरूलाई मनपर्ने ब्रह्मचर्य-व्रत ग्रहण गऱ्यो ॥ १० ॥ त्यस स्थितिमा त्यो सबै प्राणीहरूको सुहृद र समदर्शी भएर ठूलो भक्तिभावले परमविशुद्ध सर्वात्मा भगवान् वासुदेवको अनन्य भावमा प्राप्त भयो ॥११॥ उसले सबै सङ्ग त्यागिदियो र शान्तचित्त, जितेन्द्रिय र परिग्रह-विहीन भई दैववश प्राप्त आहारले नै निर्वाह गर्दो छँदो आफ्नो चित्त परमात्मामा लगाए ज्ञानामृतले तृप्त तथा समाहित चित्त भएर जड, अन्धो एवं बहिरो जस्तै भूमण्डलमा विचरण गर्न लाग्यो ॥ १२-१३ ॥ यस्तो वृत्ति धारण गरेर त्यो वनमा गयो र त्यहाँ दावानल लागेको देखेर, उसैमा सबै इन्द्रियहरूका साथै आफ्नो शरीर पनि भस्म पारेर त्यस मुनिले परब्रह्मरूप प्राप्त गऱ्यो ॥ १४ ॥ त्यसपछि मनुको सबभन्दा

कान्छो छोरो कवि पनि सबै विषयबाट उदासीन भई तथा आफ्ना बन्धुजन सहित राज्य त्यागेर वनमा हिंडिदियो र आफ्नो हृदयमा स्वयं प्रकाशशील पुरुषोत्तम भगवानलाई विराजमान पारी किशोरावस्थामानै परमपदमा प्राप्त भएर लीन हुनगयो ॥ १५ ॥ करुषबाट कारुष नामका क्षत्रिय भए, जुन उत्तरायण क्षेत्रका रक्षक, ब्राह्मण-भक्त ओघवान् भयो र ती धार्ष्ट नामका क्षत्रिए भए, जो आफ्ना सुकर्मले ब्राह्मण भएका थिए। नृगको छोरो सुमति, सुमतिको भूतज्योति, भूतज्योतिको वसु वसुको प्रतीक र प्रतीकको छोरो ओघवान भयो र त्यो ओघवान नामकै पुत्रको पिता बन्यो। त्यस ओघवानकी ओघवती कन्या थिई जसको विवाह सुदर्शनसित भयो ॥१७-१८॥ त्यसै गरी नरिष्यन्तको छोरो चित्रसेन, त्यसको ऋक्ष, ऋक्षको मीढ्वान्, उसको कूर्च, कूर्चको छोरो इन्द्रसेन भयो ॥१९॥ इन्द्रसेनका वीतिहोत्र, वीतिहोत्रका सत्यश्रवा, सत्यश्रवाका, उरुश्रवा, उरुश्रवाको देवदत्त नामक छोरो भयो ॥२०॥ त्यस देवदत्तको घरमा अग्निवेश्य नामले प्रसिद्ध स्वयं अग्नि भगवान पुत्ररूपले जन्मे। पछि गएर ती कानीन र महर्षि जातूकर्ण्य यस नामले प्रसिद्ध भए ॥२१॥ हे

क्षत्रजातयः ॥ उत्तरापथगोप्तारो ब्रह्मण्या धर्मवत्सलाः ॥ १६ ॥ धृष्टाद्धार्ष्टमभूत्क्षत्रं ब्रह्मभूयं गतं क्षितौ ॥ नृगस्य वंशः सुमतिर्भूतज्योतिस्ततो वसुः
॥ १७ ॥ वसोः प्रतीकस्तत्पुत्र ओघवानोघवत्पिता ॥ कन्या चौघवती नाम सुदर्शन उवाह ताम् ॥ १८ ॥ चित्रसेनो नरिष्यन्तादृक्षस्तस्य सुतोऽ-
भवत् ॥ तस्य मीढ्वांस्ततः कूर्च इन्द्रसेनस्तु तत्सुतः ॥१९॥ वीतिहोत्रस्त्विन्द्रसेनात्तस्य सत्यश्रवा अभूत् ॥ अरुश्रवाः सुतस्तस्य देवदत्तस्ततोऽभवत्
॥२०॥ ततोऽग्निवेश्यो भगवानग्निः स्वयमभूत्सुतः ॥ कानीन इति विख्यातो जातूकर्ण्यो महानृषिः ॥ २१ ॥ ततो ब्रह्मकुलं जातमाग्निवेश्यायनं
नृप ॥ नरिष्यन्तान्वयः प्रोक्तो दिष्टवंशमतः शृणु ॥ २२ ॥ नाभागो दिष्टपुत्रोऽन्यः कर्मणा वैश्यतां गतः ॥ भलन्दनः सुतस्तस्य वत्सप्रीतिर्भलन्द-
नात् ॥२३॥ वत्सप्रीतेः सुतः प्रांशुस्तत्सुतं प्रमतिं विदुः ॥ खनित्रः प्रमतेस्तस्माच्चाक्षुषोऽथ विविंशतिः ॥ २४ ॥ विविंशतिसुतो रम्भः खनिनेत्रोऽ-
स्य धार्मिकः ॥ करन्धमो महाराजस्तस्यासीदात्मजो नृप ॥२५॥ तस्यावीक्षित्सुतो यस्य मरुत्तश्चक्रवर्त्यभूत् ॥ संवर्तोऽयाजयद्यं वै महायोग्यङ्गिरः-
सुतः ॥ २६ ॥ मरुत्तस्य यथा यज्ञो न तथाऽन्यस्य कश्चन ॥ सर्वं हिरण्मयं त्वासीद्यत्किञ्चिच्चास्य शोभनम् ॥ २७ ॥ अमाद्यदिन्द्रः सोमेन दक्षिणा-
भिर्द्विजातयः ॥ मरुतः परिवेष्टारो विश्वेदेवाः सभासदः ॥२८॥ मरुत्तस्य दमः पुत्रस्तस्यासीद्राज्यवर्धनः ॥ सुधृतिस्तत्सुतो जज्ञे सौधृतेयो नरः सुतः

राजन् ! उनैबाट अग्नि वेश्यायन गोत्रका ब्राह्मणवंशको विस्तार भयो। यसरी मैले नरिष्यन्तका संतानको वर्णन गरिदिएँ। अब दिष्टको वंश-विस्तार सुन–॥२२॥ दिष्टको छोरो नाभाग भयो। यो अगाडि कहिने नाभागभन्दा दोस्रो नाभाग हो। यो आफ्नो कर्मले वैश्य भएको थियो। यसको पुत्र भलन्दन र उसको पुत्र वत्सप्रीतिभयो ॥२३॥ वत्सप्रीतिको छोरो प्रांशु र उसको पुत्र प्रमति भयो ! प्रमतिबाट खनित्र, खनित्रबाट चाक्षुषको विविंशति नामक पुत्र भयो ॥ २४ ॥ हे राजन् ! विविंशतिको पुत्र रम्भ, रम्भको धर्मात्मा खनिनेत्र र खनिनेत्रको करन्धमा भए ॥२५॥ राजा करन्धमका अविक्षित र उनका चक्रवर्ती महाराज मरुत भए, जसको द्वारा अङ्गिरा ऋषिका सुपुत्र संवर्तले यज्ञ गराएका थिए ॥२६॥ मरुतको जस्तो यज्ञ भएको थियो, त्यस्तो कसैको भएन। उनको यज्ञमा जति पात्रादि थिए, सबै सुनका बनेका थिए ॥२७॥ त्यस यज्ञमा इन्द्र सोमरस पिएर मस्त भएका थिए र ब्राह्मण दक्षिणाहरूले

पूर्ण सन्तुष्ट भएथे । दिनमा पस्कने व्यक्ति मरुद्गण र सभासद् विश्वेदेवगण थिए ॥ २८ ॥ मरुतका दम, दमका राज्यवर्धन उनका सुधृति र सुधृतिका नर नामका पुत्र जन्मे ॥ २८ ॥ नरको छोरो केवल,केवलको बन्धुमान्, बन्धुमान्‌को वेगवान् वेगवान्‌को छोरो बन्धु र बन्धुको पृथ्वीपति तृणबिन्दु भयो ॥३०॥ सबै सेवनीय गुणहरूका आश्रयस्वरूप थिए। अलम्बुषा नामकी एक श्रेष्ठ अप्सराले तृणबिन्दुलाई पति रोजी, जसबाट अनेक पुत्र र इडविडा नामकी यौटी कन्या जन्मी ॥ ३१ ॥ मुनिवर विश्रवाले आफ्ना पिता पुलस्त्यसित उत्तम विद्या प्राप्त गरेर इडविडाबाट कुबेर नामको पुत्र उत्पन्न गरे ॥३२॥ महाराज तृणबिन्दुका विशाल, शून्यबन्धु र धूम्रकेतु पुत्र थिए। तिनमा वंशवर्धक राजा विशालले वैशाली नामको नगर बसाले ॥३३॥ ती विशालको पुत्र हेमचन्द्रका हेमचन्द्र धूम्राक्ष, धूम्राक्षको छोरो संयम र संयमको कृशाश्व र सहदेवज नामका दुइ पुत्र भए ॥३४॥ उनमा कृशाश्वको सोमदत्त नामक छोरो उत्पन्न भयो। जसले कैयौं अश्वमेध यज्ञद्वारा परमपुरुष भगवान यज्ञेश्वरको आराधना गरेर योगेश्वरहरूको आश्रय लिएर उत्तम गति पाए ॥३५॥ उनै सोमदत्तका छोरा सुमति र

॥२६॥ तत्सुतः केवलस्तस्माद्बन्धुमान्वेगवांस्ततः ॥ बन्धुस्तस्याभवद्यस्य तृणबिन्दुर्महीपतिः ॥ ३० ॥ तं भेजेऽलम्बुषा देवी भजनीयगुणालयम् ॥ वराप्सरा यतः पुत्राः कन्या चेडविडाऽभवत् ॥३१॥ तस्यामुत्पादयामास विश्रवा धनदं सुतम् ॥ प्रादाय विद्यां परमामृषिर्योगेश्वरात्पितुः ॥३२॥ विशालः शून्यबन्धुश्च धूम्रकेतुश्च तत्सुताः ॥ विशालो वंशकृद्राजा वैशालीं निर्ममे पुरीम् ॥३३॥ हेमचन्द्रःसुतस्तस्य धूम्राक्षस्तस्य चात्मजः ॥ तत्पुत्रात्संयमा-दासीत्कृशाश्वः सहदेवजः ॥३४॥ कृशाश्वात्सोमदत्तोऽभूद्योऽश्वमेधैरिडस्पतिम् ॥ इष्ट्वा पुरुषमापाग्र्यां गतिं योगेश्वराश्रितः ॥३५॥ सौमदत्तिस्तु सुमति-स्तत्सुतो जनमेजयः ॥ एते वैशालभूपालास्तृणबिन्दोर्यशोधराः ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे द्वितीयोऽध्यायः ॥२॥

शुक उवाच ॥ शर्यातिर्मानवो राजा ब्रह्मिष्ठः स बभूव ह ॥ यो वा अङ्गिरसां सत्रे द्वितीयमह ऊचिवान् ॥ १ ॥ सुकन्या नाम तस्या-सीत्कन्या कमललोचना ॥ तया सार्धं वनगतो ह्यगमच्च्यवनाश्रमम् ॥ २ ॥ सा सखीभिः परिवृता विचिन्वन्त्यंघ्रिपान्वने ॥ वल्मीकरन्ध्रे ददृशे खद्योते इव ज्योतिषी ॥ ३ ॥ ते दैवनोदिता बाला ज्योतिषी कण्टकेन वै ॥ अविध्यन्मुग्धभावेन सुस्रावासृक् ततो बहु ॥ ४ ॥ शकृन्मूत्रनि-

सुमतिका छोरा जन्मेजय भए। तृणबिन्दुको यश बढाउने यी सबै विशालवंशी राजा थिए ॥३६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः॥२॥

( महर्षि च्यवन र देवी सुकन्याको वृत्तान्त र श्रीबलरामको रेवतीसित विवाह )–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन्! यस्तो पनि कहिन्छ कि मनुका छोरा राजा शर्याति वेदहरूका तत्त्वज्ञाता थिए, किनकि उनले अङ्गिरागोत्र भएका ऋषिहरूको यज्ञमा दोस्रो दिनका कर्महरू उनलाई सिकाएका थिए ॥ १ ॥ तिनकी यौटी कमलनयनी कन्या थिइन्–जसको नाम थियो सुकन्या। एक समय सुकन्या सहित वनमा गएका शर्याति महर्षि च्यवन ऋषिका आश्रममा पुगे ॥ २ ॥ सुकन्या आफ्नी सखीहरूसित त्यस वनको सौन्दर्य हेर्दै डुलिरहेकी थिइन्। त्यसै बखत उनले कुनै यौटा वल्मीक ( धमेरो ) का सानो प्वालबाट जुनकिरी जस्तै दुइटा ज्योति टल्केको देखिन् ॥ ३ ॥ अनि ती बालाले विधाताको प्रेरणावश मुग्धभावले यौटा काँढा लिएर ती दुवै ज्योतिमा घोचिदिइन्, त्यसबाट निकै नै रगत बग्न लाग्यो ॥ ४ ॥ त्यसै बखत महाराज शर्यातिका सेनाका सैनिकहरूको

मल, मूत्र अवरुद्ध भयो । यस्तो व्यतिक्रम देखेर राजर्षि शर्यातिले अतिशय विस्मित भावले आफ्ना सैनिकहरूलाई सोधे—॥५॥ 'तिमीहरूले भृगुवंशी महर्षि च्यवनको कुनै अपकार त गरेनौ ? मलाई त यस्तो लागिरहेको छ–हामीहरूमध्ये कसैले अवश्य तिनको आश्रममा कुनै अनर्थ गरेको छ' ॥ ६ ॥ अनि मनमनै डराउँदै सुकन्या पितासित भन्दछिन्–'हे पिताजी ! मैले केही अपराध अवश्य गरेकी छु, किनकि थाहै नपाई मैले दुइटा ज्योतिमा काँडाले घोचिदिएकी छु' ॥७॥ आफ्नी छोरीका कुरा सुनेर राजा शर्याति आत्तिए र वल्मीकले ढाकिएका च्यवन मुनिकहाँ गएर उनलाई फुल्याउन लागे ॥ ८ ॥ केही बेरपछि मुनिको अभिप्राय जानेर राजाले आफ्नी कन्या उनैलाई सुम्पिदिए र त्यस सङ्कटबाट मुक्त भई, आज्ञा लिएर समाहित चित्तले आफ्नो नगरमा फर्किए ॥९॥ यता सुकन्याले ती महाक्रोधी च्यवन मुनिलाई पतिरूपमा पाएर उनको मनोवृत्ति जानी निकै सावधानीपूर्वक सेवा गरेर उनलाई प्रसन्न पारिलिइन् ॥१०॥ एक दिन उनको आश्रममा दुवै अश्विनीकुमार आए । उनको यथोचित सत्कार गरेर च्यवन मुनिले भने–'तिमी दुवै यो काम गर्न समर्थ छौ, अतः मलाई युवावस्था

रोधोऽभूत्सैनिकानां च तत्क्षणात् ॥ राजर्षिस्तमुपालक्ष्य पुरुषान्विस्मितोऽब्रवीत् ॥ ५ ॥ अप्यभद्रं न युष्माभिर्भार्गवस्य विचेष्टितम् ॥ व्यक्तं केनापि नस्तस्य कृतमाश्रमदूषणम् ॥६॥ सुकन्या प्राह पितरं भीता किञ्चित्कृतं मया ॥ द्वे ज्योतिषी अजानन्त्या निर्भिन्ने कण्टकेन च ॥ ७ ॥ दुहितुस्तद्वचः श्रुत्वा शर्यातिर्जातसाध्वसः ॥ मुनिं प्रसादयामास वल्मीकान्तर्हितं शनैः ॥ ८ ॥ तदभिप्रायमाज्ञाय प्रादाद्दुहितरं मुनेः ॥ कृच्छ्रान्मुक्तस्तमामन्त्र्य पुरं प्रायात्समाहितः ॥ ९ ॥ सुकन्या च्यवनं प्राप्य पतिं परमकोपनम् ॥ प्रीणयामास चित्तज्ञा अप्रमत्ताऽनुवृत्तिभिः । १०॥ कस्यचित्त्वथ कालस्य नासत्यावाश्रमागतौ ॥ तौ पूजयित्वा प्रोवाच वयो मे दत्तमीश्वरौ ॥ ११ ॥ ग्रहं ग्रहीष्ये सोमस्य यज्ञे वामप्यसोमपोः ॥ क्रियतां मे वयो रूपं प्रमदानां यदीप्सितम् ॥ १२ ॥ बाढमित्यूचतुर्विप्रमभिनन्द्य भिषक्तमौ ॥ निमज्जतां भवानस्मिन्ह्रदे सिद्धविनिर्मिते ॥ १३ ॥ इत्युक्त्वा जरया ग्रस्तदेहो धमनिसन्ततः ॥ ह्रदं प्रवेशितोऽश्विभ्यां वलीपलितविप्रियः ॥ १४ ॥ पुरुषास्त्रय उत्तस्थुरपीव्या वनिताप्रियाः ॥ पद्मस्रजः कुण्डलिनस्तुल्यरूपाः सुवाससः ॥ १५ ॥ तान्निरीक्ष्य वरारोहा सरूपान्सूर्यवर्चसः ॥ अजानती पतिं साध्वी अश्विनौ शरणं ययौ ॥ १६ ॥ दर्शयित्वा पतिं तस्यै पातिव्रत्येन तोषितौ ॥ ऋषिमामन्त्र्य ययतुर्विमानेन त्रिविष्टपम् ॥ १७ ॥ यक्ष्यमाणोऽथ शर्यातिश्च्यवनस्याश्रमं गतः ॥ ददर्श दुहितुः पार्श्वे

प्रदान गर ॥११॥ तिमी मेरो रूप र मेरो अवस्था यस्तो तुल्याइदेऊ जुन युवती स्त्रीहरूलाई मनपरोस् । त्यसको साटो म तिमीहरूलाई सोमपानको अधिकार नभए पनि यज्ञमा सोमरसको भाग प्रदान गर्नेछु' । १२ ॥ ती वैद्य-श्रेष्ठले च्यवन मुनिको अभिनन्दन गरेर 'हुन्छ' भनी अनि 'सिद्धगणले बनाएको यस कुण्डमा स्नान गर्नुहवस्' यति भनेर जरावस्थाले जीर्ण भइसकेका धमनीहरू ( नसाहरू ) ले व्याप्त र च्याउरिएको छाला, पाकेका केश आदिले अत्यन्त कुरूप देह हुने ती च्यवन मुनिलाई आफ्नो संगसंगै कुण्डमा प्रविष्ट गराए ॥१३-१४॥ त्यस्तो गर्नाले तत्काल कुण्डबाट अति सुन्दर र कामिनीहरूका प्रिय तीन पुरुष प्रकटभए । ती तीनैजना एकैनासे रूपवान् थिए र पुष्पमाला कुण्डल र राम्रा वस्त्र पहिरेका थिए ॥ १५ ॥ ती सूर्यजस्तै तेजस्वी तथा एकसमान रूपधारी तीनै जना पुरुषहरूलाई देखेर परमसाध्वी सुकन्याले आफ्ना स्वामी चिन्ह सकिनन् । यसकारण तिनले दुवै अश्विनीकुमारहरूलाई

798

'नै शरणा छु' भनिन् ॥१६॥ तिनको पातिव्रतले सन्तुष्ट अश्विनीकुमारले उनलाई च्यवन मुनि चिन्हाइदिए र ती मुनिको आज्ञा लिई विमानमा बसी स्वर्ग जाँदाभए ॥१७॥ त्यस पछि केही समयपछिको कुरा हो–राजा शर्याति यज्ञ गर्न उद्यत भई च्यवन ऋषिको आश्रममा गए। त्यहाँ उनले आफ्नी छोरीको नजीकै ( वृद्ध च्यवन मुनिको स्थानमा ) सूर्यनारायण समान तेजस्वी यौटा अन्य पुरुषलाई उपस्थित देखे ॥१८॥ राजा शर्यातिले आफूलाई ढोग्न आएकी छोरीसित केही रिसाए झैं गरेर आशीर्वाद पनि नदिई भन्नलागे–॥१९॥ 'ऐ व्यभिचारिणी ! तँ के गर्न खोज्दैछस् ? के यस्तो ठानेर 'यो भिखारी* बुढो हुनाले मेरो कामको छैन' तैंले आफ्ना सर्वलोक-नमस्कृत पति च्यवन मुनिलाई धोखा दिइस् र उनलाई त्यागेर यौटा बाटो हिंड्ने जार पुरुषको चाकरी गरिरहेकी छस् ? ॥२०॥ हे सत्कुल-प्रसूते ! तेरो मनमा यस्तो विपरीत धारणा किन उत्पन्न भयो ? तेरो यो व्यवहारले त कुलमा कलङ्क

पुरुषं सूर्यवर्चसम् ॥ १८ ॥ राजा दुहितरं प्राह कृतपादाभिवन्दनाम् ॥ आशिषश्चाप्रयुञ्जानो नातिप्रीतमना इव ॥ १९ ॥ चिकीर्षितं ते किमिदं पतिस्त्वा प्रलम्भितो लोकनमस्कृतो मुनिः ॥ यत्त्वं जराग्रस्तमसत्यसम्मतं विहाय जारं भजसेऽमुमध्वगम् ॥२०॥ कथं मतिस्ते विगताऽन्यथा सतां कुलप्रसूते कुलदूषणं त्विदम् ॥ बिभर्षि जारं यदपत्रपा कुलं पितुश्च भर्तुश्च नयस्यधस्तमः ॥ २१ ॥ एवं ब्रुवाणं पितरं स्मयमाना शुचिस्मिता ॥ उवाच तात जामाता तवैष भृगुनन्दनः ॥ २२ ॥ शशंस पित्रे तत्सर्वं वयोरूपाभिलम्भनम् ॥ विस्मितः परमप्रीतस्तनयां परिषस्वजे ॥ २३ ॥ सोमेन याजयन्वीरं ग्रहं सोमस्य चाग्रहीत् ॥ असोमपोरप्यश्विनोश्च्यवनः स्वेन तेजसा ॥ २४ ॥ हन्तुं तमाददे वज्रं सद्योमन्युरमर्षितः ॥ सवज्रं स्तम्भयामास भुजमिन्द्रस्य भार्गवः ॥ २५ ॥ अन्वजानंस्ततः सर्वे ग्रहं सोमस्य चाश्विनोः ॥ भिषजाविति यत्पूर्वं सोमाहुत्या बहिष्कृतौ

लगाइदिन्छ, किनकि तैंले लज्जा त्यागेर जार पुरुषलाई आश्रय दिएकी छस्। हे पापिनी ! तँ त आफ्ना पिता र पति दुवैको नै कुललाई नरकमा लैजाने योजना बनाउँदै छस्' ॥२१॥ आफ्ना पिताले त्यस्तो भनेपछि मंजुहासिनी सुकन्याले हाँस्तै भनिन्–'हे पिता ! यी हजुरका ज्वाईं भृगुनन्दन च्यवन मुनि नै हुन् ॥२२॥ अनि उनले जसरी उनलाई रूप र यौवन प्राप्त भएको थियो, त्यो सबै वृत्तान्त आफ्ना पितालाई सुनाइन्। त्यसपछि राजा शर्यातिले साह्रै छक्क परेर आफ्नी छोरीलाई ठूलो प्रेमले अंकमाल गरे ॥२३॥ अनि महर्षि च्यवनले शर्यातिसित सोमयज्ञको अनुष्ठान गराई आफ्नो कर्तव्य निष्ठा तथा तपोबलले ती सोमपानका अनधिकारी अश्विनीकुमारलाई सोमरसको भाग प्रदान गरे ॥ २४ ॥ अनि शीघ्र नै क्रोधित हुने देवराजले रिसाई महाराज शर्यातिलाई मार्नको निम्ति आफ्नो वज्र ताके, तर भृगुश्रेष्ठ च्यवनले वज्रसमेत उनको हात बीचमै स्तम्भित अर्थात् अड्याइदिए ॥ २५ ॥

---

* दृष्टान्त–बम्बईमा जब भिक्षुक सप्ताह मनाइएको थियो, त्यसै बेलाको कुरा–'बाबूजी ! एक पैसा, हिजो बिहानैदेखि केही खाएको छैन…।' मैले फर्केर हेरें। मोटो केटो रेलको डब्बामा मेरो पछाडि लम्किएको सने खित पैसा मागिरहेको थियो। मसँग एक जना परिचित सज्जन बसेका थिए। उनले त्यो केटोसित सोधे—'हट्टाकट्टा, मरद भीख माग्छस् ! तँ नोकरी गर्छस् भने म तँलाई नोकरी दिलाउन सक्तछु।' केटोले हाँसेर भन्यो–'नोकरी ! तर कति रुपियाँ तलब दिलाउनु हुन्छ, महाशय ?' 'पैंतालीस रुपियाँ महीना। बिहान नौ बजेदेखि साँझ सात बजेसम्म काम गर्नुपर्दछ !' केटोले मुसुक्क हाँसेर भन्यो–'महाशय ! अहिले त मलाई थोरै पनि दिनको पाँच रुपियाँ मिल्दछ। म के गर्छु तपाईंको नोकरी लिएर ?' परिचित सज्जन छक्क परे र सोधे–'पाँच रुपियाँ दिनको कमाउँछौ ! कसरी ?' केटोले भन्यो—'म स्टेशनको नजीकै बस्तछु र बिहान चार बजेदेखि राति एघार बजेसम्म रेलहरूमा भीख माग्दछु। बीचमा कैयौं पल्ट पुलिससित जोगिन र विश्राम गर्नको लागि पर जान्छु।' धेरै दिन भइसक्यो, अझ पनि रात्रिको अन्धकारमा भिखारी केटो हाँस्तै यो भनिरहेको देखिन्छ–'महाशय ! मिहिनेत नगरेर नै मलाई दिनको पाँच रुपियाँ मिल्दछ।' अनि मैले धेरै दिन पहिले पढेको यो वाक्य सम्झना हुन्छ–भिखा दिनेहरूले नै मलाई माग्न सिकाए। परिश्रम नगरेर नै पेट भर्ने बाटो सहजै देखाइदिए।

7-96

त्यसै वेलादेखि सबै देवताहरूले ती अश्विनीकुमारलाई पनि सोमारसको भाग दिन स्वीकार गरे, जसलाई पहिले 'वैद्य' हुनाले सोमरस-पानको अधिकारबाट वञ्चित पारिराखेका थिए ॥२६॥ हे राजन् ! शर्यातिका उत्तानबर्हि, आनर्त र भूरिषेण यी तीन छोरा उत्पन्न भए। तिनमा आनर्तबाट रेवतको उत्पत्ति भयो ॥२७॥ हे शत्रुसूदन ! राजा रेवत समुद्रको माझमा कुशस्थली नामकी यौटी नगरी बसाएर त्यसैमा बस्तै आनर्तादि देशहरूको राज्य गर्दथे ॥२८॥ ती रेवतका एक सय उत्तम छोरा उत्पन्न भए। तिनमा सबभन्दा जेठा ककुद्मी थिए। राजा ककुद्मी आफ्नी कन्या रेवतीलाई लिएर वर सोध्नको निम्ति कुनै प्रकारको रोक-छेक नहुनाले सरासर ब्रह्मलोकमा ब्रह्माजीकहाँ पुगे, तर त्यस वेला त्यहाँ नाच-गानको धूम-धाम थियो। त्यसै कारण कुरा-कानीको निम्ति मौका नपाइ ती एकछिनसम्म बाहिरनै उभिइरहे ॥२९-३०॥ त्यसपछि आदिदेव भगवान् ब्रह्माजीलाई नमस्कार गरेर उनले ब्रह्माजीलाई आगमनको कारण बताए। त्यो सुनेर ब्रह्माजीले हाँस्तै भने–॥३१॥ 'हे राजन् ! तिमीले जुन-जसलाई यिनको वर मनोनीत गरेका थियौ, ती सबै कालको मुखमा पसिसके। यस वेला

॥ २६ ॥ उत्तानबर्हिरानर्तो भूरिषेण इति त्रयः ॥ शर्यातेरभवन्पुत्रा आनर्ताद्रेवतोऽभवत् ॥ २७ ॥ सोऽन्तःसमुद्रे नगरीं विनिर्माय कुशस्थलीम् ॥ आस्थितोऽभुङ्क्त विषयानानर्तादीनरिन्दम ॥ २८ ॥ तस्य पुत्रशतं जज्ञे ककुद्मिज्येष्ठमुत्तमम् ॥ ककुद्मी रेवतीं कन्यां स्वामादाय विभुं गतः ॥ २९ ॥ कन्यावरं परिप्रष्टुं ब्रह्मलोकमपावृतम् ॥ आवर्तमाने गान्धर्वे स्थितोऽलब्धक्षणः क्षणम् ॥ ३० ॥ तदन्त आद्यमानम्य स्वाभिप्रायं न्यवेदयत् ॥ तच्छ्रुत्वा भगवान्ब्रह्मा प्रहस्य तमुवाच ह ॥ ३१ ॥ अहो राजन्निरुद्धास्ते कालेन हृदि ये कृताः ॥ तत्पुत्रपौत्रनप्तॄणां गोत्राणि च न शृण्महे ॥ ३२ ॥ कालोऽभियातस्त्रिणवचतुर्युगविकल्पितः ॥ तद्गच्छ देवदेवांशो बलदेवो महाबलः ॥ ३३ ॥ कन्यारत्नमिदं राजन्नररत्नाय देहि भोः ॥ भुवो भारावताराय भगवान्भूतभावनः ॥ ३४ ॥ अवतीर्णो निजांशेन पुण्यश्रवणकीर्तनः ॥ इत्यादिष्टोऽभिवन्द्याजं नृपः स्वपुरमागतः ॥ त्यक्तं पुण्यजनत्रासाद्भ्रातृभिर्दिक्ष्ववस्थितैः ॥ ३५ ॥ सुतां दत्त्वाऽनवद्याङ्गीं बलाय बलशालिने ॥ बदर्याख्यं गतो राजा तप्तुं नारायणाश्रमम् ॥३६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥

त मलाई तिनका पुत्र, पौत्र, नाती पनाती तथा वंशधरको विषयमा पनि केही थाहा छैन ॥३२॥ अहिलेसम्म सत्ताईस चतुर्युगीको समय व्यतीत भइसक्यो। यस निम्ति तिमी जाऊ। अब देवाधिदेव नारायणका अंशभूत महाबली श्रीबलरामले पृथ्वीमा अवतार लिइसकेका छन् ॥३३॥ हे राजन् ! यी कन्यारत्न तिमी उनै नर-नरत्नलाई देऊ, जुन बलरामजीको श्रवण र कीर्तन धेरै पवित्र छ, ती भूतभावन भगवान यस वेला पृथिवीको भार हरण गर्नको निम्ति आफ्नो अंशले अवतीर्ण भएका छन्। ब्रह्माजीको आज्ञा पाएर राजा ककुद्मीले उनलाई प्रणाम गरेर आफ्नो नगरमा फर्के, यसै बीच दिशा-विदिशामा बस्ने उनका बन्धु-बान्धवहरूले यक्षहरूको भयले त्यस नगरलाई सर्वथा त्यागिदिएका थिए ॥३४-३५॥ त्यसपछि महाबलवान् बलरामजीलाई उनले आफ्नी सर्वाङ्ग सुन्दरी कन्या रेवती दिए र स्वयं राजा ककुद्मी तपस्या गर्नको निम्ति नारायणका परमधामस्वरूप बदरिकाश्रमको निम्ति हिंडे ॥३६॥ इति श्रीमद्भागवते महापुराणे नवमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥

( महाराज नाभाग तथा अम्बरीषको वृत्तान्त)—श्रीशुकदेव भन्नुहुन्छ—मनुका छोरा नभगका यौटा पुत्र नाभाग थिए, जसका जेठा दाजूले (अन्याय गरेर) गुरुकुलबाट फर्केर आएको आफ्नो कान्छो भाई ब्रह्मचारी एवं विद्वान् नाभागलाई अंशमा केवल पिता नै दिएका थिए, अरु केही थिएन ॥१॥ उसले गुरुकुलबाट फर्केपछि आफ्ना दाजूहरूसित सोध्यो—'दाजु हो ! हजुरहरूले मेरो निम्ति के अंशको भाग लगाउनु भयो ?' उनीहरूले भने—'हामी पिताजीलाई नै तिमीलाई सुम्पिदिन्छौं ।' त्यसपछि उसले आफ्ना पितानेर गएर भन्यो—'हे तात ! मलाई मेरा दाजूहरूले हजुरलाई नै मेरो अंशको रूपमा सुम्पेका छन् ।' पिताले भने—'बाबू ! तँ तिनका कुरा स्वीकार नगर ।।२॥ हेर, धेरै बुद्धिमान् आंगिरस गोत्रका ब्राह्मण यज्ञ गर्न तयार छन्, तर ती प्रत्येक छैठौं दिन त्यो यज्ञकर्ममा केही बिर्सिदिन्छन् ।।३॥ अतः तिमी गएर उनीहरूलाई वैश्वदेवका ती इदमित्थारौद्रम्' र 'यज्ञेनदक्षिणया' इत्यादि दुइ सूक्त सुनाऊ । यज्ञ समाप्त गरेर जब ती स्वर्गलोक जानलाग्दछन्, तब यज्ञबाट उब्रेको सबै धन तिमीलाई दिएर जानेछन् । यस निम्ति अब तिमी तुरुन्त त्यहाँ जाऊ ।' अनि नाभागले त्यसै गरे, जुन पिताले भनेका थिए । ती ऋषि यज्ञबाट उब्रेको धन नाभागलाई दिएर स्वर्ग गए ॥४॥५॥ धन लिने वेलामा यौटा कृष्णवर्ण पुरुष (रुद्र) ले उत्तर दिशाबाट नाभागसित भन्यो—उब्रेको धन मेरो

श्रीशुक उवाच ॥ नाभागो नभगापत्यं यं ततं भ्रातरं कविम् ॥ यविष्ठं व्यभजन्दायं ब्रह्मचारिणमागतम् ॥ १ ॥ भ्रातरोऽङ्क्त किं मह्यं भजाम
पितरं तव ॥ त्वां ममार्यास्ततोऽभाङ्क्षुर्मा पुत्रक तदादृथाः ॥२॥ इमे आङ्गिरसः सत्रमासतेऽद्य सुमेधसः ॥ षष्ठं षष्ठमुपेत्याहः कवे मुह्यन्ति कर्मणि ॥३॥
तांस्त्वं शंसय सूक्ते द्वे वैश्वदेवे महात्मनः ॥ ते स्वर्यन्तो धनं सत्रपरिशेषितमात्मनः ॥४॥ दास्यन्त्यथ ततो गच्छ तथा स कृतवान् यथा ॥ तस्मै
दत्त्वा ययुः स्वर्गं ते सत्रपरिशेषितम् ॥५॥तं कश्चित्स्वीकरिष्यन्तं पुरुषः कृष्णदर्शनः॥ उवाचोत्तरतोऽभ्येत्य ममेदं वास्तुकं वास्तुकं वसु॥६॥ममेदमृषिभिः
र्दत्तमिति तर्हि स्म मानवः ॥ स्यान्नौ ते पितरि प्रश्नः पृष्टवान्पितरं तथा ॥७॥ यज्ञवास्तुगतं सर्वमुच्छिष्टमृषयः क्वचित्॥चक्रुर्विभागं रुद्राय स देवः
सर्वमर्हति ॥८॥ नाभागस्तं प्रणम्याह तवेश किल वास्तुकम् ॥ इत्याह मे पिता ब्रह्मञ्छिरसा त्वां प्रसादये ॥९॥ यत्ते पिताऽवदद्धर्मं त्वं च सत्यं प्रभा·
षसे ॥ ददामि ते मन्त्रदृशे ज्ञानं ब्रह्म सनातनम् ॥१०॥ गृहाण द्रविणं दत्तं मत्सत्रे परिशेषितम् ॥ त्युक्त्वाऽन्तर्हितो रुद्रो भगवान्सत्यवत्सलः ॥११॥

हो ॥६॥ मनुपुत्र नाभागले भने—'ऋषिहरूले यो धन मलाई दिएका हुन् । अतएव यो धन मेरो हो ।' त्यसमा रुद्रले भने—'हामी दुवैको विवादमा तिम्रा पितालाई नै मध्यस्थ राख्नु उचित छ । अनि नाभागले यस विषयमा आफ्ना पितासित गएर प्रश्न गरे ।।७।। उनका बाबुले भने—'कहीं अन्तै कुनै समय ऋषिहरूले यस्तो निश्चित गरिदिएका छन्—यज्ञभूमिको शेष सारा धन रुद्रको भाग हुनेछ । अतः यो धन रुद्र भगवान्लाई मिल्नुपर्दछ' ।।८॥ यति सुनेपछि नाभागले फर्केर गई रुद्रदेवलाइ प्रणाम गरेर भने—'हे भगवन् ! यी सर्ववस्तु हजुरका नै हुन्—मेरा पिताको वचन छ । हे ब्रह्मन् ! म हजुरसित क्षमा माजिरहेको छु '॥९॥ श्रीरुद्रले भने—'हे सौम्य ! तिम्रा पिताले धर्मसंगत वचन भनेका हुन् र तिमी पनि सत्य बोलिरहेका छौ । वेदको अर्थ जान्ने तिमीलाई म सनातन ब्रह्मज्ञानको उपदेश दिन्छु ॥ १० ॥ साथै यो धन पनि तिमी नै लेऊ ।' यति भनेर ती रुद्र भगवान् अन्तर्धान भए । यसरी एकाग्रचित्त भएर जो पुरुष बिहान र सायंकालको वेलामा यो आख्यान स्मरण र मनन गर्दछ, त्यो विद्वान् तथा वेदज्ञ बन्दछ र पछि गएर अचिन्त्यरूप नारायण भगवान्को

आत्मस्वरूप पनि प्राप्त गर्न सक्दछ ॥११-१२॥ महाभाग नाभागबाट द्वारा भगवद्भक्त एवं उदार-स्वभाव अम्बरीष उत्पन्न भए, जसलाई कहिल्यै प्रतिहत नहुने भएको ब्रह्मशापले पनि स्पर्श गर्न सकेको थिएन ॥ १३ ॥ परीक्षितले सोधे–हे भगवन् ! म ती परम बुद्धिमान् राजर्षि अम्बरीषको चरित्र सुन्ने इच्छा गर्दछु–जसमाथि छाडिएको दुस्तर ब्रह्मदण्डसम्मले आफ्नो कुनै प्रभाव प्रकट गर्न सकेको थिएन ॥१४॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! ती महाभाग अम्बरीषले सप्तद्वीपवती पृथिवी र यस भूतलमा प्राणीहरूको निम्ति अत्यन्त दुर्लभ र अविचल सम्पत्ति तथा अतुलित ऐश्वर्य पाएर पनि ती सबैलाई स्वप्नमा पाएको पदार्थहरू झैं मिथ्या ठानेका थिए । जसले गर्दा मनुष्य अज्ञानको अन्धकारमा डुबिरहन्छ, त्यसको नाश हुने उनलाई यस्तरी ज्ञान थियो ॥१५-१६॥उनलाई भगवान् वासुदेव तथा उनका साधुस्वभाव भक्तगणमा त्यो परम भक्ति प्राप्त थियो–जसले गर्दा सारा जगत्‌को सम्पत्ति माटोको डल्लो झैं तुच्छ ठानिने गरिन्छ ॥१७॥ ती भक्तप्रवरले आफ्नो मन कृष्णचन्द्रका चरणमा, आफ्नो वाणी भगवान्‌को गुणगानमा, आफ्ना हात भगवान्‌को स्वच्छता राख्ने आदिमा, कानहरूलाई

य एतत्संस्मरेत्प्रातः सायं च सुसमाहितः ॥ कविर्भवति मन्त्रज्ञो गतिं चैव तथात्मनः ॥ १२ ॥ नाभागादम्बरीषोऽभून्महाभागवतः कृती ॥ नास्पृशद्ब्रह्मशापोऽपि यं न प्रतिहतः क्वचित् ॥ १३ ॥ राजोवाच ॥ भगवञ्छ्रोतुमिच्छामि राजर्षेस्तस्य धीमतः ॥ न प्राभूद्यत्र निर्मुक्तो ब्रह्मदण्डो दुरत्ययः ॥१४॥ श्रीशुक उवाच ॥ अम्बरीषो महाभागः सप्तद्वीपवतीं महीम् ॥ अव्ययां च श्रियं लब्ध्वा विभवं चातुलं भुवि ॥१५॥ मेनेऽतिदुर्लभं पुंसां सर्वं तत्स्वप्नसंस्तुतम् ॥ विद्वान्विभवनिर्वाणं तमो विशति यत्पुमान् ॥१६॥ वासुदेवे भगवति तद्भक्तेषु च साधुषु ॥ प्राप्तो भावं परं विश्वं येनेदं लोष्ठवत्स्मृतम् ॥१७॥ स वै मनः कृष्णपदारविन्दयोर्वचांसि वैकुण्ठगुणानुवर्णने ॥ करौ हरेर्मन्दिरमार्जनादिषु श्रुतिं चकाराच्युतसत्कथोदये ॥१८॥ मुकुन्दलिङ्गालयदर्शने दृशौ तद्भृत्यगात्रस्पर्शेऽङ्गसङ्गमम् ॥ घ्राणं च तत्पादसरोजसौरभे श्रीमत्तुलस्या रसनां तदर्पिते ॥ १९ ॥ पादौ हरेः क्षेत्रपदानुसर्पणे शिरो हृषीकेशपदाभिवन्दने ॥ कामं च दास्ये न तु कामकाम्यया यथोत्तमश्लोकजनाश्रया रतिः ॥२०॥ एवं सदा कर्मकलापमात्मनः परेऽधियज्ञे भगवत्यधोक्षजे ॥ सर्वात्मभावं विदधन्महीमिमां तन्निष्ठविप्राभिहितःशशास ह ॥२१॥ ईजेऽश्वमेधैरधियज्ञमीश्वरं महाविभूत्योपचिताङ्गदक्षिणैः ॥ ततैर्वसिष्ठासितगौतमादिभिर्धन्वन्यभिस्रोतमसौ सरस्वतीम् ॥ २२ ॥ यस्य क्रतुषु गीर्वाणैः सदस्या ऋत्विजो जनाः ॥ तुल्यरूपाश्चानिमिषा व्यदृश्यन्त सुवाससः

श्रीअच्युतको कथा सुन्नमा, आँखालाई भगवान्‌को मूर्ति र मन्दिर हेरिरहनलाई, आफ्ना अङ्गहरूलाई भगवद्भक्तका सेवामा, नासिकालाई भगवान्‌का चरण-कमलमा चढाइएका तुलसीको जिब्रो प्रभुलाई अर्पित नैवेद्यादिमा पाउ, भगवान्‌का क्षेत्रादिको यात्रामा, मस्तक श्रीहृषीकेशका चरणको वन्दनामा र माला चन्दनादि सबै भोग-सामग्री उनले यस निम्ति भगवत्-सेवामा लगाइदिएका थिए कि जसले उनलाई हरिभक्तहरूको आश्रित भएर रहने भगवत्प्रीति प्राप्तहोस् ॥१८-२०॥ यसरी ती यज्ञपुरुष अधोक्षजलाई सबैका आत्मा जानेर आफ्ना सबै कर्म अर्पण गर्ने भगवद्भक्त ब्राह्मणहरूको आदेशले राज्य गर्नलागे ॥२१॥ उनले धन्व अर्थात् मारवाडदेशमा सरस्वती नदीको प्रवाहको सम्मुख वसिष्ठ, असित, गौतमादि आचार्यहरूद्वारा महान् ऐश्वर्यले सम्पन्न तथा धेरै-धेरै दक्षिणाहरूले युक्त अश्वमेध यज्ञहरूद्वारा यज्ञपुरुष नारायणको यजन गरे ॥२२॥ तिनका सबै यज्ञहरूमा देवताहरू समेत सबै सदस्य र ऋत्विज पनि आफ्ना